श्री इष्टदेवी चरण कमलेभ्यो नमः

# सुब्बा होमनाथ उपाध्याय कृत असली रामाश्वमेध सहित को

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

# भानुभक्तीय रामायण आठ काण्ड




प्रकाशकः- सुब्बा होमनाथ केदारनाथ हितैषी कम्पनी ।

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

❁ श्री इष्टदेवताचरणकमलेभ्यो नमः ❁

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सयकड़ौ वर्ष (अर्थात् सम्वत् १९४४ सन् १८८६) देखी चलिआएको पुरानु

## राजा वजीर भाई भारदार बुढा पुराना दाजू भाई द्वारा

सहनी गरिएको एकमात्र

## स्वर्गीयः—सुब्बा होमनाथ उपाध्याय कृत

अनेक लाख प्रति भन्दा बढ़ता छापिएको

## चित्रमय रामाश्वमेधकाण्ड समेतको ठूलो आठकाण्ड




यसमा रामायणमा भए भरका सबै पात्रहरुको परिचय समेत छ ।

यसमा छापिएका चेपक, कथा, श्लोक, विरामको फूल या कुनै पनि स्टाइलको नकल गर्नेहरू माथी ऐनको प्रतिबन्ध छ ।

प्रकाशक र विक्रेता :—

कार्यालयको वर्तमान अध्यक्ष सुब्बा होमनाथात्मज तनय
पं० रामजी उपाध्याय खतिवडा

## कार्यालय—सुब्बा होमनाथ केदारनाथ,

हितैषी कम्पनी, पोष्ट बाक्स नं० ८१ वाराणसी–१

७७ रौं संस्करण } सन् १९६१ { मूल्य छाला जिल्द १०) कपड़ा जिल्द ९)

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

श्रीइष्टदेवता चरण कमलेभ्योनमः

# ❋ रामायण आठकाण्डको विषय-सूची ❋



CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

स्वर्गीय सुब्बा होमनाथ उपाध्याय कृत रामाश्वमेध काण्ड समेत को

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

# भानुभक्तीय रामायण ८ काण्ड ग्लेज का०

## यस पुस्तकमा छापिएका क्षेपक कथा ( दुइ चिन्ह भीत्र राखीएको छ )

यसमा लक्ष्मण परशुराम संवाद, कैकेयी मंथरा संवाद, अङ्गदरावण संवाद, अहिरावण, महिरावण बध र सुलोचना सती र रामायणमा भए भरका सबै पात्रहरू सतीले सिता हुनु, नारद, विश्वामित्र, परशुराम, वशिष्ठ, जनक, दशरथ, कौशल्या, कैकई, सीता राम, लक्ष्मण, भरत, शत्रुघ्न र तिन्का सन्तान, शान्ता, गुह, वाल्मीकिजी, हनुमान, जाम्बवान, जटायू, सम्पाती, बाली, सुग्रीव, शूर्पणखा, ताड़का, मारीच, सुबाहु, रावण, कुम्भकर्ण, बिभीषण र कागभु

## प्रचारलाई नयाँ टाइपमा छापिएको

रामायण आठकाण्डमा रिआयत

संसार प्रगति गर्दै गएको छ। हामी नेपालीहरूले पनि संसारका दाँजामा बस्न आफुलाइ पनि प्रगतिशील संसार तुल्य बनाउनै पर्दछ। जस्ता प्रकार पुरानु ६४ पैसाका ठाँऊमा हिजो आज १०० नञा पैसाको चलन् भएकोमा पहिले सबैलाई अफठयारो भए पनि चलनचाँजो गर्दा त्यै १०० पैसाको हिसाब पनि सरल हुन आएकोछ। उसै रितले ५।७ दिन मात्रै यो नञाटाइप लाई हेर्न थाल्नु भयो भने अभ्यास भएमा यहि टाइप सरलताले बुझ्न सक्नु हुनेछ।

मोल चमड़ा ढकने १०) रु० कपड़ाको ८) रु० पर्दछ तर प्रचार लाइ चमड़ाको ६) रु० र कपड़ा जील्दको ५) रु० मा पाउनु हुने छ।

## सुब्बा होमनाथ केदारनाथ,

बाराणसीको भनि कीटेर मगाउनु होला।

शुण्डीको जन्म कथा र परिचयका साथ अनेक श्रवणकुमार कथा, राम विलाप, हनुमान भरत सम्वाद, हनुमानजीले सूर्यलाई काखि च्याप्नु, रावणको अन्तिम समयको उपदेश, भरतजी लंका गमन, हनुमानजीको हृदयमा राम दर्शन र अङ्गदले बाप वैरी साधने बरदान पाउनु आदि अनेक नञा कथाहरू समेत एकैठाऊ छापिएको छ जो बाल्मीकि, तुलसीदासजीकृत हिन्दी अथवा बंगला र गुजराती आदि भारतीय भाषाको कुनै यउटा रामायणमा पनि छैनन्। हजारौं रुपया खर्च गरी छपाई तैयार भएको छ।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

* श्री इष्टदेवताचरणकमलेभ्यो नमः *

सयकड़ौं वर्ष अर्थात् सम्वत् १९४४ सन १८६६ देखी चलिआएको पुरानु

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

राजा वजीर भाई भारदार बुढा पुराना दाजू भाई द्वारा

सह्नी गरिएको एकमात्र

## स्वर्गीय:–सुब्बा होमनाथ उपाध्याय कृत

डेढ लाख प्रति भन्दा बढ़ता छापिएको

# चित्रमय रामाश्वमेधकाण्ड समेतको ठूलो आठकाण्ड




यसमा सबै पात्रहरुको परिचय र लक्ष्मणपरशुरामसंवाद, कैकेयीमंथरासंवाद, अङ्गदरावणसंवाद, अहिरावण, महिरावणबध र सुलोचनासतीसंवाद समेत छ।

यसमा छापिएका चेपक, कथा, श्लोक, विरामको फूल या कुनै पनि स्टाइलको नकल गर्नेहरू माथी ऐनको प्रतिबन्ध छ।

प्रकाशक र विक्रेता :–

कार्यालयको बर्तमान अध्यक्ष सुब्बा होमनाथात्मजतनय

पं० रामजी उपाध्याय खतिवडा

कार्यालय :–सुब्बा होमनाथ केदारनाथ

हितैषी कम्पनी, वाराणसी-१

७५ औं संस्करण } सन् १६५६ { मूल्य छाला जिल्द १०) कपड़ा जिल्द ६)

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations





CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

# महाकबि भानुभक्तको संक्षिप्त जीवन चरित्र

हाड़, छाला, मासु, रगत इत्यादिबाट बनेको जीव नाश हुन्छ। आफूले गरेको कीर्तिचाहिं कहिले मर्दैन। हुनत विदेशतिर मरेको लाशलाई पनि औखतिद्वारा ज्यौंकात्यौं पारेर हजारौं बर्षसम्म पनि राख्तछन्, तर त्यो अर्कै कुरा हो। हामीहरूले त अहिले कीर्तितिरै ध्यान दिनुपर्छ। वास्तवमा जसको यश दुनियाँले गाइन्छ उही बाँचेको हो। शरीर खरानी भएर माटोमा मिल्दा पनि अमर बनेका नेपालीहरूमध्ये भानुभक्तको नाम महाकालीदेखि मेचीसम्म प्रख्यात छ। त्यसको मुख्य कारण उनले गरेको मातृभाषाको सेवा हो। चारैतिर हेर्यौं भने अहिले उनको जस नगुनगुनाउने घर पाउन मुश्किल पर्छ। बालख र आइमाईहरू समेत उनको रसिलो र सजिलो श्लोकमा मक्ख पर्छन्।



महाकबि भानुभक्त आचार्य

त्यस ताकमा कविहरू त अरू पनि थिए रघुनाथले पनि सुन्दर-काण्डको अनुवाद गरेकै हुन्। वसन्त, यदुनाथ पतञ्जलिहरूका कविता पाइन्छन्, तर यिनकै श्लोकहरूले दुनियाँलाई किन खिच्यो भन्ने शंका उठ्न सक्छ, यसमा उनको शैलीले नै जवाफ दिन्छ। जस्तोसुकै गाह्रो विषय भएपनि उनले कलम चोप्नासाथ एकदम बुझ्न सकिने भइहाल्छ। एउटा सानो दृष्टान्त देऔं। रामगीता कति गाह्रो कुरा हो तर उनले हदसे हद सजिलो पारेका छन्। उनले आफ्नो आशयलाई छर्लङ्ग पारेर देखाएका छन्। कहीं नबुझिने छैन, नत एउटा कुरा लेख्न आँटेकोमा अर्को कुरा बुझिएको छ। संस्कृत रामायणको कथा मात्र लिएर उनले रामायणको अनुवाद गरेका छैनन्, वास्तवमा यिनको सिर्जना आफ्नै छ; मिठास अर्कै छ, सरलता उत्तिकै छ, सौन्दर्य पनि ठाउँ ठाउँमा प्रशस्त छ। सबभन्दा मुख्यकुरा के हो भने नेपालीपन प्रशस्त मात्रामा पाइन्छ। यो सबै कुरा बुझ्न भानुभक्तको रामायण नै आदिदेखि अन्त्यसम्म राम्रोसँग पढ्नुपर्छ।

होमर भन्ने कविले इलियड भन्ने महाकाव्य लेखेका छन्। त्यसलाई अर्को भाषामा उतार्न सकिंदैन भन्ने पश्चिमी विद्वान्हरूको भनाइ छ। भानुभक्त रामायण पनि त्यस्तै छ। उसलाई कुनै भाषामा अनुवाद गर्न हामी सक्तैनौं। कथा आउँदैन भनेको होइन, किन्तु भानुभक्तको शैली केही गरे पनि उत्रँदैन। हुन पनि मिश्रीको मिठास अन्त कसरी पाउनु? यिनका मौलिक कविताहरू अरू पनि प्रशस्त पाइन्छन्। सबभन्दा पहिले घाँसीले उनलाई कवितामा प्रवृत्त गराएको हो भन्छन्। चिट्ठी विन्ती-पत्रहरू लेख्ता पनि यिनी श्लोकमै व्यवहार गर्थें। ज्यादै ठूला विद्वान् नभए तापनि संस्कृतमा यिनको निकै दखल थियो। कविताबाट पनि सिधासाधा होलान् जस्ता देखिन्छन्। उपदेश दिएर दुनियाँलाई सपार्ने यिनको प्रवृत्ति थियो। तारापतिकी ब्राह्मणीको र बुहारीको झगडा देखी आइमाईहरूलाई यस किसिमको उपदेश दिनुपर्छ भनेर उनले 'वधूशिक्षा' लेखेका हुन्। प्रश्नोत्तरी र भक्तमालाबाट पनि हामी निकै लाभ उठाउन पाउँछौं। प्रकृतितर्फ र भावको गहिर्याइतिर यिनले दृष्टि दिएका छैनन्। ठाउँ ठाउँमा संस्कृत शब्दलाई पनि करयाककुरुक पारेर यिनले आफ्ना लयदार छन्दमा मिलाएका छन्।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

**सावधान !　　　सावधान !!　　　सावधान !!!**

यो सयकडौं वर्षदेखी चलिआएको रामायणमा भएका सबै पात्रहरू सतीले सिता हुनु, नारद, विश्वामित्र, परशुराम, वशिष्ठ, जनक, दशरथ, कौशल्या, कैकई सीता, राम, लक्ष्मण, भरत, शत्रुघ्न र सन्तान शान्ता, गुह, वाल्मीकिजी, हनुमान, जाम्बवान, जटायू, सम्पाती, बाली, सुग्रीव, शूर्पणखा, ताडका, मारीच, सुबाहु, रावण, कुम्भकर्ण, विभीषण र कागभुशुण्डीको जन्म कथा र परिचय साथ अनेक श्रवणकुमार कथा, राम विलाप, हनुमान भरत सम्बाद, हनुमानजीले सूर्यलाइ काखि च्याप्नु, रावणको अन्तिम समयको उपदेश, भरतजी लंका गमन, हनुमानजीको हृदयमा राम दर्शन, र अङ्गदले बाप बैरी साध्न बरदान पाउनु आदि नया कथाहरू समेत छापिएका छन्, जो वाल्मीकि तुलसीकृत तथा बंगला र गुजराती आदि भारतीय भाषा का कुनै यउटा रामायणमा पनि छैनन्

❋ तसर्थ— ❋

नेपाली हरूका एकमात्र पुरानो कारखाना

**सुब्बा होमनाथ केदारनाथ,** वाराणसीको भनि कीटेर मगाए-मात्र यो किताब समेत अन्य असली शुद्ध किताब र मालहरू पाउनु हुनेछ।

नत्र भने

हिजो आज कमारा, कुजातका र मदिसेहरूले "अर्व सर्व वर्मा शर्मा आरत भारत" नामका कारखाना खोली नकली महाभारत, रामायण, कृष्णचरित्र, महाकाली तैल, सत्य अमृत-जीवन हरू पठाई हाम्रा सोझा नेपाली दाजुभाइहरूलाई झुक्याई तिनको धन धर्म दुवै नष्ट गराइरहेका छन्। त्यस्ता नकली कम्पनीदेखि सावधान रहनु होला। झुक्याइ नकली पुस्तक पठाउनेलाई पक्राइदिने सज्जनलाई ५००) रु० नगद इनाम दिनेछौं।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

# सुब्बा होमनाथ उपाध्याय खतिवडाको संक्षिप्त-वंश-परिचय



कार्यालयको वर्तमान अध्यक्ष सुब्बा होमनाथात्मज तनय पं० रामजी उपाध्याय खतिवोडा

हाम्रो नेपाल परापूर्व काल देखिनै प्रसिद्ध देश मानिएको छ। यो देश सत्ययुग देखिनै कला कौशल साहित्य सभ्यता र कृषिको केन्द्र मानिएको थियो। भगवान रामचन्द्रका पालामा नेपालनरेश सुधन्वाले जनकपुर गएको र भगवान कृष्णका पालामा नेपालका किराती राजा जितेद्राष्ठीले भारत युद्धमा सामिल भएको कुरा इतिहासमा प्रसिद्ध छ। राजा जनक र त्रिलोकजननी सीताको वासस्थल पनि नेपाल राज्यकै अन्तर्गत जनकपुर हो। फेरी त्यसैका दाँजा दाँजी शुक्ल यजुर्वेदका प्रणेता प्रसिद्ध स्मृतिकार महर्षि याज्ञवल्क्य र नीजकी विदुषी पत्नी गार्गीको आश्रम पनि नेपालमै थियो। भगवान बुद्धको जन्म पनि नेपालको बुटौल जिल्लाकै अन्तर्गत लुम्बिनी वघैचामा भएको र पछी धर्म प्रचार गर्न भगवान बुद्ध स्वयं नेपाल पाल्नू भएको थियो। भारतीय सम्राट् चन्द्रगुप्त र महान अशोक पनि आर्य र बौद्ध धर्मको प्रचार गर्न नेपाल गएका थिए। अशोककी राजदुहिता चारूमतीले आफ्नो विवाह नेपालमै गरी एउटा वाहाल स्थापन गरेर चावहिल टोललाई बसाएकी थिइन। सातौं शताब्दीमा नेपालका राजा उदयदेवकी छोरी भृकुटी प्रसिद्ध तिब्बत-नरेश "सोङ् सान् गम्बो" कि मुख्य रानी थिइन्। इनैद्वारा तिब्बतमा नेपाली लिपी शिक्षा र बौद्ध धर्मको प्रचार भएको थियो। [illegible]

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

विक्रम संबत् १८६६ Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations मा तनहुँका चुँदी बसीको रघा गाउँमा इनी जन्मेका हुन। बाजे श्रीकृष्ण पण्डितले यिनलाई निकै प्यारो गर्थे। साउँभन्दा ब्याज प्यारो भन्ने उखानलाई उनले सत्यको टाकुरामा पुर्‍याएका थिए। बाबु धनञ्जयबाट भन्दा बाजेबाटनै यिनले राम्रो शिक्षा पाएका हुन्। १८६८मा कोरा किसिमबाट बालकाण्ड तयार पारिसकेका थिए। त्यसलाई पछि फेरि सुध्याए। १९०६ मा यिनी नेपाल आये त्यसै बखतमा काठमाण्डौं देख्ता यिनलाई रमाइलो लागेछ र शहरको बयान श्लोकमा नै गरेका छन्। १९०७ मा जागिरे भई यिनी मधेशतिर गए। तर १९०९ मा नै यिनी खोसिए। पछि आम्दानी खर्चको स्याहा बुझाउँदा सरकारी बाँकी लाग्यो र पाँच महिनासम्म कुमारीचोकमा थुनिए। त्यसै बखतमा अयोध्याकाण्ड, अरण्यकाण्ड, किष्किन्धाकाण्ड, र सुन्दरकाण्ड, तयार पारे। त्यसपछि फारख पाई छोरा रमानाथको ब्रतबन्ध गर्न घर गए। १९१० मा भानुभक्त फेरि नेपाल आए, अनि फुर्सद फुर्सदमा बसेर युद्धकाण्ड र उत्तरकाण्ड पनि पूरा गरे। १९२५ मा विशेष काम आइपर्दा यिनी फेरि घर गए। उहाँ पुगेपछि उनलाई कालज्वर आयो। त्यसैले इतिश्री पनि गरायो।

घरको दैलोबाट बाहिर पाइला राख्न मुश्किल भएका आइमाईहरूका र गोठालाहरूको सुक्खा हृदयमा समेत भक्तिरस छर्केर भानुभक्तले ठूलो सत्कर्म गरे। जति मातृ भाषाको सेवा गरेका थिए उति उनको नाउँ पनि अमर भयो।

प्रकृतिले नेपालीको रूप लिएर कमसे कम हजार वसन्तको विहार गरिसक्यो होला। यसमा कंती पनि दशहजार विद्वान्हरूका मुखबाट नेपालीको उच्चारण भयो होला। त्यसो भएपछि सम्बत् १८०० भन्दा अगिका नेपाली कविता खोइ भन्ने शङ्का उठ्नु मुनासिबै हो। तर बोल्ने भाषा जतिसुकै भएतापनि लेख्ने भाषा एउटै हुनुपर्छ भन्ने विचार उस बखतका विद्वान्हरूका मनमा परेको थियो। यसैले जुनसुकै विद्वान् पनि संस्कृतैमा लेख्दथे। त्यो विचार बिलकुल अमिल्दो हो भन्न पनि हुँदैन। कति ज्यादै उन्नत देशहरूमा पनि त्यही चलन देखिन्थ्यो। प्रान्तमा भिन्न भिन्न भाषा बोलिए तापनि लेख्ने भाषा जहाँतहीं एउटै हुनुपर्छ भन्ने कतिको विचार अझ सुनिंदैछ। तिनताकाका विद्वान्हरूलाई कसैले मातृभाषा द्रोही भनेर दोष पनि लगाएका छन्। त्यो कुरामा कति मात्रा सत्यता छ, त्यसलाई इतिहासका धुरन्धरहरूले याद गर्नैपर्छ।

भाषाका सेवक गुमानी कविले पनि वल्लतल्ल क्रियापदसम्म भाषा राखी कविता गर्ने साहस गरेका हुन्। यता यसो हुँदा उता वङ्गालतिर कृत्तिवासी रामायण र मध्यदेशतिर तुलसीकृत रामायणको प्रचार बढ्यो। त्यो छावा नेपालमा पनि आइपुग्यो। त्यसले भानुभक्त जस्ता कविहरूले भाषामा कलम चलाए।

चैतमा रामनवमीका दिन श्रीरामचन्द्र जन्मेका हुनाले ठूलो भक्तिका साथ घरघरमा पूजा हुन्छ, आदि देखि अन्त्यसम्म रामायणको पाठ पनि भक्तहरू गर्दछन्।

यसबाट बाबू, आमा, दाज्यू, पतिलाई यसरी मान्नुपर्ने रहेछ, आदर्श चरित्र यो रहेछ, अन्यायको परिणाम तीतो र न्यायको फल भविष्यमा मीठो हुँदो रहेछ इत्यादि धेरै कुराको ज्ञान हुन्छ। पहाडतिर बिहेहरूमा श्लोक भन्ने चलन छ। जसले राम्रोसँग भन्न सक्यो उसको मान निकै बढ्दछ। अरू फुर्सदका बखतमा पनि रामायणको पाठ गर्दछन। भानुभक्त रामायणले नेपाललाई शान्तिको पाठ र दुष्टहरूलाई बहादुरीसाथ बिताएर न्यायको स्थापन गर्नुपर्छ भन्ने पनि सिकाएको छ।

भाषालाई ताती गराउँदै नेपालका कुना काप्चा सम्म श्रीरामचन्द्रको आदर्श चरित्र पुर्‍याएको हुनाले कवि भानुभक्तलाई हामीले धन्यवाद दिनैपर्छ। हामी त के उनै पनि फेरि नेपाली भएर जन्मेका भए आफूलाई आफै धन्यवाद दिनेछन्।

सहायक प्रवेशिकाबाट उद्धृत

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुब्बा होमनाथका प्रपितामहहरूमा जेठा श्री काल्‍लू जोशी खतिवडा, माहिला श्री शिवु जोशी खतिवडा र कान्छा श्री धनंजय खतिवडा थिए। तात्कालीन महाराजधिराज श्री ५ रण बहादुर शाहले कल्लेरी का अधिकारमाह स्तक्षेप गर्न खोज्दा त्यसमा विरोध प्रदर्शन गरेको र श्री ५ रणबहादुर शाह विरोधी तत्कालीन नेपालामात्य दामोदर पाण्डेलाई सहयोग गरे बापत सन् १८०४ मा रणबहादुरशाहले पुनः राज्यासन ग्रहण गरी श्री काल्लू खतिवडा लाई काशीमा र श्री शिवु खतिवडा लाई रिडीमा धपाएका थिए। कान्छा श्री धनंजय चाहीं त्यसबेला ६ महिनाका बालक हुनाले बाँचेका थिए। तिनै श्री धनंजयका नाति श्री नन्दलाल खतिवडा हुन। श्री नन्दलाल मुखियाकी धर्मपत्नी धर्मशीला देवीबाट सुब्बा लक्ष्मी प्रसाद उपाध्याय सुब्बा, टंकनाथ उपाध्याय तथा सुब्बा होमनाथ उपाध्याय नामक तीन छोरा भए। नीज सुश्री धर्मशीला देवीले श्री ५ बलेट महाराज त्रैलोक्य वीर विक्रमलाई दूध ज्यूनार गराएकी थिइन्।

सम्वत् १९३३ सालमा जंगबहादुर शिकार खेल्न पत्थर घट्टा गएका थिए। तिन्को त्यहीं मृत्यु भयो। श्री धीर समसेरले त्यस समाचारलाई छुपाई श्री ५ बलेट महाराजको सवारी पत्थर घट्टा तिर चलाई पागल-जस्ता महाराजधिराज श्री ५ सुरेन्द्र वीर विक्रम द्वारा बक्साई आफ्ना दाज्यू श्री रणोद्दीप सिंह लाई प्रधाना-मात्यको पदमा र श्री जगत् जंगलाइ कमाण्डर इनचीफको पदमा बहाली गराएका थिए। यो कुरा श्री ५ बलेट महाराजले थाहा पाई बीचै बाटो बाट नेपाल फर्केर आए। त्यसैको फल स्वरूप श्री ५ बलेट महाराजले श्री धीर समसेरको विनाश गरी तिन्को निरंकुश हस्तक्षेप हटाउन एउटा दल कायम गरे। त्यस दलमा श्री जंगबहादुरको पुत्र श्री जगत जंग र श्री बम विक्रमका साथ दरबारका धेरै जसो ठूला ठूला भारदार हरूका अतिरिक्त हाम्रा सुब्बा होमनाथ पनि थिए। तर यो कार्य सफल हुनै न पाई श्री ५ बलेट महाराजको राणाहरू-का विष प्रयोगले मृत्यु भएकोले सबैकार्य त्यसै सेलायो, त्यस्का केहि दिनमा श्री धीर समशेर स्वयं नेपालका कमाण्डर इन चीफ भए। श्री ५ बलेट महाराज स्वर्ग भए पछी तिनै वर्ष भित्र श्री ५ महाराजाधिराज राजेन्द्र वीर विक्रम शाह भक्तपुरमा मुक्त हुनु भयो। फेरी त्यसैका १ वर्ष भित्रमा श्री ५ महाराजाधिराज सुरेन्द्र वीर विक्रम शाहको पनि देहावसान भयो। त्यस पछी पाँच वर्षे शिशु श्री ५ पृथ्वी वीर विक्रम शाह नेपालको राज्यसिंहासनमा आरोहित भएका थिए। ति शिशु राजालाई पाएर श्री धीर समशेर लाई "के खोज्छस् कानो आँखो" भनेझैं भई राणाहरूको मन्परिको स्वेच्छाचारि तन्त्र चलनमा केही बाधा रहेन।

त्यस घटनाले दुःखित भएका नेपालीमात्रले धीर शमशेरको त्यस दानवी नीतिलाई उन्मूलन गर्ने उपाय शोचनलागे। त्यसैका फल स्वरूप नेपालमा पुनः एउटा गुप्त दल कायम भयो। जस्मा नेपालका नव-युवक भारदार हरू समेत श्री ५ शाहजादा नरेन्द्र वीर विक्रम शाह, भू. पू. प्रधानामात्य मातवरसिंहका पुत्र कर्णेल श्री विक्रम र अमर विक्रम थापा भू. पू. प्रधानामात्य गगनसिंह थापाका पुत्र कर्णेल उत्तरध्वज खवास, कर्णेल इन्द्रसिंह टण्डन, कप्तान संग्रामसिंह विष्ट, खजाञ्ची शिव प्रसाद, श्री भैरव प्रसाद, सुब्बा टंकनाथ तथा सुब्बा होमनाथ आदि थिए। तर यस दलले पनि परस्परको विश्वाशघात तथा समयको ढिलाइले गर्दा हात लागेको मौका त्यसै गुमाउनु पर्‍यो।

माथि लेखिएको तथा कथित षडयन्त्रको कुरा उत्तरध्वजले धीर शमशेरको कानमा पुर्‍याए। त्यसले गर्दा धीर समसेरले महाराजधिराजको गाथगादी ताक्ने अभियोग लगाई श्री नरेन्द्र वीर विक्रम शाहलाई आजन्म भारतका चुनारका किल्लामा नजरबन्दर, श्री विक्रम थापा, संग्रामसूर विष्ट, अमर विक्रम थापा, आदि ४१ जना वीरपुंगव भारदारहरूलाई पोढेद्वारा काटिने आज्ञा तथा सुब्बा टंकनाथ र सुब्बा होमनाथ प्रभृति १० जना ब्राह्मण युवक भारदारहरूलाई मुडेर आजन्म कैद गरी पाल्पा जेलमा राखे। डेढ वर्ष जेलमा बिताए-पछी सुब्बा टंकनाथ तथा सुब्बा होमनाथ जेलबाट कुनै प्रकारले उम्के। त्यस बेला उनीहरूले लगाएको नेल र गलफन्दी केही टाढा कुनै गाउँमा पुगी त्यहाँको एउटा कामी सँग काट्न भनेका थिए। तर त्यसकुरामा कामीले अनिच्छा प्रकट गरी विरोध गरेकाले ती दुवै भाइले हामी तेरा राजा भनाउँदा राणा हरूलाई त काटन तत्पर थियौं भने तँलाई त यहीं नेल र गलफन्दीले ठोकी सिध्याइ दिन्छौं भनी हप्काई त्रास देखाएर आफ्नो त्यो नेल काट्न लाएका थिए। त्यसपछी पुनः अर्को गाउँमा पुगी दुई जना भरियाहरूको लगाएको लुगा किनी लगाएर नेपालको सीमाना नाघि गोरखपुर पुगेका थिए।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बाहौं शताब्दीमा आरनी भन्ने कुनःर२ वर्षीय नेपाली नव-युवकले आफ्नो साहस द्वारा चीन, जापान, वर्मा, सिंहल र श्याम आदि राष्ट्रहरूमा पनि ( नेपाली मन्दिरहरूका ) कलाको निकै प्रचार गराएका थिए।

यस प्रकारको सत्य शिव र सुन्दर नेपालमा पुच्छ्रेतारा समान प्रवेश गरी राणावंशप्रवर्तक एकेश्वर प्रधानामात्य महाराज श्री ३ जंग बहादुर कँवर तथा तिनका उत्तराधिकारीहरूले नेपाललाई आफ्ना शोषण तथा दानवी अत्याचारले जस्तो दुरवस्थामा ल्याइ पुर्‍याएको थियो त्यो कुरा पनि इतिहासमा प्रसिद्ध एवं सबैको सन्मुख छ।

राणाप्रधानामात्य कालको अत्याचारले बिदेशमा धपाइएका वीराग्रणीहरू मध्येमा हाम्रा श्री सुब्बा होमनाथ उपाध्याय पनि हुन् इनले राणाशाही दमननीतिको विरोधका तथाकथित अपराधमा १९३८ सालको पर्वमा मुडिएर दामल भै भागेर भारतमै जीवन बिताउनु परेको थियो।

सुब्बा होमनाथको जन्म वि० सम्बत् १९११ साल वैशाख शुक्ल सप्तमीका दिन नेपाल देखि १५ कोश पश्चिम १ नम्बरको कल्लेरी इलाकामा उच्च घरानियाँ विद्वान तथा राजातुल्य ब्राह्मणकुलमा भएको थियो।

इनले तात्कालीन बलेट महाराज श्री ५ त्रैलोक्य वीर विक्रम शाहका संग बाल्यकालमा सहवास गर्ने मौका पाएका थिए। तिनैताका जंगबहादुरका कान्छा भाई कमाण्डर इन चीफ धीर समशेरका पुत्र ( पछी नेपालमात्य भएका ) श्री ३ महाराज बीर समशेर र साहेबज्यू डम्बर बिक्रम संग मित्यारी लाएका थिये।

राजदरबारका तात्कालीन वातावरणमा बढेका सुब्बा होमनाथले राणाशाहीको औचित्यलाई उल्लंघन गरिएको निरंकुशता लाई बाल्यकाल देखिनै देख्न र विचार गर्न पाएकोले नीजले राणाहरूका विरोधमा खड्गहस्त हुनु स्वाभाविकै हो। इनी चतुर राजनीतिज्ञ तथा संस्कृतका योग्य विद्वान थिए। साथ साथै हिन्दी बंगाली तथा अंग्रेजीमा पनि निपुण थिए।

सुब्बा होमनाथका पिता कल्लेरी नगरका स्वामी पं० नन्दलाल खतिवडा हुन। इनले सम्बत् १९२२ सालमा आफ्ना नगरमा बग्ने महेश खोलालाई डाँडोकाटेर फर्काई ३/४ कोश जति जमीनलाई उर्वरा ( प्रशस्त पानी हुने ) खेत बनाएका थिए। त्यसै कुरालाई उल्लेख गरी कवि शिखरनाथ सुवेदीले आफ्ना "मुद्राष्टक" भन्ने पुस्तकमा "पैसेले गर्दा महेश खोलो फर्काई दियो" भन्ने लेख लेखेका थिए। मुखिया नन्दलाल खतिवडाको त्यस भगीरथ प्रयासलाई देखेर जंग बहादुरले पनि नीजको निकै प्रशंसा गरेका थिए।

मकवानपुर नरेश मुकुन्द सेन द्वितीयले सन् १६४२ मा होमनाथका पूर्वपुरुष श्री शंकर खतिवडा लाई कल्लेरीको इलाका बितलब सर्वाङ्ग माफी खानी पानी पंचखत समेत गरी ताम्रपत्रको सनद दिएका थिए। त्यस्को क्षेत्रफल अन्दाजी १८/१६ कोशको छ।

श्रीमोक्षेश्वर जोशी खतिवडाका पालामा प्रातः स्मरणीय गोर्खेश्वर प्रतापी श्री ५ धिराज पृथ्वीनारायण शाह नेपाल हान्न भनी नुवाकोट सम्म आइ सकेका थिए। त्यहाँबाट नेपाल आईपुग्न मौसूफलाई कल्लेरी इलाकाको भूमी नकुल्ची जान न सकिने हुँदा र त्यो इलाका खतिवडाहरूको ब्रह्मस्वको भएकोले ठूलो धर्म संकट परेको थियो। त्यस कुराले गर्दा श्री ५ पृथ्वी नारायण शाहले श्री मोक्षेश्वर जोशीलाई डाकी नीजलाई आफ्नो 'बिशाल हिमालय भित्रको नेपाल राज्य संगठन गरी आर्य धर्म स्थापनको अभिप्राय' जाहेर गरि बक्सियो। आयधर्म संरक्षक राजपूत राजाको त्यस महान अभियानमा आफूले समेत सहयोग गर्ने अवसर पाएकोले क्षुद्र स्वार्थको विचार नराखी विशाल हृदयका मोक्षेश्वर जोशीले आफ्नो समस्त इलाका र अधिकार श्री ५ पृथ्वीनारायणशाह लाई चढाएका थिए। त्यस्को फलस्वरूप श्री ५ पृथ्वीनारायणशाहले पनि ठूलो इज्जतका साथ ताम्रपत्रको सनद गरी सुब्बा होमनाथका पूर्वज पुण्यस्मृति श्री मोक्षेश्वर जोशीका पुत्र श्री गंगाधर जोशी खतिवडालाई पुनः कल्लेरीको शासनाधिकार यथावत् कायमगरी तल लेखिएको लाल मोहर बक्सियो।

× × स्वस्तिश्री गिरिराज चक्र चूडामणी नर नारायणेत्यादि विविध विरूदावली विराजमान मानोन्नत श्रीमान् महाराज धिराज श्री श्री श्रीमत् पृथ्वीनारायण शाह शाह बहादुर समशेर देवानां सदा समर विजयीनाम्।

आगे कल्लेरीका गणपति जोशी, लक्ष्मीपति जोशीका अंशको बितलब बमोजिम मोक्षेश्वर जोशीले हाम्रा हजूरमा चढाई गएको गंगाधर जोशी कन खानी पानि पंचखत समेत बितलब ताम्र पत्र गरी पुरानै ताम्रपत्रका सरह बक्स भयो। इति सम्बत् [illegible] सुदि [illegible] रोज [illegible] मुकाम राजधानी शुभम्। × ×

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

काशीमै आए। देव समसेरकी महारानी श्री कर्मकुमारी देवी श्री ५ बलेट महाराजकी शाहजादी थिइन्। नीजले अधि नेपाल छँदा सुब्बा होमनाथलाई भाई तिहारमा टीका लाएकी थिइन्। त्यसै कारण काशी आएका वखत आफ्नी महारानीका आग्रहले देवसमशेरले सुब्बा होमनाथ सँग भेट गरे। त्यसबेला सुब्बा होमनाथले पदच्यूत हुनाले खिन्न मन भएका श्री देव समशेरलाई पुनः नेपाल फर्कने सल्लाह र त्यसमा सहायता दिने बचन दिएका थिए। त्यस परामर्शका नौ दश महिना भित्रै सन् १९१३ मा श्री ५ धिराज पृथ्वी वीर विक्रमको सवारी साथ श्री चन्द्र समशेर तराई झरेका र धिराजको सवारी मीछाखोरी पुऱ्याई आफू दिल्लीमा भायसराय लार्ड कर्जन द्वारा आयोजित ऐतिहासिक दिल्ली दरवारमा सम्मिलित हुनगएका थिए।

त्यसै अवसरमा देव समशेर तथा सुब्बा होमनाथले मिछाखोरी गई धिराज पृथ्वी वीर विक्रमबाट आफ्नो पद वहाली गराई चन्द्र समशेरलाई भारतमै हल्याउने अभिप्रायले मिछाखोरी पुग्ने कार्यक्रम बनाए। तर तिनीहरूको त्यो कुरा विश्वाशघाती अमर जंगले चन्द्र समशेरमा पुऱ्याएकोले चन्द्र समशेर हाम्फिदै मिछाखोरी पुगे। पछी उनले त्यस कुराको लेखा पढी गरी काशीका न्यायालयमा देव समशेर र सुब्बा होमनाथ माथि नेपालेश्वरको गाथगादी ताक्ने मुद्दा चलाएका थिए। पछीत्यो मुद्दा खारेज भयो। मुद्दामा विफल भएका चन्द्र समशेरले तत्कालिन भारतका अंग्रेज सरकारमाथि दवाव पारि उदयपुर, बुँदि, काश्मीर तथा बनारस राज बाट पाइने सुब्बा होमनाथको भत्ता वन्द गराएका थिए। सन् १९१२ मा मिछाखोरी जाने प्रोग्राम भएपछी सुब्बा होमनाथले आफ्ना ग्रन्थहरू विश्वराज हरिहर शर्मा नामका प्रकाशक लाई १६०) प्रतिमासमा प्रकाशित गर्ने अधिकार दिएका थिए।

मिछाखोरीको त्यो प्रयत्न विफल भएपछी र मुद्दाबाट अवकाश पाएपछी नीज सुब्बा होमनाथले आफ्नो त्यो विश्वराज हरिहर शर्मालाई प्रकाशित गर्न दिएका पुस्तकको अधिकार आफ्नै हातमा लिएर "सुब्बा होमनाथ केदारनाथ, मालिक हितैषी कम्पनी" का नामले बडाबजार कलकत्तामा र काशीमा कार्यालय स्थापित गरी भाषाका पुस्तकहरू प्रकाशित गर्ने व्यवसाय प्रारम्भ गरे।

त्यो कार्यालयले आज सम्म नेपाली साहित्यको प्रकाशन गरी नेपालीहरूको सेवागरीरहेको छ। यस्ता प्रकारसँग आफ्नो यश पृथ्वीमा राखी नेपालीहरूको अरूपनि सेवा गर्नेइच्छा गर्दा गर्दै श्री सुब्बा होमनाथ उपाध्यायको सम्बत् १९८४ साल वैशाख शुक्ल पंचमी तिथिका दिन काशीमै देहावसान भयो।

त्यसपछी सुब्बा होमनाथका एकमात्र पुत्र श्री केदार नाथ उपाध्याय खतिवडाले पिताद्वारा स्थापित त्यस प्रकाशनकार्यलाई उत्तरोत्तर बढाऊँदै लगे। नीजले पनि अनेक ग्रन्थहरूबनाए। जस्तै–महाभारत १६ पर्व श्री मद् भागवत ११ स्कन्ध, श्री मद्भागवत् गीता आदि। यस्का अतिरिक्त इनले अरू अनेक फुटकर कविता हरू पनि रचना गरेका थिए। इन्का ग्रन्थहरूको प्रशंसा नेपालका श्री ५ महाराजधिराज, श्री ३ महाराज, र प्रायः सबै भाई भारदार तथा नेपालका अनेक ठूला २ विद्वानहरू र समस्त नेपाली जनत हरू एवं संसार प्रसिद्ध विद्वानहरू मध्ये लण्डनका टर्नर, जर्मनीका हारमनजेकोवी, फ्रान्सका सिल्वन लेवी तथा भारतका गुरूदेव रवीन्द्रनाथ टैगोरले गरेका छन्। कलकत्तामा भएको गीता प्रदर्शनीमा पनि यस्ले सर्वोत्तम स्थान पाएको थियो। नीज केदारनाथको मृत्यु सन् १९४६ माघ दशमीका दिन आफ्नो मौजा दिधिया (धरहरा) गएका वेलामा त्यहीं भयो। इन्का ५ भाई छोराहरू मध्ये जेठा कृष्ण प्रसादको मृत्यु बाल्यकालमै भएको थियो। माहिला भैरव प्रसादको मृत्युपनि सन् १८४४ मा अचानक हृदयगती रूक्नाले भयो।

भैरव प्रसाद पनि बड़ा स्वाभीमानी तथा नेपालमा राणाशासनका विरोधी थिए। सन १९३७ दिसम्बर महिनामा श्री नेपालेश्वर बंशोद्भव श्री ५ रामराजा साहेबले रामनगर ( चंपारन ) राज्यको अभिभारा पाए। उन्ले आफ्ना मित्र भैरव प्रसाद उपाध्यायलाई काशीबाट रामनगर झिकाई आफ्नो प्रधान सचिव बनाएका थिए। इनै भैरव प्रसादका प्रयत्नले द्वितीय विश्वसंग्रामका औसरमा जापानी राजदूत ( कौन्सीलले ) इनलाई नेपालमाथी आक्रमण गर्न प्रसस्त शस्त्रहरू दिनेसम्म पनि बचन दिएका थिए।

दुर्भाग्यले त्यसैबेला रामनगर परिवारमा झंझट अंश वंडाको किचलो चलनथाल्यो। त्यसै किचलोले

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

तर दैवको लीला विचित्र छ, तिनीहरूलाई त्यहाँ कुनै राणाको अनुचरले देखेछ र स्थानीय दारोगाको मदतले तिनी हरूलाई पक्रँदा त्यो रात दुवै भाइले गोरखपुरका हवालातमा बिताउनु पर्‍यो। भोलीपल्ट गोरखपुरका जिलाधीशका कचहरीमा तिनीहरू उपस्थित गरिए। जिलाधीशले राजनैतिक कैदिलाई त्यसरी समात्नु अवैध हो भनी त्यस दारोगालाई ५००) रु० हरजाना स्वरूप ति दुवै भाइलाई दिलाए र मुक्त गराए। त्यसरी मिलेको ५००) रूपियाले ती दुवै भाईलाई ठूलो आड भयो। त्यसपछी दुवै भाई कलकत्ता गए। आफ्ना कलकत्ता प्रवास कालमा सुब्बा होमनाथले बंगाला भाषामा "वर्तमान नेपाल र इतिवृत्त" भन्ने एउटा पुस्तिका प्रकाशित गरि प्रचार गरेका थिए। केही कालपछी दुवै जना उदयपुर राज्यमा गै बसे। तर स्वाधीन विचार भएका सुब्बा होमनाथ लाई उदयपुर राज्यको सीमित वातावरण मन परेन र काशी फर्के।

तिनताका सुब्बा होमनाथलाई नीजका भरण पोषणको निम्ति उदयपुर राज, बुंदीराज, काश्मीरराज र बनारस राज गरी ४ राजबाट महिनाको ३००) भत्ता मिल्दथ्यो। तत्कालीन दरभंगाका महाराजा लक्ष्मणेन्द्र सिंह सँग पनि सुब्बा होमनाथको पहिले तराईतिर बडा हाकिम भएर आएका बखतको मित्रता थियो, निजले सोही मित्रतालाई संझी सुब्बा होमनाथ लाई आफ्ना राज्यका दिघिया मौजाको १०० बिघा जमीन लेखि दिएका थिए। सम्बत् १९४२ मा धीर समशेरका पुत्र बीर समशेरले आफ्ना काका तत्कालीन मुख्तियार श्री ३ महाराज रणोद्दीप सिंहको हत्या र जंग बहादुर आदि ६ भाइ खलकको कत्लेआम गरी नेपालामात्य पदमा स्वयं बहाली भए। त्यस कत्लेआममा भागेर जंग बहादुरका छोराहरू श्री रणवीर जंग, श्री जित जंग, श्री पद्मजंग आदि काशीमा आए। तिनीहरूको काशी प्रवासकालमा सुब्बा होमनाथ सँग भेट भयो। तिनीहरूसित भेट भए पछी नेपालमाथि सशस्त्र हमला गर्ने फेरी एउटा आयोजन बन्यो। त्यस आयोजनानुसार सुब्बा होमनाथले सम्बत् १९४४ मा नेपाल तराइको जलेश्वर भन्ने स्थानमा आक्रमण गरे। भैरव बहादुरले हनुमान नगर तथा शेर बहादुरले वरेबामा प्रवेशगरी आक्रमण गरे। सुब्बा होमनाथ तथा उन्का साथीहरूले त्यसरी जलेश्वर, हनुमान नगर र वरेवाको कब्जा गरेको र त्यस तर्फका जनतालाई आफुतर्फ मिलाई अनेक दिन आफ्नो हुकुम चलाएको थाहा पाएर वीर समशेर थर्कायमान भए। अतएव उनले पुरानो मित्रताको संझना गराई सुब्बा होमनाथलाई आफुमा मिल्ने आमन्त्रण गरेका थिए। परन्तु स्वाभिमानी सुब्बा होमनाथले त्यस आमन्त्रणलाइ लत्याई उनैलाई रणक्षेत्रमा आउन आह्वान गरे। तिन्को त्यस्तो निर्भिकता लाई देखि वीर समशेरले होमनाथको त्यस दलको नाशगर्न नेपालका तीन सुशिक्षित र सुसज्जित पल्टन भैरवदल, गोरखदल तथा कालीदललाई पठाए। सुब्बा होमनाथले पनि स्वयं रणक्षेत्रमा अग्रसरभै आफ्ना दललाई सान्त्वनागरी वीरसमशेरका ति सैन्यहरू सित सामना गरे। परन्तु त्यस्मा बिफल भई इनी पुनः काशीमै फर्केर आए। त्यसैसाल फरवरी महिनामा भा भारतवर्षका तत्कालीन अंग्रेज भायसरायलाइ भेटन वीर समशेर भारतवर्ष आएका थिए। त्यस्बेला उन्को काशी पनि आउने विचार थियो। त्यसकुरालाई थाहा पाई जंगबहादुरका पुत्र रणवीरजंग र सुब्बा होमनाथले गोताखोरहरू द्वारा नीज वीर समशेरलाई गंगाजीको काखमा सुताउने विचार गरेका थिए। तर आफ्नो गुप्तिचर द्वारा यो कुरा थाहा पाएर वीर समशेर काशीनै न आई तत्काल नेपाल भागेका थिए।

यस घटनापछी सुब्बा होमनाथले असि (हथियार) लाई छोडी मसीलाई ग्रहण गरे। नीजले क्रमशः सम्बत् १९५३ सम्ममा महाभारत विराटपर्व, नृसिंह चरित्र, आदि रचना गरे। सम्बत् १९५४ मा विन्ध्यवासिनी प्रेस स्थापित गरी उपरोक्त ग्रन्थहरूलाई प्रकाशित गराए। तत्कालीन नेपालामात्य महाराज श्री ३ वीर समशेर र प्रायः तिन्का जम्मै भाइहरू ले सुब्बा होमनाथको विराट पर्व अवलोकन गरी त्यसकोनिकै प्रसंसा गरी विराट पर्वको भगवती स्तोत्रलाई कण्ठस्थ पारी पाठ गर्ने गरेका थिए।

त्यसै बीचमा सन१९०९ मा श्री वीर समशेर को मृत्यु भई नेपालामात्य पदमा देव समशेर बहाल भए। प्रधानामात्य श्री ३ महाराज देव समशेर राजभक्त प्रकृतिका मानिस थिए। नीजले आफ्ना शासन कालमा श्री ५ महाराजधिराजहरूको वास्तविक मर्यादाको स्थिरता ल्याउन गरेको प्रयत्नले उनी ६ महिना भित्रमै आफ्ना भाई चन्द्र समशेरको षडयन्त्रले हुत्तिनु पर्‍यो। पछी नेपालबाट पलायित देव समशेर पनि

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

उपोद्घात
१

१ महर्षि याज्ञवल्क्यसित भारद्वाज मुनिले रामायणको कथा सुनेको ।

२ शिवजी र सती देवी याज्ञवल्क्य कहाँ रामायण सुन्न आएको ।

३ सती देवी र शिवजीका सम्वाद, सतीले वनमा गै रामचन्द्रलाई छल्ने आज्ञा मागेको ।

४ सीताजीका विरहमा रामले वनका वृक्षहरूलाई अँगालो हाल्दा सती सीता रूपमा त्यहाँ आएको ।

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

गर्दा आफ्नो नेपाल आक्रमणको कुरा परे रहोस् राज परिवारके ठूला क्षति हुने संभावना देखिएकोले भैरव प्रसादले रामराजा साहेब तथा उन्का पुत्र श्री शिवराजा साहेबलाई मिलाई मिलापत्र गराए। त्यसबाट राज परिवारका प्रत्येक व्यक्तिलाई यथेष्ट अंश दिलाई सबैको चित्त बुझाएका थिए। त्यही ताका एक दिन अचानक हृदयगति रूक्नाले नीज भैरव प्रसादको काशीमा मृत्यु भयो। उन्को मृत्युमा श्री ५ रामराजा साहेबले नीजको घरमा पठाएको तार I lost my brother Friend and wisher ( मैले आफ्नो भाइ मित्र र शुभचिन्तकलाइ गुमाएँ) बाट तिनलाई कत्रो मर्मान्तक पीडा भएको रहेछ भनी बुझ्न सकिन्छ। नीजभैरव प्रसादको सहानुभूतिका निमित्त रामराजा साहेबकी रानी श्री ५ सीता महारानीले आफ्ना अंशको ६००८एकड जमीन दिएर तिन्का प्रति आफ्नो सहानुभूति प्रकट गरेकी थिइन्।

केदारनाथ उपाध्यायका तृतीय पुत्र वर्तमान कार्याध्यक्ष, सप्तशती भाषा श्लोक, देवी भागवत क्षेपक, रामायण क्षेपक, कोकशास्त्र तथा अनेक साना साना पुस्तक बाहेक नेपाल दिग्दर्शनका लेखक श्री रामजी उपाध्याय हुन्। दिल्ली प्रवासकालमा नेपाल दिग्दर्शन लाई हेरा क्रान्तिदूत स्वर्गीय नेपाल नरेश श्री ५ त्रिभुवन बीर बिक्रम शाहले ठूलो प्रशंसा गरी लेखकलाइ ६०००)–रू० पुरस्कार दिएर सन्मानित गरेका थिए। फेरी नीज रामजी उपाध्याय वर्तमान "विश्व नेपाली संघ" नामक संस्थाका सभापति पनि छन्. केदारनाथका काहिला पुत्र देवनाथ उपाध्यायको उदर रोगको पीडाले सन् १९४७ मा काशीमा देहान्त भयो। कान्छा गोपानाथ उपाध्यायले नेपाली राष्ट्रिय काँग्रेस लाई सहयोग दिइ देशमा स्वतन्त्रता ल्याउन ठूलो योगदान गरेका थिए।

सुब्बा टंकनाथ उपाध्यायले समस्त जीवन उदय पुरमा बिताएका थिए। निजका यामिनी प्रसाद र भवानी प्रसाद नामका दुई पुत्र थिए। यामिनी प्रसादको मृत्यु बाल्यावस्थैमा भएको थियो। भवानी प्रसाद नेपाली बंगला तथा संस्कृतका योग्य विद्वान थिए। काशीबाट इन्का सम्पादकत्वमा "सुक्ति सुधा" नामक एक संस्कृत मासिक पत्र प्रकाशित भएको थियो।

सन् १९२८/२९ मा पनि "तरूण गोर्खा" तथा "गोर्खा संसार" नामक पत्रमा इन्का ओजस्वी लेखले राणा हरूको निकैनै पोल प्रकाश गरेको थियो। इन्को देहावसान पनि सन् १९३९ मा काशी मै भयो। इन्का तीन छोरा मध्ये जेठा राजाराम शर्मा माहिल्ला, कृष्ण कुमार शर्मा, कान्छा नन्द किशोर शर्मा हिजोआज कलकत्तामा स्वतन्त्र व्यवसाय गरी बसेका छन्।

नेपाल दिग्दर्शनबाट उद्धृत



CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

* श्रीगणेशाय नमः *

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

# अथ रामायण-उपोद्घात

सुब्बा होमनाथात्मज तनयेन पं० रामजी उपाध्याय कृत

मंगलाचरण, प्रयागराज-महिमा, भारद्वाज-याज्ञवल्क्य सम्वाद

गौरीपुत्र गणेशको मनमहाँ * अत्यन्त भक्ती गरी।
राम्नाम्को महिमा पढ्छन् सब छ जो * कानूलाइ अमृत् सरी॥
काशीका सब देवदेवीहरूले * संकष्ट सब्को हरून्।
श्री राम्को महिमा भजन् गरि सबै * संसारसागर् तरून॥
सीताराम चरित्ररूपी बनका * हुन् मुख्य यात्री जति।
त्यस्ता श्री हनुमान् र वाल्मिकिजिमा * गर्छु म पैले स्तुती॥

—...o0o...—

श्री राम्का चरणारविन्दयुगको * मन्मा ठुलो ध्यान् गरी।
बस्थ्या नित्य प्रयागका तटमहाँ * प्रख्यात् भरद्वाज् ऋषि॥
मेला लाग्छ प्रयागमा अति ठुलो * हर्साल माघ् मासमा।
स्नान् दान् पूजनको अपार् छ महिमा * यो तीर्थको शास्त्रमा॥ १॥
सोहीकारण भन्दछन् सबजना * फेर् तीर्थराज् यस्कन।
स्नान् गर्नाकन याज्ञवल्क्य मुनिजी * आया त्यहाँ एक् दिन॥
भारद्वाजजिले ति पूज्य मुनिको * आतिथ्य सत्कार् गरी।
सोध्या श्री रघुनाथको शुभ कथा * तन्मन् प्रभूमा धरी॥ २॥
हे ब्रह्मन्! सब शास्त्र वेद र पुराण् * वेदान्त औ दर्शन।
श्री राम्को महिमा अपार छ भनी * भन्छन् सबै दिन्दिन॥
सर्वैश्वर्य स्वरूपि शंकर समेत् * काशी महाँ हर् घडी।
श्री रामको जप गर्नु हुन्छ मनमा * अत्यन्त भक्ती गरी॥ ३॥
मानिस् देखि लिएर कीटतकका * जो जो जती जीव छन्।
मर्दा काशीमहाँ ति अन्त्य घडिमा * मोक्षै समेत् पाउँछन॥
गर्छन् शंकर रामको सदुपदेश * यो क्षेत्रमा हर्घडी।
मुक्तीक्षेत्र तसर्थ यो हुनगयो * प्रख्यात विश्वैभरी॥ ४॥
छोरा भै दशरथ्जिका हरि जउन् * जन्म्या अयोध्या महाँ।
पितृवाक्यमहाँ रह्या दृढ सदा * भै सत्यवादी तहाँ॥
सीताका विरहाग्निले ति प्रभुले * बन्मा ठुलो दुख् सह्या।
रावण् मारि उतारि भार् पृथिविको * फेरी परम्धाम् गया॥ ५॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

उपोद्घात
२



१ पार्वतीको तपस्यादेखि सन्तुष्ट भै शिवजीले दर्शन दिएका।

२ शिवजीको तपस्या भंग गर्नलाग्दा कामदेव भस्म भएको।

३ पार्वतीको कन्यादान लिन शिवजी जन्तीका साथ हिमालय पर्वत कहाँ गएका।

४ पार्वतीले शिवजी सँग रामचरित्र सुन्ने प्रार्थना गरेको।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
* सती जी द्वारा राम परीक्षा, सती राम सम्बाद *

लीला गर्न भनेर ती प्रभुजिले * औतार् लियेको भई ।
वास्तव् रुप प्रकट् गरुँ यदि भन्या * होवस् रिसानी कहीं ॥ १३ ॥
मौका चुक्न गया पनी त पछितो * होलाकि मन्मा भनी ।
सारै क्षुब्ध भएर शंकर तहाँ * वस्थ्या यही सब् गुनी ॥
चिन्तामग्न भई बस्या शिव यता * श्री रामजीले उता ।
फेरी दण्डक बनमहाँ बध गर्‌या * मारीचलाई तदा ॥ १४ ॥
रावण्‌ले पनि सोहि औसर महाँ * सीताजिलाइ हर्‌यो ।
पत्नीका विरहाग्निले प्रभु महाँ * संकष्ट साह्रै पर्‌यो ॥
यस्तो दृश्य ति रामको शिवजिले * देखी लियाथ्या जसै ।
सारै दुःखि भएर शंकरजिले * आँसु गिराया तसै ॥ १५ ॥
श्रीराम्‌को "जयहोस्" भनी शिवहिंडे * फेरी सतीले पनि ।
माया रुप् नर रामलाइ नचिन्ही * यो बात सोधिन् अनि ॥
हे स्वामी ! जुन राम्‌कनै हजुरले * ईश्वर् इनै हुन भनी ।
भन्नूभो, प्रभुहुन् तिनैकि अथवा * छन् राम अर्का पनि ॥ १६ ॥
यस्ता बात सुनेर शंकरजिले * भन्नूभयो यो तहाँ ।
मेरा ब्रह्म त हुन् इनै बुझ प्रिये ! * क्वै छैन अर्को यहाँ ॥
यस्तो निश्चय वाणि शंकरजिको * देवी सतीले सुनी ।
शंका धेर् मनमा हुंदा शिवजिमा * यो वात् सुध्याइन् अनि ॥ १७ ॥
हेस्वामी!किनराम्‌सिताजिकनखूब् * संझेर व्याकुल भई ।
वृक्षै गुल्म लतादिलाइ अहिले * हाल्छन् अँगालो गई ॥
कामी हौ तिमि भक्त ईश्वर दुबै * एकै समानका भनी ।
लागिन् हाँस्न सती र फेरि शिवले * भन्नू भयो यो अनी ॥ १८ ॥
मेरा राम् प्रभु बन्‌महाँ यसघरी * कामुक् सरीका बनी ।
लीला गर्नु हुंदैछ दुःखित भई * आदर्श राखौं भनी ॥
साक्षात् ब्रह्म भनेर जान तिमिले * श्री रामलाई यहाँ ।
अर्को क्वैपनि छैन राम सरिको * ईश्वर् जगत्‌भर् महाँ ॥ १९ ॥
यस्तो बात सुनेर शंकरजिको * भान्छन् सतीजी पुनः ।
हे शंभो! म छकाइ दिन्छु अहिल्यै * बन्मा गई राम् कन ॥
शंकर्‌ले पनि भन्नुभो सुन प्रिये ! * मेरा ति ईश्वर् कन ।
मोहै पार्न सक्यौ भन्या म कहिल्यै * बस्है भनी मान्दछु ॥ २० ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

राम् हुन् एक तिनै किवा अरूपनि * छन् कोहि राम् त्यो सब ।
आज्ञा गर्नु हवस् ऋषे ! मकन भट् * चित्तै बुझाई अब ॥
यस्तो प्रश्न ति याज्ञवल्य ऋषिले * सुन्नु भएथ्यो जसै ।
भारद्वाजजिलाइ सान्त्वन दिंदै * भन्नू भयो यो तसै ॥ ६ ॥
जान्नू हुन्छ मुने ! समस्त हजुरै * श्री रामको जीवनी ।
संसार्को उपकार निम्ति अहिले * सोध्नू भयो तै पनी ॥
साह्रै गुप्त रहस्य यो छ त पनि * इच्छा हजुर्को हुँदा ।
भन्छू श्री रघुनाथको शुभ कथा * संपूर्ण मुक्ती प्रदा ॥ ७ ॥
शंका यै अघि दक्षपुत्रि सतिको * मन्मा उठेथ्यो जब ।
भन्नूभो शिवले त्यहाँ जुन कुरा * शंका मिटाई सब ॥
सम्वाद् सोहि सती र शंकरजिको * भन्छु म अैले यहाँ ।
सुन्नू होस् मुनिराज ! यो शुभकथा * एकाग्रभै मन्महाँ ॥ ८ ॥

सती परिचय रामपरीक्षा, सीताराम सम्वाद

ब्रह्मापुत्र सनन्दनादिक गरी * दश्जन् महर्षीहरु ।
अङ्गीरा र वशिष्ठ, अत्रि मरिची * पूलस्त्य रौद्रै अरु ॥
नारद् श्री पुलहै र दक्षजि भया * प्रख्यात संसार् महाँ ।
छोरी दक्ष प्रजेशका हुनगया * शाठीजना फेर् तहाँ ॥ ९ ॥
तिन्मा तेह्रवटी मरीचि सुत श्री * कश्यप्जिलाइ अनि ।
सत्ताइस्वटि चन्द्रमाकन तथा * दश् धर्मलाई पनि ॥
द्वी द्वीटी भृगु तार्क्ष्यमा र शिवमा * जेठी सतीजी दिया ।
सोही श्री सति साथ शंकर सदा * कैलाशमा वस्तथ्या ॥ १० ॥
एक्दिन् श्री सतिलाई ली सँगमहाँ * त्रेतायुगैमा जब ।
शंकर् पाल्नु भयो अगस्ति ऋषिका * आश्रम्विषे फेर् तब ॥
पूजा गर्नुभयो अगस्ति मुनिले * ती दम्पतीको तहाँ ।
आज्ञाले शिवको सुनाउनु भयो * रामायणै तिन्महाँ ॥ ११ ॥
रामको त्यो महिमा सुनेर शिवजी * अत्यन्त हर्षित् भई ।
कैलाश् पाल्नुभयो सतीजि सँगमा * नन्दी उपर्मा चढी ॥
क्यै कालमा जब भार हर्न हरिले * औतार रामको लिया ।
आज्ञाले दशरथ्जिको बन पसी * लीला ति गर्दैथिया ॥ १२ ॥
सारा यो घटना बुझी शिवजीका * मन्माभयो चिन्तन ।
कस्ता रीत सितले गइकन गरुँ * श्री रामको दर्शन ॥

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
हेनू होस् प्रभुले सरोज सरिको * आँखा उघारी कन ॥ २८ ॥
हे राम्! हे करूणानिधान्! हजुरको * जो ज्ञान पैले थियो।
के त्यो पत्नि वियोगले यसघरी * सारा हराइ गयो ॥
फेरी इ प्रिय भाइ लक्ष्मणजिको * बात्लाई उल्टो बुझी।
सीतामात्र रटेर यो बनमहाँ * राज्हुन्छ व्यर्थै कती ॥ २९ ॥
जाऊँ पंचवटी भनेर सतिले * भन्दी भईथिन् जब।
हाँस्दै केहि मुसुक्क राम प्रभुले * भन्नू भयो यो तब ॥
हे मातर्! गरि दण्डवत् चरणमा * पैले हजुर्को अब।
यौटा बिन्ति म गर्दछु हजुरमा * सुन्नू हवस् त्यो सब ॥ ३० ॥
सेवक् हूँ शिवको तथापि किन यो * गर्नू भयो जाँच् यहाँ।
इच्छा क्यान भयो मलाइ अहिले * छल् गर्न यो बन् महाँ ॥
एक्लै श्री शिवलाइ छोडि अहिले * सीताजिको रूप् धरी।
के काम्ले गरि व्यर्थ आउनुभयो * छल्न्या इरादा गरी ॥ ३१ ॥
यस्तो कोमल वाणि त्यो सतिजिले * राम्को सुनीथिन् जब।
आफ्नो रूप लिई भनिन् प्रभुजिका * जाई चरण्मा तब ॥
हे योगेश्! प्रभुलाइ छल्न भनि यो * सीताजिको रूप् धरी।
आयाँ यो बनमा परन्तु अहिले * हार्दीभ्याँ यसघरी ॥ ३२ ॥
शंकर्का संगमा घमण्ड बहुतै * मैले गर्याँ एक्दिन।
स्त्रीको हद्कन दूर गर्न शिवको * आज्ञा भयो यो पुनः ॥
हे देवी! प्रभुलाइ छल्न कहिल्यै * इच्छा न ल्यौ मन्महाँ।
भन्दामा पनि हद् गरेर शिवले * भेज्नूभयो फेर् यहाँ ॥ ३३ ॥
सारा सत्य रहेछ यो रघुपते! * प्रत्यक्ष थाहा भयो।
शंका औ अभिमान् अघी जुन थियो * मेरा सबै त्यो गयो ॥
हे नाथ्! हे रघुनाथ्! मता शिवजिकी * शक्ती थियाँ, यस्घरी।
छल्नै लाइ भनेर फेर् प्रभुकनै * आयाँ सिताह्रूप् धरी ॥ ३४ ॥
स्यौताले यस रूपलाइ न चिनी * मोहित् भयाथ्या सब।
मेरो यो अभिमान् जलाइदिनुभो * सारा प्रभुले अब ॥
पश्चात्ताप गरी बसिन् जब सती * अत्यन्त लज्जित् भई।
आफ्नो गुप्त रहस्य भन्नुपनि भो * साम्ने प्रभूले गई ॥ ३५ ॥
हे देवी! इ तपाइँका वरिपरी * वृक्षादि जो छन् यहाँ।
पूर्वजन्म महाँ सबै ऋषि थिया * तप गर्दथ्या बन्महाँ ॥
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
श्री राम् छन् परिपूर्ण अव्यय सदा * छन् सावधान् तिन्कन ।
व्यर्थमा तिमिले छकाउँछु भनी * इच्छा गर्‍यौ यो किन ?॥
झोक्काझोक्कि भयो यही रित सँगै * ती दम्पतीमा जब ।
आज्ञा माग्दिभइन् ति देवि सतिले * शंकर्‌जिका सँङ् तब ॥ २१ ॥
शंकर्‌ले पनि भन्नुभो सुन प्रिये ! * मेरो न लागे भर ।
औले गैकन बन् महाँ प्रभुजिको * आफैं परीक्षा गर ॥
स्वामीको यतिवात् सुनेर ति सती * तत्काल् सिताजी बनिन् ।
स्वामीदेखि बिदा भएर विरही * राम्‌का आगडी गइन् ॥ २२ ॥
राम्‌ले ति सति तर्फ दृष्टि नगरी * रोएर मात्रै रह्या ।
हा सीते ! भनि नाम् जपेर उनकै * बन् बन् ति घुम्दै थिया ॥
देखी ती सतिरूप् सिताकन तहाँ * लक्ष्मण्‌जिले राम् कन ।
भन्छन् नाथ ! सिताजि पाइ किन फेर् * हो शोक गर्नु पुनः ॥ २३ ॥
यस्तो बात सुनेर लक्ष्मणजिको * रामचन्द्रजीले पनि ।
ज्यादै झोक्किइ भाइका संगमहाँ * भन्नू भयो यो अनि ।
हे भाइ ! तिमि भाइ भैकन पनी * शत्रू सरीको बनी ।
दिन्छौ आर्ति मलाइ जानकिजि छन् * तिम्रा सँगैमा भनी ॥ २४ ॥
सीताजीकन देखि सन्मुख तहाँ * त्यो वाणि राम्‌को सुनी ।
आश्चर्यै भइ भाइ लक्ष्मण तहाँ * शोच् गर्न लाग्या अनी ॥
श्री राम्‌लाइ असह्यभो विरहले * उन्माद् भयो मन्‌महाँ ।
तस्मात् जानकिले स्वयं इनिकनै * संझाउनेछन् यहाँ ॥ २५ ॥
यस्तो बात बिचारि लक्ष्मणजिले * मौनावलम्बन् गर्‍या ।
द्यौताले ति सिताजि देखि बनमा * आश्चर्य मान्दा भया ॥
रावण्‌देखि छुटेर जानकि अहो ! * आइन् कसोरो यहाँ ।
ब्रह्माले पनि सो रहस्य न बुझी * मोहित् भया मन्महाँ ॥ २६ ॥
मायाका पति रामले कुन कुरा * जानी नसक्तू थियो ।
थाहा क्यै न भएसरी प्रभुजिले * खूब् शोक् गरी बक्सियो ॥
सीतारूपि सती अगाडि सरि फेर् * छल्न्या इरादा गरी ।
केही डर् मनमा नमानि तिनले * श्री रामको त्यस्‌घरी ॥ २७ ॥
पक्री हात भनिन् प्रभो ! हजुरको * देखेर चालाकन ।
ज्यादै दुःखित छू यहाँ म अहिले * व्याकुल छ मेरो मन ॥
आयाको शरणार्थिनी हजुरको * यो दासि सीताकन ।
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
बोको लाश् सतिको पिठ्य् विषमहाँ * हिंड्नू भयो श्री शिव ॥ ४३ ॥
सारा अंग गलेर फेरि सतिका * एक् एक टुक्रा झरी ।
एकाउन्न ति शक्ति पीठ्हरू बने * सम्पूर्ण भारत् भरी ॥
पत्नी देखि वियोग् हुंदा शिवजिमा * वैराग्य बढ्दै गयो ।
सोही कारण रामनाम जपको * आरंभ गर्नू भयो ॥ ४४ ॥

शिव वैराग्य, पार्वती जन्म र तपस्या

श्री शंकर् कन भक्तिमा अटल औ * वैरागि देखीकन ।
सन्मुख्मा गइ भन्नुहुन्छ भगवान् * श्री रामरूप् भैकन ॥
हे शंभो ! म उपर् भया हजुरको * श्रद्धा ठुलो यस्घरी ।
माता पार्वतिलाइ झट् हजुरले * गर्नोस् विहा क्यैगरी ॥ ४५ ॥
अन्तर्ध्यान् हुनुभो जसै ति रघुनाथ् * संझाइ शंकर् कन
सप्तर्षीकन भन्नुभो शिवजिले * यो वात डाकीकन ॥
हे ब्रह्मन् ! हिमवानका घर गई * मेरा निमित्तै भनी ।
कन्या माग्नुहवस् तपाइँहरूले * दिन्छन् खुशीले तिनी ॥ ४६ ॥
यस्ता बात सुनी अरून्धति सहित् * सप्तर्षिहेरू पनि ।
आकाश् मार्गगरी गया सब जना * देदीप्यमान्का बनी ॥
साक्षात् श्री जगदम्बिका भगवती * अफ्ना घरैमा पनी ।
जाने ति हिमवानले जब तहाँ * छोरी भयाकी भनी ॥ ४७ ॥
विष्णूलाइ म दिन्छु पार्वति भनी * शोची रह्याका थिया ।
कन्यार्थी भइ शंभुका ति ऋषिगण् * सोही घरीमा पुग्या ॥
सत्कार् धेर गरी हिमालयजिले * सोद्धा भयाथ्या जसै ।
आज्ञा शंकरको सुनाइ तिनले * भन्दा भया फेर् तसै ॥ ४८ ॥
हे राजन् ! शिवकी सती अघिथिइन् * श्री दक्षपुत्री जउन् ।
सोहीनै यस जन्ममा हजुरकी * पुत्री भई जन्मिइन् ॥
माग्दा शंकरले हजुर् कि दुहिता * आयौं इ हामी सब ।
तस्मात् शंकरलाइ नै हजुरकी * पुत्री दिनूहोस् अब ॥ ४९ ॥

तारकासुरको कथा र कामदेव भस्म हुनु

यस्ता बात सुनी हिमालय पनि * अत्यन्त हर्षित् भया ।
दिन्छू शंकर लाइ पार्वति भनी * तिन्मा सुनाइ दिया ॥
सोही काल विषे कुनै असुर एक् * नाम् तारकासुर् भनी ।
प्रख्यात् भैकन गर्दथ्यो तप ठुलो * ब्रह्माजिको त्यो अनि ॥ ५० ॥
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

कर्मको फलत्याग् गरेर तिनले * निष्काम भक्ती गर्‍या ।
मेरो निश्चय हुन्छ दर्शन भनी * विश्वाश मन्मा धर्‍या ॥ ३६ ॥
त्यागी सब् अभिमान पूर्ण रूपले * आशा गरि मुक्तिको ।
बस्छन् बृक्ष लता भइकन इनी * मानेर ज्यादै निको ॥
सीताको निहुंपारि खोज्दछु इनी * लाई म जंगल् महाँ ।
इच्छा पूर्ण गरौं भनेर इनको * हाल्छु अँगालो यहाँ ॥ ३७ ॥
साँचो संझनुहोस् यहाँ सब कुरा * मैले भन्याको जति ।
झूटो हुन्न कदापि यो सब कुरा * बुझ्छन् उमाका पति ॥
श्रीराम्को यति बात् सुनेर सतिको * अज्ञान नाश् भो जब ।
आज्ञा लीकन रामको सति फिरिन् * कैलाश् महाँ झट् तब ॥ ३८ ॥

शिव विरक्ति सती मरण र पार्वती जन्म र तपस्या

कैलाश्मा पुगि शंभुलाइ सतिले * ध्यान् मग्न देख्तीभइन ।
तत्काल् गैकन स्वामिका चरणमा * पश्नेर विन्ती गरिन् ॥
शंकरले पनि देखि तिन्कन तहाँ * केही नबोली कन ।
ध्यानैमा रहनू भयेर मनमा * शोच्नू भयो यो पुनः ॥ ३९ ॥
मेरा इष्ट उपास्यदेव गुरुका * सँङ्मा अहो! छल् गरी ।
ठूलो पाप गरिन् इ देवि सतिले * जानी बुझि यस्घरी ॥
सीताको प्रतिरूप धारण गरिन् * देवी सतीले जब ।
मेरा निम्ति सिताजिकै सरी भइन् * इ पूजनीया अब ॥ ४० ॥
तस्मात् इन्सँग गर्नु हुन्न सहवास * भन्ने मनैमा धरी ।
मातृभाव गरेर शंकरजिले * राख्नू भयो त्यस् घरी ॥
शंकर्को बुझि भाव त्यो सतिजिको * मन् क्षुब्ध साह्रै भयो ॥
सोही कारण दक्ष यज्ञ विचमा * जाने पनि मन् गयो ॥ ४१ ॥
स्वामीको अपमानको निहुं भ्ई * हाम्फालि आगो महाँ ।
स्वामी श्री शिवको जपेर शुभनाम् * त्याग्दी भ्इन् प्राण् तहाँ ॥
पत्नी श्री हिमवान्जिकी तहिं कनै * नाम् मेनकाकी थिइन् ।
तिन्मा पार्वति नामले प्रकट भै * सो पाप धोइलिइन् ॥ ४२ ॥
संसार्को सुखलाइ केहि न गनी * छोडेर घरवार् पनि ।
पाउँ शंकरलाइ नै पति भनी * तप गर्न लागिन् उनी ।
भन्नभो सब बात यो शिवजिमा * नारद् पुगेले जब ।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
बस्नेछन् इ अनङ्ग भै सबमहाँ * हाला ठुलो गौरव ॥ ५८ ॥
फेरी द्वापरमा हुनेछ हरिको * औतार पृथ्वी महाँ ।
मिल्लान् इ तिमिलाइ कृष्णसुतभै * प्रद्युम्न नामूलेतहाँ ॥
बस्नू गै तिमि सम्बरासुर कहाँ * मायावती नाम् धरी ।
भन्नेछन् तिमिलाइ यो सब कुरा * नारदजिले त्यस् घरी ॥ ५९ ॥

पार्वती बिवाह

यस्ता बात् सुनि शंभुको रति गइन् * हर्षित् भई घर् महाँ ।
आज्ञा श्री रघुनाथको स्मरण भो * फेर् शंभुलाई तहाँ ॥
दिन्छू दर्शन पार्वतीकन भनी * मन्मा बिचारी कन ।
यौटा षोडश बर्षको बटु भई * तिन्को परीक्षा लिन ॥ ६० ॥
बन्मा गैकन पार्वतीकन तहाँ * श्री शंभुले भन्नूभो ।
इच्छा कुन् मनमा लिएर तिमि यो * गछ्र्यौ तपस्या अहो! ॥
रूप्को निम्ति भनौ भने पनि तिमी * अत्यन्त छौ सुन्दरी ।
फेरी शंकरको निरन्तर तिमी * नाम् जप्तछ्यौ यस् घरी ॥ ६१ ॥
शंकर्ता घसि भस्म अंग भरिमा * मत्ता दिगम्बर् बनी ।
खाई भाङ धतुर पागल समान् * घुम्छन् जहाँ औ तहीं ॥
हात्तीको चमडा लगाइ तनुमा * बस्छन् श्मशान्मा सदा ।
फेरी भूत पिशाच प्रेत सँगमा * * राख्छन् इनी सर्वदा ॥ ६२ ॥
तस्मात् इ शिवको नराख मनमा * इच्छा तिमी यस् घरी ।
तिम्रो लायकता खडाछु म यहाँ * औले बुझ्यौ सुन्दरी ! ॥
निन्दा पार्वतिले सुनेर शिवको * श्राप् गर्न आँटिन् जसै ।
आफ्नो रूप प्रकट् गरेर शिवले * भन्नू भयो यो तसै ॥ ६३ ॥
हे गौरी ! तिमि गै पिता सँगमहाँ * योबात् बताऊँ सब ।
आज्ञा माग अनी विवाह गरूँला * तिम्रा सँगैमा तब ॥
यस्ता बात सुनेर शंकरजिको * गौरी गइन् घर् महाँ ।
आमा बाबु र मान्यजन् सबमहाँ * सोबात् बताइन् तहाँ ॥ ६४ ॥
छोरीको सुनि बात् हिमालय पनि * अत्यन्त हर्षित् भया ।
फेरी लग्न विचार गर्न गुरुका * घरमा तुरन्तै गया ।
जन्ती ती शिवका हिंडे चउ दिशा * ज्यादै उडाइ धुलो ।
मङ्गल् बाद्य बज्यो अनेक् तरहका * उत्सव् भयो खूब् ठूलो ॥ ६५ ॥
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
त्यस्को त्यो तपदेखि हर्षित भई * ब्रह्माजि पाल्नू भयो ।
साम्ने तारकको गएर खुशिले * 'वर्माग' भन्नू भयो ॥
'के मागूं अब वर' भनेर मनमा * त्योदैत्यशोच्तै थियो ।
योगी छन् शिवजी सती मरणाले * भन्ने त सँझीलियो ॥ ५१ ॥
हुन्नन् सन्तति क्वै सदाशिवजिमा * भन्ने विचारी तहाँ ।
माग्दोभो वरदान दैत्य त्यसले * ब्रह्माजिका सँङ् महाँ ॥
हे ब्रह्मन् ! हनुहुन्छ तुष्ट त ममा * योवर् प्रदान्गर्नु होस् ।
शंकर्का सुत देखि बाहिक कुनै * जन्बाट मृत्यू न होस् ॥ ५२ ॥
ब्रह्मा पाल्नु भयो 'तथास्तु' भनि त्यै * वर्दान् दिई त्यस्कन ।
वरदान् त्यो भइ दैत्यले गरिलियो * बश्मा तिनैलोक्कन ॥
दुःखित् भै त्यसदेखि देवहरूले * ब्रह्माजिका सँङ् गई ।
सोध्या मृत्यु हुने उपाय त्यसको * अत्यन्त आतुर् भई ॥ ५३ ॥
भन्नू भो बिधिले ति देवहरूमा * गर्दै ठुलो सान्त्वना ।
गर्छिन् पार्वति देवहो ! शिवजिको * अत्यन्त आराधना ॥
आज्ञा भै शिवको ति पार्वति कनै * सप्तर्षिहेरू गई ।
माँग्दामा हिमवानले दिइसके * अत्यन्त हर्षित् भई ॥ ५४ ॥
फेरी के बुझि हो परन्तु शिवता * बस्नूभयो तप् महाँ ।
तस्मात् हे सुर हो ! तपाइँहरू गै * शंकर्जिको तप् तहाँ ॥
भंगै गर्दिनुहोस् र पार्वति सँगै * होला विवाहै जब ।
जन्मी श्री शिवका सुपुत्र तिनले * यो दैत्य मार्लान् तब ॥ ५५ ॥
ब्रह्माका यति बात् सुनी अमरगण् * अत्यन्त हर्षित् भया ।
शंकर्को तप भंग गर्न भनि फेर् * श्री कामदेव्जी गया ॥
आफ्नो शक्ति प्रयोग् गरी शिवजिमा * शरछोड् नलाग्याजसै ।
संसार्को स्थिति नै विचित्रहुनगो * सोही घरीमा तसै ॥ ५६ ॥
तेश्रो नेत्र उघार्नुभो शिवजिले * बिघ्नै हुंदा तप् महाँ ।
ज्वाला निक्लो खरानिनै हुन गया * श्री कामदेव्जी तहाँ ॥
तिन्की पत्नि रती गएर शिवमा * बिन्ती चढाइन् अनि ।
ब्रह्माको उपदेश् हुंदा मदनले * यो काम् गर्याको भनी ॥ ५७ ॥
यस्ता बात् रतिको सुनेर शिवले * संझाइ भन्नू भयो ।
दौताका उपकार निम्ति इनको * ज्यानै समेत् गैगयो ॥
तस्मात् ... * ... [illegible]
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized by Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
यौटा बालक दीव्यरूप बनिगो ❀ त्यो वीर्य देखि तहाँ ।
सेनाकापति स्वामीकार्तिक भनी ❀ प्रख्यात् भया लोक्महाँ ॥७३॥
मारे तारक दैत्यलाइ तिनले ❀ द्यौता सबै खुस् भया ।
स्वामी कार्तिकलाई आशिष दिई ❀ आफ्ना पदैमा गया ॥
एक्दिन् पूर्वकथा सितापतिजिको ❀ संझी लिईथिन् जसै ।
हात् जोरीकन गौरिले शिवजिमा ❀ बिन्ती गरिन् यो तसै ॥७४॥

शिव पार्वती सम्वाद र रामावतारको कारण

हे स्वामी ! जगदीश राम प्रभुका ❀ नामको कथा हो जुन ।
बिस्तार् पूर्वकले यथार्थ गरि सब् ❀ भन्नूहवस् त्यो पुनः ॥
यस्तो बात सुनेर पार्वतिजीको ❀ श्री शंभुले त्यस्घरी ।
यो बात् भन्नुभयो उमाकन तहाँ ❀ राम्चन्द्रकोध्यान्धरी ॥७५॥
अज्ञानी र अधर्मि दानव बढी ❀ अन्याय होला जब ।
द्यौता ब्राह्मण गाइ आदि सबमा ❀ संकष्ट होला तब ॥
पूजा पाठ र धर्म कर्म हरूको ❀ होला विनाश् फेर् जसै ।
भूभार् हर्न भनेर हुन्छ प्रभुको ❀ प्रत्यक्ष औतार् तसै ॥७६॥
वैदिक् धर्म अटल् रहोस् जगतमा ❀ भन्ने विचारै गरी ।
राजा श्री दशरथ्जिका सुत भई ❀ फेर्जन्मिबक्स्योहरि॥
औतार् राघवको हुने जगतमा ❀ कारण् छ अर्को पनि ।
सो कारण् पनि भन्दछु सुन उमे ! ❀ अत्यन्त भावुक् बनी ॥७७॥
पार्षद् श्री हरिका थिया दुइजना ❀ नामका विजय्औजय।
श्राप् पर्दा सनकादिको हुनगया ❀ द्वीजन् पछी राक्षस ॥
पैलो जन्म महाँ हिरण्यकशिपू ❀ औ फेर् हिरण्याक्ष भै ।
जन्म्या ती दुइ, देवता कन दिया ❀ कष्टै बहुत् स्वर्ग गै ॥७८॥
मार्नू भो प्रभुले बराह रूपले ❀ दुर्धर् हिरण्याक्ष त्यो ।
सोही रीत्गरि त्यो हिरण्यकशिपू ❀ नर्सिंह द्वारा मर्‍यो ॥
फेरी रावण कुम्भकर्ण भई ती ❀ जन्म्या धरातल् महाँ ।
श्री रामको अवतार भो यसघरी ❀ तिनलाई मार्न यहाँ ॥७९॥
बस्थ्या ति दुइ दैत्य उग्र अति भै ❀ लंका नगर्मा पनि ।
पाल्नू भो तिनकै निमित्त प्रभुजी ❀ कालै समान्का बनी ॥
यस्ता श्री रघुनाथको शुभकथा ❀ भन्छू म तिम्रा सँग ।
तस्मात्गौरी ! कथा सलै अवतिमी ❀ एकाग्र मन्ले सुन ॥८०॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized by Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
नाच्थे भूत पिशाच डाकिनी हरु * उन्मत्त ज्यादै बनी ।
गर्थे बर्षण पुष्पको अमरगण् * आकाशदेखी अनी ॥
यस्ता रीतूसित जन्ती ती शिवजिका * पौंच्या हिमाचल् जब ।
बालक्हेरु डराइ दौडि घरमा * गै लुक्न थाल्या सब ॥ ६६ ॥
ज्वाजी हेर्न ति मेनका पनि तहाँ * आइन् अटाली महाँ ।
देखी भूत पिशाच मात्र शिवका * सँङ्मा रहेका तहाँ ॥
दुःखित् भैकन छोरिलाइ उनले * राखेर काख्मा अनी ।
थालिन् आँसु गिराउनाकन तहाँ * शंकर्जिको हाल् भनी ॥ ६७ ॥
यस्तो हाल्कन देखि पार्वतिजिले * माताजिको त्यस् घरी ।
लागिन् भन्न बुझाइ चित्त तिनको * शंकर्जिकोध्यान्गरी ॥
हे मातर् ! सब प्राणि पूर्वजुनिको * फल् भोग्छ केवल् सदा ।
सोही कारण दोष रहन्न विधिको * जानीलिनोस् सर्वदा ॥ ६८ ॥
यस्ता बात सुनेर पार्वतिजिको * अत्यन्त हर्षित् भइन् ।
चाडै नै गइ मेनका वरणिको * काम् गर्न लाग्दी भइन् ॥
फेरी लग्न र दिन् घड़ी पल सबै * राम्रो विचारीकन ।
आफ्नी पुत्रि दिया हिमालयजिले * लोकेश शंकर्कन ॥ ६९ ॥

स्कन्दकुमारको उत्पत्ती र तारकासुर बध

शंकर् पार्वतिको विवाह जब भो * हर्षित् भया देव्गण ।
बस्नू भो शिव-दम्पती त्यसपछी * कैलाशमा गैकन ॥
धेरै काल वित्यो परन्तु शिवका * सन्तान् भयानन् जब ।
सारा देव मिलेर आपुसमहाँ * शोच्ता भया यो तब ॥ ७० ॥
गौरीका सँगमा भुलेर शिवजी * कैलाशमै बस्नु भो ।
सन्तान् क्वै नहुंदाँ ति शंकरजिको * हाम्रो सबै आस् गयो ॥
तस्मात् तिन्कन झट् भुलाउँनु पर्‍यो * भन्न्या विचारीकन ।
सारा देवहरूले ति शंभुजि कहाँ * भेजे ति अग्नीकन ॥ ७१ ॥
संभोग् गर्न भनेर शंकर पनी * लाग्नू भएथ्यो जसै ।
गौरीशंकरका नगीच् पुगि गया * ती अग्निदेव्जी तसै ॥
लज्जित् भैकन पार्वती लुकिगइन् * शंकर्जिले फेर् तहाँ ।
आफ्नो वीर्य निकालि फाल्दिनुभ्यो * ती अग्निकामुख्महाँ ॥ ७२ ॥
अग्नीलाइ असह्य कष्ट हुनगो * त्यो वीर्य राख्नै जब ।
गंगामा लगि सांघुरोकन त्यो * [illegible]
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

# सुब्बा होमनाथात्मज केदारनाथजी उपाध्याय र

## पं० रामजी उपाध्याय कृत क्षेपक समेत




❀ अथ नारद पूर्व वृत्तान्त नारदब्रह्मा सम्बाद ❀

•••○○•••

ब्रह्माका भइ पुत्र नारद ऋषी * पैदा भयाका थिया ।
फेरी दक्ष प्रजेशका सुत इनी * दोश्रा जनमूमा भया ॥
छोरा फेरि भया महर्षिहरूकि * क्वै दासिका इ जब ।
राम्का भक्त भया महर्षिहरूको * पाएर अर्ती तब ॥ १ ॥

एक्दिन् नारद सत्यलोक् पुगिगया * लोक्को गरुँ हित् भनी
ब्रह्मा ताहिँ थिया पर्‍या चरणमा * खूशी गराया पनि
क्या सोध्छौ तिमि सोध भन्छु म भनी * मर्जी भएथ्यो जसै
ब्रह्माको करुणा बुझेर ऋषिले * बिन्ती गर्‍या यो तसै १
हे ब्रह्मन्! जति हुन् शुभाशुभ सबै * सूनी रह्याछू कछू
बाँकी छैन तथापि सुन्न अहिले * इच्छा म यो गर्दछू
आजला जब यो कली बखतमा * प्राणी दुराचार् भई
गर्न्याछन् सब पाप् अनेक् तरहका * नीचका मतीमा गई २

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

नेपाली साहित्यगगनमा आफ्ना अमर लेखनीले सूर्यझैं प्रसिद्ध

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

# सुब्बा होमनाथ केदारनाथ उपाध्यायजीका

ग्रन्थरत्नहरू पढ्नोस् ।

सुब्बाहोमनाथ केदारनाथजीको महाभारत १८ पर्व, रामायण रामाश्वमेध श्रीकृष्णचरित्र र श्रीमद्देवीभागवतको तपाईंका बाबु वराजु, भाई भारदार, बुढापुरानाले र देशका महाराजाधिराध मुखतियार मंत्रीहरूले शुद्ध राम्रो र पूर्ण संझी पढने पढाउने गरेको कुरा सारा नेपालीलाई थाहा भएको कुरा हो । सुब्बा होमनाथ केदारनाथजीको महाभारत, रामायण श्रीकृष्णचरित्र प्रचलित भएको सयकड़ौं वर्ष भयो । सुब्बा होमनाथ केदारनाथजीका कलमले लेखिएका श्लोकहरु विवाह र उत्सवहरुमा पनि नेपालीहरुले श्लोक हाल्ने गरेको कुरा तपाईंहरु सबैलाई थाहा छ । सुब्बा होमनाथ केदारनाथजीका पुस्तक ग्रन्थहरुनै नेपालका महाराज र भाई भारदारले तारीफ गरी लिने र पढने गरेका छन् । तेस कुराको विचार गरी हालैमा बनाएका बेपारीहरुको किताब पढ्नु जुहार छोडी काँच लिने गंगाजीको स्नान छोडी भैंसीले पोखरीमा गई अहाल खेल्ने झैं ठहर्नें छ ।

| | |
|---|---|
| अठाहपर्व महाभारत चमड़ा ढकनीको | दाम २२) |
| श्री कृष्णचरित्र चमडा ढकनीको | दाम ८/५० |
| आठकाण्ड रामायण चमडा ढकनीको | दाम ८/५० |
| श्री देवी भागवत चमडा ढकनीको | दाम ८/५० |
| नेपाल दिग्दर्शन सचित्र पुरा | दाम ८) |
| | ५५/५० |

५५/५० रुपयां पर्नें ई पुस्तक हरु एकै पल्ट मगाए ५०) रुपयाँ पर्दछ । १० पेशगी पठाइ मगाएमा खर्च समेत माफ हुन्छ ।

मगाउने ठेगाना—

**सुब्बा होमनाथ केदारनाथ,**

हितैषी कम्पनी, वाराणसी ।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




१ अयोध्याका राजा दशरथ सन्तान नहुनाले रानीहरूका साथ चिन्तित भै बसेको ।

२ श्रवणकुमारले पानी भर्नलाग्दा दशरथले मृग ठानी शब्दभेदी वाण हानेको ।

३ दशरथको वाण लागी श्रवण कुमारको मृत्यु ।

राजेन्द्र

४ दशरथजीले श्रवणकुमार लाई उनका पिता कहाँ ल्याउदा अन्धमुनिले पुत्रकै वियोगमा तिम्रो मृत्यु होस् भनी श्रापेको ।

५ राजा दशरथले आफ्नो श्रापको हाल विन्ति गर्दा गुरुवशिष्ठले उनलाई संझाई पुत्रेष्टी यज्ञगर्न सल्लाह दिएको ।

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
साँचो बात गरैन कोहि अरुकै * गर्नन् ति निन्दा पनि
अर्काको धन खानलाइ अभिलाष * गर्नन् असल् हो भनी
कोही जन् त परस्त्रीमा रत हुनन * कोही त हिंसा महाँ
देहैलाइ त आत्म जानी रहनन् * नास्तिक पशूझैं यहाँ ३
काम्का चाकर झैं भएर रहनन् * स्त्रीलाइ द्यौता सरी
मान्नन्,पितृ र मातृलाइ बुझि खुब् * शत्रू सरीका गरी
ब्राह्मण् भैकन वेद बेचि रहनन् * कोही पढ्नुन् ता पनि
धन् ठूलो छ भनी भन्या सहज धन् * आर्जन गरौंला भनी ४
जाती धर्म रहैन क्षत्रिहरुमा * जो छन् इ नीचाहरु
शूद्रादी त तपस्वि होइरहनन् * ब्राह्मण सरीका बरु
स्त्री धेर् भ्रष्ट हुनन् पती र शशुरा * को द्रोह ठूलो गरी
यसता दुष्ट कसोरि मुक्त त हुनन् * संसारसागर् तरी ५
यो चिन्ता मनमा भयो र अहिले * सोधूँ उपायै भनी
आयाको छु दयानिधान ! कसरी * तर्नन् सहज् ती पनि
यस्तालाइ उपाय तर्न सजिलो * कुन्हो उ आज्ञा गरी
मेरो चित्त बुझाइ बक्सनुहवस् * क्याले इ जान्छन् तरी ६
नारद्ले दुनियाँ उपर् गरि दया * बिन्ती गऱ्या यो जसै
ब्रह्माजी पनि खुब् प्रसन्न हुनुभै * मर्जीभयो यो तसै
हे नारद् ! सब पाप हर्नकन ता * रामायणैका सरी
अर्को मुख्य उपाय छैन सबको * हित् यै छ अमृत्सरी ७
शम्भू देखि सुनेर तत्व सब यो * गान् पार्वती गर्दथिन्
रामको नाम अपार जानि बहुतै * आनन्दमा पर्दथिन्
जस्ले गान्कन गर्दछन् तित सहज् * संसार पार् तर्दछन्
कालैको पनि ताप हुंदैन भय ताप * तिनका सहज् टर्दछन ८
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
यो सब् शास्त्रविषे बड़ो छ रघुनाथ् * को रूप् जनाई दिन्या
जो छन् सब् इ पुराणहेरू सबमा * यै मुख्य जानी लिन्या
गर्छन् कीर्तन सुन्दछन् पनि भन्या * पाऊँदछन् फल् भनी
तिन्को पुण्य बखान गर्न त सबै * सक्तीन मैले पनी ९
सुन्याथ्यौँ शिवदेखि यो त महिमा * एक्श्लोक्पढ्नतापनि
भक्तीले यदि यो पढ्यो पनि भन्या * पाप् छुट्छ सारा भनि
जो एक्चित्त गरेर पाठ खुशिभै * गर्छन् सदा यै भन्या
जीवन् मुक्त तिनै त हुन् नर भई * ईश्वर् सरीकै बन्या १०
पूजा पुस्तकको गर्‌यो पनि त फल् * एक् अश्वमेध्का सरी
पाऊँछन् सुनियो कहीं पनी भन्या * पाप् छुट्तछन् त्यैघरी
जो ता पुस्तकको नजिक् गइ प्रणाम् * मात्रै फगत् गर्दछन्
त्यस्ता जन् सब देवता पुजि हुन्या * फल्भोगमा पर्दछन् ११
चारै वेद पढेर शास्त्रहरुको * व्याख्यान गर्दा अनी
पाइँदैन उ फल् त पाउँछ सहज् * पुस्तक् दिनाले पनि
भक्तीले कहिं भक्तका घर गयो * एकादशीमा कह्यो
चौबिश् पल्ट पुरश्चरण् गरिहुन्या * गायत्रिकोफल् भयो१२
जस्ले राम्नवमी उपासी खुशिले * जाग्राम् समेतो गरी
यो रामायण पाठ्गरोस् कित सुनोस् * तन्मन् यसैमा धरी
त्यस्ले तीर्थपिछे तुलापुरुषदान् * सूर्यै ग्रहण्मा गर्‌यो
यस्मा संशय छैन जान्नु सबले * आनन्दमात्यो पर्‌यो१३
रामायण्कन गाऊँन्या पुरुषको * आज्ञा त इन्द्रै पनी
मान्छन् श्री रघुनाथका प्रिय इ हुन् * मान्न्या इनैहुन् भनी
दिन्दिन् यस्कन पाठ् गरेर जसले * सत्कर्म गर्छन् जती
कोटीगुण् फल बढ्ति मिल्छ सबको * घट्तैन तिन्को रती १४
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




१ दशरथले ऋषी ऋष्यश्रृङ्ग संग पुत्रेष्टि यज्ञमा प्रार्थना गरेको ।

२ अग्नि प्रसन्न भै दशरथजी लाई पायस दिएको ।





राजा दशरथले रानीहरु लाई पायस खान दिएको ।

४ राजा दशरथकी जेठी रानी कौशल्याबाट भगवान रामचन्द्रको जन्म ।



६ महर्षि विश्वामित्रले

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Ajay Avasthi Sahib Bhuvan Vani Trust Donations

रामगीता उपवास गरीकन बहुत् * श्रद्धा गरी पढ्छ जो
तेस्लाई त न भन्नु मानिस भनी * राम सरीको छ त्यो
दान् ध्यान् तीर्थ कदापि केहि नगरी * यो रामगीता पढी
बस्छन् जो ति अनन्तका पदविमा * जान्छन्सहज्पारतरी २१
धेरै बात गरेर हुन्छ अब क्या * रामायणै हो जबर
पाप हर्नाकन छैन केहि बुझ यो * एसो सरीको अबर
जान्छन्स्तोत्रपुराणश्रुतीस्मृति इता * सोह्र कलामा पनी
पुग्दैनन् त बखान् कहाँ तक गरूँ * हो फेरी ठूलो भनी २२
यो रामायणको माहात्म्य विधिले * नारद्जिलाई कही
लाग्या फेर पनि भन्न यस् तरहले * ब्रह्माजि खुशि भई
पाठ्गर्छन् कित सुन्दछन् यदिभन्या * यो येति सुन्दा पनी
जान्छन्सब उहि विष्णुकापुरिमहाँ * खुबपूज्यसबका बनी २३

अथ शिव पार्वती संम्बाद

कैलाश्मा भगवान् सदाशिव थिया * ध्यान्मा बहुत मन्दिई
बाम्काख्मा बहुतै पियारि हितको * श्री पार्वतीजी लिई
एक दिन् पार्वतिले पनि शिवजीथ्यैं * सोधिन् चरण्मा परी
आफुता सब जान्दथिन् तर दया * सम्पूर्ण लोक्मा गरी २४
हे नाथ ! बिन्ति म गर्दछु हजुरमा * राम्हुन् जगत्का पति
राम्देखी अरु कोहि छैन जनको * संसार तर्न्या गति
जसकोभक्तिगर्याभन्याअतिगभीर् * संसार सागर महाँ
नौका झैं तरि जान्छ झटपट गरी * देहै उ जन्को तहाँ २५
यस्ता रामकन लोकमा जनहरू * एक् ईश्वरै भन्दछन्
केही तत्व न पाइ मूर्खहरु ता * मानिस् सरी गन्दछन्
भन्छन् कोहि त राम ईश्वर भया * शोक् क्यान तिन्लेगर्‍या

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यसमा रामहृदयैछ पाप् हरिलिन्या * क्वै ब्रह्मघाती पनि
शुद्धात्मा बनिजान्छ दिन्दिन पढ्या * गर्छन् कृपा राम् धनी
रोज्रोज्तीनपटक् अगाड़िहनुमान * राखेर पाठ् गर्छ जो
जस्तो भोग कन गर्नखोज्दछ उभोग् * सम्पूर्ण पाउँछ सो १५
जो यो पाठ् तुलसी पिपल् वरिपरी * गर्छन् प्रदक्षिण् गरी
तिन्कोपाप् सबजन्मको जतितछन् * छुट्छन् ति सोही घरी
यस्मा रामगिता छ झन् अति ठुलो * जस्को महात्म्यै पनि
सब्जान्न्या शिवमात्रछन् अरूत क्वै * जान्दैन यस्तो भनी १६
आधा पार्वती जान्दछिन् म त अझै * चौथाइ पो जान्दछु
गीता पाठ गरेर नाश न हुन्या * पाप्छैन यो मान्दछु
राम्ले वेद मथन् गरीकन झिक्या * गीता र अमृत् सरी
लक्ष्मणलाई दिया तहाँ पढ़िलिया * जाइन्छ संसार्तरी १७
माछु निश्चय कार्तवीर्य भनि खुब् * ठूलो इरादा धरी
पढ्थ्या श्री शिवथ्यैं गई परशुराम् * दिन्दिन चरण्मा परी
पढ्थिन् पार्वती राम्गिता तहिंसुनी * पाठ् गर्न लागीगया
राम्गीता तहिंदेखि पाठ् गरिलिया * नारायणै ती भया १८
मैन्हा दिन् यहिरामगिता पढ़िलिया * सब् ब्रह्महत्याहरू
छुट्छन्ताअरूछूट्तछन्सकल पाप् * भन्न्याँ बयान् केगरूँ
शालिग्राम् तुलसी पिपल् कितबड़ा * सन्यासिथ्यैं जो गई
राम्गीताकन पाठगऱ्यो यदिभन्या * ठूलो महात्मा भई १९
जुन्फल्छन् मुखले भनीन सकिन्या * सोफल् त भोग् गर्दछन्
कोही श्राद्धविषे पढ्न त तिनका * पितृ सबै तर्दछन्
पैल्हे खुब नियम् गरी दशमिमा * एकादशीमा पनि
आसन् बाँधि अगस्ति बृक्षमनि पाठ * गर्छु म गीता भनी २०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भूभार हर्नत काम् थियोजब हर्‍या * छिन्छान्भयोकामको३२

सीताजीले हनुमानजीलाई तत्व ज्ञान दिएको

भूमीको सब भार् हरेर् रघुनाथ् * राज् गर्न लाग्या जसै
देख्या श्री हनुमानलाइ र दया * आयो प्रभूमा तस
सीतालाइ हुकुम् तहाँ दिनुभयो * सीते ! हनूमान् बड़ा
हाम्रा भक्त भया इ तत्व लिनका * खातिर् यहाँछन्खड़ा३३
इन्लाइ तिमि तत्व देउ भनि यो * आज्ञा भएथ्यो जसै
सीताले हनुमानलाई दिनुभो * जुन् तत्व हो सब् तसै
अर्को तत्व त केहिछैन हनुमान् ! * कुन् आज अर्को कहूँ
राम्हुन् ब्रह्म इनै कि शक्ति बलिई * माया भन्याकी महूँ ३४
राम्को सन्निधिपाई गर्छु सबकाम * सृष्टी र पालन् पनी
आरोप् राम विषे गरिन्छ सब यो * गर्न्या इनै हुन् भनी
यो निर्मल रघुवंशमा प्रभुजिले * जो जन्म ऐल्हे लिया
विश्वामित्र निमित्त यज्ञहरुमा * राखी दया मन्दिया ३५
जो पाप् गौतम पत्निको हरि दिया * जो भाँचि दीया धनू
जो मैलाइ बिहा गर्‍या सब कुरा * यस्ता कहाँ तक् भनूँ
जस्ले गर्व हर्‍या ति बीर् परशुराम् * को जो अयोध्या बस्या
बाह्रै वर्ष बिहा गर्‍या पछि बसी * जो ता बनीमा पस्या ३६
यस्ताइजतिकाम्भयातिसबकाम् * गर्न्या म हूँ ता पनी
भन्छन् लोक त रामलाइ सबका * कर्ता इनै हून् भनी
अन्तर्यामि अनादि शक्ति तित हुन् * कर्ता कहाँ ती थिया
मेरो गुण लिंदा त लोकहरुले * कर्ता भनी पो दिया ३७
एतो ताहिँ सिताजिबाट उपदेश् * पाई सक्याथ्या जसै
आफैँ राम प्रभुले पनी दिनुभयो * रफे तत्वको ज्ञान् तसै

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सीता रावणले जसैं हरि दियो * ठूला विपत्‌मा परघ्या२६
ईश्वर्‌लाइ त शोक् हुदैंन त भनूँ * हूंदैंन अज्ञान् पनी
इन्‌मा यो सब देखियो त कसरी * जाँनु म ईश्वर् भनी
लोक्‌यस्तोपनिभन्छकोहि भगवान्! * यस्मा विचार् खुब् गरी
जस्‌तो हो सब यो बताउनुहवस् * सन्देह मेरो हरी २७
यस्‌तो प्रश्न सुनेर पार्वतीजिको * खुशी पनी खुब भया
राम् यस्‌ता प्रभु हुन् भनेर शिवले * सब् तत्व ताहीं कह्या
सून्यौ पार्वति! राम् अनादिपरमेश्वर् * हुन् ति आकाश् सरी
सब् ढाकीकनबस्तछन् अघिविराट् * सम्पूर्ण सृष्टी गरी२८
जस्‌तै चुम्बकका नगिच् परिगया * तान्छन् इ लोहा पनी
त्यस्‌तै जस्कन पाइ नाचद्छ जगत् * नाना प्रकार्‌को बनी
यस्‌तो तत्वनजानि मानिस विचार् * राम्‌लाई जो गर्दछन्
संसार्‌को इ अनंत ताप्‌हरु तिनै * लाई सदा पर्दछन २९
बादल्‌लेभुमिढाक्छढाक्छ कहिंक्या * श्री सूर्यलाई पनी
लोक्‌ता भन्छ उठ्यो र बादल ठुलो * सब् सूर्य ढाक्यो भनी
तेस्‌तै तत्व न जानि बोल्छ जन जो * सो भन्छ मानिस् पनी
योगी ज्ञानि त चिन्दछन् इ रघुनाथ् * त्रैलोक्यकानाथभनी३०
जस्‌लाई रिङ्टा छ भन्छ उ फगत् * घुम्छन् इ पर्वत् भनी
घुम्दैनन् ति त घुम्छ तेहि रिङ्टा * जान्दैन कोही पनी
अज्ञान् हुन् रिङ्टा हुन्या जनहरू * भन्छन् ति मानिस् भनी
राम् ता हुन् परमेश्वरै सकल यो * चौधैभुवन्‌का धनी ३१
सूर्यमा पनि अन्धकार् छ कहिंक्या * तेस्‌तै इ राम्‌मा पनी
शोक् अज्ञान् रतिछैन जान्नु सबले * आत्मा इनै हुन् भनी
अर्को गोप्य रहस्य भन्छु सुन यो * संवाद सितारामको

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भारी भै ति रुँद गइन् उहिं जहाँ * ब्रह्मा बस्याका थिया
पापी धेर् भइ भार् भयो भुवन ता * यो भार् छुटोस् लौ भनी
आयाँ आज दयानिधान् ! चरणमा * योबिन्तिपारिन् अनि४४
यस्तो बिन्ती सुनी दया पनि उठ्यो * तौ भूमि माथी तहाँ
दौड़ी क्षीरसमुद्रका तिर गया * बिष्णू रहन्या जहाँ
इन्द्रादीहरु साथमा लिइ स्तुती * ताहीं गर्याथ्या जसै
सर्वात्मा भगवान प्रसन्न हुनु भै * दर्शन् दिनूभो तसै ४५
देख्या सुन्दर रूप् जसै प्रभुजिको * ब्रह्मा चरण्मा पर्या
भक्तीले स्तुति खुब् गरेर खुशि भै * हात् जोरि बिन्ती गर्या
हे नाथ् ! रावण दुष्टभै सकल लोक् * लाइ बिपत्ती दियो
इन्द्रादीहरुको त तेज् सहजमा * खैंचेर तेस्ले लियो ४६
यस्लाई अब मारिबक्सनु हवस् * मानिस् सरिको बनी
मानिस् देखि मरेस् भनेर बरदान् * दीई रह्याँछू पनी
ब्रह्माको यति बिन्ती सुनी भगवान् * को यो हुकुम्भो पनी
रावण्लाइ म मारुँला सहजमा * मानिस् सरीको बनी ४७
माया मेरि सिता भएर रहनिन् * छोरी जनक्को भइ
छोरो भैकन जन्मुला म दशरथ् * जीका घरैमा गई
सीतालाई लिएर पूर्ण गरुँला * बिन्ती म तिम्रो भनी
अन्तर्ध्यान् भगवान् तहाँ हुनुभयो * त्रैलोक्यकानाथ पनी४८
अन्तर्ध्यान् भगवान जसै हुनुभयो * इन्द्रादि लाई पनी
ब्रह्माले खुशि भै अह्राउनु भयो * भूलोक जाऊ भनी
मानिसभै भगवान् जती ति रहनन् * तेस् पृथ्वितल्मा गई
बानर् भै तिमिहेरु सब् पनि रह्या * साहाय जस्ता भई ४९

दशरथ, बसिष्ठजी, ऋष्यश्रृङ्ग र कौसल्या परिचय र पुत्रेष्टी यज्ञ र राम जन्म

ब्रह्माजा पनि सत्यलोक् गइगया * एती अरहाई वरी

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यसतो हुन्छ परात्म आत्म यहि हो * यै हो अनात्मा भनी
आत्मा औ परमात्मलाइ बुझिंदा * पाइन्छ मुक्ती पनी ३८
आत्माकोरपरमात्मकोछ कतिफेर् * तो एक जानी लिनू
जुन्जुन चीजअनात्म हुन् उत झुटो * जानेर छाड़ी दिनू
आत्माको र परात्मको गरिविचार् * एक् तत्व जान्यो जसै
अज्ञान् सब छुटिजान्छ तो पुरुषको * मै तुल्य हुन्छन् तसै ३९
यो मेरो हृदयै त हो प्रिय छ यो * खुब् गुप्त राख्नू पनी
तत्वैज्ञान् भनि यै कहिन्छ बुझिल्यौ * सुन्यौ हनुमान् ! भनी
तत्वैज्ञान् हनुमानलाइ रघुनाथ् * ले यै दिनूभो तहाँ
सोहीज्ञान्तिमिथ्यैँ कहीसबसक्याँ * सम्पूर्ण मैले यहाँ ४०
सुन्यौ पार्वति ! रामको हृदय यो * जो जो त पाठ् गर्दछन्
जो छन् जन्म सहस्त्रका सकल पाप् * तिन्को सबै टर्दछन्
जोता भ्रष्ट अधम् हवस् त पनिलौ * यस्लाइ खुब् पाठ् गरी
रामकोध्यान पनी गर्‍यो यदिभन्या * त्यो जान्छ संसार् तरी ४१

शिवजी द्वारा राम चरित्र वर्णन

सुनिन् पार्वतिले अपार महिमा * यो रामजीको जसै
फेर् बिस्तार् गरि सुन्नलाइ मन भो * ती पार्वतीको तसै
बिन्ती फेर् शिवथ्यैँ गरिनूपनि तहाँ * हे नाथ् ! सबै रामको
लीला सुन्न मलाइ मन् हुन गयो * एही बुझ्याँ कामको ४२
सुनोस् रामलिला भनेर म उपर् * माया बहूतै धरी
सब् लीलाहरु फेर् बताउनुहवस् * जो छन् ति बिस्तार गरी
यो प्रेम्न पार्वतिको सुनेर शिवले * खुब् प्रेम राखिन् भनी
जो जो हुन् सब रामचरित्र शिवले * ताहाँ बताया पनी ४३
ई भूमीकन रावणादि हरूले * भारी बनाई दिया

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

तो हामी बसि यज्ञ एक् हजुरका * खातिर् गरौंला जसै
चार् छोरा अति बीर् हुनन् हजुरका * सन्ताप छुट्नन् तसै
यस्तो अर्ति बशिष्ठको जब सुन्या * राजा बहुत् खुश् भया
शान्ताका पतिलाई डाकिकन खुब् * याग् गर्न लागीगया ५७
ऋष्यैशृङ्ग बशिष्ठ दूइ ऋषिले * होम् गर्न लाग्या जसै
पायस्को थलिया लिईकन तहाँ * आया ति अग्नी तसै
यस् पायस्कन आज लेउ महाराज! * छोरा हुन्याछन् भनी
राजालाइ दिया र पायस तहाँ * लुक्या ति अग्नी पनी ५८
राजा खुशि भई दुवै ति ऋषिका * कोमल् चरणमा परी
कौशल्या र ति कैकयीकन दिया * पायस् दुवैभाग गरी

स्वायम्भुव् मनु फेरि श्री शतरुपा * सन्तान् विधिका थिया।
छोरा श्री हरिनै म पाउँ भनि ती * तप् गन लाग्दाभया ॥ ५९ ॥
तिन्को त्यो तपले प्रसन्न हुनुभै * सन्मुख् प्रकट् भै हरी।
इच्छा कुन् वरको छ माग अहिले * भन्नू भयो त्यस् घरी॥
भन्छन् दम्पति ती प्रभो! हजुरनै * सन्तान हाम्रो बनी।
धोको मेटिदिनोस् अकिंचन दुवै * हुन् भक्त मेरा भनी ॥ ६० ॥
यस्तो बिन्ति सुनेर फेरि हरिको * आज्ञा भयो यो तहाँ।
त्रेतामा गइ "राम" पुत्र दुइको * हूंला अयोध्या महाँ॥
यस्तो बर्कन पाइ ती दुइजनै * फर्केर घर्मा गया।
कौशल्या दशरथ् भएर ति दुवै * फेर् पृथ्विमा जन्मिया॥ ६१ ॥
दक्षिण् कोशलराजकी शतरुपा * जन्मिन् भई कन्यका।
रावणले निज काल ठानि शिशुमै * हर्दोभयो त्यो सुता॥
सुम्प्यो राघव मत्स्यलाइ, विधिले * त्यो चाल पाई तहाँ।
मारी राघव मत्स्य त्यो शिशुदिया * फेरी सुमंत्री महाँ॥ ६२ ॥
कन्या योग्य विवाहकी जब भइन् * शास्त्र विधान्ले गरी।
राजा श्री दशरथ्जिका सँग भयो * इन्को विहा त्यस्घरी॥

खानु बाँकि थियो उसै बखतमा * आइन् सुमित्रा पनी

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

इन्द्रादी पनि बानरै भई रह्या * सब् पृथिवलोक्मा झरी
ब्रह्मामानसपुत्र कश्यपजिका * तेह्रौटी पत्नी सँग ।
द्यौता, दैत्य, मनुष्य, जीवहरु सब् * जन्मी बढ्यो यो भव ॥ ५० ॥
तिन्कै पुत्र भएर सूर्यजि तथा * श्री सूर्य पुत्रै भई ।
इक्ष्वाकू भई सूर्यको कुल चल्यों * सोही कुलैमा गई ॥
राजा श्री रघुजन्मि बंश रघुको * प्रख्यात् भयो विश्वमा ।
यै कुल्मा दशरथ् बडा बिर भया * राजा अयोध्यामहाँ ५१
तिन्को वृद्ध उमेर भयो तपनि एक् * छोरा भयानन्न भनी
तापले पूर्ण भई गुरू सित गई * सोध्या उपायै पनि
हे सर्वज्ञ ! मुने ! कसोगरि हुनन्न * छोरा मलाई अहो !
छोरा एक् न भएर व्यर्थ हिले * यो जन्म मेरो भयो ॥ ५२ ॥
यस्कामले फल मिल्छ यो भनिसबै * जान्न्या बशिष्ठै थिया
यस्तो बिन्ति सुनी बशिष्ठ गुरुले * युक्ती बताई दिया
ब्रह्माका सुतती वशिष्ठ ऋषि हुन् * पैला जनमूका तिनी ।
इक्ष्वाकू सुत मैथिलेश निमिको * पाएर श्रापै अनि ॥ ५३ ॥
जन्मे उर्वशिले निमित्त हुनगै * मित्रावरुण् वीर्यले ।
कर्दम् पुत्रि अरुन्धती सँग भयो * इन्को विवाहै बुझे ॥
इक्ष्वाकू नृपले इनैकन गुरु * कुल्का बनाई लिया ।
तत्पश्चात् रघुवंशका कुल गुरु * स्थायी बशिष्ठै भया ॥ ५४ ॥
हुन्छन् पुत्र अवश्य जल्दि महाराज! * एक् यज्ञ ऐल्हे गऱ्या
शान्ताका पति ऋष्यशृङ्ग ऋषि छन् * तो डाक्नु ऐल्हे पऱ्या
पुत्री श्रीदशरथ्जिकी अघि थिइन् * शान्ता भनेकी जज्ञन ।
छोरी पोष्य भएर अंग नृपका * घर्मा ति बढ्दी भइन् ॥ ५५ ॥
ऋष्यैशृङ्ग विभाण्डपुत्र सँगमा * इन्को विवाहै भयो ।
ब्रह्माका वरले ति ऋष्यशृङ्गमा * यौटा ठुलो गुण् थियो ॥
सक्थे पुत्र दिनै अपुत्रकन ई * पुत्रेष्टी यज्ञै गरी ।
थाहा भै सब त्यो वशिष्ठ ऋषिले * भन्दा भया त्यस घरी ॥ ५६ ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

चेष्टा बालकको लिया प्रभुजिले * खब खन लाग्या पनी ६९

❀ भरत लक्ष्मण शत्रूघ्न-जन्म ❀

थाहा भो दशरथजिलाइ र गया * दर्शन् गरच्याथ्या जसै
देख्दैमा परिपूर्ण मन् हुनगयो * आनन्द पाया तसै
तत्क्षणमा तहिं जात कर्म पनि भो * सब्काम् गुरुले गरच्या
कैकेयी तिर ता भरत् हुन गया * आनन्दमा सब परच्या ७०
जम्ल्याहा दुइ पुत्र पाउँदि भइन् * ताहाँ सुमित्रा पनी
जेठा लक्ष्मणजी भया ति दुइमा * शत्रुघ्न कान्छा बनी
तिन् रानी तिर चारपुत्र सुकुमार * जन्मी सक्याथ्या जसै
भूमी रत्न, सुबर्ण, वस्त्रहरुको * भारी भयो दान् तसै ७१
कौशल्यासुतको बशिष्ठ गुरुले * नाम् 'राम' भन्नू भनी
राख्या, कैकयिपुत्रको भरत नाम् * जम्ल्याहको नाम् अनी
जेठाको शुभ नाम 'लक्ष्मण' गरी * जुन चाहिं कान्छा थिया
तिन्कोनाम्पनिकाममाफिकअसल * 'शत्रूघ्न' राखी दिया ७२
लक्ष्मणराम्सितखेल्दथ्या भरतथ्यैँ * शत्रुघ्न खेल्दा भया
पायस्कै अनुसारले हुन गयो * प्रीती त बढ्दै गया
बालख्काल्बितिगै गयो प्रभुजको * सब् बाललीला गरी
चारैको ब्रतबन्ध भो, पढि सक्या * सब्शास्त्रकोबोध्गरी ७३
खेल्दा क्वै दिनमा शिकार बनमा * साँचो शिकारी बनी
राज्काज्गर्नु जतोथियोसकलत्यो * राज्काज् चलाया पनी॥

राम् हुन् परात्मा ति कहाँ बिकारी।
यस् लोकमा छन् नररूप धारी॥
काम् गर्न लाग्या ति नरै सरीको।
लीला अपार् छन् भगवान् हरीको॥७४॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

कौशल्या र तिकैकयी सित भनिन् * दवै भाग मेरो भनी ६३
दूवैले दुइ भाग देखि झिकि भाग. * तिनको पुऱ्याई दिया
तिन् रानी मिलि सोही पायस तहाँ * सम्पूर्ण खाई लिया
तीनै रानि ति गर्भिणी पनि भया * तेज देवताका सरी
देखीयो सब रानिको सकल लोक् * खुशी भया त्यसघरी ६४
कौशल्या जननी गराइ भगवान् * श्री राम पैदा भया
देखिन् श्री प्रभुको चतुर्भुज स्वरूप् * सब् माइका ताप् गया
हात् जोरी बहुतै स्तुती पनि गरिन् * ईश्वर् इनै हुन् भनी
जान्याँ नाथ ! हजूरलाइ सबका * आत्मा स्वरूपी भनी ६५
यो ब्रह्माण्ड पनी सहज् उदरमा * लीन्या त आफैं थियौ
मेरा आज उदर् बिषे बसि यहाँ * यो जन्म ऐल्हे लियौ
देख्याँ भक्त उपर् दया हजुरको * हे नाथ् ! शरण्मा पऱ्याँ
य मूर्ती प्रभुको सदा मनमहाँ * झल्कोस् पुकारा गऱ्याँ ६६
यस्तो दिव्य शरिर् लुकाइकन भेष् * बालक् स्वरूप्को बनी
दर्शन् देउ मलाइ हेर्छु भगवान् ! * फेर् बाललीला पनी
तेही बालक मूर्तिलाइ म यहाँ * आलिंगनादी गरी
सब् पाप् नष्ट गराउला र करुणा * होला र जाँला तरी ६७
यो बिन्ती महतारिको सुनि हुकुम * यो भो प्रभुको तहाँ
मातर् ! जुन छ हजूरको हित कुरो * होवस् सबै थोक यहाँ
दूवै स्त्री पुरुष भई अघि ठुलो * मेरो तपस्या गऱ्यौ
तीमीलाइ म पुत्र पाउँ भनि खुब् * इच्छा यसैमा धऱ्यौ ६८
हूंला पुत्र भनेर बर पनि दियाँ * सोही कुराले यहाँ
तिम्रो पुत्र भएर जन्मन गयाँ * ब्यर्थै म गर्थ्याँ कहाँ
कौशल्यासित बात् पनि यति गरी * बालक सरीका बनी

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

राम नारायण हुन् भनेर मनले * जानेर भेट्छू भनी
बिश्वामित्र ऋषी बहुत् खुशि हुंदै * आया अयोध्या पनी
सूर्यँका सुत श्राद्धदेव मनु एक् * पैले भयाका थिया ।
तिन्का पुत्र सुद्युम्न मै पछि इनो * नारी सामनका भया ॥ ७५ ॥
देखी तिन्कन चन्द्रपुत्र बुधले * गर्भ गराइ दिया ।
चन्द्रैवंशि पुरुरवा क्षितिपती * तिन्बाट पैदा भया ॥
तिन्का वंशज गाधिपुत्र नृपती * कौशिक्भयाथ्याइनी ।
तिन्ले एकदिन श्री बशिष्ठ मुनिकी * देख्दा भया नन्दिनी ॥ ७६ ॥
चोर्छु ती गउलाइ आज म भनी शोच्या ति कौशिक्जिले ।
पौंच्या आश्रममा र तिन्कन तहाँ * देख्या बशिष्ठैजिले ॥
ठूलो युद्ध भयो बशिष्ठ सँगमा * इन्को भयो हार् अनि ।
ब्राह्मणबल् बुझि श्रेष्ठतप्गरी पुग्या * ब्रह्मर्षि पद्मा इनी ॥ ७७ ॥
देख्या श्री दशरथ्जिले र बहुतै * आदर ऋषीको गरी
सोध्याकाम् किनआजआउनुभयो * भन्दै बहुत् प्रेम् धरी
आदर पूर्वकको सुन्या प्रिय बचन् * यस्तो ऋषीले जसै
आफ्नू दर्द जउन् थियो मनमहाँ * सोही बताया तसै ७८
हे राजन् ! सब पर्व पर्वहरुमा * ईश्वर् बिषे मन् धरी
गर्छौं काम्हरु कर्म त्यस् बखतमा * आएर होम् नाश् गरी
मारिच्ले र सुबाहुले बहुत दिक् * गर्छन् र पापी भनी
दूवैलाइ मराउनाकन उठ्यो * रिस् आज मेरो पनी ७९
सोही बिन्ती गरुँ भनेर अहिले * आयाँ हजुर्मा यहाँ
जेठा पुत्र मलाइ बक्सनुहवस् * लैजान्छु ऐल्हे तहाँ
लक्ष्मणसाथ्गरिरामलाइअधिराज्! * ऐल्हे हजुर्ले दिया
मारिच्लाइ सुबाहुलाइ सहजै * मार्न्या इनैले थिया ८०
यस्मा अर्ति बशिष्ठको लिनुहवस् * दीना न दीना महाँ

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
भन्छन् दीनु त बक्सनू पनि हवस् * ये काम आयाँ यहाँ
बिश्वामित्रजिको सुनी बचन यो * राजा सकस्मा परया
दीऊँ की न दिऊँ यही मन महाँ * चिन्ता बहूतै गर्‌या ८१
सोध्या ताहिं बशिष्ठथ्यैं पनि गुरो! * यस्तो पर्‌यो क्या गरूँ
कल्याण् हुन्छ कसो गरेर अहिले * अर्तो मिलोस् एक बरू
राम्‌लाइ म नदेखि बाँच्छु कसरी * एक् यै कठिन् भो अनी
इन्‌लाई न दिया शशप् पनि दिनन् * की लाग्छ यस्तो पनी ८२
यस्मा श्रेय यसो छ यो गर भनी * पाऊँछु आज्ञा जसो
सोही काम म गर्दछु हित हुन्या * कुन् पाठ् छ गर्नु कसो
यो बिन्ती दशरथ्‌जिको जब सुन्या * ताहीं गुरूले पनी
रामको गुह्य कुरा सबै भनि दिया * यस्ताइ राम हुन् भनी ८३
हे राजन्! तिमि रामलाइ अहिले * हन् पुत्र मेरा भनी
भन्छौ पुत्र ति हुन् तथापि इ त हुन् * चौधै भुवन्‌का धनी
भूभार् हर्न निमित्त आज भगवान् * यस पृथ्वितल्‌मा झर्‌या
कौशल्यातिर जन्मनू पनि थियो * यो सत्य ऐल्हे गर्‌या ८४
कौशल्या दशरथ् दुवै तिमिहरू * कश्यप् अदीती थियौ
ईश्वर्‌लाइ म पुत्र पाउँ भनि तप् * गर्दै समाधी लियौ
खूशी भै बरदान् दिया प्रभुजिले * छोरा म हूंला भना
सोही सत्य गराउनाकन यहाँ * जन्न्या परात्मा पनी ८५
शेष हुन् लक्ष्मण शंख हुन् भरतजी * शत्रुघ्न चक्रावतार्
हुन्, को जान्दछ तत्व यो बुझतिमी * लीला प्रभुको अपार
मूल्‌शक्ती प्रभुकी अनन्त गुणकी * सो दिव्य मूर्ती बना
छोरी भै ति बसेकि छन् जनककी * सीता छ नाऊँ पनी ८६
सीताराम् दुइको बिबाह बिधिले * संयोग गराऊँ भनी
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

श्री रामचन्द्रजिका वरीपरि घुमी * प्रेमले नमस्कार गरी
स्वर्गैमा गइ रामका वचनले * बेशएकबिमान्माचढ़ी९३
विश्वामित्र ऋषी बहुत् खुशी भया * त्यो कार्य देख्या जसै
जो सब शस्त्र रहस्य हो कहि दिया * श्री रामलाई तसै
कामाश्रम् रमणीयस्थल्तहिं थियो * एक्रात् तहाँ बास गरी
फेर सिद्धाश्रममा गया रघुपती * सबलाइ मङ्गल् गरी ९४
तेस्सिद्धाश्रममा अनेक्ऋषिथिया * पूजा सबैले गर्‍या
मारिच् फेकन सुबाहु मार्नकन राम * ताहाँ अगाड़ी सर्‍या
बिश्वामित्रजिलाइ भन्नु पनि भो * मारिच् सुबाहू कहाँ
बस्छन्, यज्ञ ठुलो गरीलिनु भया * ती आउँथ्या को यहाँ९५
भेटै आज भएन मार्नु कसरी * यो मर्जि सुन्या जसै
बिश्वामित्र ऋषि अरू ऋषि गई * होम गर्नलाग्या तसै
दिन् मध्यान्ह भयो उसै बखतमा * आया ति राक्षस् पनी
मार्न्याकाल्कनचाल नपाइअघिझ * होम्नाश्गरौंला भनी९६
काँही हाड खसाउँछन कहिंरगत् * यस्तै प्रकार्ले गरी
आया ती जब यज्ञमा प्रभुजीले * हान्या आगाडी सरी
मारिच्लाइ त बाणले जलधिका * तीरमा पुर्‍याई दिया
अग्नीबाण धरी सुबाहुकन ता * भस्मै गराईलिया ९७
तिन्काफौज्पनिताहिंलक्ष्मणजिले * मारी सक्याथ्या जसै
खूशी भैकन पुष्पबर्षण गर्‍या * सब् देवताले तसै
बिश्वामित्र बहुत् प्रसन्न हुनगै * रामलाइ काखमा लिया
भोजन् गर्न निमित्त रामकन तहाँ * मीठा फलादी दिया ९८
तीन्दिन्ताहिंमुकांगर्‍या प्रभुजिले * बार्ता कथाको गरी
चौथादिन्ऋषिलेगर्‍याबिनतिएक * रामका अगाडी सरी

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

विश्वामित्रजिको भयो र मनमा * आई रह्याछन् पनी
दीनै योग्य म मान्दछु भनी दिया * अर्तो गुरूले जसै
खुशीभै दशरथजिले पनि दिया * लक्ष्मण सहित्‌राम्‌तसै८७
रामलक्ष्मण्‌कन पाऊँदा ऋषिपनी * अत्यन्त खुशी भया
आशिर्वाद्‌दशरथ्‌जिलाइदिइराम * लक्ष्मण लिई तो गया
केही दुर् गइ रामलाइ ऋषिले * विद्या सिकाई दिया
जुन् विद्या पढि भोकप्यास कहिल्यै * लाग्दैन यस्ता थिया८८

मारीच सुबाहु ताड़का परिचय र ताड़का सुबाहुवध

गङ्गाका तिरमा बड़ो बन थियो * पुग्या जसै ती तहाँ
विश्वामित्रजिले कह्या प्रभुजिथ्यैं * राम् ! ताड़का छे यहाँ
छोरी यक्ष सुकेतुकी अघि थिई * क्वै ताडका यक्षिणी ।
सुन्दै नामक यक्षका सँग भयो * यस्को बिबाहै पनि ॥ ८९ ॥
मारीच फेरि सुबाहु नामक दुई * यस्कात छोरा थिया ।
पर्दा श्राप अगस्तिको त्यस घरी * सुन्दै अघि मारिया ॥
सोही रीस् लिइ ताडका बन महाँ * घुन्थी सदा सर्वदा ।
पूजा पाठ र यज्ञमा ति ऋषिका * दिन्थी बहुत् दुख् तदा ॥ ९० ॥
सोही कारण श्राप परेर ऋषिको * राक्षस् सरीको भइ ।
जो भेट्थी त्यसलाइ बध् गरिलिने * आफ्नो स्वभावै लिई ॥
सोही राक्षसि कामरूपि छ बहुत् * लोक्‌लाइ बाधा पनी
दिन्छे त्यस्‌कन मारिबक्सनुहवस * यो पापिनी हो भनी९१
विश्वामित्रजिको बचन्‌कन सुनी * श्री रामजीले पनी
टङ्कार् खुप्‌धनुको गर्‌या सुनि यहाँ * त्यो जल्दि आवस् भनी
त्यो टङ्कार् सुनि ताड़का पनि तहाँ * दौड़ेर आई जसै
हान्या बाण प्रभुले गड्यो हृदयमा * त्यो बाण, मरी त्यो तसै९२
यक्षीथी अघिको शराप् परि तहाँ * तेस्तो भयाकी थिई
रामलेमारिदिंदात आपपनि छुट्यो * फेर यक्षिको रूप लिई

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized by Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
पाया एति शराप् र इन्द्रपनि फेर * आफना स्थलै मा गया
पत्नीलाइ शराप दिएर ऋषिले * पत्थर बनाईदिया ५
जन्तू कुल. नहुनन् यहाँ अबउपर * पत्थर् भइ तैं रहेस.
जैल्हे ता रघुनाथ चरण धरिदिनन् * तैले तँ मुक्तै भएस.
यस्तो सत्यशराप पर्‍यो र पतिको * ताहीं अहिल्या पनी
पृथ्वीमा परि गै गइन् अचल भै * पत्थर स्वरुपको बनी ६
पादस्पर्श ति खोज्दथिन् हजुरको * पाप् मुक्त होला भनी
तिन्‌लाई करुणा गरी हजुरले * कुल्‌चो दिन्या हो पनी
यस्तोबिन्तिसुन्या जसै ति ऋषिको * श्री राम् तुरुन्तै गया
देख्या पत्थर एक् ढुलो र रघुनाथ् * ज्यूले त कुल्चोदिया ७
सुन्दर् मूर्ति भई खड़ी भइगइन् * ताहाँ अहिल्या पनी
श्रीरामचन्द्रजिलेप्रणाम् पनिगर्‍या * इ ब्राह्मणी हुन् भनी
देखिन् श्री रघुनाथलाई र तहाँ * खुशी अहिल्या भइन्
पूजा पाठ गरेर राम्‌सित बिदा * मागी पतीथ्यैं गइन् ८
ताहाँ देखि चल्या र जल्दि रघुनाथ् * गङ्गाजिका तीर झर्‍या
तर्नाको प्रभुले जसै मन गर्‍या * माझी चरणमा पर्‍या
स्वामित्‌काडुइपाउकोअतिअलल् * धूलो जसै ता पर्‍यो
पत्थर हो त पनी मनुष्य सरिको * सुन्दर् स्वरूपपो धर्‍यो ९
तेस्तै पाठ यहाँ भयो पनि भन्या * डुङ्गा स्वरूप् धर्दछन्
डुङ्गाले पनि रुप धर्‍यो यदि भन्या * हाम्रा जहान् मर्दछन्
तस्मात् पाउ पखालि वारि तिरमा * हाम्रा शिरोपर छरी
पाल्नूहोस. अहिले हजुरहरुयहाँ * गङ्गाजिका पार. तरी १०
यस्तो बिन्ति सुनी तहाँ प्रभुजिले * पाऊ अगाड़ी दिया
माझीले जलले पखालि उहि जल. * आफना शिरोपर् लिया
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
हेराम्! जाउँ जनक्जिकापुरिमहाँ * राजा जनक् छन् बड़ा
तो खूब् आदर भक्तिले हजुरका * साम्ने हुन्याछन् खड़ा९९
ताहाँएक्शिवको धनुष्पनि छ बेश् * देखीयला त्यो पनि
यो बिन्ती ऋषिको सुनेर रघुनाथ् * खुशी भया बेश् भनी
बिश्वामित्र र भाइ लक्ष्मण लिई * श्री राम्हिंड्याथ्या जसै
आश्रम् गौतमको पर्‌यो नजरमा * गङ्गा किनार्मा तसै १००
आश्रम्कानगिचैअसल्फलसहित् * फुल्को बघैंचा थियो
जन्तू नाम थिएन कोहि त पनि * संसार्बिनै त्यो जियो
मालुम्राम्कनक्याकहोंकमिथियो * जो ता जगत्का धनी
सोध्या तैपनि यो असल् छ किनहो * रित्तो बघैंचा भनी १
बिश्वामित्र थिया सबै गुण निपुण * बिस्तार सुनाया पनी
गौतम्कोअघिवस्ति हो अबभन्या * छैनन् यहाँ ववै भनी
भार्या गौततकी समान गुणकी * भक्तै अहिल्या थिइन्
ब्रह्माकी ति त पुत्रि हुन् गुणिहुंदा * खुब खुश गराईलिइन् २
गौतम् कार्य निमित्त दूरजब गया * रूप गौतमैको धरी
पौंच्या गौतमपत्निका नजिकमा * इन्द्र अगाड़ी सरी
इन्द्रै भोग विलास गरेर खुशि भै * फर्की गयाथ्या जसै
देख्या गौतमलाइ गौतमजिले * आश्चर्य मान्या तसै ३
आफ्नू रूप दुरुस्त देखिकन खूब् * गौतम् रिसाया पनि
सोध्या होस्तँ कउन् बता नतरता * हेर् भस्म गर्छू भनी
ब्रह्मन्! इन्द्र म हूं भनेर डरले * बिन्ती गर्‌याथ्या जसै
गौतम्ले पनि रीसमा परि दिया * यस्तो शराप् पो तसै ४
योनीमा अति लुब्ध आज भइछस् * यत्रो बडो भै पनि
तेरो येहि शरीरमा अब हुनन् * हज्जार योनी भनी
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पाऊले तहिं कुलाचिंदा उठिगइन् * जस्ताकि तस्ती भइन्
सोही श्री रघुनाथको म अहिले * धेरै बयान् क्या गरूँ
रुप्मा शील महाँ पराक्रम महाँ * छैनन् इ जस्ता अरू ३

श्री सुब्बा होमनाथात्मज पं० केदारनाथकृत सीता र रामको प्रथम मिलन ।

विश्वामित्रजिको सुनेर सब बात् * राजा जनक्ले तहाँ ।
राख्या ती ऋषिका सहित् दुइ कुमार् * उत्तम् कुनै घर् महाँ ॥
सेवा गर्नु उचित् थियो ति सबको * जस्ता प्रकार्ले गरी ।
त्यो सब् पूर्ण गरी गया महलमा * रात्री भयाका घरी ॥ ४ ॥
विश्वामित्र पनि सुतौं भनि गया * आफ्ना पलङ्मा जसै ।
पाऊ दाबि लिनुभयो खुशि भई * रामचन्द्रजीले तसै ॥
निद्रामा जब ती ऋषीश्वर पर्‍या * फेरी उसै बीच्महाँ ।
भाईलाइ लिएर क्यै घरि तलक् * सुत्नुभयो राम् तहाँ ॥ ५ ॥
भोली पल्ट उठी नुहाइ पहिले * फुल् टिप्नलाई भनी ।
राम् लक्ष्मण् दुइ भाइलाइ ऋषिले * खुशभै पठाया पनी ॥
फुल्बारी नजिकै थियो अति असल् * राजा जनक्को तहाँ ।
पौंच्या ती दुइ भाइहेरु गई फेर् * सोही बगैंचा महाँ ॥ ६ ॥
मन्दिर् पार्वतिको थियो तहिं असल् * दिन् दिन् सिताजी गई ।
गर्थिन् पूजन ती जगत्-जननिको * ठूलो नियम्मा रही ॥
नित्यैका सरि धेर् लिएर सँगिनी * फेरी उसै बीच्महाँ ।
हंसैका सरि मन्द मन्द गतिले * आइन् सिताजी तहाँ ॥ ७ ॥
मङ्गल् बाद्य बजाइ पार्वतिजिको * पूजा विधान्ले गरी ।
जो आफ्ना मनमा थियो वर पनी * माग्दीभइन् त्यो घरी ॥
एक्लै क्वै सँगिनी ती जानकिजिकी * फुल्वारीमाहाँ गई ।
राम् लक्ष्मण् दुइ भाइलाइ उसले * देखेर फिर्दीभई ॥ ८ ॥
तेस् बेला बहुतै प्रसन्न थिइ त्यो * तेस्लाइ देखी लिई ।
सीताका सँगिनी अरु जति थिया * तिन्ले सुध्याया गई ॥
हे प्यारी ! तिमीलाइ खुब् खुशि हुन्या * देख्छौं सबैले किन ।
त्यस्को कारण कुन्छ त्यो कहु यहाँ * चाँडो न ढाँटीकन ॥ ९ ॥
यो प्रश्नै सँगिनि हरु सकलको * सूनेर खुसी भई ।
भन्छिन् ती सँगीनी तहाँ सब कुरा * साम्ने सिताका रही ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
यस्ता रीतृसित नाउमा चढि सहज * गङ्गाजिका पार गया
श्यामसुन्दररघुनाथबहुत्खुशिहुंदै * दाखिल जनकपुरभया ११
विश्वामित्र ऋषी बहुत् खुशि हुंदै * दुवैंकुमार साथ् गरी
आया यस पुरिमा भनि जब सुन्या * दौड्या जनकत्यस घरी

राजा जनक बंश परिचय

इक्ष्वाकु रविवंशिका सुत निमी * क्वै एक भयाथ्या नृप
तिन्ले स्वर्ग सदेह जान्छुभनि मख् * गर्ने लिंदामा हठ ॥ १२ ॥
आफ्ना प्रोहित श्री बशिष्ठ सँगमा * तिन्ले लडाजी गर्‍या ।
श्राप पर्दा मुनिको विदेह हुनगै * राजानिमी ती मर्‍या ॥
सोहीलाश निमिको मथन्गरिलिया * सारा महर्षी गइ ।
मन्थन्ले गरि एक् शिशू उसवखत् * उत्पन्न ताहीं भइ ॥ १३ ॥
जन्मी मन्थनलो विदेह र मिथी * नाम्त्यस कुलैको चल्यो ।
तिन्कै वंशज हुन् जनक् नृपति इ * सीरध्वजै नाम् थियो ॥

पुगी प्रश्न गर्‍या सबै कुशलको * पाउ महाँ शिर धरी
देख्या सुन्दर राजकुमार जनकले * पूज्या ति ईश्वर सरी १४
पक्का गर्न निमित्त फेर जनकले * सोध्या ऋषीथ्यैं पनी
जान्या जान्नत चित्तले त भगवान् * विष्णु इनै हुन् भनी
ब्रह्मन् ! पुत्र इ हुन् कउन पुरुषका * बिस्तार हवस बेश गरी
क्लेशको लेशनराखियस बखतमा * मेरो लग्या मन् हरी १५
बिश्वामित्रजिले सुन्या बिनति यो * राजा जनकको जसै
यस्ता हुन् इ भनेर सब ति ऋषिले * बिस्तार बताया तसै
हे राजन्! दशरथजिका इ सुत हुन् * नाम् राम लक्ष्मण् भनी
भन्छन् मानिसले गरी नसकिन्या * गर्छन् पराक्रम् पनी १६
मारिचलाइ सुबाहुलाइ अरु ता * को जित्न सक्न्या थिया
रामले मारिचलाइ फ्याँकि सहजै * सुबाहु मारीदिया
पत्थर भै कति वर्ष सम्म रहँदी * गौतमकि नारी थिइन्
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
ध्यान् राखी मनमा उसै स्वरुपको ❀ बिमुलिन् नयन् त्यै घरी ॥
देख्याथ्या सँगिनी हरु सकलले ❀ त्यो हाल् सिताको जसै ।
संकोच् मानिलिया तथापि मुखले ❀ बोल्नै सकेनन् तसै ॥ १८ ॥
सीताका सँगिनीहरू पनि सबै ❀ मोहित् हुनाले गरी ।
लाग्या हेर्न घुमी घुमी प्रभुजिको ❀ सुन्दर् स्वरुप् त्यो घरी ॥
छम् छम् नूपुरको उठ्यो मधुर स्वर् ❀ जुन तर्फबाटै तहाँ ।
तेस्तर्फै रघुनाथको पनि पर्‍यो ❀ दृष्टी उसै बिच्महाँ ॥ १९ ॥
शोभा जो छ सिताजिको सकल त्यो ❀ देखीलिनाले गरी ।
मन् मन्मा बहुतै प्रसन्न हुनुभो ❀ राम्चन्द्रजी त्यो घरी ॥
ब्रह्माले सब सुन्दरै चिजहरू ❀ जो हुन् निकाली लिया ।
साँचामा धरि मानु जानकिजिको ❀ त्यो देह ढाली दिया ॥ २० ॥
जस्तै बत्ति बलेर झाड़हरुको ❀ झन् बढ्छ शोभा यहाँ ।
बढ्थ्यो सुन्दरता सिताजि हुनगै ❀ सब्को उसै रित् महाँ ॥
यसरीत्को ति सिताजिलाइ प्रभुले ❀ देख्नू भएथ्यो जसै ।
आज्ञा भो इ कुरा मधुर् बचनले ❀ लक्ष्मण्जिलाइ तसै ॥ २१ ॥
हे भाइ ! बुझिल्यौ सिताजि इनि हुन् ❀ इन्लाइ देख्ता महाँ ।
मेरो इन्सित प्रेम हुन्छ किन लौ ❀ जानून् विधाता यहाँ ॥
हेर्नू छैन कुदृष्टिले गरि यहाँ ❀ क्वै नारिलाइ भनी ।
हेर्‍याको कहिल्यै थिएन बुझिल्यौ ❀ स्वप्ना हुंदामा पनी ॥ २२ ॥
भाग्न्या छैन लड़ाइँ छोडीकन जो ❀ युद्धै भयाका घरी ।
जो जन् हुन्न विकल् जनानि अरुको ❀ देखीलिनाले गरी ॥
माग्न्या जन्हरुलाइ केहि नदिई ❀ फेर्दैन जस्ले यहाँ ।
तेस्तै जन्हरुलाइ मात्र तिमिले ❀ धन्यै बुझ्या मन्महाँ ॥ २३ ॥
पैदा यो रघुवंशका कुल महाँ ❀ हामीहरूको भई ।
लाञ्छन् लाउनु योग्य ठान्दिन यहाँ ❀ यस्ता प्रकार्ले रही ॥
पैल्हे एति भनेर भाइ कन फेर् ❀ लीएर साथ्मा तहाँ ।
निस्की त्यो फुलवारि देखी रघुनाथ् ❀ पाल्नुभयो बास्महाँ ॥ २४ ॥
ध्यान्मा मग्न सिताजि तेस् घरि थिइन् ❀ क्वै एक् सखिले गई ।
बाहू पक्रि सिताजिलाइ इ कुरा ❀ त्यो भन्न लाग्दीभई ॥
हे राजपुत्रि ! अबेर भो अब छिटो ❀ जाऊँ सबै घर् महाँ ।
जानूभो रघुनाथ ध्यान् यसरि यो ❀ कस्को गर्‍याको यहाँ ॥ २५ ॥
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
देख्याँ राजकुमार सुन्दर दुई * मैले बगैंचा महाँ ।
यौटा नील मणिले र एक सुनले * मानू मढ्याका यहाँ ॥ १० ॥
देख्न्या नेत्र भयो कुरा गरिलिन्या * जिभ्रो भयो यो घरी ।
जिभ्राले मइँले बयान् गरिलिनू * कस्ता प्रकार्ले गरी ॥
हेरी ती दुइको मनोहर स्वरूप् * नेत्रै सुफल् यो गर्याँ ।
सुन्दर्मा ति समान् नमानि अरु क्वै * आनन्द साह्रै पर्याँ ॥ ११ ॥
तेस्को तेस् रितको कुरा सुनिलिई * सब् ती प्रसन्नै भई ।
मन्को भाव सिताजिको पनि तहाँ * सम्पूर्ण जानीलिई ॥
यौटी क्वै सँगिनी ति जानकिजिको * फेरी उसै बीच्महाँ ।
लागी भन्न इ बात जानकिजिको * हेरेर मुख्मा तहाँ ॥ १२ ॥
विश्वामित्रजिले हिजो दुइ कुमार् * ल्याई रह्याछन् जउन् ।
जाने निश्चय राज्कुमार ति दुवै * श्री राम लक्ष्मण् उ हुन् ॥
देखी सुन्दरता ति भाइ दुइको * मोहित् सबै जन् भई ।
गर्छन् बर्णन त्यो फगत् यस बखत् * घर् घर् सबैका गई ॥ १३ ॥
दर्शन् ती दुइ भाइको गरिलिनू * योग्यै छ ऐलहे भनी ।
दर्शन् यै अउसर् महाँ गरिलिऊँ * हामीहरुले पनी ॥
सुनिन् तेस् रितको कुरा सँगिनीको * श्री जानकीले जसै ।
लाग्यो बग्न तहाँ दुवै नयनमा * हर्षाश्रुधारा तसै ॥ १४ ॥
संकेत्ले गरि फेर् तँ हिंड् अघि भनी * तेस्का पछाड़ी भई ।
लागिन् जान सिताजि, फुल् रघुपति * जुन् ठाउँ टिप्थ्या रही ॥
फेरी ती सँगिनी पनि जती थिया * लाग्या पछाड़ी महाँ ।
छम् छम् नूपुरको मनोहर अवाज् * उठ्तो भयो खुब् तहाँ ॥ १५ ॥
आफ्नू हुन्छ विवाह राम्सित भनी * जानीलिनाले गरी ।
लागिन् हेर्न सिताजि राम्कन तहाँ * चौतर्फमा त्यो घरी ॥
मन्को बात सिताजिको उस बखत् * जान्दैनथ्या क्वै पनी ।
ठान्थ्ये मात्र इ देख्न लाई आहले * आइन् यसोरी भनी ॥ १६ ॥
क्यै दूर् बाट दुवै ति भाइकन फेर् * देखेर सोही घरी ।
देखाया सँगिनी हरु अघि सरी * हात्ले इशारा गरी ॥
सुन्दर् श्यामस्वरूप् जसै प्रभुजिको * देखिन् सिताले तहाँ ।
उस्मै मग्न भएर सब् अरु कुरा * बिर्सिन् उसै बीच्महाँ ॥ १७ ॥
खैंचो सोही सकल तहाँ प्रभुजिको * आफ्ना नयनले गरी ।
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

य बिच्मा खुशिभै भन्या जनकले * रामले उचालुन् धनू
सीता छोरी म दिन्छु रामकन गरुन् * वोहा बहुत क्या भनूँ
साँचो वाणि सुन्या र सोहि रितका * बात्चीत् गर्‌याथ्या जसै
पाँच् हज्जार् बिरले उचालि बलले * ल्याया धनू त्यो तसै ३३
ताहाँ श्री रघुनाथ उठेर नजिकै * सोही धनूथ्यैँ गया
बाम्हात्मा सहजै उचालि धनु त्यो * रामले त लींदा भया
ताँदो जल्दि चढ़ाइ खैंचनुभयो * ताहाँ धनूको जसै
टुक्रा दुई भई गिर्‌यो धनुष त्यो * खुशी भया सब् तसै ३४
हर्षै हर्ष भई उसै बखतमा * सारा जनक्पुर् भरी
आदर् खुब् प्रभुको गर्‌या जनकले * आलिंगनादि गरी
सीताले पनि रामका शिर उपर् * माला कनक्को धरी
छम् छम् पाउ गरी फिरिन् घरमहाँ * मङ्गल भयो तेस् घरी ३५
मालिक् हुन् दशरथ् खबर् दिनुपर्‌यो * ती छन् अयोध्या महाँ
जाउन् पत्र लिएर मानिसहरू * चाँड़ो ति आउन् यहाँ
यस्तो बिन्ति जनक्जिले गरि तहाँ * एक् पत्र लेखी दिया
सोही पत्र लिएर दूत्हरू पनी * चाँडै अयोध्या गया ३६
त्यो बिस्तार् दशरथ्जिले जब सुन्या * आनन्दमा ती पर्‌या
सबले जानुपर्‌यो जनकपुर महाँ * भन्न्या हुकुम् झट दिया
जम्मा लश्करभै गयो क्षणमहाँ * जल्दी जनक्पुर पुग्यो
क्या वर्णन् भिड़को गरूँ उसबखत् * खाली अयोध्या भयो ३७
यस्ता रित्सित सब् गया जति थिया * सेना जनक्पुर महाँ
दाखिल् भो दशरथ्जिका हुकुमले * हर्ष बढ्यो खुब तहाँ
ताहाँ श्री दशरथ्जिको जनकले * आदर बहूतै गर्‌या
लक्ष्मणले सँग राम् पनी तहिं पिता * जीका चरण्मा पर्‌या ३८

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
जानूभो रघुनाथ् भनेर उसको * त्यो बोलि कान्मा परी।
खोलिन् नेत्र छुटेर ध्यान सब त्यो * सीताजिले त्यै घरी ॥
आफ्नू त्यो सबबात् बुझया ति सबले * भन्न्या बिचारी तहाँ।
लाज्मानी बहुतै सिताजि पनि फेर् * फिर्दीभइन् घर्महाँ ॥ २६ ॥

पिनाक धनुष परिचय र धनुषभङ्ग सीता स्वयंवर

विश्वामित्रजिले सकेर सब काम् * त्यो प्रातकाल्को तहाँ
सङ्मा राजकुमार् दुवै लिइ गया * राजा जनक् छन् जहाँ
सत्कार् पाइ जनक्जिदेखी बहुतै * खुशी तिनै जन भया
विश्वामित्रजिले जनक्सित तहाँ * फेर् भन्न लागीगया २७
हे राजन्! शिवको धनू छ अहिले * तिम्रा सँगमा भनी
सुन्दा त्यो धनु हेर्न खातिर यहाँ * आया दुवै इ पनी
चाँड़ो त्यो धनुलाइ ल्याउ तिमिले * यो रङ्गभूमी महाँ
तिम्रो जो मतलब् छ त्यो पनि बुझे * सिद्धै हुन्या सब् यहाँ २८
विश्वामित्रजिको इ बात् सुनिलिया * राजा जनक्ले जसै
मन्त्रीलाई हुकुम् दिया धनु यहाँ * लौ ल्याउ भन्न्या तसै
शारंगै र पिनाक नाम् दुइ धनू * श्री विश्वकर्माजिले।
आफ्नो शक्त्यनुसार विश्वभरमा * प्रख्यात् गराई रचे ॥ २९ ॥
पैलो चाहिं लिनू भयो हरिजिले * शारंग नाम्को छ जो।
दोश्रो जो त्रिपुरासुरै वध गर्‍या * श्री शंभुले सोहि हो ॥
पूजा गर्न पिनाक् धनू कन उही * शंकर्जिदेखि तहाँ।
माग्दा देवसमस्तले खुशि भई * राख्या जनक्पुर्महाँ ॥ ३० ॥
त्यस्को पूजन गर्दथ्या जनकजी * अत्यन्त भक्ती गरी।
स्नान् गर्नै नदिमा गया नृपति ती * क्वै कालमा त्यस्घरी॥
हज्जारौंजनले उचाल्न धनुत्यो * सक्तैनथ्या क्यै गरी।
सीताले फुलझैं उचोलि धनु त्यो * लिप्पोत् गरिन त्यस घरी ॥३१॥
लोकोत्तर् बुझि शक्ति जानकिजिको * वालक् पनैमा पनि।
द्यौता लाइ गराइ साक्षि नृपले * यस्तो गर्‍या प्रण् अनि॥
ताँदो यो धनुको उठाइ करले * खींच्नेछ जो वीर् जन।
सीता लायक वर् हुनेछ त्यहिनै * गर्छु म ...ले प्रण ॥ ३२ ॥
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized by Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रावणले पनि हाँडि त्यो रगतको * हातमा लिएथ्यो जसै ।
लाग्यो पोल्न र नारदै सँग गई * सोद्धधो भयो यो यसै ॥ ४५ ॥
देवर्षे ! किन अग्निकै सरि छ यो * आज्ञाहवस् सब् यहाँ ।
रावण्को सुनि वाणि नारदजिले * भन्दा भया यो तहाँ ॥
हे रावण् ! यस रक्तबाट जुन स्त्री * उत्पन्न होली त्यही ।
तेरो नाशनिमित्त मै कुलसहित् * जान्छस् तँ नष्ट भई ॥ ४६ ॥
यस्तो बात सुनेर नारदजिको * मन्मा बहुत् डर् परी ।
एक्लै रावण झट् उठ्यो रगतत्यो * फ्याक्ने इरादा गरी ॥
हाँडी त्यो करमा लिईकन हिड्यो * कालै स्वरुप् जो थियो ।
धेरै स्थान् घुमि यो जनक् पुरमहाँ * त्यस्लाइ गाडीदियो ॥ ४७ ॥

जान्थ्यौं भूमि पवित्र गर्न भनि एक् * क्ये यज्ञ गर्दा महाँ
जोत्ताँमा त सिताजि निस्कनगइन् * आश्चर्य मान्यौं तहाँ
पायाँ छोरि भनेर नाम् पनि असल् * सीताजि राखीदियाँ
गर्थिन् बालकमा अनेक तरहको * लीला म खुशी थियाँ ४८
रामनामले दशरथजिका सुत भई * खेल्छन् अयोध्या महाँ
तिम्री पुत्री सिता उनै प्रभुजिकी * माया ति आइन् यहाँ
यो लीला छ बुझी सिताकन तिनै * रामलाइ दीया भनी
नारदजी उठि गै गया उहि सुनी * याद् भो मलाई पनी ४९
कुन् पाठले अब रामलाइ म सिता * पारूँ विचार् मा पर्याँ
थीयो यो शिवको धनुष् यहि उसै * मा यो प्रतिज्ञा गर्याँ
ताँदो यस धनुको चढाउन जउन् * वीर्ले त सक्ला यहाँ
सीता छोरि दिन्याछु तेसकन फिका * होवैन यस बात् महाँ ५०
जानुन् सब् बिरले भनीकन गर्याँ * यस्तो प्रतिज्ञा जसै
यो सूनीकन देशका बिरहरू * आया तुरुन्तै तसै
को सक्थ्या धनु त्यो उठाउँन बिना * श्रीराम् अगाडी सरी
हिक्मत् हारि सबै घरै फिरिगया * दर्शन् धनूको गरी ५१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

वसनालाइ हबेलि सुन्दर जनक * जोले खटाया तहाँ
खुशी भै दशरथ पनी गइ बस्या * तेसै हबेली महाँ
सुन्दर लग्न खटन् गर्‌या जनकले * मङ्गल शहरमा चल्यो
नाच्कीर्तन्हरुभै प्रकाशअतिहुन्या * रात्माचिराग.खुबबल्यो ३८
मण्डप जो छ बिबाहको उस उपर * झुम्का हिराका खुल्या
मूगा, मोति, जुहार जनकपुर महाँ * घर घर सबैका झुल्या
यस्तोरित्गरि सब् बिबाह विधिभो * चारै जना भाइको
हर्षैले परिपूर्ण मन् हुनगयो * सीताजिकी माइको ४०
राम् लक्ष्मण् दुइलाइ ता जनकले * आफ्ना ति छोरि दिया
भाईका त भरत्जिलाइ अनि फेर * शत्रुघ्नलाइ दिया
सीता पत्नि भइन् रमापतिकि ता * लक्ष्मण्जिकी उर्मिला
पत्नी हुन् श्रुतकीर्ति ता भरतकी * शत्रुघ्नकी माण्डवा ४१

राजा श्री कुशकेतु जो जनकका * हुन् भाइ तिन्की सुता।
हुन ई माण्डवि, तक्ष, पुष्कर इ द्वि * इन्का भया पुत्रता ॥
साकल्याधिप क्वै कुशध्वज भनी * भाइ जनक्का थिया।
तिन्की श्री श्रुतकीर्ति पुत्रीकन जो * शत्रुघ्नलाइ दिया ॥ ४२ ॥
तिन्कै पुत्र सुबाहु फेर् हुनगया * श्री भूपकेतू पनि।
बढ्दैगो यहि रीत् रघूकुल विषे * सन्तानको जीवनी ॥

जस्तै आफु थिया अनन्त गुणका * चौधै भुवन्का धनी
अभ्यन्तर् मनले बिचार गरदा * उस्तै ति पत्नि पनी ४३
विश्वामित्र वशिष्ठ दूइ ऋषिथ्यैं * यस्तो सिता हुन् भनी
उत्पत्ती अघिको सबै जनकले * बिस्तारबताया पनी

लंका खोसिलियो कुबेर सँगमा * त्यो रावणैले जब।
जीती कौडी लियो सुरासुर समेत् * त्रैलोक्य देखी तब ॥ ४४ ॥
माग्यो कर ऋषिहेरूका सँग पनी * त्यस्ले बलात्कार् गरी।
करका रूपमहाँ दिया रगतपो * हालेर हाँडी भरी ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

श्री रामचन्द्रसित लछून ति जनकमाया ।
त्यो रङ्गभूमि सब घेरि लिएर आया ॥ ५७ ॥
पैल्हे सदाशिवजिले भुजमा लियाको ।
जो उत्तमै धनु थियो उहि भाँचियाको ॥
श्री परशुराम ऋषिले पनि चाल पाया ।
सोही जनकपुर उसैघरि दौड़ि आया ॥ ५८ ॥
बाबा श्री जमदग्नि औ जननि हुन् ❀ श्रीरेणुका तिन्महाँ ।
जन्म्या श्रीहरिको लिएर अवतार् ❀ श्रीपशुरामजी तहाँ ॥
एकदिन् भूपति कार्तवीर्य तिनका ❀ पौंचेर आश्रम्महाँ ।
गाई नन्दिनिलाइ देखि तिनले ❀ चोर्दाभया झट् तहाँ ॥ ५९ ॥
बाबु श्रीकृत्तवीर्य औ जननि हुन् ❀ एकावली, तिन् महाँ ।
जन्म्या हैहयराज् सहस्रकर तो ❀ श्रीकार्तवीर्यै तहाँ ॥
सत्या नामकि पत्निबाट इनका ❀ हज्जार छोरा भया ।
वैनी हुन् इनि रेणुकाकि जसमा ❀ श्री पशुराम् जन्मिया ॥ ६० ॥
गर्थे शासन नर्मदा तटविषे ❀ माहिष्मती राज्यमा ।
अन्तिम्काल हुंदा गयो मन पनि ❀ तो नन्दिनी चोर्नमा ॥
आफ्नी गाइ न देखि क्रुद्ध अति भै ❀ माहिष्मती पुर् महाँ ।
आई इन्कन मारि गौलिइ फिर्‍या ❀ श्री पशुरामजी तहाँ ॥ ६१ ॥
सोही रीस् लिइ कार्तवीर्य नृपका ❀ छोराहरूले पनि ।
चोरझैं गै जमदग्निलाइ छलले ❀ मारीदिया, यो सुनी ॥
लाल् लाल् नेत्र गरेर क्रुद्ध अतिभै ❀ श्री पशुरामले तहाँ ।
एक्काईस पटक् धराकन गर्‍या ❀ क्षत्रीयहीन क्षण् महाँ ॥ ६२ ॥
गोरो छ वर्ण उस माथि विभुत् घस्याको ।
भारी जटाजुट छ माथ उपर् गर्‍याको
टेढ़ा दुवै भृकुटि लाल नजर् गर्‍याका ।
साहै ठुलो परशु काँध विषे धर्‍याका ॥ ६३ ॥
देख्तै महाँ ति बुझिन्या भइ क्रोध मूर्ति ।
छोड्या सबै नृपतिले तहिं आफ्नु फूर्ति ॥
लुकछन् चरा जसरि बाज् गइ झम्टदामा ।
त्यस्तै भया नृपतिहेरु ति आउँदामा ॥ ६४ ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रामले पूर्ण गराइबकसनुभयो * मेरो प्रतिज्ञा पनी
यो जान्याँ पनि सब कृपा चरणले * गर्दा भयाको भनी
विश्वामित्रजिथ्यैं भनेर इ कुरा * फेरी अगाडी सरी
सीतानाथ् रघुनाथको स्तुति गर्‌या * आनन्दमा तो परी ५२
दाईजो सय कोटि दौलत सहित * बेस्‌ बेस्‌ अयुत् रथ् दिया
घोड़ा तिन्सय लाखदिया छसयता * खुब मत्त हात्ती दिया
पैदल् लश्कर एक लाख सय तिन् * केटी दियाथ्या जसै
पूजा ताहिं बशिष्ठको पनि भयो * भारी डबल्‌ले तसै ५३
पूजा ताहिं भरत्‌जिको पनि भयो * लक्ष्मण्‌हरुको पनि
इच्छा भो रघुनाथको अब फिरी * जाऊँ अयोध्या भनी
जानाको मतलब् बुझी जनकजी * राम्‌का चरण्‌मा पर्‌या
राजी मन् सबको गराइ बहुतै * बीदा जनक्‌ले गर्‌या ५४
सीताजी महतारिका अघि गई * आलिङ्गनादि गरी
लागिन् रुन र त्यो सुनेर सबका * आँसु खस्या बर्बरी
सीताजी कन अर्ति यो पनि दिया * सासू ससूरा सरी
अर्को छैन बड़ो यही बुझि गर्‌या * तिन्‌कोटहल् बेस्‌ गरी ५५
स्त्रीको धर्म पतिव्रता हुनु ठुलो * जानेर हूनू भनी
एती अर्ति दिया र तेस्‌ बखतमा * बीदा भया तो पनी
यै बिचमा नगरा बज्यो प्रभुजिको * भेरी मृदंगै पनी
स्वर्गैमा पनि हर्ष भो प्रभु गया * फेरी अयोध्या भनी ५६
राम्‌को लश्कर बाह्रकोश् जनकपुर * देखी जसै ता गयो
सबको चित्तमहाँ बड़ो भय दिन्या * उल्का बहूतै भयो

लक्ष्मण पर्शुराम सम्वाद—परशुराम कार्तवीर्य परिचय।

सीताजीलाई हरन्या मनसुब् गर्‌याका।
जो जो थिया अरु तहाँ नृपगण गयाका॥

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
हे ब्रह्मन् ! धनु भाँच्न्या हजुरको ❀ होला कुनै दास त्यो ।
आज्ञाहोस् मँइ गर्छ गर्नु पर्न्या ❀ त्यसले जती काम हो ॥ ७२ ॥
श्री रामको इ कुरा सुन्या तर पनी ❀ क्रोधित् हुनाले तहाँ ।
लाग्या भन्न ति परशुरामजि इ बात ❀ फेरी उसै बिच् महाँ ॥
दासको काम् जति गर्दछन् जगतमा ❀ केवल् उनै दास हुन् ।
शत्रुको गरि काम् म दास हुँ भनी ❀ तेस्लाइ दास् मान्छ कुन् ॥ ७३ ॥
भाँच्तो भो धनुलाइ आइ जसले ❀ मेरा गुरुको यहाँ ।
हे राम् ! मान्दछु तेसलाइ मइँले शत्रु ठुलो मन्महाँ ॥
तस्मात् छोड़ि समूह यो अलगहोस् ❀ त्यो दुष्ट एसै घरी ।
मर्न्याछन् नहिता इ सब् जनअरू ❀ मेरा प्रहारले गरी ॥ ७४ ॥
यो बात् श्री रघुनाथजीसित गर्‍या ❀ श्री परशुरामले जसै ।
लाग्या लक्ष्मण हाँसि भन्न इ कुरा ❀ तिनका सँगैमा तसै ॥
भाँच्यौं धेर् धनु हामिले अघि तिसब् ❀ भाँची लिएको महाँ ।
क्यै रीस् गर्नु हुंदैनथ्यो किन भयो ❀ ऐलहे रिसानी यहाँ ॥ ७५ ॥
भन्छन् लक्ष्मणलाइ फेर् ति ऋषिले ❀ हे दुष्ट ! नाश भै मति ।
बोल्छस् धेर् किन मर्नलाइ तँ यहाँ ❀ ख्याल नराखी रति ॥
ठुलो यो धनु हो सदाशिवजिको ❀ प्रख्यात् छ संसार् महाँ ।
छुद्रा सब् धनुझैं तँ यो धनु पनी ❀ मान्दोभइस् के यहाँ ॥ ७६ ॥
भन्छन् लक्ष्मणजि हाँसी धनुहरुजति छन् एक् सरीनै सबै हुन् ।
जीर्ण भै भाँचियो ता यहि धनु अहिले हानि भो लाभ भो कुन् ॥
श्री रामले ठान्नु भै त्यो जबर धनु ऋषे ! हेर्न पक्रीलिनुभो ।
छुँदैमा भाँचियो त्यो कसुर कउन फेर् रामले गर्नु भो त्यो ॥ ७७ ॥
भन्छन् फेर् परशुरामजी परशु गरि खड़ा हेरि लक्ष्मणजिलाइ ।
हे मूढ ! सामान्य ब्राह्मण भनिकन तँ यहा मान्दछस् के मलाइ ॥
हज्जार् बाहु भएको नरपति पहिले कार्तवीर्य थियो जो ।
तेस्को सब् हात काट्यां परशु लिइ यही प्राणहिन्को भयो त्यो ॥ ७८ ॥
जो जो सब् क्षत्रि थीया पृथिवि भरि अघी धेर् पटक् मारिलीयाँ ।
कश्यपजीलाइ मैले सकल पृथिवि यो खुश भई दान दीयाँ ॥
बालक भै सोहि मेरा अघि सरि यसरी बोल्दछस् जो तँ ऐले ।
त्यै बातले आफ्नु आफैं यहि बखत महां डाक्तछस् काल तैंले ॥ ७९ ॥
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuwan Vani Trust Donations

राजा जनक उस बखत् बहुतै डराई।
सीता र राम दुइलाइ लिएर आई ॥
पाउ महाँ ति ऋषिका तहिं पर्नलाया।
आशिष दुवै कन तहाँ ऋषिको दिलाया ॥ ६५ ॥
श्री रामको अधिक सुन्दर रूप देखी।
छुट्थ्यो सहज् मदनकै पनि जो छ शेखी ॥
श्री रामको उहि अपार स्वरूपलाई।
हेरीलिया ति ऋषिले मन खूब् लगाई ॥ ६६ ॥
क्रोधित हुनैगइ नजानिलिन्या समान।
सोध्छन् जनकजिकन फेरि ति पशुराम ॥
राजन् ! बताउ किन भूपति सब् इ आया।
यो बात् सुनी जनकले बिनती चढाया ॥ ६७ ॥
सीताजिको भइ स्वयंबर इ तपोधन् !।
जम्मा भया नृपति आइ यहाँ सबै जन् ॥
त्यो बात् सुनी ति ऋषिले चउतर्फ हेरी।
भन्छन् रिसाइ ति जनक्तिर फर्कि फेरी ॥ ६८ ॥

भाँच्यो त्यस् धनुलाइ कुन् पुरुषले * कारण् यहाँ कुन् परी।
हे नीच् भूपति ! लौ बता म कन त्यो * सम्पूर्ण बिस्तार् गरी ॥
भन्दैनस् ति कुरा भन्या तँ अहिले * तेरो छ यो राज् जति।
उल्टाई म दिन्याछु पृथ्वितलमा * क्रोधित् हुनाले अति ॥ ६९ ॥
भन्थ्या यै रितको कठोर् बचन धेर् * श्री परशुराम्‌जी तहाँ।
त्यस्‌को उत्तर दिन्नथ्या जनकजो * डर् पस्न गै मन्‌महाँ ॥
दुष्ट भूपति त्यस् स्वयम्बर महाँ * जो जो गयाका थिया।
त्यो हाल् देखिलिंदा तहाँ ति सबले * खुब् हर्ष मानीलिया ॥ ७० ॥
के होला अब लौ भनेर डरले * एक्‌एक् क्षणै त्यो घरी।
लागिन् मात्र तहाँ जनक्‌कि दुहिता * मानू छ मैन्हा सरी ॥
सारा काम बनेर बिग्रन गयो * हामीहरूको भनी।
लागे खल्बल गर्न दुखि:त भई * सब् पौरजन्‌ले पनि ॥ ७१ ॥
त्यस्‌तो हल्‌चल देखिबक्सनुभयो * श्री रामजीले जसै।
हात् जोड़ेर ति परशुराम् कन तहाँ * भन्नू भयो यो तसै ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

म ता शूर् वीर् पो हुँ सुनि हजुरको हप्कि मइँलो ।
कसोरी मानूला डर हजुरको लौ म अहिले ॥ ८७ ॥
जसै लक्ष्मणको त्यो बचन ऋषिले सब् सुनिलिया ।
तँलाइ मार्छू हेर् भनि परशु हातूमा धरिलिया ॥
नजर् भै त्यो चाला रघुपतिजिले गै बिच महाँ ।
पछाड़ी पार्नू भो उहि बखत लक्ष्मण् कन तहाँ ॥ ८८ ॥

लक्ष्मण् आहुति अग्निझैं ऋषि थिया * श्री राम जल् झैं भई ।
बिन्ती गर्नु ति परशुराम् सित भयो * यो बात् तुरुन्तै गई ॥
हे ब्रह्मर्षि ! अजान बालक हुंदा * यो भाइ मेरो अति ।
कुन् बात् कस्कन भन्नु पर्छ ति कुरा * जान्दैन ऐल्हे रति ॥ ८९ ॥
कुन् कस्तो गुणि हो नजानि सकिने * जैल्हे तलक् जन् यहाँ ।
सब्कासाथ् गरिलिन्छ मन्परि कुरा * तैल्हे तलक् लोक् महाँ ॥
बालक्नै जन त्यो ठहर्छ उसले * त्यै ठीक् कुनै बात् गरी ।
गर्दैनन् गुणिहेरु क्रोध रतिभर् * तेस्का उपर् त्यो घरी ॥ ९० ॥
गर्छन् बालकहेरु भै कन यहाँ * अज्ञानको बात् जति ।
आमा बाबु गुरूहरु उसमहाँ * हुन्छन् प्रसन्नै अति ॥
आफ्नै बालक शिष्य मानिलिनुभै * त्यै ठिक् हजुरले यहाँ ।
माफी यस्कन बक्सनै उचितहो * राखी दया मन्महाँ ॥ ९१ ॥
ज्ञानी धार्मिक धीर छैन अरु क्वै * जस्का समान् योघरी ।
तेस्तो भैकन हे मुने ! हजुरले * साह्रै अबुझ्का सरी ॥
बालक् माथि यसोरि क्रोध गरिलिनू * बादा-बिबादै महाँ ।
देख्ता मा अहिले मलाइ बहुतै * आश्चर्य लाग्यो यहाँ ॥ ९२ ॥
त्यस्माथी धनु भाँचन्या पनि महूं * क्यै दोषभया तेस्महाँ ।
दोषी ता म भयाँ इ लक्ष्मणजको * क्यै छैन दोषै यहाँ ॥
बिन्ती गर्नुभयो यसोरि बहुतै * रामचन्द्रजीले जस ।
लाग्या भन्न रिसाइ तै पनि तहाँ * श्री.परशुरामजी तसै ॥ ९३ ॥
हे राम् ! सक्तिन हेर्न भग्न धनु त्यो * मेरा गुरूको यहाँ ।
निन्दा लक्ष्मणलो मलाई बहुतै * त्यस्माथि गर्दा महाँ ॥
दोषी खुब् दुइ भाइ हौ तिमिहरू * भन्न्या बुझी यो घरी ।
बध गर्छु तिमिहेरुलाइ म यहाँ * काटेर टुक्रटुक् गरी ॥ ९४ ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
भन्छन् लक्ष्मण जि हाँसि हजुर कन तुमौं खुब घमण्डी भइलो ।
देखाई बारबार् त्यो परशु म कन लौ मार्न आँट्नु अहिलो ॥
पर्वत्‌लाई उडाइ लिन मन गरन्या फुक्नु मैं मानिलिन्छु ।
त्यै कारण हे द्विजोत्तम् ! हजुरकन जवाफ् यो यहाँ आज दिन्छु ॥ ८० ॥
लज्जालू हामि ह्वै नौ रघुकुल तिलकै हौं भनी हामि मान्छौं ।
बम्केकै यो बतास्‌ले उहि सरि कसरी हामि मुर्झाइ जान्छौं ॥
ब्राह्मण् जानी जनै फेर् उस उपर यहाँ देखि काँधमा धर्‌याको ।
सब् बात् हामी सहन्छौं यस वखत महाँ त्यो हजुर्‌ले गर्‌याको ॥ ८१ ॥
जस्‌लाई मारदा पाप् जससित रणमा हारिंदा हुन्छ दुर्नाम् ।
ब्राह्मण् सोही हजुरका सँग लड़ि अहिले बन्छ हाम्रो कउन् काम् ॥
चाहे मारिलिनूहोस् त पनि हजुरका पर्दछौं पाउ माहाँ ।
वाक्यै ठुलो छ नाथ्‌को अरु लिनु हतियार मान्दछौं व्यर्थ याहाँ ॥ ८२ ॥
लक्ष्मण्‌को त्यस प्रकार्‌को बचन जब सुन्या परशुराम् धेर जाग्या ।
विश्वामित्रैजिलाई नजर गरि तहाँ यो कुरा भन्न लाग्या ॥
ब्रह्मर्षे ! हेर यो मूढ्‌कन तिमि अहिले गर्छ कस्तो प्रलाप ।
यस्लाई चूप्‌गराऊ भनिकन तिमिले जो छ मेरो प्रताप ॥ ८३ ॥
नाहीं मान्र्याछु मैले परशु शिर उपर् आज यस्‌को बजारी ।
पाउन्नौ दोष् मलाई दिन तिमिहरु क्वै दोष यस्‌कै बिचारी ॥
लक्ष्मण्‌ले यस् प्रकार्‌को बचन जब सुन्या फेरि त्यै बीच माहाँ ।
क्यै हाँसी भन्नलाग्या नजर गरिलिइ परशुराम्‌लाइ ताहाँ ॥ ८४ ॥

ऋषे ! आफ्नु आफैं गुणहरू बयान गर्नु सब भो ।
हजुर्‌को गुण् सोही कहन अरु चाहिन्छ अबको ॥
अरु केही भन्न्या हजुर कन मन्सुब् छ त अति ।
बयान् आफ्नू आफै गरिलिनुहवस् गर्नु छ जति ॥ ८५ ॥
न बोली मुख्‌ले क्यै कटु बचन शत्रू कन यहाँ ।
प्रकट गर्छन् शूर्‌वीर्‌हरु सब पराक्रम् रण महाँ ॥
घमण्डै गर्छन् जो हजुर सरि काम् सिद्ध नभई ।
अवश्यै मन्र्याछन् समर गरनै लाइ ति गई ॥ ८६ ॥
अहो ! मेरो कालै लिइ हजुर आया सरि गरी ।
मलाई गाली खुब किन दिनभयाको यस घरी ॥
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यो सब् वात बुझेर लड्न म यहाँ ❀ सक्नेर् पछी सर्दछु ।
लड्नू तैं पनि भन्नु हुन्छ त भन्या ❀ त्यो सब् पुरा गर्दछु ॥ १०२ ॥
धर्मैं सङ्गत गूढ् मधुर बचन त्यो ❀ रामचन्द्रजीको सुनी ।
अज्ञान्को परदा खुलेर इ कुरा ❀ फेर् भन्नलाग्या मुनी ॥
हे राम्! यो धनु लेउ लक्ष्मिपतिको ❀ खैंचिलिया यो यहाँ ।
जान्ला तिमिलाइ निश्चय पनी ❀ नारायणै मन्महाँ ॥ १०३ ॥
पैल्हे एति भनेर आफ्नु धनु फेर् ❀ लाग्या दिनै ती जसै ।
आफ त्यो धनु हातमा गइगयो ❀ रामचन्द्रजीको तसै ॥
त्यो देखेर ति परशुरामजि तहाँ ❀ आश्चर्य साह्रै भया ।
साराशेखि छुट्यो पुकार् ति प्रभुको ❀ झट् गर्न लागीगया ॥ १०४ ॥

हे राम् ! घमण्डिहरुको सब शेखि हर्न्या ।
नित्यै दया सकल सज्जन माथि गर्न्या ॥
जुन् नाथको छ सब यो महिमा अपार ।
गर्छु प्रणाम उहि नाथ्कन बारबार ॥ १०५ ॥
सुन्दर् स्वरूप् हजुरले अहिले धर्याको ।
देख्ता महाँ मदन तक् छ फिका पर्याको ॥
गर्छन् सुरासुर सबै जसको पुकार ।
गर्छु प्रणाम उहि नाथ्कन बारबार ॥ १०६ ॥
जस्को भजन् गरिलिया भइ ज्ञान बोध ।
छुट्न्या छ निश्चय पनी भ्रम मोह क्रोध ॥
गर्छन् स्वरुप जसको शिव तक् बिचार ।
गर्छु प्रणाम उहि नाथ्कन बारबार ॥ १०७ ॥
मैले हजुर् कन गर्याँ अनुचित कुरा जो ।
गर्थ्यां कहाँ गरिलियाँ अनजानले यो ॥
माफ् राखिवक्सनुहवस भनि फेरि ताहाँ ।
बिन्ती गर्या ति ऋषिले उहि बीच माहाँ ॥ १०८ ॥

पापी भो अति कार्तवीर्य अब ता ❀ यस्लाइ मार्छु भनी ।
बालख् पो म थियाँ गर्याँ हजुरको ❀ ठुलो तपस्या पनी ॥
यस्तो वर् खुशि भै मलाइ दिनुभो ❀ शक्ती समेतै दिइ ।
इच्छा पूर्ण हुन्याछ जाउ अब ता ❀ क्यै शक्ति मेरो लिइ १०९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भाँच्यौ फेर् तिमिहरूले धनु जउन * मेरा गुरूको यहाँ ।
तेसैले तिमिहेरूलाइ मइँले * मारीलियाको महाँ ॥
आफ्ना ती गुरूदेखि हुन्छु म अऋण् * त्यो कारणैले गरी ।
धर्मै हो तिमिहेरुलाइ मइँले * मारीलिनु यो घरी ॥ ९५ ॥
श्री रामूजीकन परशुराम इ कुरा * भन्दैथिया त्यो घरी ।
लाग्या लक्ष्मण भन्न तिन्कन इ बात् * हाँसेर ठट्टा गरी ॥
ब्रह्मर्षे ! यदि हेर्न सक्नु नभया * त्यो भाँचियाको धनु ।
आँखा चिम्लनुहोस पर्छ किन फेर् * त्यस् वातमा ताप् लिनु ॥ ९६ ॥
लागेको छ हजूरलाइ ऋण जो * आफ्ना गुरूको यहाँ ।
आज्ञाहोस उसको हिसाब जति हो * मेरा अगाड़ी महाँ ॥
त्योसब् ब्याज समेत यस धरि तलक् * होला हिसाब्ले जति ।
तिर्दिन्छू मसवै हजुर नलिनुहोस * तेस्कोपनि तापरति ॥ ९७ ॥
लक्ष्मण्का इकुरा सुन्या जब तहाँ * अत्यन्त क्रुद्धै भई ।
लाग्या भन्न ति परशुराम रघुनाथ * जीका नगिच्मा गई ॥
हे राम् ! दुर्जनहोस तँ खुबबुझिलियाँ * तेरा मतले गरी ।
निन्दा लक्ष्मणले मलाइ बहुतै * गर्दोभियो यो घरी ॥ ९८ ॥
तस्मात् गर्दछु बध दुवै तिमिहरू * लाई म यै बिचमहाँ ।
लड्नैलाइ तिमिहरू दुइ पनी * चाँडो तयार् हो यहाँ ॥
मुख्ले एति भनी तयार् भइगया * ती लड्नलाई जसै ।
हात् जोड़ीकन भन्नु भो यसरि फेर् * रामचन्द्रजीले तसै ॥ ९९ ॥
हे ब्रह्मर्षि ! सुरासुरै सहितका * राजाहरु छन् जति ।
आया लड्न भन्या पनी म कहिले * मान्दीन डर् एकरति ॥
क्षत्री भै पनि युद्धगर्न जति जन् * डर् मान्दछन् मन्महाँ ।
त्यस्तै जन्हरूलाइ सब इ दुनियाँ * मान्छन् कुलाङ्गार् यहाँ ॥ १०० ॥
सोहो कारणले म देखि बलवान् * चाहे कुनै जन् हउन् ।
चाहे पाश लिएर आइ यमराज् * मेरा अगाड़ी रहुन् ॥
आफ्नू क्षत्रिय धर्म पालन यहाँ * सब् गर्न लाइ भनी ।
क्षत्री भैकन जानुपर्छ मइँले * लड्नै अवश्यै पनी ॥ १०१ ॥
शिर् हुन् ब्राह्मण बाहु क्षत्रि हरु हुन् * त्यै कारणैले गरी ।
हुन्छ रक्षितनू बाहु डर ति शिरको * आफ्ना मनैमा धरी ॥

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

क्यै दिन् भानिज हुन् भरत् कन यहाँ * त्याऊँ घरैमा भनी ।
भानिज्‌लाइ लिना निमित्त खुशिले * आया युधाजित् पनि ११५
बीदा श्री दशरथ्‌जिले पनि दिया * बीदा मिलेथ्यो जसै ।
एक शत्रुघ्न लिई भरत्‌जि त गया * मामा कहाँ पो तसै ॥
आया राम बिहा गरेर पुरिमा * जस्सै उड्यो यो खबर् ।
सारा रैयतको प्रसन्न मन भो * हुन्थ्यो खुशी क्या अबर ११६
सीताराम् अघि तप् गरिन् र त यहाँ * छोरा बुहारी भया ।
कौशल्याकन ता मिल्यो अदितिको * शोभा सबै ताप् गया ॥
सीताराम पनि लोकमा सकलको * आनन्द मङ्गल् गरी ।
चेष्टा मानिसको गरीकन रह्या * लक्ष्मी र विष्णू सरी ११७

इति सुब्बा होमनाथत्मज पं० केदारनाथ उपाध्यायजी र पंडित रामजो उपाध्याय कृत चोपक समेतको नेपाली कवि भानुभक्ताचार्य कृत रामायण बालकाण्ड समाप्त ।

नेपाली-साहित्यगगनमा सूर्य झैं प्रसिद्ध सुब्बा होमनाथ केदारनाथजीका ग्रन्थ रत्न—

अट्ठारहपर्व महाभारत चमड़ा ढकनीको दाम २२।
श्री कृष्णचरित्र चमड़ा ढकनीको दाम ८।५०
आठै काण्ड रामायण चमड़ा ढकनीको दाम ८।५०
ठूलो श्रीमद् देवीभागवत चमड़ा ढकनीको दाम ८।५०
सचित्र नेपाल दिग्दर्शन इतिहास १ के ८।

यो समग्र पुस्तकको सेट एकै पटक रु० १०) पेशगी पठाई मगाए सिर्फ ५०) रुपयामा पाउनु हुनेछ । यो मौका नचुक्नुहवस् । खर्च पनि माफ हुन्छ ।

असली पुस्तक पाइने एक मात्र ठेगाना----

सुब्बा होमनाथ केदारनाथ,
हितैषी कम्पनी
वाराणसी १ ( बनारस सिटी । )

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पल्हे मारि ति कार्त्तवीर्य कन फेर् * सब क्षत्रिको नाश् पनी।
एक्काईस बखत् गर्‍याँ प्रभुजिको * हूकुम् छ यस्तै भनी॥
क्षत्री शून्य भयाकि पृथिव मईँले * कश्यपजिलाई दियाँ।
एही कर्म गरी सकेर अघिको * शेखी पुर्‍याई लियाँ११०
त्रेतामा अवतार् लिन्याछु नरमा * राम्नाम् जगत्मा धरी।
भेट्होला तिमिथ्यैं उहीं म लिन्‍ला * यो शक्ति फेरी हरी॥
ताहाँ देखि तपै गरेर रहनू * ब्रह्माजिको दिन्भरी।
एती अर्ति मलाइ दीकन गया * बकुण्ठ-धाम्मा हरि१११
मैले काम् पनि सो सबै गरिसक्याँ * राम्लाइ भेट्याँ पनी।
मेरो शक्ति हजूरले हरिलिंदा * चीन्ह्याँ प्रभू हुन् भनी॥
मेरो जन्म सुफल् भयो सहजमा * पायाँ परात्मा पनी।
बूझ्याँ तत्त्व सबै पनी हजुरको * पात्रै कृपाको बनी ११२
जो छन् भक्त हजूरका ति सँगमा * सत्सङ्ग मेरो हवस्।
यो भक्ती दृढ भै प्रभू हजुरको * एही चरण्मा रहोस्॥
एती बिन्ति तहाँ गरी सकल पाप् * पुण्यै समर्पण् गर्‍या।
इच्छित् बर प्रभुले दिंदा परशुराम् * आनन्दमाखुबपर्‍या११३

श्री रामचन्द्रजीको अयोध्या पुनरागमन

ताहीं श्री रघुनाथका वरिपरी * घूमी नमस्कार् गरी।
मर्जीले ति गया महेन्द्र गिरिमा * मन् राम्चरण्मा धरी॥
देख्या तेज् दशरथजिले र सुतको * हर्षाश्रुधारा धरी।
प्रेमका सागरमा तहाँ डुबिगया * आलिङ्गनादी गरी ११४
एती काम् गरी राम् गया सहजमा * पुग्या अयोध्या महाँ।
सीतालाइ लिएर राज्यसुख भोग * रामले गर्‍या वयै तहाँ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations










CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

सुब्बा होमनाथात्मज पं० केदारनाथजी र पं० रामजी उपाध्याय
कृत क्षेपक समेत महाकवि भानुभक्तीय

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations



# रामायण अयोध्याकाण्ड

श्री राम-नारद-सम्बाद

एकान्तस्थलमा सितापति थिया * सीता हजुरमा रही
हात्मा चामर लि प्रभूकन तहाँ * हाँ विथन् समिप्मा गई
आकाश मार्ग गरी बहुत् खुशि हुंद * नारदजि ताहीं गया
नारदजीकन दण्डवत् गरि प्रभु * यो बिन्ति गर्दा भया १
संसारी म थियाँ बड़ो हुनगयाँ * दर्शन् मिल्यो यो जसै
यो भाग्योदय हो बुझ्याँ पनि यहाँ * दर्शन् मिल्याको उसै
मैले गर्नु छ काम कउन् हजुरको * चाँडो उ आज्ञा हवस्
त्यो काम सिद्ध गराउँला हजुरको * आनन्द मनमा रहोस् २
यस्तो बात् प्रभुको सुनेर खुशि मै * सब् गुह्य खोलीदिया
नारदले बहुतै गऱ्या स्तुति तहाँ * रामलाइ मन्मा लिया
बिन्ती गर्नु कुरा थियो मन विषे * बिन्ती गऱ्या त्यो पनी
ब्रह्माको बिनती लिई हजुरमा * आई रह्याछू भनी ३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भूको भार म दुष्ट मारि हरुँला * जान्छू अयोध्या महाँ
भन्न्या एति बचन् गरिकन हजुर् * पाल्नू भएथ्यो यहाँ
यस्तो हो तर गादि दीन दशरथ * राजाजिको मन् भयो
स्वामितूले अब राज्यमा भुलिदिया * भार् हर्नु कामना रह्यो ४
नारद्का इ कुरा सुनेर खुशि भै * उत्तर् प्रभूले पनी
जल्दी बक्सनुभो म राज्य न गरी * बन् जान्छू भोली भनी
स्वामित्का इ बचन् सुनेर बहुतै * नारद्जि खुशी भया
तिन् फेरा प्रभुको प्रदक्षिण गरी * आकाशगतीले गया ५

रामराज्यतिलकको आयोजन

सन्तोषले दशरथ्जिका मनविषे * आनन्द मङ्गल भयो
रामलाई अब राज्य द्यू भनि तहाँ * मन् यस लहड्मा गयो
यस्तो मन हुनगो र डाकि गुरुका * सङ्मा हुकुम् भो पनि
भोली राज्य तिलक् दिन्याछु मइँले * रामचन्द्रलाई भनी ६
मन्त्रीडाकिहुकुमभयोउहि बखत् * जो जो कहन्छन गुरु
सोसो चीज झटपट् तयार गरतिमि * सब् काम छोडी अरू
मन्त्रीले पनि यो हुकुम् सुनि तहाँ * साथ्मा गुरुका रह्या
चाहिन्छन्जतिचीजतिखोज्नगुरुले * खोलेर सब् चिज्कह्या ७
मन्त्रीलाइ अह्राइ राघवजिका * साथमा वशिष्ठ गया
पैल्हे श्री रघुनाथले गुरु भनी * सन्मान गर्दाभया
साह्रै खुशि भई वशिष्ठ गुरुले * फेरी उसै बिचमहाँ
श्री रामचन्द्रजिका अगाड़ि इ कुरा * बिन्ति चढाया तहाँ ८
हे त्रैलोक्यपते ! गुरु हुन म हूं * तिम्रो म हूं क्या गुरु
इनका हुन् इ गुरु भनेर इ सबै * भन्छन् भनुन् लौ अरू
तिम्रो दर्शन पाउँला भनि यहाँ * प्रोहित भयाको म हूं

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बुद्धी नाश गरिन् सरस्वतिजिले ❀ त्यो मन्थराको जसै !
राम्कोराज्यतिलक् हुन्या बुझितहाँ ❀ ताप् मात्र लागी तसै ॥
बिघ्नै गर्छु भनेर त्यो भरतकी ❀ माता भयामा गई ।
अश्रुपूर्ण नयन् गराई नखरा ❀ पारेर रूँदी भई ॥ १६ ॥
सामने तेस्कन् देखि तेस् तरहले ❀ रोईरह्याकी तहाँ ।
क्यै हाँसेर ति रानि भन्न इ कुरा ❀ लागिन् उसै बिच्महाँ ॥
रुन्छेस् क्यान तँ आज भन् ति सबबात् ❀ आफ्ना भयाको जति ।
ठान्छू लक्ष्मणले तँलाइ अहिले ❀ शिक्षा दिया हुन् अति ॥१७॥
बारम्बार ति रानि यै तरहले ❀ सोध्थिन् तथापी पनी ।
त्यस्ले भन्दिनथि म रुन्छु अहिले ❀ यस्ता कुराले भनी ॥
सोही कारण मन्थरा कन तहाँ ❀ हेरेर फेरी पनी ।
लागिन् सोध्न छ कुन्कुरो यसरि यो ❀ तैंले रुनाको भनी ॥ १८ ॥
श्री राम्चन्द्र र भूपती भरतजी ❀ शत्रुघ्न लक्ष्मणहरू !
ठान्छू फेरि सबै कुशल् तब रुन्या ❀ कुन् बात्छ यस्तो अरू ॥
यस्तो वात ति रानिको सुनि तहाँ ❀ त्यो मन्थराले जसै ।
राम्को नाम् लिनु त्यो सुनेर पहिले ❀ भन् डाह मानी तसै ॥ १९ ॥
लामू स्वास गरेर नेत्र दुईमा ❀ आँसू बहूतै धरी ।
लागी भन्न ति रानिलाइ इ करा ❀ त्यो मन्थरा त्यै घरी ॥
भोली राज्यतिलक् हुन्याछ जसको ❀ यो राजगद्दी महाँ ।
सोही राम सिवाय कौन अरुको ❀ होला कशल्ली यहाँ ॥ २० ॥
कौशल्या सरि भाग्यमानि मइँले ❀ मान्दिन कोहि पनि ।
गर्छिन् आफ्नु बढ़ाइँ ती म सरिको ❀ क्वै हुन्न रानी भनी ॥
हेर्नू गै किन हुन्न यस् बखतमा ❀ तिन्को छ शोभा जति ।
तिन्को चक्चकि सोहि देखि मनमा ❀ ताप् हुन्छ मेरा अति ॥ २१ ॥
छैनन् पुत्र हजूरका घर महाँ ❀ ख्याल् छैन केहि पनी ।
मान्नू हुन्छ हजूरले नृपति छन् ❀ मेरा वशैमा भनी ॥
निंद्रा खुप् छ सजी सजाउ सइया ❀ पाया यहाँ भै गयो ।
जान्न् हुन्न कपट् कुरो नृपतीको ❀ कुन्हाल् हुन्या योभयो ॥ २२ ॥
त्यस्तो बात ति रानिले सुनिलिइन् ❀ त्यो मन्थराको जसै ।
तेस्को त्यो मनको कुभाव् बुझि सबै ❀ हप्काइ भन्छिन् तसै ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

गुह्य खुलछ भनेर डर् हुनगयो * धेरै कुरा क्या कहुं ९
खोल्न्या छैन म गुह्य चूप रहुंला * सब जान्दछ, ता पनी
जानी जानि म बिन्ति गर्न अहिले * आयाँ हजुरमा भनी
भोली हुन्छ तिलक हजुरकन यहाँ * सामग्रि जम्मा भयो
पृथ्वीमा सुकला हवस् हजुरको * सब्शास्त्रले भन्छ यो १०
सब् इन्द्रीय जितेर आज उपवास् * गर्नु सिताले सँगै
आज्ञा पाऊँ म जान्छु काम छ बहुत् * सब काम् विचार् छु म गै
फर्क्या एति भनी वसिष्ठजि जसै * राम्चन्द्रजीले पनी
आज्ञा लक्ष्मणलाइ भो तिमि गऱ्या * यो राज्यको काम्भनी ११
छैनन् भाइ भरत् ति आज उनका * खातिर् छ मेरो दया
लक्ष्मणका सँग यो कुरा गरि प्रभू * माता भयामा गया
मातालाई भन्या जसै प्रभुजिले * सम्पूर्ण त्यो बात् गई
लागिन् माइ बिचार गर्न मनले * अत्यन्त खुशी भई १२
राजाले त विचार गऱ्या दिन भनी * क्या गर्दछिन् कैकई
यस्मा विघ्न कदापि पर्न नदिउन् * लक्ष्मी र दुर्गा भई
कौशल्या पनि यो विचार गरितहाँ * गर्थिन पूजा देविको
द्यौताका मनमा भने ठहरियो * काम बिघ्न गर्नु निको १३



मन्‌ले एति विचार् गरेर पहिले * फेरी उसै बिच्महाँ।
लाग्या भन्न सरस्वती कन गई * द्यौताहरूले तहाँ॥
हे मातर् ! रघुनाथ् गएर बनमा * भूभार चाँड़ो हरुन्।
त्यस्को केहि उपाय गर्दिनुहवस * आनन्दमा सब् परुन॥ १४॥
यस्तो विन्ति सुनी सरस्वतिजिले * द्यौताहरूको तहाँ।
त्योकाम्गर्न कबोल् खुशीसितगरी * पौंचिन् अयोध्या महाँ॥
दासी एक् थिइ मन्थरा भनि तहाँ * कैकेइजीकी कुनै।
मनमा गै उसका प्रसिन् ति पहिले * बुद्धी बिगारी दिनै॥ १५॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

देख्याँ हजुरका घडिया र ऐलहे।
बिन्ती गर्‍याँ आफ्नु बिचार मैले ॥
मेरो भया चुक यहि बात माहाँ।
माफ बक्सियोस् हे पटरानि ! याहाँ ॥ ३१ ॥
त्यो मन्थरा तरफ देखि यसोरि हाँसी।
फेरि सरस्वती स्वयम् पसि बुद्धि नाशी ॥
मोहित्र जसै गरिलिइन् तब सोहि रानी।
लागिन्न सुध्याउन ठुलो पतियार मानी ॥ ३२ ॥
राम्को तिलक् भइ कउन् घटिया छ ऐल्हे।
जान्दीन यो सकल सोचि बिचारी मैले ॥
हे मन्थरे ! म कन त्यो सब प्रष्ट खोलो।
चाँडो बता यसरि व्यङ्ग कुरा नबोली ॥ ३३ ॥

यो आज्ञा सुनि रानिको जब तहाँ ❀ त्यो मन्थरा खुश् भई।
साढ़ेसाति समान भै अबधको ❀ फेर् भन्न लागी गई ॥
राजाको मन राख्न प्रेम् हजुरको ❀ राम्चन्द्र गर्थ्या यहाँ।
प्रेम् गर्छन्न अब रामले हजुरको ❀ कुन् काम खातिर् महाँ ॥ ३४ ॥
सूर्यदेखि अघी बढेर बहुतै ❀ सूर्यकमल छन् जति।
सोही सूर्यजिदेखि शोषण भई ❀ वैलाउँछन्न फेर् अति ॥
त्यस्तै प्रेम् अघि रामको हजुरको ❀ साँचै थियो ता पनी।
ती दिन् बित्न गया दिनै फिरि यहाँ ❀ छुट्छन् सबै प्रेम्भनी ॥ ३५ ॥
राजालाइ हजूरका वश महाँ ❀ देखी लिनाले गरी।
कौशल्याजि हजूरको मन महाँ ❀ रीस् गर्दथिन् हर् घरी ॥
मौका पाइ भरत्जिलाइ परदेश् ❀ तिन्ले पठाई दिइन्।
राजा राम हउन् भनी सकल काम् ❀ आफ्नू सह्यारी लिइन् ॥ ३६ ॥
राजा राम भया पछी हरजुले ❀ पुत्रै सहित् भै यहाँ।
कौशल्या कन गर्नु पर्दछ टहल् ❀ रात्दिन् रही सङ्महाँ ॥
सेवा गर्नु भएन तिन्कन भन्या ❀ दूधको झिंगा झैं भई।
पर्ला बस्नु हजूरले अब यहाँ ❀ साह्रै ठुलो भार् सही ॥ ३७ ॥
रेखा खैंचि म भन्दछु अब यहाँ ❀ कदी भरतजी हुनन्।
मन्त्री भैकन रामको सकल काम् ❀ लक्ष्मण् अवश्यै लिनून ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
घर्मा फूट हुन्या कुरा यसरि यो ❀ बोलीस् भन्या फेर् यहाँ।
जिभ्रो काटि निकालि दिन्छु मइँले ❀ पक्रेर गर्धन् महाँ ॥ २३॥
कानी कुवरि होस् कुचाल बहूतै ❀ देख्छू म तेरो यहाँ।
उस्माथी पनि दासिहोस् कसरिबुझ् ❀ योग्यै कुरा मन्महाँ ॥
जेठाको सब राज्य हुन्छ अरु सब् ❀ भाइहरू छन् जति।
तिन्को चाकरी गर्नु पर्छ उसको ❀ यै राज्यको हो गति ॥ २४॥
उस्माथी पनि रामचन्द्र अहिले ❀ माताहरू छन् जति।
मान् राख्छन् सबको बराबर यहाँ ❀ भेद्द छैन तिन्मा रति ॥
मैमाथी छ विशेष प्रेम तिनको ❀ जाने परीक्षा गरी।
सोही कारण प्यार गर्छु मइँले ❀ रामूलाइ प्राणै सरी ॥ २५ ॥
अर्को जन्म दिया मलाइ बिधिले ❀ गर्छु पुकार् यो पनी।
मेरै पुत्र बुहारि भैकन यहाँ ❀ जन्मुन् सिताराम् भनी ॥
भोली राज्य तिलक् भयो यदि भन्या ❀ मेरा उनै रामको।
पाउँ छेस् तँ इनाम् म देखि बुझिले ❀ एक्सौ ठुलो ग्रामको ॥ २६ ॥
जस्को सज्जनता स्वभाव गुण रुप् ❀ देखी लिनाले गरी।
जस्देखी खुश। छन् तिनै भुवनका ❀ प्राणीहरु यो घरी ॥
सोही श्री रघुनाथको किन ठुलो ❀ गर्छेस् तँ डाहै यहाँ।
त्यस्को कारण कुन्छ त्यो सब बता ❀ मेरा अगाडी महाँ ॥ २७ ॥

यो बात् सुन्दा मन्थरा ताहिं फेरी।
लागी भन्नै कैकईलाइ हेरी।
एकैबेर्मा पाइ घर्-फोर्नि नाउँ।
आफ्नू जिभ्रो के म बोली कटाउँ ॥ २८ ॥
बोल्छन् झूठो बात जस्ले बनाई।
प्यारा हुन्छन् सोहि जन्हेरु आई ॥
तेस्तै मालिक्लाइ खूशी म पार्छु।
नाहीं मौनै आज देखि म धार्छु ॥ २९ ॥
जस्तो पूर्वै जन्ममा कर्म थोयो।
दासी तेस्तै रूपको पारिदीयो ॥
राजा क्वै हुन् कुन् मलाई छ हानी।
दासी छोडी हुन्न कैल्है म रानी ॥ ३० ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

केकैई कन खोपिमा नृपतिले * देख्या भयानन् जसै
सोध्या रानि कता गइन् भनि तहाँ * सब् केटिलाई तसै
यो आज्ञा नृपराजको जब सुनी * केटि तहाँ जो थिई
हात् जोड़ी उसले खड़ा भई तहाँ * बिंती चढाई लिई ४६
क्रोधागार विषे गयाकि त बुझ्यौं * कारण छ कुन् कत्तिको
बुझ्याको पनि छैन ग हजुरले * बूझ्नुहवस क्यान हो

कैकेयी वंश परिचय र राम बन जाने कारण

पैले केकय देशमा नृप थिया * ठूला यशस्वी गुणी ।
नाउँ केकयराज् थियो तिनिमहाँ * जन्मिन् इ छोरी पनि ॥ ४७ ॥
वंशैको अनुसार कैकयीभनी * तिन्को त नाउँ रह्यो ।
राजा श्री दशरथ्जिका सँगमहाँ * इन्को विवाहै भयो ॥
कान्छी रानि थिइन् इनी नृपतिको * वीरांगना थिन् अति ।
कर्तव्यादि गरेर पालन सबै * इन्ले रिझाइन् पति ॥ ४८ ॥
द्यौता दानवको भयो रणठुलो * एक्पल्ट स्वर्गै महाँ ।
कैकेयी सँगली गया नृपति ई * डाक्ता सुरैले तहाँ ॥
सम्बर् राक्षससाथमा नृपतिले * ठूलो लडाँञी गर्‍या ।
भाँचीयो रथको धुरा र नृप ती * साह्रै सकस्मा पर्‍या ॥ ४९ ॥
रानी कैकयिले त्यसै बखतमा * एक् युक्ति शोची लिइन् ।
आफ्नो बाहुलिनै लगाइ रथमा * धूरा बनाइ दिइन् ॥
सोहीकारण खुश् भएर नृपले * यो बात् भने झट्तहाँ ।
हे प्यारी ! बरदान दिन्छु दुइटा * लौ माग चाँडो यहाँ ॥ ५० ॥
यस्ताबात सुनेर ती नृपतिको * ती. कैकेयीले पनि ।
राखिन् त्यो वरलाइ भूप सँगनै * नासो रहोस् त्यो भनी ॥

केटीका इ बचन सुनेर डरले * राजा नगिच्मा गया
कैकेई किन यो ठुलो रिस गर्‍यौ * बात् खोल भन्दा भया ५१
जो भन्छौ म पुर्‍याँउला भनि तहाँ * खाया सफथ् धेर् जसै
लागिन् भन्न खुशी भएर इ कुरा * ती कैकइले तसै

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

कद्रले बिनताजिलाई पहिले * जो दुख दिईथिन् यहाँ।
कौशल्याजि हजूरलाइ उहि ठिक् * छोड्निन् नदुखदी कहाँ ॥३८॥
यै रितूका अरुधेर् कुरा सुनिलिइन् * त्यो मन्थराको जस।
मानमा ताप् बहुतै प्रकट् हुनगयो * कैकेइलाइ तसै॥
छुट्‌तो भो पसिना शरीर् भरि बहुत् * कामेर थर्थर् तहाँ।
लागिन् भन्न ति मन्थरा कन इ बात् * फेरी उसै बिच्महाँ॥ ३९॥
आफ्ना माइतमा गएर म बरू * बसन्याछु जन्मै भरी।
सेवा सौतिनिको म गर्दिन कस * भन्न्या बुझेस् यो घरी॥
मुखले एति भनेर कैकइ बहुत् * ताप् गर्न लागिन् जस।
लागी फेर पनि भन्न लाइ इ कुरा * त्यो मन्थराले तसै॥ ४०॥
ऐल्हे हे पटरानि! ताप किन यो * गर्नु भएको अति।
जो भन्छू गरिबक्सिए हजुरले * पर्दैन यो दुख् रति॥
थाती छन् दुइ वर् अघी नृपतिले * दिन्छु भन्याको तहाँ।
आज तो बरदान माँगिलिनुहोस् * राजाजिका सङ्गमहाँ॥४१॥
बनमा गैकन चौध वर्ष तक राम् * योगी समान् भेष् धरुन्।
राजा भैकन राज्यको सकल काम् * छोरा हजुर्का गरुन्॥
सत्यैका बशमा परी नृपतिले * त्यो पर्छ गर्नै यहाँ।
बन्‌ला कामहरू सबै हजुरका * एही उपायै महाँ॥ ४२॥
यो बात् कैकइले तहाँ सुनीलिइन् * त्यो मन्थराको जसै।
भन्छिन् चित्त बुझेर फेरि इ कुरा * तेसका सँगैमा तसै॥
मेरो यो सब काम् बन्यो यदि भन्या * एही उपायै महाँ।
आँखाको पुतलो समान मइँले * राख्छु तँलाइ यहाँ॥ ४३॥
यै रितूले अघि मन्थराकन खुशी * तो रानी गर्दी भइन्।
त्यो दुष्टैकन झट् बिदा दिइ तहाँ * एकान्त ठाउँ गइन्॥
कुन् रितूले अधिराजलाइ मइँले * पानू वशैमा भनी।
मनमा तर्क वितर्क धेर गरितहाँ * क्रोधगर्न लागिन् पनी॥ ४४॥
सुन्दर बस्त्र निकालिफालि कपड़ा * मैला शरीर्मा धरीन्
आभूषण कन फ्याँकि खूब रिसले * खाली जमिन्मा परिन्
सज्जन् बेस् सुमती पनी कुमतिका * सङ्गले त बिग्री गयो
भन्छन् जो दुनियाँ उ लक्षण यहाँ * ठिक् कैकईमा भयो ४५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
खुशीले काख्मा लीकन अब भनिन् आऊ तिमिले।
सुनी रामज्यू भन्छन् अब त कति खाँला नि मइँलेप्र८
गयो खाने बेला मकन त मिल्यो राज्य बनको।
भरत्ले राज् पाया यहिं बसि गरुन् राज्य जनको॥
बिदा बक्स्याजावस् खुशिसित म जानेछु बनमा।
म चाँडै फिन्र्याछु विरह न हवस् कत्ति मनमा॥५९॥
बचन् सुन्दा मूर्छा परिकन उठेकी छंदि तहाँ।
भनिन् कौशल्याले तिमिकन म छोड्छु अब कहाँ॥
भन्या राजाले ता तर म अहिले रोक्ट्छु यहाँ।
कि साथै लैजाऊ मकन तिमि जान्छौ अब जहाँ॥६०॥
तिमिलाई बीदा दिई कसरि यो दुःख सहुंला।
बरू प्राणै त्यागी यमपुरि महाँ जाइ रहुंला॥
विलाप् कौशल्याको यति सुनि दयाले भरि गयो।
तहाँ लक्ष्मण्को मन् तब अरु उपर् रीस हुनगयो॥६१॥
नजर् दी रामज्यूमा अरुसित उठ्याको रिस बढ़ी।
गरया बिन्ती रामथ्यैं अब भरतथ्यैं लिन्छु म लड़ी॥
हजुरको राज् हर्न्या जति जति ति छन् मार्दछु यहाँ।
पितै मार्छु पैल्हे तब म अरु फेर छोड्दछू कहाँ॥६२॥
चढ्याजावस् गादी सकल रिपुको नाश म गरुँला।
यसै कामले माइहरु इ दुइको शोक हरुँला॥
सुन्या लक्ष्मणजीको बचन इ जसै राम खुशि भया।
बुझाया बिस्तारले पनि तहिं ठुलो लीकन दया॥६३॥
सुन्यौ भाइ! लोकमा शरिर अति कच्चा छ जनको।
शरीर कच्चा जानी नगर तिमि रीस् कत्ति मनको॥
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पैल्हे जो दुइ बर मलाइ दिनको * आज्ञा हजुरको भयो
पायाको अझतक थिइन मईले * थाँती हजुरमै रह्यो ५२
एक बरले गरि रामचन्द्र बनमा * चौधै बरषतक रहुन्
अर्को जो वर हो भरतजि उसले * राजा यहाँका हउन्
भोली एति कुरा भएन त भन्या * मर्न्याछु विष पान् गरी
भन्या बात्सुनि रानिको गिरिगया * राजाजि मूर्छा परी ५३
त्योरात्वर्षसमान्बित्योतिदशरथ * त्यो खोपि भित्रै रह्या
सब सामग्रि तयार गरीकन बिहान् * मन्त्री हजूरमा गया
देख्या चाल्र तहाँ विचार् हुनगयो * सोध्या पर्‌यो क्या भनी
विस्तार् पाइ सुमन्त्र राम लिनगया * आया तहाँ राम् पनी ५४
भन्छिन् कैकइ रामलाइ बुझ यो * आज्ञा पिता कै यहाँ
सौंपी राज्य भरत्जिलाइ तिमिले * जानू पर्‌यो बन्महाँ
यस्ताबात्सुनिबात्गर्‌याप्रभुजिले * धेरै कुरा क्या गरूँ
राजा भाइ भया समान् म खुशिको * मान्दोन क्यै बात् अरू ५५
गाह्रो कत्ति नमानि जान्छु बनमा * राजा त बोलुन् भनी
बोलेको प्रभुको बचन् सुनि तहाँ * बोल्छन् ति राजा पनी
हे राम्चन्द्र! मलाइ आज तिमिले * बाँधेर राज्यै गरी
झुट्टादेखि बचाउ पाप रति भर * लाग्दैन यस्तो गरी ५६
राजाएति भन्यार फेर् पनि विलाप * खुब् गर्न लाग्दा भया
राजाको बुझियो र आशय तहाँ * रामचन्द्र घरमा गया
कौशल्या पनि भक्तिले प्रभुजिका * ध्यान्मा रह्याकी थिईन्
रामजीलाई नदेखि खुब् दृढ भई * ताना हरीमा दिइन् ५७
सुमित्राले भन्दा पछि पलक तिनको खुलिगयो ।
प्रभुलाई देख्ना अलिक मन संतोष पनी भयो ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
कर्मैको फल भोग गर्छ दुनियाँ * यै बात जानीलिनू
आमाले पनि एहि बात् बुझि यहाँ * बीदा उचित् हो दिनू ७०
यो बिन्ती गरि पाउमा जब पर्‍या * बीदा दिइन् माइले
आँशू थाम्न कठिन् भयो सब शरीर् * निथ्रुक्क भो आँशुले
आशिर्वादुर बिदा समेत् जब मिल्यो * खुश मन् भयो रामको
लक्ष्मण्ले पनि साथ जान्छु म भनी * बिन्ती गर्‍या जानको ७१
लक्ष्मणलाइ सँगै लिएर रघुनाथ् * सीता भयामा गया
बिस्तारपूर्वक सब कुरा प्रभुजिले * खोलेर भन्दाभया
पङ्खा छत्र चमर् रहित् प्रभु तहाँ * देखेर दुक्खित् भइन्
आज्ञा हुन्छ मलाइ क्या अब भनी * साम्ने खड़ा भै रहिन् ७२
शङ्कित जानकिलाइ देखि प्रभुले * आज्ञा भयो यो पनी
सासूको टहलै गरी घर रहू * चौधै बरष् तक् भनी
बाबाको बचनै लिई शिर उपर् * जानै पर्‍यो बन् महाँ
चौधै बर्ष बिताइ निश्चय पनी * फिर्न्याछु फेरी यहाँ ७३
यस्तो बात् प्रभुको सुनिकन तहाँ * सीताजि मूर्छा परिन्
पैल्हे ज्योतिषिको कुरा सब कही * छोड्दीन सेवा भनिन्
सीताको यति बात् सुनेर खुशि भै * साथै सिताजी लिया
ब्राह्मण खुशी सदा रहुन् भनि तहाँ * दौलत् बहुतै दिया ७४
कौशल्याजि जहाँ थिइन् तहिं गई * लक्ष्मणजिले फेर तहाँ
माता मेरि पिछा भइन् अब भनी * सौंप्या उसै बिच्महाँ
एती काम् गरि रामका हुकुमले * लक्ष्मण् तयारै भया
सीता लक्ष्मण साथमा लि रघुनाथ * राजा भयामा गया ७५
बीदा हून पिताजिथ्यैं जब सिता * लक्ष्मण लि राम्ज्यू गया
यस्तो देखि असह्य भो र दुनियां * सब शोक गर्दा भया
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सब बोल्छन् चल्छन बिजुलि सरि एकछिन न रहन्या ।
बिचार यस्तो राखो सह्नु तिमि बड़ो हुन्छ सहन्या ॥ ६४॥
भ्याक्तोखाँभनिखोजछडाँस्मुखविषे * साँपले धड्याको पनि
एस्त भोग गरुँला भनेर मनले * भन्छन् दुनीयाँ भनी
क्याको रिस छ यहाँ बिचार मनले * काल सर्पका मुख् परी
क्या होला बन जाउँला इ सबमा * आनन्द राखुन हरी ६५
देश् देश्का बाटुलिन्छन् बुझ तिमी मनले बाटका पाटि माहाँ
बात्चित् गर्दै रहन्छन् खशिसित मनले बन्धु झैं राति ताहाँ
प्रातःकाल् भो जसैं ता उठीकन ति सब दशदिशा लागि जान्छन्
बन्धूको सङ्ग यस्तै बुझिकन गुणिले दुःखसुख एक मान्छन् ६६
छाया तुल्य छ लक्ष्मी यौवन भया * भेलैं सरीका भनी
भन्छन् स्त्रीसुखलाइ स्वप्न सरिको * साँचो कुरा हो पनी
यस्तो जानि पनी मनुष्यहरु सब् * संसारमा भुल्दछन्
भुल्नैका वशले अनेक दुख सही * संसारि भै डुल्दछन ६७
जुन् यो देह निमित्त यो रिस गर्‍यौ * चिन्छौ कि कस्तोछ यो
हाड् मासु र रगत् नसा यति कुरा * जम्मा भई बन्छ यो
विष्ठा हुन्छ कि भष्म हुन्छ पछितक * बाँच्तैन यो ता कसै
यस्काखातिरक्रोधगर्‍योपनिभन्या * पाप मात्र मिल्ला उसै ६८
क्रोधै हो यमराज सबै इ जनको * वैतर्नि भन्ने पनी
तृष्णा हो भनि यो बुझेर तिमिले * कैल्हे नविर्स्या अनी
सन्तोष बुझ कामधेनु सरिको * सन्तोष मनले रहू
रिस गर्नु बढ़िया हुंदन बनमा * जानू असल हो सहू ६९
यस्तै हो सुन कर्मका बश हुँदा * बस्तैन एक ठाम् रही
कस्तै कोहि हवस अवश्य करले * जानु छ जाहाँ गई

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ककेईसित बात् बशिष्ठ गुरुले * एतो गराथ्या जसै
बिदा भै रघुनाथ चढ्या रथ विषे * सम्पूर्ण रोया तसै ८२

सीताराम र लछमणको वनगमन

सीताराम् वनमा गया रथ चढी * लक्ष्मण. गया साथमा
वृक्षैका तलमा रह्या रघुपति * घर छाड़ि तेस् रातमा
सुन्दर एक तमसानदी तहिं थिइन * तिन्का दुवै तोर् भरी
आई लश्कर रामका सँग बस्यो * खाली अयोध्या गरी ८३
फिर्नन ता रघुनाथ् सँगै फिरियला * जानन् चलौंला सँगै
रामजी छोडि यहाँ कसो गरी बसौं * काहाँ बसौंला न गै
यस्तो सुर प्रभुले बुझीकन तहाँ * युक्ती गऱ्या छल्नको
प्रातःकाल भयो उठेर झटपट् * मन्सुबगऱ्या चल्नको ८४
फर्की फेरि शहर् गया झइँ गरी * बाटो छलो राम गया
फर्क्याछन् रघुनाथ भनेर दुनियाँ * सम्पूर्ण फिर्दाभया
यस. रित्ले दुनियाँ फिराइ शहर * श्री राम् बन्मा गया
गङ्गाका तिरमा पुगेर अब ता * रथ थाम भन्दाभया ८५
सुन्दर् बृक्ष थियो ठुलो तिर विषे * एक् शिशपाको तहाँ
दोश्रो बास. रघुनाथको तहिं भयो * त्यै वृक्षका तलमहाँ
फलफुल लीकन भेटनलाइ गुहजी * आया बड़ा हर्षले
निर्मल् देह भयो उसै बखतमा * श्री रामका स्पर्शले ८६

शृंगवेर् पुरमा कुनै गुह भनो * राजा अनार्यै थिया।
तिन्ले श्री दशरथ् जिका सँगमहाँ * मैत्री लगाईलिया॥
पूर्वै जन्ममहाँ थिया इनि पनी * व्याधा भयाका अघी,
रामका भक्त भया कठोर गरि तप् * श्री शंभुजीको पछी॥ ८७॥

मेरो आज पवित्र घर पनि हवस् * स्वामित्! गर याँबिन्तीये।
सेवक हूं करुणानिधान! मकनहोस् * माया र मर्जी छ जो

Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सीताराम् कन दुःख यो हुन गयो * कैकेइ दुष्टै भई
सीता आज कसोरि दुःख सहनिन् * घोर जङ्गलैमा गई ७६
यो अन्याय भयो यहाँ त न बसौं * जाऊँ प्रभूका सँगै
रामजी छोड़ि यहाँ कसोगरि बसौं * बुझ्दैन मन् ता न गै
यस्तो बात् गरि लोकले पनि बहुत् * शोक गर्नलाग्या भनी
सब विस्तार गरि बामदेव ऋषिले * यो बात् बुझाया पनी७७
हे लोक्हो! कतिगर्दछौसकलशोक * त्यो शोक ता छाड़िद्यौ
साक्षात् विष्णु इ हुन् भनेर मनले * श्री रामजी जानिल्यौ
पृथ्वीको सब भार् हरेर रघुनाथ् * फिर्छन् इ जान्छन कहाँ
साँचा हुन् इ कुरा अवश्य किन यो * खेद्मानिलिन्छौयहाँ७८
यस् बातले ऋषिले मनुष्यहरुको * खुब् मन् बुझाई दिया
पौंच्या राम् पनि कैकई र दशरथ * जाहाँ बस्याका थिया
हे मातर ! बन जानलाइ अब ता * आयौं जना तीन् चली
बोदा जान मिलोस् म जान्छु बनमा * रिस्राग कसैमा न ली७९
आज्ञाजानपिताजिकोपनिमिलोस् * जान्छू बहुत् खुश म छू
दुखभोग्नन्किभनीपिताजिकनशोक * मन्मा नलागोस् कछू
कैकेई यति बात् सुनेर खुशि भ * बस्त्र पुराना दिइन
लाया श्री रघुनाथले ति कपड़ा * सीताजिले ता लिइन्८०
यस्तो वस्त्र म लाउँ आज कसरी * भन्न्या मनैमा धरी
साताले रघुनाथका मुखविषे * हेरिन् कटाक्षै गरी
श्री रामले मुट्ठरा गरी ति कपड़ा * हातमा जसै ता लिया
त्यो देखीकन राजपत्निहरु सब् * रोया तहाँ जो थिया८१
दुष्टे ! आज सिताजिलाइ किन यो * बस्तर पुराना दियौ
यसकामलेजतिछन्यहाँति सबको * प्राण् खैंचि ऐल्हे लियौ

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
यस्तो बिन्ती गरी सिता प्रभुजिका * साथै चलिन् पार् तरी
आज्ञाले घरमा फिरया गुह पनी * भक्ती मनैमा धरी ९४

बनमा भारद्वाज र बालिमकि सँग रामको भेट दुर्वेऋषिको परिचय

गङ्गा पार् तरि मिर्ग मारि पकुवा * तारेर खाया तहाँ
तेश्रो बास रघुनाथको तहिं भयो * एक् वृक्षका तलमहाँ
चौथो बास् रघुनाथको हुनगयो * आश्रम् भरद्वाजको
रामज्यूकोऋषिलेगरयास्तुतिअनेक * सुर् जानो कामकाजको
इन्का बाबु थिया वृहस्पतिजि जो * हुन् देवताका गुरू ।
माता हुन् ममता, वृहस्पतिजि की * जो थिन् अघी भाउज्यू॥
इन्का पालक थ्या भरत्जि जुन हुन् * दुष्यन्तजीका सुत ।
जस्को नाम र कीर्तिले हुनगयो * विख्यात यो भारत ॥ ९६ ॥
पाँचौदिन्ऋषिकाकुमार्सँगलिया * बाटो बताउन् भनि
रामलाई जमुनाजितारि ति कुमार् * साँझमा त फर्क्या पनि
सीताराम् पनि चित्रकूट् पुगिगया * बाल्मीकि बस्थ्या जहाँ
बाल्मीकी कन दण्डवत् गरि बहुत * आनन्द मान्या तहाँ९७
भाषा संस्कृतका इ आदि कवि हुन् * व्याधा थिया इ अघी ।
उल्टो पारि 'मरा मरा' भनि जप्या * राम्नाम इन्ले पछी ॥
सप्तर्षीहरूको मिलेर उपदेश् * त्यस्कै प्रभाव्ले गरी ।
राम्का भक्त भया ठुला पछी इनी * प्रख्यात विश्वै भरी ॥९८॥
बाल्मीकी कन भन्दछन् रघुपती * कयै दिन रहन्छू यहाँ
कुन् जग्गा बढिया छ सब् तरहले * होला सुविस्ता कहाँ
सून्या बालिमकिले मनुष्य सरिभै * रामले गरयाका कुरा
सोहो माफिक बिंति बात् पनि गरे * बाल्मीकि छन्ज्ञन्पुरा ९९
जान्दैनन् महिमा बड़ा ऋषि पनी * जस्को त एक् नामको
यस्ता हौ रघुनाथ् हजुर कन यहाँ * के काम् असल् ठामको
सज्जन्को हृदयै छ घर हजुरको * अर्को बताऊँ कहाँ

...ji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations


यो बिन्ती सुनि भन्दछन् प्रभु तहाँ * सुन्यौ सखे ! आज ता
बनमा जान चल्याँ म जान्न घरमा * याहीं रहन्छु म ता ८८
कौनै फल्फुल खानु छैन अरुले * केही दिउन् ता पनि
भन्न्या यो मनमा छ थाम्छु मनको * आफ्नो प्रतीज्ञा भनि
मेरै हौ तिमि राज्य जो छ उ पनी * मेरै छ भन्दाभया
बर.को दूध घसी जटा मुकुट झैं * पारेर बाँध्दा भया ८९
जलपान मात्र गरी सिता र रघुनाथ * कुशआसनैमा गया
लक्ष्मणका सँगमा गई गुह पनी * रात् भर. खड़ा भै रह्या
सीता राम फगत् कुशासन विषे * देख्या सुत्याका तहाँ
साह्रै ग्लानि भई तहाँ गुहजिको * शोक. पस्नगो मन्महाँ९०
भन्छन् लक्ष्मणलाइ भाइ फजिती * खुप् कैकेईले दिइन्
राजाजिकन बश गरेर बहुतै * हुर्मत् प्रभूको लिइन्
लक्ष्मण.बात्सुनीभन्दछनगुहजिको * दिल. भित्र ठण्डा गरी
लाग्या सुन्न पनी तहाँ गुहजिले * तनमन् उसैमा धरी ९१
दाता को छ यहाँ इ दुःख सुखको * फल मिल्छ सब् कर्मको
अर्को भन्नु कुबुद्धि हो नभन यो * नाश हुन्छ संसर्गको
कर्ता हूं पनि भन्नुछैन अभिमान् * जन्ले नगर्नू कहीं
कर्मैको फल भोग मिल्छ तिमिले * बुझ्नु इ जाहीं तहीं ९२
धीरा भै रहनू बिपत्ति सहनू * कस्तै परोस. ता पनि
कैल्हे मोह विषे नपर्नु जनले * माया छ संसार भनि
यस्तोबात्सुनिरात्बित्येगुहजिको * राम्का नजिक्मा रही
गङ्गा तर्न हुकुम् भयो प्रभुजिको * ताहाँ उज्यालो भई ९३
गङ्गे ! आज म जान्छु घोर बनमा * केवल् नमस्कार. गरी
फिर्दामा म पुजा अवश्य गरुँला * सामग्रि ठुलो गरी

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations










Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
विस्तार यो सुनी बक्सनू पनि हवस् * बिन्ती म गर्छू यहाँ १००
ब्याधा हूं अघिको म सप्तऋषिका * निर्मल् कृपाले गरी
बाल्मीकि भनि नाम् चल्यो जब जपें * राम्नाम उल्टो गरी
उल्टै नाम जपे त यो छ महिमा * विस्तार धेर क्या कहूं
गङ्गाको र इ चित्रकूट गिरिको * बीच्का जगामा रहूं १०१
बाल्मीकीऋषिको बचन् सुनि बहुत् * खुश् भै जगन्नाथ् गया
गङ्गाको र ति चित्रकूट गिरिको * बीच् पारि बस्ता भया
गङ्गादेखि सुमंत्र फर्कि दशरथ * जाहाँ बस्याका थिया
ताहीं जल्दि गएर जो छ समचार् * बिल्कुल् सुनाइ दिया २
बर्को दूध घसी जटा मुटक झैं * बाँध्या दुवै भाइले
फर्की जा भनि यो हुकुम् तहिं दिया * रामले सिता माइले
गङ्गा पार् रघुनाथ गया नजरले * हेर्दा कठिन् भो तहाँ
छोड्याँ देख्न जसै रुँदै रथ लिई * दौड़ेर आयाँ यहाँ ३

राजा दशरथ को प्राणत्याग र श्रवण कुमार चरित्र, भरत क्रुद्ध हुनु

सेवा विन्ती गरेस् भनी हुकुम भो * लक्ष्मण् सीतारामको
हाम्रो शोक् रतिभर् कदापि नगरुन् * हूंदैन शोक् कामको
यस्तै बात् गरि राम् गया भनी सबै * विस्तार सुनाया जसै
कौशल्या दशरथजिलाइ रिसले * बाक् बाण बजारिन् तसै ४
बाक्शरले अतिताप भएर दशरथ * भन्छन मलाई कति
भन्छ्यौ मर्न बखत् यसै हुनगयो * छोड्यो शरीरले गति
ऐल्हे मर्छु शराप पनी छ तिमिले * खुब पुत्र शोकले गरी
जस्तै हामि मर्यौं यसै गरी मर्या * ठूलो बिपत्ती परी ५
एती एक तपस्विले अघि शराप * जो दी गयाथ्या मरी
तिन्कोतेहि शरापको फलमिल्यो * ठीक् आज उस्तै गरी।

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

एक् दिन् फौजलिइ गयाँ बनमहाँ * आखेट खेल्नै भनी ।
अन्धा क्वै ऋषिदम्पती कुटिमहाँ * वस्थ्या बनैमा तिनी ॥ ६ ॥
यौटामात्र श्रवण्कुमार सुत थिया * तिन्का सदा साथमा ।
माग्दापानि पिताजिले त्यसघरी * गाग्रो लिइ हातमा ॥
पानी ल्याउँ भनी गया नदीमहाँ * साँझका वखत्मा जसै ।
झटपट् पानि भरौं भनेर तिनले * गाग्रो डुबाया तसै ॥ ७ ॥
गुड्गुड् शब्द सुनेर त्यो खुशिभइ * गाढान्धकारै महाँ ।
हात्तीको भ्रम भै प्रहार् गरि लियाँ * बाण् शब्द भेदी तहाँ ॥
छातीमा गइ रोपयो शर जसै * 'ऐय्या मरयाँ' लौ भनी।
रोया बालक ती र दौडि म गयाँ * तिन्का अगाडी अनि ॥ ८ ॥
देखीं त्यो घटना अचम्भ हुनगै * मैले पनि फेर् तहाँ ।
बालक् औ जललाइ लीकन गयाँ * ती दम्पती छन् जहाँ॥
आफ्नो भूल सबै ऋषीश्वरजिका * सङ्मा भन्याथ्याँ जसै।
सुन्दा त्यो सबबात् ति दम्पति दुवै * लोट्या जमीन्मा तसै॥ ९ ॥
छातीको शरलाइ फेरि शिशुको * मैले झिक्याथ्याँ जब ।
पानी खाइ पिताजिलाइ ति गया * तत्काल् परम् धाम् तब॥
ब्यूँझी क्यै घरिमा ति अन्धमुनिले * सर्वत्र हेर्दा भया ।
पुत्रैको गति देखि दुःखित भइ * यो श्राप तिन्ले दिया॥ १० ॥
हे राजन ! जसरी मरयाँ म अहिले * यो पुत्र शोक्मा परी ।
सोही रीत् सित पुत्रकै विरहमा * जानू तिमीले मरी ॥
सब् विस्तार् शरापको कही सकी * हा राम् ! सिताराम् ! गरी
प्राणै त्याग् दशथ्जिले जबगरया * खल्बल् परयोतेस् घरी ११
प्रातःकाल भयो बशिष्ठ गुरु झट् * मन्त्री लि दर्बार् गया
तेल्मा श्री दशरथजिलाइ धरि फेर् * छोरा झिकाई लिया
चाँड़ो आउनको वशिष्ठ गुरुको * आज्ञा छ भन्या सुनी
दूतका सँग लागि भाइ कन लो * आया भरत्जो पनी १२
कैकेईसित भेट भयो भरतको * सोध्यापिता छन् कहाँ
सब बृत्तान्त गरो भरत्कन भनिन * ती कैकईले तहाँ

Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

अरण्य का. १

१ राम सीता र लक्ष्मण दण्डक वनमा।

Vihay Avasthi Sahib Bhuvan Vani Trust Donations

२ सूर्पणखाले रामसित विवाह गर्न विन्ति गरेको।



३ लक्ष्मणले सूर्पणखाको नाक काटेको



४ शूर्पणखाले दाज्यू खर र दूषण लाई आफ्नो हाल बताई राम लाई मार्न प्रार्थना गरेको।

५ रामचन्द्रले खर दूषण लाई मारेको।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
कीर्तीमा अपकीर्ति पारि कसरि * राज् गर्नु मैले बसी
दाज्युको टहलै गरी साँग रह्या * लक्ष्मण् रह्याछन् जसो१९
गया जाहाँ सीतापति म पनि जान्छू अब तहाँ।
फगत् कैकेई एक् यहिं बसिरहुन् छोड्दछु यहाँ
फलाहारी हुन्छू शिरभरि जटाधारि बनना।
म भोली जान्याछु हिंड़िकन विचार् यै छ मनमा२०
प्रभूको गादी हो प्रभु कन फिराएर घरमा
म गादी सुम्पन्छू किन म गरुंला राज्य करमा

भरतजी को रामदर्शन लाई बन जानु

भरत्को यसतो बात् सुनिकन सबै खुश् अति भया
भरत् भोली बेरै उठिकन सबेरै चलिगया २१
सबै माता भ्राता गुरु सहित सब् फौज् पनि लिई
फगत् सीतारामका चरण तलमा चित्त पनी दी
भरत् गङ्गा पौंच्या गुहजि कन शङ्का हुनगयो
ठुलो लश्कर् देख्या न बुझिकन तानैं डर भयो २२
लड़ूँला नाव् खैंची भरत कपटी हुन् यदि भन्या
भनी मन् मन् लश्कर्हरु कन तयार् हौ पनि भन्या
ठुलो भित्री मतलब गरिकन गया बुझ्दछु भनि
तहाँ भेटी राखी नजरतिर हेर्या कछु पनि २३
जसै देख्या आँसू गह भरि धरी शोक पनि गरी
कहाँ मिल्छन् सीतापति म कन भन्दै घरिघरी
तसै शिर् पाऊमा धरि ति गुहले ढोग पनि दिया
भरत्ले अंकैमाल् गरुँ भनि उठाईकन लिया २४
भरत्जीले सोध्या गुहसित सीताकापति यहाँ

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
सुन्या शोक मनमा परयो भरतको * कौशले भन्या यो पनि
पापी हौ तिमि कुम्भिपाक नरकमा * भोगगर्म जाऊ भनी१३
कैकई कन गालि दीकन तहाँ * दुःखी बहूतै भया
कौशल्याजि जहाँ थिइन् तहिं रुँदै * फेरी भरत्जी गया
हे मातर्! मनमा कदापि न परोस् * मेरो कुनै सम्मति
पाप लागोस् गुरुलाइ मार्नु सरिको * यसमा भया मत् रति१४
बिन्ती यै गरि दुःखमा परि विलाप् * गर्थ्या भरत्जी जहाँ
मंत्रीबर्ग समेत् बशिष्ठ गुरुजी * पौंच्या नजीकमा तहाँ
देख्या शोक भरत्जिको र गुरुले * भन्दाभया यो पनि
शोकगर्नू बढ़िया तछैन किनशोक * गर्छौ महाराज! भनि१५
नाना तत्व कही तहाँ भरतको * सब शोक गुरुले हरया
सब आज्ञा गुरुको लिई भरतले * काम्काज्पिताकोगरया
राजाको किरिया जसी गरिसक्या * दान्को असंख्यै गरी
त्यै बिचमा मनले बिचार भरतले * राख्या बहुत् ताप धरी१६
माता मेरि इ राक्षसी सरि भइन् * इनका नगीचमा यहाँ
बस्नू योग्य अवश्य छैन अब ता * जान्छू प्रभू छन् जहाँ
यस्तो चित्त लिया तहाँ भरतले * इन्को छ यो मन पनी
मालुम् ता गुरुमा थियो तर पनी * भन्छन्उचित् हो भनी१७
राजाको छ हुकुम् यहाँ भरतले * राज गर्नु रामले गई
चौधै वर्ष तलक् बसुन् बनविषे * मानू मुनीश्वर भई
सीताराम यहि बातले बन गया * याहाँ हजूरले पनी
गादी चढनुहवस हुकुम् दिनुहवस * यो राज्य मेरो भनी१८
यस्तो विन्ति गरी बशिष्ठ गुरु चुप * जस्सी रहेथे तहाँ
उत्तर जल्दि दिया तहाँ भरतले * के गर्छु यो राज् यहाँ
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
कैल्हे पुग्छू कहाँ छन् भनिकन मनले रह्या दिशा दृष्टि दौंद
जाँदा ताहिं भरत्ले प्रभुजिकन जस नेत्रले देख्नपाया
स्वामित्लाई त पायाँ भनिकन खुशिले पाउमा पर्न धाया३१
देख्या पाउ पर्याको गह्भरि बहँदा अश्रुधारा झर्याको
सब राज्य तृण बराबर गरिकन बहुत आफुमा मन् गर्याको
यस्तो देखी कृपाले भरत कन तहाँ काखमा राखिलिया
जस्तो मन्हो भरत्को बुझि रघुपतिले खुब कृपादृष्टि दिया३२
माइका परि पाउमा रघुपति * भन्छन् कहाँकन् पिता
मैले लौ किन आज देख्तिन यहाँ * के गर्दछन् छन् कता
भन्द खोजि गर्या पिताकन् तहाँ * श्री रामजीले जसै
सब बिस्तार गुरुदेखि पाइ रघुनाथ * शोक गर्नलाग्या तसै३३
गङ्गा स्नान गरी तिलाञ्जली दिया * फेर पिण्ड दानै पनी
फल फुलले रघुनाथले तहिं दिया * पाउन पिताले भनी
त्यस्दिन्माउपवासगर्याजबबित्यो * रात फेरी गङ्गा गिया
गङ्गास्नान् गरि फेर् फिरेर मढ़िमा * आएर बस्ताभया३४
तहाँ सीता रामका चरणतलमा शिर् पनि धरि
अयोध्या लैजान्छू भनिकन ठुलो मन्सुब गरा
भरत् बिन्ती गर्छन् किन रघुपते ! आज बनमा
हजुर्ले आयाको मकन अति ताप हुन्छ मनमा३५
स्वामित् ! हजुरको म त दास पो हूं
यो राज्य गर्नाकन योग्य को हूं
यो गादि ता याँदि हजूरको हो ।
मैले त सेवा गरी बस्नु पो हो३६
छोरा हुनन् यज्ञ बहुत गरीनन्

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुतेको स्थल कुन् हो म कन कहु जान्छु अब तहाँ
गया विस्तार पाई रघुपति सुतेका शयनमा
भरत्ले खेद्ध मान्या कुश शयन देखेर मनमा २५
अहो ! मेरा खातिर् बनबन सिताजी पनि सँगै
कुशासन्मा सुत्छिन् नत यसरि सुत्थिन् अघि कतै
अहो ! धिक्कार् मेरी जनम जननी कैकइ भइन
इनैले गर्दामा पतिसँग सिताजी बन गइन् २६
कहाँ छन सीतानाथ कति पर गया भेटद्छु कहाँ
छ केही मालुम् ता कहु म कन जान्छु अब तहाँ
बताया याहाँ छन भनी ति गुहले रामकन पनि
गुहैका सम्चारले खुशि पनि भया भेटद्छु भनी २७
सब विस्तार सुनाइ ताहिं गुहले * गङ्गाजि तारि दिया
ताहाँ देखि भरत् चली पुगिगया * जाहाँ भरद्वाज थिया
एकदिन्ताहिं मुकाम्गरयाभरतले * सन्मान् ऋषिले गरया
बिलकुल् सन्य जती थिया भरतको * मेजमानिले छकपरया
भोलीपल्ट सबेर लश्कर लिई * बोद्दा ऋषिमा भया
कैल्हे पुग्दछु चित्रकूट गिरिमा * भन्द भरत्जी गया
खुश भै लश्कर चित्रकूट गिरिका * पौंच्या नगीच्मा जसै
खोज्या ताहिं भरत्जीले अघि गई * डेरा प्रभूको तसै २९
डेरा देखी भरत्जी तहिं नजिक गया पाउका छाप देख्या
श्रीरामका पाउका छाप् चिह्निकन खुशिले माथले ताहिं टेक्या
भन्छन् धन्न्य रह्याछु यहि घरी म यहाँ पाउका छाप देख्याँ
ब्रह्मालाई नमिल्ने छ त पान सहज माथले आज टेक्याँ ३०

भरतजी र रामचन्द्रजीको भेट र सम्वाद

यस्तो बोल्दै प्रभूको चरण धुलिविषे भक्तिले लटपटींदै

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
जानु असल. होइन आज झाडो
स्वामित् ! सदा बिन्ति छ फर्कि जाऊँ
फर्कन्न भन्याँ म जवाफ् नपाऊँ४३
यस्तो भरत्ले जब जिद्दी लीया ।
उत्तर् प्रभूले पनि फेरि दिया ॥
फर्कन्न भैया ! तिमी फर्किजाऊ।
पिताजिलाइ पनि दोष् नलाऊ ॥४४॥
खुब् सत्यवादी त पिताजी थीया ।
साँचो हुनाले बरदान दीया ॥
सो पूर्ण गर्नाकिन जान्छु बन्मा ।
साँचो कुरा हो बुझिलेउ मन्मा ॥४५॥
उत्तर् प्रभुको सुनि कष्ट पाया ।
फेरी चरणमा परि बिन्ति लाया ॥
फिर्नू हवस् स्वामित ! बिन्ति गर्छू ।
यस् दण्डकारण्य बिषे म जान्छ ॥४६॥
यस्तो बचन् सूनि भरत्जिलाई ।
फेरी हुकुमभो तिमि फर्क भाई ! ॥
यो राज्य साट्या पनि हुन्छ झूटो ।
हे भाइ ! गर्छौ किन आज झूटो ४७
हुकुम सूनी एति भरत पनि राम्का चरणमा ।
परी बिन्ती गर्छन् म त रघुपते ! छु शरणमा ॥
हजुर् बाहेक् एक् छिन् रहन पनि ताप् हुन्छ मनमा ।
नफर्क्या स्वामित्का! पछिपछि म ता जान्छु वनमा४८
नता फर्की जान्या न त मकन लान्या सँग पनि ।
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
सम्पूर्ण लोक्को पनि ताप् हरीनन्
तब् पो ति छोराकन राज्य छाड़ि
जानू असल् हो त छँदैछ झाडी३७
बेला त यो होइन जान बन्मा
मेरो त यै निश्चय हुन्छ मन्मा
लौ जाउँ घर् फर्कि सवारी जावस्
मेरी इ मातासित रीस् न आवस्३८
यसतै प्रकार्ले अति बिन्ती गर्द
आँखा भरी आँसु बहूत धर्दै
रोया भरत्ले जव पाउमा गै
बोल्या प्रभूले पनि खुशि मन् भै३९
हे भाइ ! गर्छौ किन आज जिद्दी
फिर्नू असल् होइन काम् नसिद्धी
जान्छू म बन्मा तिमि फर्कि जाऊ
सब राज्यको काम् तिमिले चलाऊ४०
रामले बनै गै मुनि भेष धर्नु
याहीं भरत्ले बसि राज्य गर्नु
भन्याँ पिताको जब सुन्न पायाँ
आज्ञा म मानी बन जान आयाँ४१
इ बात् भरत्ले जब सुन्न पाया
फेरी चरण्मा परि बिन्ति लाया
हे नाथ ! पिता हुन् मतिहीन् भयाका
स्त्रीका त साह्रै बशमा पर्याका४२
उन्ले भन्याथ्या भनि राज्य छाडी
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
चौध वर्ष समाप्ति पारि नफिरचा * मन्याँछु साँचै म ता
यो बिन्ती सुनि हुन्छ लौ भनि हुकुम् * रामको भयो त्यो घरी
लागिन् ककइ भन्न फेरि इ कुरा * रामका चरणमा परी ५४

कैकेइजीको पश्चात्ताप र रामको उपदेश

हे नाथ! दुर्बुद्धि आइ अति फजितिदियाँ राज्यको घात् गराई
मायाले मोह पर्दा मन पनि भुलिगो बुद्धि मेरो हराई
क्याऊँ नाथ आज रुन्छू बिपति परि ठुलो आज यो चेत आया
कठपुतली झैं जगत् यो वशगरि रहन्या धन्यछन् तिम्रि माया ५५
मेरो माया छ छोरा जन धनहरुमा यो सबै खचिदेऊ
दुर्बुद्धी हो पछी ता शरण परि भनी खुब कृपा राखिलेऊ
कैकेइ येहि पाठले स्तुति गरि हरिमा बारबार् शीर धारिन्
हे नाथ! आई शरणमा परि भनि करुणा राख यो बिन्ति पारिन ५६
हाँसी सीतापतीले पनि अभय दिया जो मलाई भन्यौ सो
दोष तिम्रो छैन यस्मा बुझ तिमि मनले मनत मेरै थियो यो
मनमा सन्तोष लाउ म कन दिनदिनै सम्झँदै दिन् बिताऊ
छुटनन् सब कर्म तिम्रा रतिभर मनमा शोक नराखेर जाऊ ५७
कैकेई करूणा बुझी खुशि भई * बीदा प्रभूमा भइन्
श्री रामको चरणारविन्द मनले * भजदै अयोध्या गइन्
सब् लश्करहरू ली भरत्पनि बिदा * भै फेर् अयोध्या गया
सारा लश्करलाइ राखि घरमा * आफु फरक भै रह्या ५८
नन्दीग्राममा सरचाका भुमि शयन गरी रोज् फलाहार गरचाका
गादी माथी खराऊ धरिकन शिरमा खप् जटाजुट् धरचाका
गर्थ्या सब राज्यको काम् तर पनि सब बात् गादिमा बिन्तिगर्दै
चौध बर्षै बिताया तहिं भरतजिले राममा चित्त धर्दै ५९
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भन्या मछ्र्छ स्वामित् ! अब अरु कुरा केहि नभनि ॥
भनी आसन् बाँधी जब मरणमा निश्चय धरया ।
खुशी भै श्री रामूले पनि अति दयालू मन गरया ४९
दिया सूचन् रामूले गुरुकन बुझाऊ तिमि भनी ।
गुरुले एकान्तै लगीकन भरत्जीकन पनि ॥
बुझाया बात् खोलीकन सुन इ जो हुन् रघुपति ।
जगन्नाथ् साक्षात् हुन् त्रिभुवनपतीका अधिपति ५०
अघी ब्रह्माजीले सकल भुमिको भार् हर भनि ।
स्तुती गर्दा खुश भै सुन म हरुँला भार् अब भनि ॥
भनेका हूनाले उहि बचन पालन् गरुँ भनि ।
प्रभू जान्छन् बन्मा पछि त सुन फिर्छन घर पनि ५१
प्रभूकै इच्छा हो न त इ कसरी ककइ पनि ।
बनै जाउ भन्थिन् प्रभुकन यहाँ केहि नगनी ॥
कुरा यस्तो जानी नगर तिमी यो आग्रह यहाँ ।
भुमीको भार् टारीकन पछि त जान्छन् प्रभु कहाँ ५२
रावण मारि उतारि भारि भुमिको * फिर्छन् जगन्नाथ् भनि
यस्ता हुन् रघुनाथ भनेर गुरुले * खोलेर गुह्यै पनि
सब् बिस्तार गरीदिया र गुरुके * बाणी सुनी खुश् भया
फर्कन्नन् रघुनाथ् भनी मन बुझी * रामूका नगिच्मा गया ५३
हे नाथ! तत्व सुन्याँ म फिर्छु अब ता * जान्छू अयोध्या महाँ
पूजा गर्न दिनूहवस् हजुरको * एक जोर् खराऊ यहाँ
यस्तो बिन्ति गरी प्रणाम् पनि गरी * घुम्दै प्रदक्षिण् गरे
रामूले आफ्नु खराऊ दी उहिबखत् * सब्ताप्भरत्कोहरया ५४
फेरी बिन्ती गरया तहाँ भरतले * लौ फिर्दछु फिर्न ता !

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

# सुन्दा होमनाथात्मज केदारनाथजी र पं० रामजी-उपाध्यायकृत क्षेपकसमेत को

## ❋ महाकवि पं० भानुभक्ताचार्यकृत ❋




विराध राक्षस वध र शरभङ्ग ऋषीको स्वर्गगमन

अत्रीका आश्रमैमा बसि रघुपतिले प्रेमले दिन् बिताई
दोश्रा दिन्मा सबेरै उठिकन वनमा जान मन्सुब चिताई
अत्रीलाई भन्या गै यही घरी अबता जान्छु बीदा म पाऊँ
रस्ता यो जाति होला भनिकन कहन्या एक् अगूवा खटाऊँ १
सीताराम्को हुकुम् यो सुनिकन ऋषिले भन्दछन् वया पठाऊँ
खन्को रस्ता त देख्न्या याहिं हजुर भन्या कुन् अगूवा खटाऊँ
चिन्हू लीला हजुर्को तर पनि अगुवा याहिं अस्सल् खटाई
यो मर्जी पूरा गर्नाकन भनि अगुवा आज दिन्छू पठाई २
अत्रीले बिन्ति एती गरिकन अगुवा शिष्य धेरै खटाया
केही रस्ता त आफैं पनि पछिपछि गै रामलाई पठाया
एक्कोश् तक् पौंचदामा बडि नदि बहँने नाउले तर्नु पर्‍या
भेटिन्थ्यो तारि फव्र्या माटितर ऋषिका शिष्य सबा फिर्नु पर्‍या ३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

केही दिन् चित्रकूट्मा बसिकन रघुनाथ बाल्मिकीथ्यँ बिदा भै
जान्छु बन्मा म फिर्छु भनिकन खुशिले अत्रिका आश्रमै गै
अत्रीका पाउ माहाँ शिर् धरि म त हूं राम्भनी नाम्बताया
श्री राम्को बाणि सुन्दा मन अति खुशि भै अत्रिले हर्ष पाया ६०
पूजा सीतापतीको गरिकन ऋषिले पाउमा बिन्ति लाया
बृद्धा छन् पत्नि मेरी सकल विषयमा एक् रती छन माया
भित्रै छन् आज दर्शन् दिन मडुलिविषे भित्र सीताजि जाउन्
सीताजी पाई अब त ति बुढिले जन्मको सार पाउन् ६१
अत्रीको बिन्ति सूनी हुकुम पनि दिया लौ सिता भित्र जाऊ
अत्रीकी पत्नि भेटीकन अब तिमिले जल्दि फर्कर आऊ
आफ्नानाथ्को हुकुम् यो सुनिकन खुशि भै भित्र सीताजिजाई
भेटिन बृद्धा बहुत् भकन बसि रहन्या अत्रिकी पत्निलाई ६२
सीताले पाउमाहाँ शिर धरि बहुत प्रेम् बुढिमा बढाइन्
जोर्जोर कुण्डल्र सारी दिइकन बुढिले अंगराम् फेर् चढाइन्
यस्ले शोभा निरन्तर् दृढ पनि रहला यो पनी बिन्ति लाइन्
सीताजीलाइ आशिष् दिइकन बुढिया ले बहुत् हर्ष पाइन् ६३
सीता र लक्ष्मण सहित् गरि रामलाई
भोजन् म दिन्छु भनि खुबसित चित्तलाई
भोजन् गराइ रघुनाथजिकि जानि माया
राम्को सपत्नि ति दुई भइ कीर्ति गाया ६४

इति सुब्बा होमनाथत्मज पं० केदारनाथजी र रामजी उपाध्यायकृत चपक समेतको नेपाली कवि भानुभक्ताचार्य कृत रामायण अयोध्या काण्ड समाप्त ।

शुद्ध पुस्तक र सकली माल पाइने ठेगाना—
सुब्बा होमनाथ केदारनाथ, हितैषी कम्पनी, वाराणसी १

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जसैले स्वर्ग विराध् गया प्रभुजीले ❀ रस्ती वनैको लिया
पालन् गर्छु म योगिको वन भनी ❀ मनमा दया खुब्लिया
ध्यान् गर्दै शरभङ्गजी वनमहाँ ❀ जाहाँ बस्याका थिया
ताही श्री रघुनाथजी खुशि हुँदै ❀ पौंचेर दर्शन् दिया १०
ताहाँ श्री शरभङ्गले प्रभुजिमा ❀ तन्मन् वचन्सब्धरी
आफ्नू कर्म जती थियो ताहिं तती ❀ सम्पूर्ण अर्पण् गरी
अस्सल् ताहिं चिता बनाइ हरिको ❀ दर्शन् नजर्ले गरी
आफ्नू देह दहन् गरी चालिगया ❀ संसारसागर् तरी ११

ऋषी द्वारा रावणको उत्पति वर्णन र राक्षस नाससलाइ रामको प्रतिज्ञा

मुक्ती श्री शरभङ्गको जब भयो ❀ तस्सै मुनीश्वर्हरू
आया भेट्न भनी बहुत् खुशिभई ❀ बन्मा थिया जो अरू
हातजोरीस्तुतिखुब्गरयातिऋषिले ❀ स्वामितइनै हुन्भनी
कोमल् चित्त गरी तहाँ नजरले ❀ हेर्‍या प्रभूले पनि १२
बिन्ती सब्ऋषिले गर्‍या हजुरमा ❀ हाम्रा बिपत्ती पनि
देख्या पूर्ण दया हुन्याछ बहुतै ❀ आपत् रह्याछन् भनी
जाऊँ सब्ऋषिका मढी माढि बिषे ❀ वाहीं गई पो दया
होला चित्त बिषे भनी ति ऋषिले ❀ ताहीं प्रभूजीगया १३
देख्या त्यस् वनका धरातल बिषे ❀ खप्पर् र सोह्र्‌या तहाँ
कस्का खप्पर हुन् अनेक् नजरले ❀ देख्छू मर्‍याका यहाँ
श्री सीतापतिको वचन् सुनि तहाँ ❀ बिन्ती ऋषीले गर्‍या
ईशिर् हुन् ऋषिका यहाँ छल परी ❀ धेरै ऋषीश्वर् मर्‍या१४
राक्षस्का छलले बहुत् ऋषि मर्‍या ❀ भन्न्या कुरा त्यो सुनी
ताहाँ सब्ऋषिलाई राखि सबका ❀ साम्ने प्रतिज्ञा पनि
सब् राक्षस्हरुको म नष्ट गरूलाँ ❀ भन्न्या प्रभूले गर्‍या
खूशी मन् हुनगो र ताहिं ऋषि ती ❀ आनन्दमासब्परयाश१५

Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सीताराम् बनमा पुग्या बनाथ्यो ❀ साहै खजित्को तहाँ
बाघ्भालू अरु दुष्ट राक्षसहरू ❀ डुल्छन् निरन्तर् जहाँ
ताहाँ पौंचि हुकुमभयो प्रभुजिको ❀ भाई ! तयारी भई
सीताका म अगाडि हिंड्छु तिमिले ❀ हिंड्नू पछाडी रही ४
यस्तो बातगरि राम लक्ष्मणतहाँ ❀ हिंड्थ्या तयारी भई
एक् सुन्दरबनमातलाउ मिलिगो ❀ ठूलो छ कोश् बन् गई
ठण्डा जल् ताहिं पान् गरेर रघुनाथ् ❀ छाया बस्याथ्या जसै
आई ताहिं बिराध राक्षस ठुलो ❀ बातबोल्नलाग्योतसै ५
कोहौस्त्रीपनिसाथमा छ किन यो ❀ आयौ बड़ा बन्महाँ
कस्तोसुर् मनमा छ फेर् अब उपर् ❀ जान्या छ इच्छा कहाँ
मैले सुन्दर गाँस् बनाउन असल् ❀ मानेर सोद्याँ यहाँ
सब्नाम्कामसमेतबताउतिमिले ❀ जुन्कामछजान्छौ जहाँ ६
तेस्को उत्तर रामले दिनुभयो ❀ फेर भन्छ राक्षस् पनी
बाँच्नै मन्छभने सिता र हतियार् ❀ छोडेर जाऊ भनी
यस्तोबोलिं सिताजिलाइ लिन सुर् ❀ बाँधेर दौड्यो जसै
काट्या हात् रघुनाथले सहजमा ❀ तेस् राक्षसैको तसै ७
जस्सै हात गिर्यो तसै त रिसले ❀ खाँ रामलाँइ भनी
दौड्यो त्यो मुख बाइ फेर् प्रभुजिले ❀ काट्या ति गोडापनि
हात् गोडा नहुँदा त सर्प सरिको ❀ पस्र्यो भूमीमा जसै
रीस्ले पूर्ण भई सितापति तरफ् ❀ धस्रेर आयो तसै ८
घस्त्री घिस्नी उ सर्दथ्यो प्रभुजिले ❀ काट्या तहाँ शिर्पनी
विद्याधर्गरा हो छुटोस्अब शराप् ❀ जानस् परम्धाम् भनी
राक्षस्देहमर्यो शराप् पनि टर्यो ❀ विद्याधरै फेर् भयो
श्रीरामको स्तुति खुब् गरेर खुशिभै ❀ फेरस्वर्गलोक्मागयो ९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




JK Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

केही वर्ष बिताइ ताहिं प्रभुले ❀सब्योगिकोतापूहरया
माया फेरि सुतीक्ष्णसौ उपर भै ❀ प्रस्थान् प्रभूले गरया
थीया ती जुन ठाउँमा तहिं गई ❀ दर्शन् प्रभूले दिया
पूजा पूर्ण गरी सुतीक्ष्णजीले ❀रामूलाईमन्मालिया१६
सायुज्यै मुक्ति मिल्ला तिमिकन सुन यो देह जैल्हेतछुटला
भन्या आज्ञा प्रभूको हुनगइअब ता कर्मको पाश टुट्ला
भन्या यो मन् ऋषिको हुनगइ बहुतै चित्तमा हर्ष पाया
सीतारामूलेअगस्तीसितगइकछुदिन्बस्न मन्लेचिताया१७
प्रभूका सौथमा पछि पछि सुतीक्ष्ण् पनि गया
अगस्तीका भाईसित पुगि त एक् रात् प्रभु रह्या
ति अग्नीजिह्वा खुब् खुशि पनी भया ईश्वर भनी
चिन्ही ताहाँ तिन्ले बिधिसित गरया पूजन पनि १८
तहाँ देखी सीतापति उठि सबेरै चालिगया
अगस्ती काहाँ छन् भनि खबर ली दाखिल भया
अगस्तीले खुश् भै स्तुति गरि बहुत मन् पनी धरया
विराट् रूपको वर्णन् गरिकन त पूजा पनि गरया १९
कोही एक महर्षिथ्या अघि कुनै ❀ मैत्रावरुण् नामका
देखी उर्वशि अप्सरा वनमहाँ ❀ वशूमा पारया कामका
वीर्यैपात भई घडाविच खसी ❀ त्यस्बार् वालक् भयो
सोहीकारणले अगस्ति ऋषिको ❀ कुंभज् भनीनाम् रह्यो २०
विन्ध्याचल् गिरिको सुमेरुसंगमा ❀ इर्श्या हुँदा एकदिन
आकाश् व्याप्त गरी ति विन्ध्यगिरिले ❀ उठ्ता इनै गैकन
न्यूह्राया गिरिलाइ छल् गरिभनि ❀ भन्छन् जगतमा सब
आफ्नो सत्यमहाँ ति दक्षिणमहाँ ❀ छन् विन्ध्यपर्वत अझ २१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

वृत्रासुर्कन इन्द्रले बधगऱ्या ❀ संग्राम भूमीमहाँ
जाली दानव कालकेय् त्यसको ❀ भाई थियो एक् तहाँ
पानीमा बसि दिनदिनै ऋषि हरु ❀ त्यो दैत्य खान्थ्यो तहाँ
धौताहेरू गएर आग्रह गऱ्या ❀ इन्द्रका अगाडी महाँ २२
शोष्या ई मुनिले समुद्रकन त्यो ❀ तीन् अंजुलीले पिई
माऱ्या राक्षस लाइ देवहरूमा ❀ आनन्द भो दुख् गई
वृत्रासुर् वधले सुरेन्द्र कन मो ❀ त्यो ब्रह्महत्या जब
भाग्दै मानसमा गईकन लुक्या ❀ श्रीइन्द्रजी झट् तब २३
स्वर्गैको सब राज्यशासन तहाँ ❀ राजा नहुषूले लिया
सारै उद्धत भै शची उपरमा ❀ दाऊ गरेका थिया
सप्तर्षीहरूलाइ पालिक विचका ❀ डोले बनाई लिंदा
इन्को फेरि पतन् भयो इ मुनिले ❀ सर्पै बनाइ दिंदा २४
राक्षस् मार्न अगस्तिले पिइलिया ❀ सारा समुद्रै जब
होला विघ्न भनेर गैकन वसिन् ❀ गंगाजि स्वर्गै तब
फेरि श्री भगिरथ्जिले तपगरी ❀ गंगाजिलाई यहाँ
ल्याया पूर्वज लाइ तार्न बिधिले ❀ एक्दिन धरातल् महाँ २५

सुन्दर् धनू र तरवार् सँग बाण् धऱ्याको
ठोक्रो त जोडि आधि इन्द्रजिले दियाको
ताहिं थियो सब दिया रघुनाथलाई
बिन्ती गऱ्या सकल मार् हर आज जाई २६
आठ् कोशमा असल पंचवटी भन्याको
आश्रम् असल् छ रमणीक बहुत् बन्याको
ताहिं बसेर कछु दिन् तिमिले बिताऊ
सब् साधु माथि करूणा तहिं गै चिताऊ २७

Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

१ लक्ष्मणले सीतालाई घेरामा राखी दाज्यूलाई खोज्न गएको।








२ रावणले भिक्षुको रूप धारण गरी सीतालाई हर्न आएको।

३ रावणले सीताजीलाई आकाश मार्ग द्वारा उडाइ लगेको।

४ सीताजीको रक्षागर्न लड्दा रावणले जटायुको पखेटा काटेको।

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

एकान्त देखिकन लक्ष्मणले चरणमा
बिन्ती गया रघुपते ! म त छू शरणमा
ज्ञान् कुन् कहिन्छ अनि कुन् त कहिन्छ बिज्ञान्
जान्दीन केहि म विषे त ठुलो छ अज्ञान् ३४
आज्ञाहवस् सकल तत्व म सुन्न पाऊँ
जान्न्या पुरुष अरु छ को र कता म जाऊँ
यो बात लक्ष्मणजिको सुनि हर्ष पाया
लक्ष्मणजिलाई सब तत्व तहाँ बताया ३५
यै ज्ञान् कहिन्छ सुन एहि कहिन्छ बिज्ञान्
यो रीत् गरीकन नर्‍या हुँदि छुट्छ अज्ञान्
खोलेर एहि रितले प्रभुले बताया
लक्ष्मणजिले पनि तहाँ सब तत्व पाया ३६
यै बीचमा नजिक शूपर्णखा त आई
देख्या तहाँ प्रभुजिले पनि दुष्टलाई
कन्दर्पका बश परी प्रभुका नजिक् गै
सोधी तहाँ प्रभुजिलाइ बहुत् खुशी भै ३७

राखा औ मुनि विश्रवा इ दुइका ❀ कोखबाट पैदा भई
भार्या विद्युतजिव्ह दैत्यकि तथा ❀ रावणकि वैनी थिई
एक्दिन् रावणको पऱ्यो रण तहाँ ❀ कैकेय दानव् सँग
रावण्को शर भूलले रणमहाँ ❀ लाग्याछ ज्वाइँकन ३८
हत्याभो जब ज्वाइँको रणमहाँ ❀ दुःखित् भई रावण
अर्को वर् तिमि खोज लौ भनि गऱ्यो ❀ आदेश वैनीकन
खोज्थी शूर्पणखा परन्तु वर क्वै ❀ पाईन त्यस्ले कहीं
त्यस्का दाज्यु थिया त्रिदूषण र खर् ❀ नाम्का सहोदर् तहीं ३९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तो अगस्ति ऋषिको उपदेश पाई

श्री राम् तयार् पनि भया ताहिं जान लाई

मालुम् थियो त पनि जुन् ऋषिले बताया

सो मार्ग जानकन पाउ उतै चलाया २८

राम र जटायूको भेट॥ लछमणलाइ तत्वज्ञानप्राप्ति।

जान्थ्या प्रभू अलिकती पर केहि जाई

जङ्गल् विषे अधिक वृद्ध जटायुलाई

देखेर राक्षस भनीकन मार्नलाई

माग्या धनू प्रभुजिले त लिला जनाई २९

माता श्येनि र सूर्यसारथि अरूण् ❀ तिन्का त पुत्रै पनि
सम्पाती र जटायु नामक थिया ❀ दाज्यू र भाई इनी
पक्षीका कुलमा जनम् हुनगई ❀ गृध्दै भयाका थिया
राजा श्री दशरथ्जिका प्रिय भई ❀ श्रीरामम मा मन् दिया ३०

मान्या कुरा सुनि जटायु बहुत् डराया

राजाजिको प्रिय म हूँ भनि बिन्ति लाया

गर्न्याछु हित् बसि बसी म सिताजिलाइ

कल्याण् मिलोस् हजुरदेखि बहुत् मलाइ ३१

श्री रामले पनि तहाँ अति खूशि मनले

आनन्द निर्भय दिया पछि फेरी तिनले

स्वामित् ! शरण् छु भनि खुन्सित बिन्ती लाया

श्री राम् तहाँ पछि त पञ्चवटी ति आया ३२

डेरा भयो प्रभुजिको ताहिं बीच बनमा

एकान्त देखिकन हर्ष भयो र मनमा

आनन्दपूर्वक रह्या रघुनाथ ताहीं

अर्को त आश्रम नजीक थिएन काहीं ३३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

थीयो चौध हजार सैन्यहरूको ❀ सेनापती त्यो खर
स्वामी पाँच हजार सैन्यहरूको ❀ दूषण् थियो दुर्धर
सेनाको भइ खूब् सहाय इ दुई ❀ दाज्यू र भाई मिली
यज्ञै नाश गरी महर्षिहरूमा ❀ पार्थे ठुलो खल्बली ४६

राक्षस् भनी प्रभुजिले तहिं चाल पाया
लक्ष्मणजिलाई तहिं काम् प्रभुले अह्राया
हे भाइ ! आज तिमिले इ सिताजिलाई
गूफाविषे लगि बसी रहुजल्दि जाई ४७

एक् बात् नबोलिकन जल्दि उठेर जाऊ
संग्रामको बखत भो अब बेर् नलाऊ
मार्छू म दुष्टकन तेज् अधिकै जनाई
चौधै हजार्कन सहज् टुकुरा बनाई ४८

यसतो हुकुम् हुनगयो र सिताजिलाई
लक्ष्मणजिले सँग लिईकन भट्ट जाई
गूफा विषे बसि रह्या रघुनाथ् तयारी
चौंडै भया धनु र बाण्हरु ठिक्क पारी ४९

आया खर-त्रिशिर-दूषण तीन भाई
लश्कर् समेत् सँग लिईकन रीस् बढाई
ठाकुर्जिका उपर बाणकि बृष्टि पार्‍या
ठाकुर्जिले पनि ति बाण् सब काटि टार्‍या ५०

तिन्का सबै ति हतियार्हरु काटि टारि
सम्पूर्ण राक्षसहरु कन जल्दि मारी
मार्‍या खर-त्रिशिर-दूषणलाइ ताहाँ
सम्पूर्ण राक्षस सवया घरि चार माहाँ ५१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

नाम् सब् कह्या प्रभुजिले जब नाम सूनी
ऐल्हे म भज्दछु पती भनि एति गूनी
बिन्ती गरी मकन पत्नि बनाइ लेऊ
कन्दर्पको कठिन ताप छुटाइ देऊ ४०
यस्तो बचन् सुनि सिताकन हाँसि हेरी
उत्तर् दिया प्रभुजिले घर मै छ मेरी
सीता बुझीकन न भज् तँ पती मलाई
भाई छ खालि बरु भज पति भाइलाई ४१
साँचो भन्या भनि त लक्ष्मणका नजिक् गै
आयाँ म पत्नि हुन एति भनी र खुश् भै
भन्दाभया उ सित लक्ष्मण फेरि ताहाँ
दास् हूँ म ता मसित कुन् सुख मिल्छ याहाँ ४२
जा नाँहिं मालिक उ हुन् उहिं बस्नु अच्छा
बुद्धी रहेनछ बहुत् रहिछस् तँ कच्चा
यस्तो बचन् सुनि र शूर्पणखा रिसाई
सीताजिलाइ अब खाँ भनि फर्कि धाई ४३
मार् हर्न बात् प्रभुजिले तहिं रोपन आँट्या
लक्ष्मण्जिलाइ भनि नाक र कान काट्या
आज्ञा लि लक्ष्मणजिले पनि काटिदीया
भागी डराइकन भाइ जहाँ त थीया ४४
बिस्तार् गरी त्रिशिर दूषण खर् भन्याका
राक्षस् पनी सुनि ति अग्नि सरी बन्याका
आया जहाँ प्रभु थिया तहिं तीन भाई
लश्कर् सहित् अधिक जल्दि कदम् बढाई ४५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations


मार्‍या खर-त्रिशिर-दूषणलाई जस्सै
सीता र लक्ष्मण पनी प्रभुसीत तस्सै
आया, डराइकन शूर्पणखा त भागी
रावण् जहाँ छ उहिं जाँ भनि जानलागी ५२
रावण् जहाँ छ उहिं पौँचि विलाप गर्दै
सब् भाइ बन्धुहरुको मनलाइ हर्दै
देख्यो तहाँ बहिनिलाइ त नाक् गयाकी
त्यो फेरि बुच्चि पनि कान न भै गयाकी ५३
माया भयो बहिनिमाथि र झट्ट उठ्यो
बिस्तार सोध्न नजिकै पनि जल्दि छूट्यो
हे बैन्हि ! कुन् पुरुष हो मन नाक काट्न्या
खुबै रह्याछ सहजै पनि मार्न आँट्न्या ५४
जस्ले त नाक् सहित कान इ आज काट्यो
हे बैन्हि ! बात सुन त्यो अब मर्न आँउयो
यस्तो बचन् सुनि र नाम समेत् बताई
सीता र लक्ष्मण सहित् रघुनाथलाई ५५
तीन् छन् पराक्रमि ति पञ्चवटी बस्याका
ठोक्का भिरीकन धनू पनि खुब् कस्याका
गर्छू विचार मनले त यही म मान्छू
सब् भस्म पो गरिदिनन् कि भनेर ठान्छू ५६
आईरह्याछू म त खुब्सित मन् डराई
फिर्छन् ति सर्व ऋषिलाई त खुश् गराई
आश्चर्य मानिकन दौडि म आज आयाँ
बिस्तार पनी हजुरमा सब बिन्ति लायाँ ५७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सीताजिलाइ पनि सुन्दरि मानि ताहाँ
ल्याऊँ टपक्क टिपि सुन्दरिलाई याहाँ
भन्या निमित्त अति चित्त धरी गयाकी
पायाँ विपत् नकाटि कुच्चि समेत् भयाकी ५८
ल्याऊ समर्थ छ भन्या तिमि आज जाऊ
साम्ने ठहर्न छ कठिन् तिमि मन् नलाऊ
एक् युक्तिले छल गरीकन हर्नु पर्ला
साम्ने कदापि नगया ताहिं देह मर्ला ५९
तेस्ले बहूत भयमा परि बात् गयाको
लश्कर् समेत् त्रिशिर-दूषण-खर् मऱ्याको
सून्यो र बैन्हि कन खातिर खुब दीयो
एकान्तमा गइ लहड् पनि खूब लीयो ६०
सामान्य मानिस भया कसरी त माऱ्या
लश्कर् खर-त्रिशिर-दूषण छुट्टि पाऱ्या
सामान्य होइन इ ता परमेश्वरै हुन्
नाहीं त माइहरुका अघि टिक्दथ्यो कुन् ६१
ईश्वर् भया हुँदि करै पनि मार्दछन् ती
सामान्य हुन् पनि भन्या हरुँला सिताजी
ईश्वर् भया हुँदि विरोध् गरि खुश् हुन्याछन्
रीसै हुन्याछ भजुँला त ममाथि ता झन् ६२
एती विचार् गरि तऱ्यो र समुद्र पारी
मारिच् जहाँ छ ऋषिका सरि रूप धारी
ताहीं पुग्यो र रथ राखि नजिक् गयाको
बिस्तार गऱ्यो खरहरू सब नाश् भयाको ६३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
यस्तो परयो मकन आज सहाय देऊ
सुन्दर् ठुलो मृग स्वरूप् तिमि आज लेऊ
रामचन्द्रलाइ छलि दूर् तिमिले गराया
सीता जसै म हरुँला तब फर्कि आया ६४
मारीचले यति हुकुम् जब ताहिं सुन्यो
चिन्ता विषे परि तहाँ मन भित्र गून्यो
बिन्ती गरयो सकल तेज् प्रभुको जनाई
स्वामित् भनेर अति हित् मनले चिताई ६५
कस्ले गरयो र उपदेश् तिमि आज आई
सीता म हर्छु मृग होस् तँ भन्यौ मलाई
त्यै शत्रु हो तिमि उसैकन मार ताहाँ
कूलै समेत् क्षय गराउन खोज्छ याहाँ ६६
को सक्छ जित्न नबुझी तिमि सूर गर्छौ
यो सुर् लिया कुल समेत् तिमि आज मर्छौ
एक् बाणले मकन चारसय कोश सार्या
बालक् थिया त पनि भस्म सुबाहु पार्या ६७
आजै गयाँ बनविषे मृगरूप धारी
एक् बाणले मकन याहिं दिया पछारी
छाड्दै रगत् अति डराइ म भागि आयाँ
जाबैन भन्छु अब खुब् सित चेत पायाँ ६८
तस्मात् तिमी पनि विरोध् मीत यो नलेऊ
सीता म हर्छु भनि आग्रह छाड़ि देऊ
सब् नष्ट हुन्छ तिमिले मीत एहि लीया
देख्यौ खर-त्रिशिर-दूषण मारिदीया ६९
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हीतै कहन्छु भनि यो तिमि जानिलेऊ
आर्को कहन्छु म गुठिल तिमि चित्त देऊ
ई ता अनन्त अधिनाथ् परमेश्वरै हुन्
ब्रह्माजिले पनि भजिन्छ सदा पुरुष् जुन् ७०
नारदजिको बचन सूनि म आज भन्छू
रुवामित्! म ता हित चिताइ सदा रहन्छू
लौ मार रावरण भनी बरदान माग्या
ब्रह्माजिले र उहि सुर् प्रभु गर्नलाग्या ७१
जाऊ घरै बरु यो मति यो नलेऊ
ईश्वर् बुझेर उहि माफिक चित्त देऊ
जो गर्दछन् प्रभु गरुन् छ लीला उनैको
लाग्दैन जोर् प्रभु विषे अरु ता कुनैको ७२
मारीचले जब यति सब् बात् बतायो
झन् बात् सुनेर बुझि खुब्सित चित्त लायो
मारीचलाइ अनि रावण भन्छ हेरी
सीता म हर्छु मृग भैकन जाउ फेरी ७३
ईश्वर् त हुन् यदि भन्या ति अवश्य मार्छन्
सामान्य हुन् यदि भन्या ति अवश्य हार्छन्
ईश्वर् भया पनि असल् छ अवश्य तर्छू
सामान्य हुन्त म सिता सँग भोग गर्छु ७४
जाए अवश्य म सिताजि हरेर लिन्छू
बोल्यौ यहाँ कहु भने त म काटिदिन्छु
यस्तो हुकुम् गरि तहाँ जब बीच पार्‍यो
मारीचले पनि तसै जिउ आश मार्‍यो ७५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आखिर् मर्‍या म हरिदेखि मर्‍या त तर्छू
यस् दुष्ट देखि मारिए त नरक् म पर्छू
यस्तो बिचार् गरि तहाँ मृगरूप धारी
हूकुम् शिरोपर धरीकन भो तयारी ७६
दौड्यो लिला पनि चरित्र बिचित्र गर्दै
सीताजिका नजिक गैकन ताहिं फिर्दै
सीताजीलाइ गरुँ मोह भनेर दाग्यो
लीला गरीकन बरीपरि चर्न लाग्यो ७७
छल् हो भनी प्रभुजिले पनि चाल पाया
एकान्तमा गइ सिताकन काम् अह्राया
सीते ! अदृश्य भइ लौ बस अग्नि माहाँ
छाया सिता पनि बनायर छाड् याहाँ ७८
एक् भिक्षुको रुप लि रावण आज आई
हर्न्याछ दुष्ट तिमिलाइ स्वरुप् छिपाई
चाँड़ो अवश्य तिमिले पनि रूप् छिपाऊ
एक् वर्ष सम्म छिपि दिन् तिमिले बिताउ ७९
यस्तो हुकुम् सुनि अदृश्य स्वरूप धारी
छाया सिता पनि दुरुस्त गरिन् तयारी
सीता छिपीकन रहिन् जब अग्नि माहाँ
छाया सिता सँग बस्या रघुनाथ ताहाँ ८०
छाया सिताजि अति बिचित्र मानी
खेलाऊँ तेस मृगलाइ भनेर ठानी
बिन्ती गरिन् रघुपते ! मृग आज देऊ
खेलाउँछु अधिक जाति छ पक्रिलेऊ ८१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

इच्छा थियो प्रभुजिको पनि बिन्ति सूनी
जानू असल् छ भनि यै मन भित्र गूनी
हातमा धनू लि मृगका पछि आफु धाया
लक्ष्मणजिलाई बस याहिं भनी अह्राया ८२
लक्ष्मण् रह्या तहिं सिता सित चौकिदारी
मारीचलाइ प्रभुले पनि खुब् लघारी
पार्या तहाँ जब त दिक बहुतै करायो
हे भाइ लक्ष्मण ! मर्याँ भनि छल् गरायो ८३
छल्का बचन् सुनि सिताजि बहुत् डराइन्
लक्ष्मणजिलाइ तिमि जाउ भनी अह्राइन्
लक्ष्मणजिले हुकुम या सुनि बिन्ति पार्या
हे भाइ ! जो मृग थियो प्रभुले उ मार्या ८४
ठाकुर्जिले तहिं गिराइदिंदा करायो
हे भाइ लक्ष्मण ! मर्या भनि छल् गरायो
तेस्तो कहाँ मृग थियो मृग रूप् धर्याका
मारीच राक्षस थियो उहि हो मर्याको ८५
ज्योती स्वरूप् यहिं भयो र मिल्यो हरीमा
आश्चर्य भो सकललाइ उसै घरीमा
यस् दुष्टले पनि त यो गति आज पायो
भन्या बुझेर सब जन् कन हर्ष आयो ८६
लक्ष्मणजिको बचन सूनि सिता रिसाइन्
आँशू बहुत् नजरदेखि पनी खसाइन्
बोलिन् अवाच्य पनि लक्ष्मणलाइ ताहाँ
भज्ली मलाइ भनि मन् छ कि आज याहाँ ८७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रामदेखि बाहिक अनरत भजेन मैले
तिम्रै अगाडि यहिं छोड्दछू देह ऐल्हे
तिम्रो त चित्त अति दुष्ट रहयाछ जान्याँ
कामदेखि आज तिमिलाइ त शत्रु मान्याँ ८८

यस्तो बचन् सुनि ति लक्ष्मणजी रिसाया
बोलिन् अबाच्य भनि मित्र मनै चिताया
धिक् चण्डि ! एति भनि खूब्सित चट्पटाया
बन्देविलाइ रखवारि तहाँ खटाया ८९

सीताहरण जटायु मरण र मुक्ती

सीताजिलाइ तहिं छोडि उठी गयाका
टाढा हुँदा नजरदेखि फरक् भयाका
देख्यो र रावण सितातिर जील्द आयो
सन्यासिको स्वरूप् लीकन रूप छिपायो ९०

सन्यासी हुन् भनि बहुत् गरि भक्ति लाइन्
पूजा प्रणाम् पनि करीकन हर्ष पाइन्
बिन्ती गरिन बस गुरो ! प्रभु फर्कि आई
गर्नन् बहुत प्रिय हजुरकन चित्त लाई ९१

यस्तो बचन् सुनि सितातिर दृष्टि दींदो
को हो पति बुझुँ भनीकन गुह्य लींदो
सोद्ध्यो सितासित पनि पति जो छ को हो
नाम् काम् समेत् तिमि बताउन आज जो हो ९२

सिताजिले पनि भनिन् तब जो छ नाम् काम्
सन्यासि जानिकन कत्ति नपारि छल्छाम्
सोधिन् तहाँ म पनि नामहरू सुन्न पाऊँ
को हौ बताउ तिमिले पनि नाम ठाऊँ ९३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तो बचन् सुनि सिताकन हर्न ग्राँटी
नाम् काम् तहाँ सब कह्यो रति भर् न ढाँटी
बोल्यो ग्रबाच्य पति मानि मलाइ लेऊ
रामचन्द्रलाइ तिमिले ग्रब छाड़ि देऊ ९४
यस्तो बचन् सुनी ग्रलिक् मनमा डराइन्
बातले त दुष्टकन तृरा् सरिको गराइन्
हे दुष्ट रावरा ! तँ ग्राज ग्रबश्य मर्लास्
ऐल्हे जसै प्रभुजिका ग्राघि याहिं पर्लास् ९५
यस्तो बचन् सुनी रिसायर जल्दि उठ्यो
धार्‍यो स्वरूप् र ग्रब हर्छु भनेर छुट्यो
बिश् बाहु दश् मुख शरिर् पनि शुद्ध कालो
देखाइ सब् कन त राम् मन भित्र हाल्यो ९६
सीताजीलाइ मन्ले चिह्निकन मनमा मातृवत् बुद्धि गर्दो
हातले मैले छुँदामा ग्रनुचित छ भनी स्पर्श केहि नगर्दो
ग्राफ्नाबाहसब्जामिन्माधसिकनजमीनैजल्दिःहात्लेउठायो
सीताजीलाइ रथ्मा धरिकन दगुर्‍यो रामदेखी छुटायो ९७
हाराम् ! लक्ष्मरा ! एतिमात्र मुखले❀ बोलेर साह्रै रुँदी
तन् मन् राम बिषे धरेर बहुतै ❀व्याकुल् निरन्तर् हुँदी
देख्या ताहिं जटायुले र उड़ि गै ❀ रथ् चूर्रा पारीदिया
घोड़ा चूर्रा गराइ फेर् धनु समेत् ❀ टुक्रा गराई दिया ९८
रावरा्भन् बरिथीयो झटपट गरिखुन् हातमा खड्ग लीयो
काट्यो दूवै पखेटा रिसासित त तहाँ भूमिमा झारिदीयो
बाधा पाई जटायु पृथिवी तल गिर्‍या फेरि रथ्को तयारी
जल्दीपार्‍योसिताजीलिइकनपुगिगोदुष्टत्योसिन्धुपारी९९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आकाशमाजब ऋष्यमूक गिरिका ❀ ऊपर् सिताजी पुगिन्
आफ्नासब् गहना फुकालि बाँलियो ❀ पोको बनाई लिइन्
राम् लक्ष्मण् कन यो दिउन् भनि तहाँ ❀ पोको खसालिन् पनि
सुग्रिव्ले त गुफा बिषे धरिलिया ❀ कस्ले खसाल्यो भनी १००
सीताजीलाइ लङ्का लगि असुरपति मातृवत् बुद्धि गर्दो
भित्री जुन् हो बघैंचा तहिं असल अशोक् वृक्षका बीच धर्दो
सेवा खुब् गर्न लाग्यो तरपनि मनमा माइले दुःख पाइन्
हाराम्! हाराम्! जगन्नाथ्! यहि बचन गरि राममा चित्त लाइन् १
मारिच् मारेर फिर्थ्या प्रभु पनि बनमा देखिया ताहिं भाई
रामले ताहिं बिचार्या मन मन् इ कुरा भाइ पुग्नै नपाइ
माया सीता बनेकी अलिकति पनि याद् छैन इ भाइलाई
साँचै सीता इनै हुन् भनिकन मनले भन्दछन् चाल् न पाई २
यो बात् खोल्दिन गुह्य राख्छु म पनी ❀ मानुन् सिता हुन् भनी
सिता निश्चय हुन् भनी ति रिसले ❀ लड्नन् रिपूथ्यै पनी
यस्तो निश्चय मन् भयो प्रभुजिको ❀ लक्ष्मण् पुग्या झट्तहाँ
सोध्या श्रीरघुनाथले किन सिता ❀ छाडेर आयौ यहाँ ३
लक्ष्मणले जब त्यो हुकुम् सुनिलिया ❀ बिन्ती गर्या त्यै घरी
जो दुर्बाच्य सिताजिले गरिलिइन् ❀ बयै हुन्न त्यै बात सरी
मारिच्को छलको बचन् सुनि बहुत ❀ दुर्बाच्य बोलिन् जसै
सम्झायाँ भरिसक् अनेक् तरहले ❀ लागेन बिन्ती कसै ४
फेर् उत्तर् प्रभुले दिया अनुचितै ❀ तिन्ले भनुन् ता पनी
छोड्नू कत्ति थिएन दुर्बचनले ❀ स्त्री हुँन् ति सीता भनी
एती बात् गरि राम आश्रम बिषे ❀ जल्दी कदम् ली गया
देख्यानन् र सिताजिलाइ नहुनै ❀ शोक् गर्न लाग्दा भया ५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized by Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

कीताराक्षसले हऱ्योकि वनमा ❀ की दुष्टले पेट् भऱ्यो
एक्थोक्वयातभयोअ्नश्यआहिले ❀ कुन्दुष्टको खेलूपऱ्यो
वनदेवी हरुलाइ मालुम भया ❀ विस्तार् बताऊ यहाँ
सीता मेरि पियारिदेखूतिनमता ❀ जान्दू सिताछन् जहाँ ६

हावाले हल्लियाका तरूवर! गिरिका हे लताका निकुञ्ज
मेरो यो दुःख देख्ता तिमिहरू किनहो बस्तछौ मौन आज
वामांगी मेरी प्यारी अतिशय शुशिला जानकीलाइ कस्ले
हर्दोभो, हे लता हो! भनन भन कहाँ छन् ति सीताजी ऐले ७
हा सीता! हे पियारि! मकन वन बिषे छोडि पारी अनाथ
ऐले बस्छयौ कहाँ गै अतिशय दुखले जर्जरै पारि गाथ
हे मेरी प्राण प्यारी! जनकनृपसुता! लोकको श्रेष्ठ नारी!
आउ झट्टै, मलाइ न धस न अहिले दुःखको यो कटारी ८
गोल् काँसीका सरीका अधर पनि थिया पुष्ट जंघा भयाकी
बाँधी काञ्ची कमर्मा मम हृदय महाँ हर्हमेशा रह्याकी
यस्ती सीताजिलाई तिमिहरु बिचमा देख्छकी कोहि जन्ले
साँचो साँचो बताऊ बिरहि बुझि यहां रामलाई तिमीले ९
माछा शूग्गा परेवा हरिण मुजुर हो! यस् वनैमा रह्याका
मेरी प्यारी सँगैमा पनि घरघड़ी बद्ध प्रेमै भयाका
देख्यौ की जानकीजी बल जफत गरी दुष्टले तानियाकी
साँचो ऐले बताऊ तिमि हरू ति कता छन् गएरै बस्याकी १०
जगतमा कहिल्यै सुनको मृग, न सुनियो किन फ़स्न गयाँ म त
विधि पनी किन आज निठुर् भयो,तिमि बिना सुख साधन सब् गयो
कति भन्या तिमीलाइ घरै बस, तर गऱ्यौ तिमिले अतिनै हठ
फल मिल्यो त्यसकै तिमिलाइ यो जगतमा प्रतिदिन् दुख भोग्नको ११
विपद औ सुखमा सङमा रही, मकन साथ दियौ अति दुख् सही
कसरि आज भुलू म तिमीकन, अब त व्यर्थ भयो मम जीवन १२

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यसूतारितुसितसोधिसोधिरघुनाथ् ❀ जानै स्वरूपी पनी
जसूतो मानिस गर्छ सोहि रितले ❀ हा मेरि सिते !! भनी
फिर्थ्या तेस् वनमा बड़ा बिरहले ❀ सोद्धा नपाई उसै
यै बिच्मा वनमा त रथ् र धनुका ❀ देख्याअ्नेकट्टुकूतसै २३
भन्छन् लक्ष्मरालाइ भाई ! तिमिले ❀ देख्यौ यहाँको त चाल्
अर्को आइ जिति लियाछ बिचमै ❀ मैले त देख्याँ कुचाल्
एतीबात् गरि राम् अलिक् परगया ❀ देख्छन् त पल्टी रही
चिन्है लाइ कठिन् जटायुकन ती ❀ दूनै परवेटा गर्ई २४
अज्ञान् कत्ति थिएन ता पनि तहाँ ❀ भन्छन् अगाडी सरी
चीन्हेको नचिन्है गरेर भगवान् ❀ लीला नरैको गरी
हे भाई ! धनु देउ दुष्ट मिलि गो ❀ मार्छू म बाणौ धरी
खान्या एहि रहेछ हेर बुझियो ❀ पल्टेछ खुन्पेट्भरी २५
सून्या बात र जटायुलेपानिहवाल् ❀ बृत्तान्त बिन्ती गर्‍या
सुन्दा पूर्ण दया भयो नजिक गै ❀ छाम्यारसन्तापहर्‍या
सीताको समचार् सबै कहि तहाँ ❀ साम्ने जटायू मर्‍या
स्नान् दाहा गरिमासुपिराडहरुदी ❀ क्रीया प्रभूले गर्‍या २६
भक्ती राखेर राम्को स्तुति गरि बहुतै मोक्ष सायुज्य पाई
पौंच्या धाम्मा जटायू प्रभु पनि नरको ठिक्क लीला जनाई
बन्बन्मा फिर्न लाग्या बिरह गरिगरि सोद्धछन् जाहिं ताहिं
दोओदेख्न्याअ्रूफेर्सकल बनढुँड्याएक्पनीकाहिं नाहिं २७
छातीमा मुख् भयाको शिरपनि नहुँदा नाम्कबंधै रह्याको
चार्चार्कोशूसम्मपुग्न्यादुइ अतिबालिया दीर्घबाहू भयाको
राक्षस् थीयो तहाँएक्बनसिकनत्रशषिसब्हातलेखैंचिखान्या
तेसैका बाहु बिच्मा रघुपति परदा रोकियो मार्ग जान्या २८

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

किष्किन्धा
का. १

१ किष्किन्धा राज्यमा बानरहरुका साथ सुग्रीवजीले मन्त्रणा गरेको ।

३ श्रीरामको साथ सुग्रीवले मित्रता गरी सीताको पत्ता लाउने प्रतिज्ञा गरेको ।



२ हनुमानले रामचन्द्रलाई भेटी सुग्रीव संग मित्रता गर्नें प्रार्थना गरेको ।

४ सुग्रीवजीले श्रीरामलाई सीताको आभूषण देखाएको

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

राक्षस्‌ले घेरियाको बुझिकन रघुनाथ् भन्दछन् भाइलाई
हे लक्ष्मण् ! देखिलियौ अननिचपरियो निल्छकी हामिलाई
ठाकुर्‌जीका बचन्‌इसुनिकन बिनतीताहिंलक्ष्मण्‌जिगर्छन्
हेनाथ् ! क्याडरछयस्‌कोदुइभइदुइहात्काटिदूँयाहिंभर्छन्१९
एती बात्‌गरि हात् दुबै सहजमा ❀ काटी खसाल्या जसै
राक्षस्‌ले पनिहात् गिरयोजब तहाँ ❀ आश्चर्य मान्यो तसै
सोदयोआज म निरकोपानिसहज् ❀ हातै खसाल्यौ यहाँ
को हौ क्या मनमा लिएर बनमा ❀ डुल्छौ छ जानू कहाँ २०
उत्तर् श्री रघुनाथले पनि दिया ❀ हाँसेर बिस्तार् गरी
सून्यो राम भनी तहाँ र मनले ❀ चीन्ह्यो इनै हुन् हरि
ठाकुर्‌जीकनचीन्हिखुश्‌अधिकभै ❀ बिस्तार्‌अनेक्‌फेर्‌गर्‌यो
हेनाथ्! आजचिन्ह्याहजुर्‌कनयहाँ ❀ पायाँरसन्तापटर्‌यो २१
ब्रह्मादेखि अनदय पाइ बरदान् ❀ गन्धर्व हूँ ता पनि
राम्रो छू मानि गर्व भो र ऋषि ता ❀ साह्रै नराम्रो भनी
हाँस्‌याँ केहि र अष्टवक्र ऋषिले ❀ राक्षस् भयास् लौ भनी
पैल्हे श्राप गरीदिया पछि त फेर ❀ मुक्ती बताया पनि २२
राक्षस् भैकन फिर्दथ्याँ म रिसले ❀ शिर् इन्द्रजिले हर्‌या
ब्रह्माको बरदान् थियो र म जियाँ ❀ इन्द्रादि सब्छक्‌पर्‌या
शीरै गै पनि यो जिया अब कसो ❀ गर्ला भनी खुब् दया
आयो इन्द्रजिको र खानकनमुख् ❀ छाती बिषे दी गया२३
चार्‌चार्‌कोशतलक् समाउन भनी ❀ लामा त हातै दिया
सो हात् आज गिराइबक्सनु भयो ❀ याहीं तलक् ई थिया
जस्‌तो युक्ति ति अष्टवक्र ऋषिले ❀ पैल्हे बताया तहाँ
तस्‌तै ठिक्कभयोइहात् गिरिगया ❀ मुक्ती त पायाँ यहाँ २४

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
कया बात धन्य रहेछु आज म प्रभु ❀ आश गर्‍याथ्यौँ जति
रातोदिन् रटना थियो चरणको ❀ मैगो शरण्को गति
खाडल् खुब् गहिरो खनेर उसमा ❀ यो देह मेरो धरी
पोली भस्म गराइबक्सनुहवस् ❀ जान्छु म संसार तरी २५
सीता पाउनको उपाय बिनती ❀ गर्न्याछु साँचो गरी
भन्या यो बिनती सुनेर हरिले ❀ पोलीदिया खाक् गरी
सुन्दर् शुद्ध स्वरूप् धर्‍यो प्रभुजीले ❀ खुश्भै दिया वर् पनी
भक्तीले बहुतै गर्‍यो स्तुति र त्यो ❀ पौंच्यो परम्धाम् धनी २६
हे नाथ! सीताजि मिल्निन् अब जति मिश शबरी छन् जहाँ ताहिं जाऊ
सोहि भक्ती छ तिम्रा चरण कमलको ताप तिन्को छुटाऊ
एहि बिन्ती जगन्नाथ्सित गरि जब धाम् त्यो गयो राम फेरी
आश्रम्मा पौंचि दर्शन् शबरीकन दिया खुब् कृपा राखि हेरी २७
पुत्रि हुन् इनी भिल्लवंशकी । शबर नामका कोहि भूपकी
मुनि मतंगको प्रार्थना गरी । भक्तिनी भइन् 'रामकी' बडी २८
आसन्देखि उठेर जल्दि शबरी ❀ रामका चरण्मा परिन्
सक्भर्को बहुतै पुजा गरि तहाँ ❀ हात्जोरि बिन्ती गरिन्
हे नाथ्! हीनकुलकी स्त्रि जतिम गरीब् ❀ जान्दीन तिम्रो स्तुती
आधार्मात्र फगत् छ त्यै चरणमा ❀ यस्तै छ मेरो गति २९
निस्तार् सब् गुरुदेखिपाइ गुरुको ❀ आज्ञा मनैमा लिई
कैह्ले देख्छु हजूरलाइ भनि खुब् ❀ तन्मन् हजुर्मा दिई
पुजा नित्य हजूरको गरि यहाँ ❀ रुनामित! बसेकी थियाँ
हे नाथ्! आज दया भयो हजुरको ❀ प्रत्यक्ष देखी लियाँ ३०
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बयाले आज बहुत् प्रसन्न हुनुभो ❀ कुन् काम मैले गर्‍याँ
योगीका मनले नभेटि सकिन्या ❀ मैले त दर्शन् गर्‍याँ
यस्तो बिन्ती सुनी दया बहुतभो ❀ हेतू प्रभुले कह्या
उँच्निच्स्त्री पुरुषै बिचार्दिनमता ❀ खुश्हुन्छु भक्तीभया ३१
नौ साधन्कि तभक्तिछन् ति नउमा ❀ पैल्हो त सत्सङ्ग हो
पैल्हो साधन यो भयो पनि भन्या ❀ बाँकी रहेका ति जो
आठ्साधन्हरु हुन् तिता क्रमसितै ❀ मिल्छन् असल् सङ्गले
सत्को सङ्ग भयो सबै बनिगयो ❀ बया हुन्छ कूसङ्गले ३२
सत्सङ्गै मै रह्याकी दिन दिन म उपर् भक्ति ठूलो भयाकी
सज्जन्को सङ्ग पाईकन सब गुणका पार पौंची गयाकी
देख्याँ मैले र दर्शन् दिन भनि खुशिले आज आफैं म आई
दियाँ दर्शन् र पायौतिमि अधमभया पाउँथ्यौ बया मलाई ३३
मुक्ति भो आज तिम्रो सब फजिति छुट्यो खुशि मै आज जाऊ
मेरी सीता कहाँ छन् कछु खबर भया त्यो पनी सब् बताऊ
हूकुम्जस्सै सुनीथिन् तब तहिं बिनति गर्दछिन्बया बताऊँ
सर्वव्यापी हजुर्ले बुझिन नसकिन्या एक्रतीछैन ठाऊँ ३४
साँचो बिन्ती गर्‍याँ यो तर पनि नरको आज यो रूपधारी
आज्ञा भो ता म बिन्ति पनि हजुर बिषे गर्दछू काल् बिचारी
सीता लङ्का बिषे छन् अब त हजुरले भेटि सुग्रीवलाई
बवर्‍याजाबस्तिगर्नन्जातिछसबतिकाम् बिल्कुलैपारलाई ॥
पम्पा भन्या तलाऊ पनि नजिक हुन्या ऋष्यमूक् पर्वतैका
टाकूरैमा ति बस्छन् अति फजिति भई दिन बिताई सँधैका
बालीको डर् हुनाले ताहिं बहुत बस्या बालि जाँदैन ताहाँ
बालीलाईनजानूभनिकनछशराप्सब्गर्‍याँबिन्तीयाहाँ ३६

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुग्रीव्सीतमित्यारीगनुसत्नकाम् ❀ हून्या छ सिद्धि पनि
मिल्निन्आजमहेरखाकृशशरीरयो ❀ गर्छू नजिकमा भनी
बिन्ती पारि चितानिषे पसि शरिर् ❀ जोहो उसन्खाकगरिन्
ठाकुर्का अति भक्तिले ति शबरी ❀ संसारसागर् तरिन् ३७
क्यादुर्लभ् रघुनाथ्खुसी हुनगया ❀ जात्की अधम्भै पनी
श्री राम्का अघि देह छोड़िकन ती ❀ पौंचिन् परम्धाम् अनी
ब्राह्मण् भैकन भक्तिगर्दछ भन्या ❀ उस्कातमन् क्याकुरा
जोकोहीपनि भक्तभोपनि भन्या ❀ योगि ति हुन्छन् पुरा ३८
हेलोक्हो! रघुनाथ्जिका चरणको ❀ भक्ती छ मुक्ती दिन्या
जो जानीकन कामधेनु सरिका ❀ राम् हुन्मनैमालिन्या
क्या गर्छौं अरु मन्त्रयन्त्रहरुले ❀ छाडेर सब् राममा
तन् मन् लाउ अवश्य जान मनले ❀ सार्मिल्छयैकाममा ३९

इति सुब्बा होमनाथात्मज पं० केदारनाथ र पं० रामजी उपाध्याय कृत क्षेपक समेतको नेपाली कवि भानु भक्ताचार्य कृत रामायण आरण्य काण्ड समाप्त ।

——❀:❀:❀——


नेपाली साहित्य गगनमा सूर्य झै प्रसिद्ध सुब्बा होमनाथ केदारनाथजीका ग्रन्थरत्न

अट्ठारहपर्व महाभारत चमड़ा ढकनीको दाम २५।

श्री कृष्णचरित्र चमड़ा ढकनीको दाम १०।

आठै काण्ड रामायण चमड़ा ढकनीको दाम १०।

ठूलो श्रीमद् देवीभागवत चमड़ा ढकनीको दाम ९।

सचित्र नेपाल दिग्दर्शन इतिहास १ के दाम ८।

यो समग्र पुस्तकको सेट एकै पटक रु० १०) पेशगी पठाइ मगाए खर्च पनि माफ हुन्छ।

पुस्तक पाइने ठेगाना—

सुब्बा होमनाथ केदारनाथ,

हितैषी कम्पनी

वाराणसी १ (बनारस सिटी)


CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुब्बा होमनाथात्मज केदारनाथजी र पं० रामजी उपाध्यायकृत क्षेपक समेतको

❀ महाकवि पं० भानुभक्ताचार्यकृत ❀




हनुमान परिचय, हनुमानराम भेट र सुग्रीव राम मित्यारी

जस्सै मुक्तभई गइन् ति शबरी ❀ सब्बात् सुनी राम् पनि
जान्छू आज म ऋष्यमूक गिरिमा ❀ सुग्रीव् भेट्छू भनी
जान्थ्याकोश् भरिको तलाउ मिलिगो ❀ पम्पा भन्याको पनी
चीन्ह्या श्री रघुनाथले शबरीले ❀ यैहो भन्याको भनी १
माछा कच्छप चल्दछन् कमलको ❀ सब् गिर्छ केसर् तहाँ
केसर्ले जब ढाकियो पनि भन्या ❀ देखिन्छ जल् पो कहाँ
नीलालालसफेद् कमल् पनि अनेक् ❀ रङ्का भयाका तहाँ
बोल्छन् हंस चकोर सारसहरू ❀ लाटा बकसेरा जहाँ २
जस्तो निर्मल हुन्छ सन्तहरूको ❀ मन् सोहि माफीक जल्
निर्मल् देखि प्रभू प्रसन्न हुनुभो ❀ लाग्यो र साह्रै असल्
केहि जल् पनि पान् गरी सकल वन् ❀ हेर्थ्या उसै बिच् महाँ
देख्या सुग्रीवले र डाकि हनुमान् ❀ लाड अह्राया तहाँ ३
रामका भक्त प्रसिद्ध सुग्रिवजिका ❀ मन्त्री हनूमान् थिया
भूको भार्‌कन हर्न शंकरजिले ❀ औतार साक्षात् लिया

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ठूला पण्डित वेद व्याकरणका ❀ वेदान्त ज्ञाता तथा
भक्ती मार्ग महाँ इनी दृढ थिया ❀ रामका उपासक् बडा ४
इन्को अञ्जनि बाट जन्म हुनगो ❀ श्री वायु द्वारा जब
मेरो भक्ष्य पदार्थहो कुन भनी ❀ माताजिका सङ् तब
सोध्या ई शिशुले र अञ्जनिजिले ❀ भन्दीभइन् यो तहाँ
पाकेको अनि रक्त फल् छ बढिया ❀ तिम्रा निमित्तै महाँ ५
बालक्लाइ बुझाइ यस्तरहले ❀ सन्तोष् गराई लिइन्
एक्दिन् अंजनि ती बिहान पखमा ❀ अन्तै गयाकी थिइन्
लाग्यो भोक् शिशुलाइ खूब् त्यसघरी ❀ के खाउँ भन्दै थिया
साही औसर रक्त गोलरूपका ❀ सूर्यै उदाई लिया ६
सूर्यैलाइ बुझेर भक्ष्य तिनले ❀ मुख्भित्र हाल्या जसै
सूर्यास्तै सरि भै गयो क्षणमहाँ ❀ गाढान्धकार् भो तसै
द्यौताहेरू मिलेर वायुसुतमा ❀ यो बात भन्छन् तब
छाडो देउ इ सूर्य हुन् यसघरी ❀ चाँडै तिमीले अब ७
द्यौताको सब बात त्यो ति शिशुले ❀ मान्दा भयानन् जसै
बज्रै लीकन इन्द्रले कुपित भै ❀ मुख् ताकि हान्या तसै
लागी बज्र ति बालको मुख तहाँ ❀ लामो र बांगो भयो
सोहीकारण अंजनी सुतजिको ❀ नाऊँ हनूमान् रह्यो ८
बालीको छल हो भन्या बुझि तहाँ ❀ हात्ले इशारा दिया
औरै कोहि रह्याछ सज्जन भन्या ❀ हाँसेर हेरी लिया
ब्राह्मण्को लड्का बनेर हनुमान् ❀ जाऊ ति को हुन् कहाँ
जान्छन् श्यामनमा छ सब् नारपारि ❀ हेरेर डुल्छन् तहाँ ९
सुग्रीव्ले हनुमानलाई जब यो ❀ हूकुम् दिया जा भनी
ब्राह्मण्को लड्का बनेर हनुमान् ❀ रामका हजुर्मा पनी
पौंचीपाठ्सितबिन्तिपारिशबकाम् ❀ सोद्या प्रभूको जसै
निस्तार् नाम र कामको प्रभुजिले ❀ खुशभै बताया तसै १०

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुग्रीव्को हनुमानले पनि तहाँ ❀ बिस्तार बिन्ती गर्‍या
बोकूँ श्री रघुनाथलाइ भनिफेर् ❀ आफ्नू स्वरूपमा्‌ट् धर्‍या
राम्‌लक्ष्मण्‌कन बोकि जल्दी हनुमान् ❀ सुग्रीवका पासमा
पौंचाऊँ रघुनाथलाइ भनि खुब् ❀ कूद्या ति आकाशमा ११
जल्दी पर्वतका उपर् पुगिगया ❀ छाया बिषे राम् रह्या
सुग्रीव्‌लाइ खबर् दिनाकन तहाँ ❀ जल्दी हनूमान् गया
बिस्तार् पायर आइ सुग्रीवजिले ❀ दर्शन् प्रभूको गर्‍या
हाँगा कोमल भाँचि आसन दिया ❀ आनन्दमा ती पर्‍या १२
आसन् सुग्रीवलाइ लक्ष्मणजिले ❀ दीया हनूमान्‌ले
लक्ष्मण्‌जीकन बस्न आसनादिया ❀ ताहीं ठुलो ज्ञानले
सीता जुन्‌गहना खसालि गइथिन् ❀ हाजिर् गराई तहाँ
लाग्या सुग्रीव भन्न लाइ इ कुरा ❀ राम्‌का हजूरै महाँ १३
हाराम्! लक्ष्मण!! यै पुकारि मुखले ❀ क्वै नारि आकाशमा
जान्थिन् सब्‌गहनाफुकालीकनता ❀ हाम्रा यसै बासमा
गिर्न्यापाठ्‌सितपोखसालीतिगइन् ❀ चीन्हीन याहिं थियाँ
कस्‌का हुन्‌यहि चीन्हि बक्सनुहवस् ❀ यैहो हजुर्‌मा दियाँ १४
एती बिन्ति गरी दिया ति गहना ❀ देख्या प्रभूले पनी
चीन्ह्या सब्‌गहना र शोक बहुत भै ❀ हा! मेरि सीता भनी
रोया छाति बिषे धरेर गहना ❀ नाना बिलाप्‌ले जसै
लक्ष्मण् सुग्रीवले बुझाइ इ कुरा ❀ बिन्ती चढाया तसै १५
हे नाथ्! रावणलाइ मारि सहजै ❀ सीताजीलाइ यहाँ
हाजिर् हामि गराउँला हजुरमा ❀ त्यो दुष्ट जाला कहाँ
एती बिन्ती तहाँ जसै ति दुइले ❀ राम्‌का हजुर्‌मा गर्‍या
साक्षी श्री हनुमानले पनि तहाँ ❀ अग्नीजिलाई धर्‍या १

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अग्नि साक्षी धरेर सुग्रीवजीले ❀ रामथ्यैं मित्यारी गरी
बाहाँ जोरि सखा भई नजिकमा ❀ एकदिन् रही त्यै घरी
सुग्रीव्लेतहिंबिन्तिबात्पनिगऱ्या ❀ हे नाथ्! फजीती सही
बालीका डरले बहुत् दिन बित्यो ❀ एसै जगामा रही १७
याहाँ बालि त आउँदैन छ शराप् ❀ मातङ्गजीको र पो
पायाँ बस्‍न नहीं भन्या मकन ता ❀ कस्ले बचाउँदथ्यो
बालीको बल बिन्ती गर्छु अहिले ❀ जस्देखि सब् डर्दछन्
कस्तै बीरहउन् लड्या पनि भन्या ❀ लड्न्या सबै मर्दछन् १८

तेस्का साथ् रणगर्न संमुख हुनन् ❀ योद्धा जउन् जन् गई
बालीमा बल जान्छ आधि उसको ❀ बीर् इन्द्रजीको भई
सोहीकारण सुर् असुर् मनुजमा ❀ जो बीर छन् यस् घरी
डर्छन् ती र प्रमत्त बालि छ बुझी ❀ आफू अजेयै सरी १९

ठूलो बीर् मयपुत्र राक्षस थियो ❀ मायाविता नाम्थियो
बालीसीत लड़ाँई गर्न भनि त्यो ❀ आयो र हाँक खूब्दियो
बालीले पनि दौडि गैकन तहाँ ❀ हान्या मुठीले जसै
बाधा पाई डराइ भागि उ गयो ❀ लाग्या पछाड़ी तसै २०
बालीका पछि लागि मै पनि गयाँ ❀ राक्षस् गुफामा गयो
ढोकामा त मलाइ राखि बिर त्यो ❀ फेर् भित्र जाँदो भयो
मैन्हा दिन् बितिगै गयोतपनित्यो ❀ फर्केन बाली जसै
सार्है दिक् म थियाँ कसोगरुँभनी ❀ आयो रगत् पो तसै २१
लौ बाली त मरेछ हेर रगतै ❀ आयो गुफा देखि ता
मैलाई पनि फर्कि मार्छ रिसले ❀ गूफा थुनी दूँ म ता
यस्तो बुद्धि भयो र पत्थर ठूलो ❀ ल्याएर गूफा थुन्या
फर्कीआउनमन्गऱ्यापनिसहज ❀ निरकीनसक्नन्हुन्या २२

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तापाह्सितखुब्थुन्याँरमाफिर्याँ ❀ बालीमर्योलौभनी
सब्बिस्तार्सुनिमन्त्रिलेमकनता ❀ राजा बनाया पनी
राजा भैकन राजभोग् पनिगर्याँ ❀ कयैदिन् पछी बाली ता
राक्षस् मारि फिरेर दाखिल भयो ❀ रीसाइ भैमाथि ता २३
तेस् दिन्देखि डराइ याहिं म रह्याँ ❀ मेरी त पत्नी पनी
बल्जफ्तीसित भोग गर्छ गरुँ क्या ❀ पुग्दैन जोर् क्यै भनी
याहाँआउन सक्ने भया यहिंपनी ❀ आएर मार्न्या थियो
पाप्को क्या डर मान्छ त्यो र बलले ❀ जस्ले बुहारी लियो २४
सार्है दुःखि भएर सुग्रीवजिले ❀ बिन्ती गर्याको सुनि
सुग्रीव्को अब दुःख हर्दछु भनी ❀ अंतस्करण्ले गुनी
खातिर् दी प्रभुले भन्या सुनसखे ! ❀ त्यो बाली मारी यहाँ
तिम्रो राज्य गराउँला अब उपर् ❀ जोर्चल्छतेस्कोकहाँ २५
यस्तो सत्य वचन् सुनी प्रभुजिको ❀ शङ्का पर्यो तै पनी
सक्छन् क्या प्रभुबालिमार्नकनता ❀ ठूलो छ बाली भनी
बालीलाइ बहुत बीर् बुझि तहाँ ❀ रामका अगाडी सरी
बालीको आघिको पराक्रम कह्या ❀ बिल्कूलविस्तार्गरी २६
एक् दिन् दुन्दुभि नाम राक्षस ठुलो ❀ आएर हाँक्खुब्दियो
बालीले सहजै निमोठिकन शिर् ❀ छुट्याइहात्मा लियो
सोही फ्याँकि दिंदा यहाँ गिरिगयो ❀ चार्कोश्जगामाजरै
छीटा पर्न गयो बहुत् रगतको ❀ ऋषी रिसाया तसै २७
बालीलाइ शराप् दिया अब यहाँ ❀ आइस् भन्या तैं पनी
शिर्जूदामइ पृथ्विमा गिरिगयास् ❀ जस्तै गिर्यो योभनी
यो मालूम मलाई सब् आघि थियो ❀ सो जानि याहाँ रह्याँ
तेस्लाईपनि यो छ याद् तबमतेस् ❀ बीर्देखिबाँच्तोभयाँ २८

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सोही शिर प्रभु तक् छ पर्वत सरी ❀ सो फ्यांकनसक्नू भया
बाली मार्न समर्थ ताहिं चिन्हुँला ❀ मेरो त शेखी गया
इ बात् सुग्रिवको सुनी झलक घूँ ❀ इनूलाई भन्या भयो
फ्याँक्याशिर ताहिंपाउका ऋँगुलिले ❀ चालिसकोश् तक्गयो २९
देख्या सुग्रिवले तथापि मनमा ❀ शङ्का त फेरी रह्यो
सक्छन् क्याइत बालि मार्नकनता ❀ ठूलो छ भन्या भयो
सातातल् वृक्ष इ छन् इ एक शरले ❀ छेदछन् त मार्छन् भनी
सुग्रीव्को मनमा भयो र इ कुरा ❀ विन्ती चढाया पनी ३०
हे नाथ्! बिन्ति म गर्दछू अरु पनी ❀ यस्तो छ बाली भनी
एही शिर्कन फ्याँकि मात्र मनले ❀ मानेन विश्वाश्पनी
बालीले यहि ताल वृक्षकन ता ❀ बूटा बराबर् गरी
हल्लाएर खसालि दिन्छ जतिछन् ❀ सम्पूर्ण पत्तापनी ३१
इ ताल्वृक्ष पनी यहाँ हजुरले ❀ एक् बाण ऐल्हे धरी
सब्मा छिद्र गराइ बक्सनुहवस् ❀ बुझ्न्याछमन्खुब्गरी
एती बिन्ती तहाँ ति सुग्रिवजिले ❀ रामथ्यैं जसैता गर्‍या
रामजीले पनि लौ भनेर खुशिले ❀ हात्माधनुर्बाणधर्‍या ३२
बाण् फ्याँक्या प्रभुले र बेगसितगयो ❀ सात्ताल भेदन् गरी
पर्वत भूमि समेत् बिदारि पर गो ❀ साम्ने सबै साफ्गरी
ठोक्रामा फिरि आइ बाण् जबपर्‍यो ❀ सुग्रीवजी छक् पर्‍यो
साक्षात्श्रीपति हुन्भनीचिन्हितहाँ ❀ राम्कोस्तुतीखुबगर्‍यो
हेनाथ्! बल्लचिन्ह्याअहो! सकलका ❀ आत्माजगन्नाथ्भनी
मायादेखि फरक् भयाँ म अब लौ ❀ लाग्दैन माया पनी
क्या गर्छू अब पुत्र दार धनले ❀ सम्पूर्ण इ दुर् रहुन्
मेरा सब् दश इन्द्रियै हजुरका ❀ सेवाटहल्मा रहुन् ३४

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यै पाठ्‌ले जब ता गर्‌या स्तुति तहाँ ❀ रामले तत्‌ यो सब्‌ सुनी
यो ज्ञान्‌ आजन छूँ भनी प्रभुजिले ❀ अन्तर करण्‌ले गुनी
मायाले अति मोह पारि रघुनाथ्‌ ❀ हाँसेर बोल्या जसै
सुग्रीव्‌ मोहभया बचन्‌ सुनि तहाँ ❀ त्यो ज्ञान बिर्सया तसै ३५
हे सुग्रीव सखे ! मलाई दुनियाँ ❀ भन्नन्‌ मित्यारी गरी
कुन्‌ चीज्‌ सुग्रीवलाइ दीकन गया ❀ आपत्ति तिन्‌को हरी
यो लोक्‌को अपबाद मेट्‌छू अब ता ❀ बाली छ ऐले जहाँ
ताहाँ गैकन हाँक देउ तिमिले ❀ त्यो बाली मार्छू यहाँ ३६
ऐल्हे राज्य गराउँछू भनि तहाँ ❀ राम्‌को हुकुम्‌ भो जसै
सुग्रीव खूशि भएर बालिकन खुब्‌ ❀ हाँक्या बचन्‌ले तसै
किष्किन्धा पुरिका नगचिननमा ❀ आएर हाँक्‌ खुप्‌ गरी
सुग्रीव्‌जी जब ता रह्या बुझि खबर्‌ ❀ बाली छुट्‌यो तेस्‌ घरी ३७
बाली सुग्रीवको लडाइँ पनि भो ❀ सुग्रीव एक्‌ त्रास्‌ पड्‌या
सक्थ्या सुग्रीवले कहाँ सहजमा ❀ बाली बिरैले धट्‌या
बाण्‌ छोडीकन बालिलाइ अब ता ❀ मार्नन्‌ प्रभूले भनी
एक्‌ क्षण्‌ ता यहि आशले टिकि गया ❀ घुस्सा दिंदामा पनी ३८
बाली सुग्रीवका दुरुस्त अनुहार्‌ ❀ एक्‌ देखि रामले जसै
बाण्‌ थाम्या टिकि सब्‌ नु मुश्किल भई ❀ सुग्रीव भाग्या तसै
पौंच्या श्री रघुनाथका हजुरमा ❀ काँप्तै र छाद्दै रगत्‌
बल्‌ तोडिकन बालिले हरिलियो ❀ एक्‌ देह पौंच्यो फगत्‌ ३९
सुग्रीव्‌ले तहिं बिन्ति खुप्‌ आसित गर्‌या ❀ हे नाथ्‌ ! मलाइ तहाँ
मार्नाको यदि मन्‌ छ पो पनि भन्या ❀ जोर्‌ चल्छ मेरो कहाँ
आफैंले यहिं मारिबक्सनु हवस्‌ ❀ रुना मित्‌ ! हजुर्‌ले पनी
शत्रूलाई लगाइ मार्न त उचित्‌ ❀ हो के सखा हो भनी ४०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुग्रीव्का इ बचन सुनी गहभरी ❀ आँशू प्रभुले धरया
सुग्रीवजीकन खातिरी दिइतहाँ ❀ यो बात् प्रभूले गरया
हे सुग्रीव सखा! दुरुस्त अनुहार् ❀ एक् देखि शङ्कामयो
मर्नन् मित्र भनेर पो डर हुँदा ❀ बाँचेर बाली गयो ४१
चिन्हूँ देह विषे धरेर अहिले ❀ जाऊ र हाँक् देउ फेर्
बालीलाइ म मारिदिन्छु सहजै ❀ लाग्दैन ऐल्हे त बेर्
यस्तोबात्‌गरिखुब्‌शपथ्‌पनिगरी ❀ सुग्रीवको मन् भरी
आज्ञा लक्ष्मणलाइ बक्सनुभयो ❀ फुल्ल्याउ माला धरी४२
त्यो माला पहिराई आउ! तिमिले ❀ जल्दी पठाऊ तहाँ
हाँक् दीउन् अब बालिलाइ अहिले ❀ मार्छू म छोड्छू कहाँ
लक्ष्मण्‌लेपनियोहुकुम्‌सुनितहाँ ❀ माला लगाई दिया
त्यो माला पहिरेर सुग्रीव गया ❀ बीर्‌बालिजाहाँथिया४३
बालीलाइ सुनाइ हाँक् बहुत दी ❀ सुग्रीव् बस्याथ्या जसै
बालीले पनि शब्द सुग्रीवजिको ❀ सुन्दा उठ्यो रीस् तसै
आश्चर्यै मनमा भयो अघि भन्या ❀ ऊठ्यो पछी रीस् पनी
मुक्का खाइ लघारियो त पनी फेर् ❀ फर्क्यौं भगूबाभनी ४४
बालीलेपनिफेर्‌कछाड्‌कसितयार् ❀ भै जान लाग्या जसै
ताराले त नजाउ यस् बखतमा ❀ भन्दै समातिन् तसै
कोहीबीर्‌बलवान्‌सहाय मिलिपो ❀ सुग्रीव आया यहाँ
साहायै नभया त एहि घरिमा ❀ सुग्रीवफिर्थ्याकहाँ ४५
ताराका इ बचन् सुनेर बलवान् ❀ बीर्‌बाली बोल्छन् तहाँ
हे प्यारी! नडराउ को छ म सरी ❀ बीर् आज दोश्रो यहाँ
सुग्रीव्‌लाइ सहज् सहाय साहितै ❀ मारेर फिर्न्या म छु
बीर हूँ हाँक दिंदा कसोगरि बसूँ ❀ शङ्का नमान्या कछु ४६

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

वालीका इ वचन् सुनीकन तहाँ ❀ ताराजिले फेर् पनी
भन्छिन्बात्कछुसूनीबक्सनुहवस् ❀ क्या मन्दछे यो भनी
बिन्ती गर्छु म हितकुरो हजुरमा ❀ साक्षात्अयोध्यापति
श्री रामचन्द्र सहाय छन् अब तहाँ ❀ चल्दैनजोर्एकरति४७
सुग्रीवसीत मित्यारिलाइ रघुनाथ् ❀ ज्युले पिछामा लिया
वाली मारि म राज्य आज दिउँला ❀ भन्न्या वचन् यो दिया
भन्न्या बात् अरुमा हुँदा वनमहाँ ❀ सुनेर अङ्गद् यहाँ
आई सब् इ कुरा मलाइ आधि नै ❀ भन्थ्यो नजाऊतहाँ४८
सुग्रीव्सीत विरोध् नराख तिमिले ❀ जाऊ र ल्याऊ यहाँ
यो राज् सुग्रिवलाइ देउ अब ता ❀ जितछैन तिम्रो तहाँ
श्री रामका दुइ पाउमा पर तिमी ❀ गर्नन् प्रभूले दया
साँचा हुन् इकुरा बुझी लिनुहवस् ❀ भोग्गर्न इच्छाभया४९
एती बिन्ति गरेर पाउ दुइमा ❀ पक्रेर रोइन् जसै
तारालाइ बुझाउनाकन तहाँ ❀ फेर् वालि बोल्या तसै
हे प्यारी! नडराउ कत्ति रघुनाथ् ❀ साक्षात् रमाका पति
नारायण्भनीचिन्दछूमपनिसो ❀ नाथ्हुन्जगत्काप्रति५०
ताहीं छन् रघुनाथ् भन्न्या चरणमा ❀ पर्न्याछु चाँडै तहाँ
सुग्रीवैछ फगत भन्न्या सहजमा ❀ मार्न्याछु छोड्छु कहाँ
सुग्रीव् कुन्वालियोछपाजिभगुवा ❀ त्योलइनमन्सुन्नालिन्या
तेस् पाजीकन डाकी आज कसरी ❀ योराज्य मैलेदिन्या५१
तस्मातशोक्नगरी बसीरहतिमी ❀ जान्छू म ताहाँ भनी
लड्नैलाइ कछाड् कसीकनतयार् ❀ मै वालि दौड्यापनी
वाली सुग्रिव दुइ भाइ रिसले ❀ फेर् लड्नलाग्या जसै
रुख्को आड गरी तहाँ प्रभुजिले ❀ एक्वाणछोड्या तसै५२

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
बाणले जब योजनकी लिकाहृदयमा ❀ सर्वाङ्ग बाधा गरी
पृथ्वी कम्प गराइ झट्ट ताहिं गिर्‍या ❀ बाली त मूर्छा परी
मूर्छा दूइ घड़ी पर्‍या पछि बालिक ❀ चैतन्य आयो जसै
देख्या श्री रघुनाथलाइ खुशि भै ❀ साम्ने खड्याका तसै ५३
भन्छन् श्री रघुनाथलाइ रघुनाथ्! ❀ तिम्रो जि राम् क्या गर्‍याँ
धर्मै छोडि लुकेर आज तिमिले ❀ मार्‍यौ म ऐल्हे मर्‍याँ
यो क्या क्षत्रिय धर्म हो लुकिलुकी ❀ वीर बाण छोड्छन् कहीं
क्षत्री भैकन धर्म छोडि लड्न्या ❀ एक् आज देख्याँ यहीं ५४
साम्ने भैकन बाण छोडि तिमिले ❀ मार्थ्यौ त खुन् यस्थियो
सुग्रीव् हो कति साख् म हूँ कति कुसाख् ❀ हा दैव! क्या मन् दियो
सीता रावणले हर्‍यो भनि बहुत् ❀ सन्ताप् मनैमा धरी
सुग्रीव्लाइ सहाय ली भकन ता ❀ लुकेर चोर्‌ले सरी ५५
मार्‍यौ यो अतिचुक् भयो गरु कसो ❀ नाथ्थ्याँ त याहीं बसी
रावण्लाइ कुलै समेत सहजमा ❀ झिक्थ्याँ म पाताकसी
लङ्कापूरि समेत पनी म बलले ❀ झिक्थ्याँ सहज्मा यहीं
पाजी रावणलाई मार्न तिमिले ❀ क्या जानुपर्थ्यौ उहीं ५६
चोरी मारिलिंदा न यश् हुन गयो ❀ न मारू खानू भयो
धर्मात्मा तिमि पापि भैं हुन गयौ ❀ ज्यान् व्यर्थ मेरो गयो
बालीका इ वचन् सुनेर रघुनाथ् ❀ भन्छन् तँ बोल्छस् कति
बाली हूँ भनि गर्व गर् त पनि हेर् ❀ साँचै तँ होस् दुर्मति ५७
पाप्‌को डर् रतिभर् नराखि तइँले ❀ खुश् भै बुहारी हरिस्
सोही पाप् अहिले प्रकट हुनगयो ❀ तेस् पापले पो मरिस्
धर्मस्थापन गर्नलाई त यहाँ ❀ औतार मैले लियाँ
धर्मै जानी अधर्म मानि अहिले ❀ तँलाइ मारीदियाँ ५८
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized by Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

श्रीरामका इ बचन् सुनी प्रभु भनी * जानी शरणमापरचा
बानर् हुँ रघुनाथ् क्षमा गर भनी * हात्‌जोरी बिन्ति गरचा
नामोच्चारणले फगत् सहजमा * संसार सागर् तरी
रूनामित! जान्छुहजूरमा अबभन्या * मैले त दर्शन् गरी ५९
पायाँमनेत भाग्यकोकति बखान् * फेरी म ऐल्हे गरुँ
को पाऊँछ हजूरलाइ भगवन्! * भन्या बखत्मा अरू
मेरो ता गति यै थियो मिलिगयो * जान्छू परमधाम् म ता
अङ्गद् माथि दया रहोस् हजुरको * हाजिर्‌छसेवक्‌उता ६०
मेरो छाति महाँ छ बाण् हजुरको * यो खैंचि छोडि दिया
शीतल् देह हुन्याथियो सहजमा * प्राण्‌आजजान्याथिया
बालीका इ बचन् सुनी प्रभुजिले * बाण् झीकि हूँदा भया
ठाकुर्‌का अघि देह छोड़ि खुशि भै * बाली परमधाम् गया ६१
बालीका सँगमा थिया जति तहाँ * बानर् ति भागी गया
ताराजीसित गै बहाँ सब् हवाल् * बिस्तार गर्दा भया
रामजीले लुकि बाण छोड़ि सहजै * बाली त मारी दिया
सुग्रीव् मंत्रि समेत्‌खुशीभईतहाँ * रामकाहजुर्‌माथिया ६२
यो राज् अङ्गदलाइ बक्सनुहवस् * ढोका शहर्‌को थुनी
बस्छौं जाल्दि हुकुम् हवस् हजुरको * क्या हुन्छ धेरै गुनी
एती बिन्ति गरचा र बानर हरु * जल्दी तयारी भया
हूकुम् माफिककामर्गनभनिसब् * बानर्‌खड़ाभैरह्या ६३
बालीकोपरलोक् भयो भनि खबर् * सूनिन् र तारा रुँदै
हेनाथ्! आज कहाँ गयौ भनिबहुत् * बिह्वल् निरन्तर् हुँदै
क्या गर्छू अब पुत्र दार धनले * भन्दै ति तारा जहाँ
बालीको परलोक् भयो उहिजगा * सोधेर पौंचिन् तहाँ ६४

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बालीका दुइ पाउ पक्रि बहुतै ❀ रूँदा बिलाप् खुब् गरी
भन्छिन् श्री रघुनाथ लाइ रघुनाथ्! ❀ फेर् बाण ऐल्हे धरी
मारीदेउ मलाइ जान्छु म पनी ❀ मेरा पतीका सँगै
खोज्नन् स्वर्गविषे मलाइ पतिले ❀ काहाँ मन्जर्छु नगै ६५
पत्नीसीत बियोग् हुँदा यति बिलाप् ❀ हुँदा रह्याछन् भनी
मालूम् सब् छ तहाँ म फेर भनूँ क्या ❀ पर्दैन भन्नू पनी
पत्नी दान् गरि पुण्य हुन्छ जतिसो ❀ मिल्न्याछ पुण्यै पनी
तस्मात् आज अवश्य हान शरले ❀ जानस् पतीथ्यैं भनी ६६
एती बात् अघि रामका सँग गरी ❀ सुग्रीवलाई पनी
भन्छिन् लौ गर राज्य आज खुशिले ❀ मीत्ले दियाको भनी
ताराका इ बचन् सुनीकन बहुत ❀ आयो प्रभूमा दया
तारालाइ बुझाउनाकन तहाँ ❀ एकत्त्वभन्दा भया ६७
हे ताराजि! बिचार् नराखि तिमिले ❀ शोकै कती गर्दछयौ
यो मेरो पति हो भनेर न बुझी ❀ ब्यर्थै शरीर् हर्दछयौ
जीवै हो पति भन्दछयौ पनि भन्या ❀ मर्दैन जीव् ता कहीं
देहै हो पति भन्दछयौ त किन शोक् ❀ गर्छयौं छ ऊता यहीं ६८
श्री राम्का इ बचन् सुनीकन तहाँ ❀ ताराजि चुप् भै रहिन्
जुन् सन्देह पर्‍यो बहाँ मनमहाँ ❀ सो मात्र सोद्धी भइन्
हे नाथ्! मार्जि भयो सुन्याँ सब कुरा ❀ बुझ्दैन मन् तै पनी
सन्देहै मनमा रह्यो मकन ता ❀ को गर्छ योभोग् भनी ६९
देहै गर्दछ भोग् भनूँ पनि भन्या ❀ जड्पो छ यो देह ता
ईश्वर् हो उहि गर्छ भोग् भनूँ भन्या ❀ सक्दीन भन्नै म ता
साह्रै मोह भयाँ म ता हजुरका ❀ एकै बचन्ले गरी
माया राखि बुझाइबकसन् हवस् ❀ कल्याण मेरो हरी ७०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized by Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ताराका इ वचन् सुनीकन बहुत ❀ माया मनैमा धरी
तत्वैज्ञान् सब ताहिं बकसनुभयो ❀ खोलेर बिस्तार् गरी
हे ताराजि ! नरोउ आज मनले ❀ संसार् छ झूठा भनी
झूठो कुन् रितलेछ यो पनि भन्या ❀ भन्छूमाबिस्तार् पनी ७१
म ता नित्यै पो हूँ याहि शरिरमा लागि म गयाँ
शरिर् मर्दा आफैं मइँ मरिगया मैं पनि भयाँ
अहो ! अज्ञान् मेरो मानिकन जहाँतक् मन महाँ
लिंदैनन् ताहीं तक् फजिति पनि छन् यै जन महाँ ७२
स्फटिक् जस्तो जीव् हो शरिरहरु लाहा बुझिलिनू
स्फटिक् लाहाका सङ्ग धरिकन त दृष्टान्त छ दिनू
लहाका सङ् बस्ता स्फटिक म छु लाल् भन्छ जसरी
शरीर् मर्दा मर्छू म पनि जिवले भन्छ तसरी ७३
स्फटिक्ले रातोछू भनिकन सुहाबस् त उ पनी
सुहाबस् यस् जीव्ले शरिर संग मै मर्छू म भनी
नता जीव् मर्न्या हो शरिर संग लागेर जनको
नरातो हुन्या हो स्फटिक सब खेल् जान मनको ७४
मनैको खेल्ले जीव् शरिर मइँ हूँ भन्दछ भनी
जहाँ तक् जान्दैनन् फजिति ताहिं तक् मिल्दछ पनी
मनैको खेल् यो हो भनिकन त जान्या तरिगया
न जान्या जीव् जो हुन् उति त सब फन्दा परिगया ७५
शरीर् मै हूँ मेरै धन जनहरू हुन् भनि जसै
पर्‍यो मन्का खेल्मा तब फजिति मिल्छन् बुझ यसै
बिना सत्का सङ्ले बिनु गुरु कृपाले इ फजिति
अनश्यै छुट्तैनन् सकल मनका खेल न जिती ७६

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

म नित्यै आत्मा हूँ शरीरहरुहुन् यार धोड़का
बिचारमा टिक्तैनन् बिषय पनि छन् स्वप्न सरिका
भनी जानी मन्ले दृढ गरि लिया भक्ति रसले
न बिर्स्या इ मैले यति कहिंदियाँ प्रीतिबशले ७७
उस् जन्ममा अधिक भक्ति गर्‍यौ र ऐल्हे
दर्शन् दियाँ नाहिं त भन्छ म मिल्छु कैल्हे
मेरो स्वरुप् र इ बचन् अब सम्झिलिया
छुट्नन् ति दुःख तिमिलाइ जती त थीया ७८
लेखै हवैन अब कर्म पनी गरिन्या
रस्ता कह्याँ भन-समुद्र सहज् तरीन्या
मेरो स्वरूप् र इ बचन् जति सम्झिलिन्छन्
सब् कर्मपाश सहजैसित काटि दिन्छन् ७९
यस्तो बचन् प्रभुजिको सुनि खूशि मन्ले
छाड़िन् जती छ अभिमान् पनि ताहिं तिन्ले
सुग्रीबको पनि गयो अभिमान ताहाँ
रामको कृपा हुनगया पछि टिक्छ काहाँ ८०
हूकुम् भयो प्रभुजिको ताहिं मित्रलाई
हे मित्र सुग्रिब ! जलाउ इ बालिलाई
क्रीया गरीकन शरीर् गर शुद्ध ऐल्हे
सब् काम छोड़िकन यै गर आज पैल्हे ८१
हूकुम् भयो र तब बालि लगी जलाया
क्रीया गरीसकि ति सुग्रिब ताहिं आया
अर्पण् गरी सकल राज् प्रभुका चरण्मा
सेवक् बनीकन म बस्छु भन्या शरण्मा ८२

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुग्रिव्‌लाइ हुकुम् भयो प्रभुजिको ❀ जो हौ तिमी सो म हूँ
जाऊ स्राज र गादिमा बस म ता ❀ याहीं बनैमा रहूँ
गाऊँश्रा घरमा बसैन म भनी ❀ मेरो प्रतिज्ञा छ यो
जानन् लक्ष्मण ता सँगै घर पनी ❀ भाई गया मै गयो ८३
वर्षा काल्‌बिती सक्छ यो जबतसै ❀ सीताजिकोखोज्‌गर्‍या
एती मार्जि भयो र सुग्रिव बहुत् ❀ स्रानन्दसागर् पर्‍या
लक्ष्जणजी पनि रामका हुकुमले ❀ सुग्रीवका साथ् गया
सुग्रिव् गादि विषे बस्यापछि फिरी ❀ दाखिल् प्रभू थैंभया ८४
रामले ताहिं थियो प्रवर्षण गिरी ❀ तेस्‌काशिखर्‌मा चढी
देख्यासुन्दर एक्‌गुफा स्फटिकको ❀ ताहीं बनाया मढी
फल्‌फुल्‌ताहिंखचित्‌थियोनजिकमै ❀ थीयो तलाऊ पनी
देख्या मन् खुशिभो तहाँ प्रभुजिको ❀ बस्न्याजगाहोभनी ८५
वर्षाकाल तलक्‌रह्या प्रभु तहाँ ❀ पर्थ्यौं बखतमा झरी
जन्तू पुष्ट थिया सबै ति वनमा ❀ खाएर घाँस् पेट्‌भरी
बस्थ्या श्री रघुनाथका वारिपरी ❀ खुब् ध्यान्‌प्रभूमाधरी
ध्यान्‌जन्तूहरुको विचार्‌गरितहाँ ❀ खूशी रहन्थ्या हरी ८६
लक्ष्मण्‌लेताहिंबिन्तीएक्‌दिनगर्‍या ❀ हेनाथ्! पुजाकोविधान्
पाऊँ सुन्न हुकुम् हवस् खुशिभई ❀ कुन्‌होकरूणानिधान्!
ब्रह्मा व्यास् स्ररु नारदादिहरु सब् ❀ भन्छन् पुजाले सरी
स्रर्को तर्न उपाय छैन जनको ❀ खुश्‌छन् पुजामा हरि ८७
यस्तो सूनि गयो र मन् चरणमा ❀ सोद्‌याँ पुजाकोविधान्
साँचो तत्व बताऊँन्या हजुर मैं ❀ को छन्‌दयाकानिधान्
यस्तो लक्ष्मणको बचन् सुनितहाँ ❀ पूजा बिधिहो जति
सब् संक्षेप् रितले कह्याप्रभुजिले ❀ लक्ष्मण्‌भयाखुश्‌स्राति ८८

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लक्ष्मणाकं..र सीता जीको खोजमा चारै दिशामा वानरहरू जानू

वर्षाकाल् यहि रीतलेताहिं बित्यो ❀ वार्ता कथाको गरी
संम्भया भट् सिताजिलाइ र बिलाप् ❀ फेर् गर्न लाग्या हरी
किष्किन्धा पुरिमा यसै बिच महाँ ❀ मन्त्री हनूमानले
सुग्रिव्सी तसिताजिखोज्गरभनी ❀ बिन्तीगरयाजानले ८९
हे राजन् ! रघुनाथले त उपकार् ❀ ठूलो हजुर्को गरी
योराज्बक्सनुभो हजुर्कन ठुलो ❀ बीर् बालिलाई हरी
सो बिर्स्या भइँ मान्दछु हजुरले ❀ सीताजिकोखोज्खबर्
गर्न्या हो अब ता बखत् पनि भयो ❀ सब्काम छोडीअब ९०
यादै छैन हजूरलाइ त सिता ❀ खोज् गर्नुपर्ला भनी
बालीको गति जुन्भयो उहि गती ❀ होला हजुर्को पनी
यो बिन्ती हनुमानको सूनि तहाँ ❀ साँचो भन्या यो भनी
सुग्रिव्लेताहिंभट् हुकुम् पनिदिया ❀ लश्कर् पठाऊँ पनी ९१
दश् हज्जार् बिर गै इशान दिशमा ❀ बानर्जती जन् सबै
खोजी आज खबर दिउन् र सब बीर् ❀ जम्मा हउन् भट् अबै
जो आवैन हुकुम् बदर् गरि तहाँ ❀ इ पन्द्र दिन् भित्रमा
तेस्कोप्राण्मालिन्याछुनिश्चयबुभुन् ❀ ठानुन्सबैचित्तमा ९२
यस्तो सुग्रिवको हुकुम् हुन गयो ❀ सोही बमोजिम् गरी
दश्हज्जार्बिरकोखटन्पनिगरया ❀ लागेन बेर् एक् घरी
दश्हज्जार् बिर दश्दिशातिर छुटी ❀ खुश्भै हनूमान् रह्या
ती बीर् दश्तिरगै खबर् दिइअनेक् ❀ सेना बटुल्दा भया ९३
लाग्या गर्न बिलाप् अनेक् तरहले ❀ लीलागरी राम् पनी
भन्छन्छन्तिसीताकहाँअभतलक् ❀ लागेन पत्ता भनी
याहाँ छन् ति सीताभनीकनखबर् ❀ पाऊँ त जाऊँ तहाँ
ल्याऊँ अमृत मैं सिताकन यहाँ ❀ पाऊँ[illegible] कहाँ ९४

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे भाइ ! सुन जो छ आज त सिता ❀ हर्न्या म तेसको सबै
कुलै भस्म गराउन्याछु करुणा ❀ राख्नैन उरमा कबै
एती बात् ताहिं भाइ सीत गरि फेर् ❀ सीताजिको शोक्गरी
लाग्या गर्न विलाप् अनेक् तरहले ❀ त्रैलोक्यकानाथ्हरि ९५
हे सीते ! कसरी म देखि पर भै ❀ बस्छयौ तिमी छौ कहाँ
प्राणौंथाम्नकठिन्भयोमाविनुभन ❀ आपत् भया हुन् तहाँ
तिम्रो भेट नपाउँदा मकन ता ❀ ई चन्द्र सूर्यै बन्या
तिम्रोतागरुँवयाबयान्तिमितमन् ❀ छौदुष्टकापासमन्या ९६
सुग्रीव् आज कृतघ्न भै हुनगया ❀ आयो शरद्कालपनी
सुतै छैन सिताजिलाइ अभतक् ❀ खोज् गर्नुपर्ला भनी
मार्छू सुग्रिव दुष्टलाइ पनि फेर् ❀ बाली सरीको गरी
लक्ष्मणलेप्रभुकोवचन्सुनिगर्या ❀ बिन्ती अगाडीसरी ९७
हे नाथ्!आज मलाइ बक्सनुहवस् ❀ हूकुम् म मार्छु गई
लक्ष्मणका इ वचन् सुनेर रघुनाथ् ❀ अत्यन्त खूशी भई
भन्छन् भाइ नमार आज बहुतै ❀ हप्काउ जाऊ तहाँ
मारीहाल्न त योग्य छैन तर खुप् ❀ चेताइ आऊ यहाँ ९८
हुकुम् यो प्रभुको सुनीकन तहाँ ❀ लक्ष्मणजि जल्दी गया
सीता नाथ्नरकोलिलागरिविलाप् ❀ खुब्गर्न लाग्दा भया
किष्किन्धापुरि पौंचि लक्ष्मणजिले ❀ टङ्कार् धनूको गर्या
पत्थर् वृक्ष उठाइ बानरहरू ❀ कोहीअगाडीसर्या ९९
सब् बानर् कन नष्ट गर्दछु भनी ❀ लक्ष्मणजिलेबाणधर्या
अङ्गद् आइ हटाइ बानरहरू ❀ जल्दी चरणमा पर्या
अङ्गद्सीत बहुत् प्रसन्न भइ भट ❀ ताहीं अज्ञाया पनी
जाऊ देउ खबर् अगाडितिमिले ❀ लक्ष्मणजिआयाभनी १००

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अङ्गद्कै पुरिमा खबर् गरादिया ❋ सुग्रिब्जिलाई तहाँ
जल्दी सुग्रिनले हुकुम् पनि दिया ❋ लौ जाउ ल्याउ यहाँ
अङ्गद्लाइ सँगै लिएर हनुमान् ❋ चाँडै शरणमा परी
लक्ष्मणलाइ बुझाइ ल्याउ तिमिले ❋ सब् क्रोध शान्ती गरी १
यस्तो सुग्रीनको बचन् सुनि तहाँ ❋ सोही बमोजिम् गरी
पाऊमा परि बाहुमा धरिलिया ❋ ल्यायाब्हुत खुश्गरी
हुकुम् सुग्रिनको सुनीकन तहा ❋ ताराजि चाँडै गइन्
लक्ष्मणलाइ बुझाइ खुश्गरुँ भनी ❋ खुप्विन्तिगर्दीभइन २
लक्ष्मण् सुग्रिनको भयोजन त भेट् ❋ सुग्रीन्चरणमा परया
लक्ष्मणले पनि तहिंसुग्रीवजिको ❋ साती कुराले हरया
बाली झैं हुन मन् छ की भनि जसै ❋ लक्ष्मण्जिलेबात्गरया
लक्ष्मणलाइ बुझाउनाकन तहाँ ❋ जल्दीहनूमान्सरया ३
लक्ष्मण्जी पनिकामले बुझिगया ❋ बात्चित्खुशीकागरी
फिर्नाको मतलब् गरया प्रभु थिया ❋ जाहाँ जगन्नाथ् हरि
लक्ष्मण्कासंगलागि सैन्यपनिली ❋ सुग्रिन खुश् भै गया
जाहाँ श्री रघुनाथ् थिया तहिं सबै ❋ दाखिल् क्षणैमा भया ४
देखि श्री रघुनाथलाइ र परै ❋ रथ्देखि उत्रेर फेर्
लक्ष्मण् सुग्रिन पाउमा परिगया ❋ लागेन एकछिन् त बेर्
रामले सुग्रिनलाइ मित्रभनिखुप् ❋ आलिङ्गदादी गरी
सोध्पुछ गर्नुभयो बहुत् खुशी हुँदै ❋ आफैं अगाडी सरी ५
लाग्या सुग्रिन बिन्ति गर्न रघुनाथ् ❋ मैले त सेना पनी
ल्यायाँ बिरहरुछन् अनेक् तरहका ❋ छन् इन्द्र तुल्यै पनी
ईसब्रुनामितकानिमित्तखुशि भै ❋ प्राणै दिन्याछन् जसै
हुकूम् हुन्छ हवस् यहाँ हजुरको ❋ गर्छन् ति एल्हे तसै ६

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

खूशी भै रघुनाथको हुकुम भो ❀ हर्षाश्रुधारा गरी
हे सुग्रिव सखे ! इ बानरहरू ❀ जाउन् दिशा दश् भरी
जाहाँछिन् ति सितातहाँ पुगिखबर् ❀ ल्याउन् भनी रामको
हूकुम् पाइ खटाई सुग्रिवजिले ❀ उर्दी दिया कामको ७
जाऊ बिर्हरु सब् दिशा दश बिषे ❀ सीताजि मिल्छिन् जहाँ
पत्तालाइ सिताजिको खबर ली ❀ सब् बीर आउ यहाँ
भैन्हादीन् बिताइ एक्रति खबर् ❀ केही न पाई त जो
ढिल् गर्ला उसलाइ ता म सहजै ❀ मार्न्याछु भन्याछ त्यो ८
यस्तो जल्दि हुकुम्गरी अरुदिशा ❀ बानर् पठाया अबर्
दक्षिण्तीर त खुब् बडा बिरहरु ❀ छानी पठाया जबर्

हनुमान आदि आठ मुख्य बीरको सीताजीका खोजमा प्रस्थान

अङ्गद्लाईरजाम्बवान्हनुमान् ❀ बिर्नल्सुषेण्फर्शरभ्
मैन्द द्विविध आठ् पठाइ प्रभुका ❀ पास्मास्थ्याएक्फगत् ९
हूकुम् पाइ ति बीर बानरहरु ❀ सब्जान लाग्या जसै
हात्मा औंठी लीएर यो हुकुमभो ❀ राम्चन्द्रजीले तसै
जाऊकाम्पनिसाधिआउहनूमान् ❀ ली आउ औंठी पनी
मेरोनाम् याहि औंठिमा छ र दियाँ ❀ सीताजिचिन्हिन्भनी १०
योकाम्सिद्धगर्याउन्यातितिमिछौ ❀ तिम्रोछ यो बल् भनी
चीन्हेको छु तबै त भन्छु म शुभै ❀ हून्याछ रस्ता पनि
एती श्री रघुनाथको पनि हुकुम् ❀ पाया र औंठि लिया
खुशी भै हनुमानले प्रभुजिमा ❀ सम्पूर्णतन्मन्दिया ११
अङ्गद् बिर् हनुमान्हरू हुकुमले ❀ दक्षिण् दिशामा गया
सर्वत्र पृथिवी ढुँडीढुँडि सबै ❀ घुम्दै ति जाँदाभया
एक्दिन्बिन्ध्यगिरिबिषेबनमहाँ ❀ देख्या र राक्षस् जसै
रावण् होकिभनी मुठी कसिकनै ❀ मार्या कसैले तसै १२
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रावण् होइन यो त जाउँभनिफेर् ❀ ग्राको वनैमा गई
ढुँड्ध्याप्यासबढ्योरजल्पनिढुँडी ❀ हिंड्ध्यातिग्राकुल्भई
गूफादेखितथ्याँख् चिसा गरिगरी ❀ हाँसूनिरकँदादेखितेस्
गूफा भित्र पस्या सबै बिरहरु ❀ देख्याब हुतबारितबेस्१३
ठण्डा जल्सितका तलाउ पनिथेर् ❀ सब् वृक्षफलफुल्भरी
घर्छन्धेर्घरमाछ चिज्पनि ग्रनेक् ❀ हीरा जवाहर् धरी
गुल्जार् देख्नुभन्या मनुष्यहरुता ❀ एक् देख्नु नाहीं कहीं
एक्योगीनि स्वयंप्रभूकनफगत ❀ ध्यान्गर्दिदेख्यातहीं१४
सोधिन्योगिनिलेतिसब्कनतहाँ ❀ कुन्काम ग्रायौ यहाँ
क्या मन्सुब्छवताउ फेर्ग्रब उपर् ❀ जानू छ इच्छा कहाँ
यस्तोयोगिनिकोबचन्सुनि तहाँ ❀ बोल्या हनूमानले
ग्रायौं ग्राज यहाँ सबै यति जना ❀ केवल् जलै खानले१५
बोलिन्फल्फुलखाउ जल्पनिपिई ❀ फर्केर ग्राऊ यहाँ
मेरो नाम बताइ ग्राज त म ता ❀ जान्छू प्रभू छन् जहाँ
काम् यै हो यहिकाम गर्नु छ भनी ❀ बिस्तार्सुनाया जसै
साह्रै खुश् हनुमानका बचनले ❀ हूँदी भइन् ती तसै१६
यस्तोयोगिनिकोबचन्सुनिगयी ❀ जल् पान्गरी फेर्पनी
ग्राया योगिनिले गरिन् सब कुरा ❀ रामका दुतै हुन् भनी
हेमाकी सखि हुँ सखि गई गइन् ❀ उन्का बचन्ले यहाँ
धेरै वर्ष बसी प्रभू भजिलिंदा ❀ एल्हे कृतार्थै भयाँ १७
भन्थिन्राम्ग्रवतार् हुन्याछहरिको ❀ हन्याछ रावण् सिता
खोज्न्याबानरग्राउनन्ताहिंतलक् ❀ याहीं रहया तीमि ता
बानर्को रघुनाथको गरि पूजा ❀ यै ब्रह्मलोक् पाउली
जान्छू ग्राज म ता तिमी [illegible] ❀ [illegible]१८
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




१ वाली सुग्रीव युद्ध ।



२ लक्ष्मणजीले सुग्रीवलाई किष्किन्धाको राज तिलक गरेको ।



३ हनुमानले समुद्रका तीरमा सम्पाती लाई भेटी लङ्काको पत्ता लाएको ।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations










CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तो आर्ति दीई गइन् साँगिनिज्यू ❀ जुन् ब्रह्मलोक् हो वहाँ
नाच्तैमा शिव खुश् हुँदा आधिदिया ❀ यो स्थान बस्ती यहाँ
पुत्री हुन् उ त विश्वकर्म कि म हूँ ❀ गन्धर्व कन्या सबै
विस्तार् आज कह्या म जान्छु खुशिमै ❀ जाँहाँ प्रभू छन् अबै १९
आखाँ चिम्ल पुर्याइदिन्छु सहजै ❀ रस्ता विषे क्षण् महाँ
जाउ तीमिहरू पनी भनि सहज् ❀ पौचाइ रस्ता महाँ
श्रीरामचन्द्रजिथ्यैं तियोगिनि गइन् ❀ बानर् पुग्या तीरमा
पौंचिन् योगिनी रामका कुटि जहाँ ❀ थीयाउसै वास्तमा २०
राम्कोस्तूति गरिन् र बरदिनुभयो ❀ जाऊ र बद्री महाँ
मेरोध्यान् गरियो बिताउ र शरिर् ❀ मिल्ला परम्धाम् तहाँ
जो तिम्रो मनमा छ त्यो सब पुगोस् ❀ यस्तो बरै ली गइन्
बद्रीमा गइ रामका बचनले ❀ संसार तर्दी भइन् २१
सीता खोज्न भनेर बानरहरू ❀ फिर्थ्या सबै बनमहाँ
सीतालाइ नपाउँदा बितिगयो ❀ धेर्काल एक्दिन् तहाँ
अङ्गद्ले अतिशोक् गर्या अब सहज् ❀ मार्छन् यहाँ ज्यान् गर्यो
प्यारी प्राण कसोगरी अब धरौं ❀ बाँच्ने यहीं तक् भयो २२
सुग्रिव्ले त मलाइ मार्नु छ सहज् ❀ पाया निहूँ यो पनी
मार्छन् निश्चय शत्रुजानि अहिले ❀ यो शत्रुको नीज् भनी
केवल् रामकृपा हुँदा अघि बच्याँ ❀ ऐल्हे त रामले पनी
दिन्छन् निश्चय मार्नलाइ मतलब ❀ खोजेन सीता भनी २३
अङ्गद्का इ बचन् सुनीकन तहाँ ❀ क्वै बिन्तियो पार्दछन्
हे साहेब ! यहाँ बसौं यहिं बस्या ❀ कुन् पाठले मार्दछन्
अङ्गद्का अरू बानरादिहरुका ❀ सून्या र कूरा तहाँ
बोल्या श्रीहनुमानले किन बहुत् ❀ छोटा गर्यौ बात् यहाँ २४

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुग्रिव्का प्रियछौं अवश्य भगवान् ❀ रामचन्द्रजीका पनी
साँचो भन्छु म बेस् कुरा हजुरमा ❀ यस्तो छ कारण् भनी
भूभार् हर्न भनेर राम अवतार् ❀ आदी पुरुष्को भयो
कस्ले सक्छ सिताजिहर्न नाहिंता ❀ इच्छा प्रभूकै छ यो २५
मानिस्को अवतार् भयो प्रभुजिको ❀ सेवक् त बानर भई
गर्छौं सेवन भक्तिले प्रभुजिको ❀ केवल् हुकुम्मा रही
जान्याछौं पछि धाममा पनि सँगै ❀ यो जान मन्ले यहाँ
क्या गर्छौं मनमा कुतर्क प्रभुको ❀ रिस्छैन कौनै महाँ २६
यस्तो बात हनुमानको सूनि बुभ्या ❀ अङ्गद् र खुशी भई
विन्ध्याचल् गिरिका कुनाकुनि समेत् ❀ सम्पूर्ण खोज्दै गई
पौच्या क्षीर समुद्रका तिर महाँ ❀ पर्वत् थियो एक् तहाँ
तेस्को नाउँ महेन्द्र हो नजिकमा ❀ देखिन्छ सागर् जहाँ २७
पृथ्वीमा नमिलिन् सिता न जलमा ❀ जान्या छ बाटो कतै
खोजौं जाउँ भन्या सबै यौं पृथिवि सब् ❀ पायौं न सीता कसै
फर्की जाउँ भन्या पनी अब सहज् ❀ मार्छन् त चाहीं यहाँ
मर्नू आज निको भनेर तिरमा ❀ बानर् बस्यासब् तहाँ २८

हनुमान आदिको सम्पाती संग भेट र सीताजीको संधान

सम्पाती अति वृद्ध गृद्ध वनमा ❀ थीया ति निस्क्या जसै
हेर्या दृष्टि फिराइ तेस्तिर महाँ ❀ देख्या ति बानर् तसै
बोल्या वाक्य पनी म भर्छु अब पेट ❀ पायाँ अहारा भनी
अङ्गद् बिर्हरुले सुन्या र ड बचन् ❀ साह्रै डराया पनी २९
लाग्या भन्न सबै ति बानरहरू ❀ आयाछ हाम्रो त काल्
मर्छौं आज अवश्य मार्छ यसले ❀ यो गृद्धको हेर चाल्
क्या बात भाग्य जटायुको प्रभुजिको ❀ प्यारो हुन्या काम् गरी
ठाकुर्लाइ रिझाइ पार् पनि गया ❀ संसार सागर तरी ३०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
व्यर्थै हामि त गृद्धका मुख विषे ❀ सब् पर्न आट्यौं यहाँ
एती वानरको कुरा सुनी तसै ❀ सम्पाति बोल्या तहाँ
हे वीर् हो! न डराउ आज तिमिले ❀ प्यारा सुनायौ कुरा
मेरै भाइ जटायु हो कहु खबर् ❀ तेस्कोत जोहो पुरा ३१
अङ्गद् वीर्हरुलाइ निर्भय दिई ❀ एती भन्याथ्या जसै
सब् वृत्तान्त बताइ अङ्गदीजले ❀ विस्तार् सुनाया तसै
सम्पाती तहिं भन्दछन् मकन लौ ❀ लैजाउ सागर महाँ
दिन्छू आज जटायूलाइ जलदान् ❀ चाँडो म ऐले तहाँ ३२
सीताको म बताउँला सब खबर् ❀ स्नान् अञ्जलीदान् गरी
ई बात् सूनि उचालि झट्लगिदिया ❀ सम्पातिले स्नान् गरी
दीया अञ्जलिदान् जसै फिरि उहीं ❀ ल्याएर राखी दिया
सम्पाती खुशिभै सबै कहि दिया ❀ आपत्ति देख्दै थिया ३३
हे बिर्हो! मत गृद्ध हूँ र म सिता ❀ देख्छु नजर्ले पनी
याहीं छन् यहिं भेष्छ दूति सँग छन् ❀ यस्तो छ चाला भनी
भन्छू सब् तिमिलाइ चारशय कोश् ❀ जो कुद्न सक्छौ यहाँ
सो लङ्का पनि पुग्दछौ उति कुद्या ❀ पौचिन्छ लङ्का महाँ ३४
लङ्कामा ति सिताजि छन् तहिं गया ❀ मिल्छन् सिताजी तहीं
गाह्रो चार्शयकोश कुद्न छ तहाँ ❀ जाऊ न जाऊ कहीं
रावण्ले लगि भित्र गुप्त वनमा ❀ राख्याकि छन् बस्गरी
पौंची भेट् गर जान सक्छ यतिमा ❀ को यो समुद्रै तरी ३५
अशोक्को वनभित्र वृक्ष छ असल् ❀ एक् शिंशपाको तहाँ
सीता छन् तहिं भेट् हुन्याछ तहिंलौ ❀ जाऊ भयो काल् यहाँ
क्यारूँ रावणलाइ मार्न म सहज् ❀ मान्र्या थियाँ हो र को
साक्षात् सूर्यजिका कठोरकिरणले ❀ प्वाँखैडढ्योसब्रपो ३६
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
जाऊचार्शयकोशकुदूनसकन्या ❀ वनै नीर सागर् महाँ
सीताको समचारसब् बुझिसहज् ❀ फर्केर आऊ यहाँ
यो समचार बताइफेर्खुशि भई ❀ आफ्नोहवाल्सब्कह्याँ
जुन्रितलेअघिप्वाँख्डढेरनिपती ❀ पाईअनेक्दुख्सह्याँ ३७
सम्पाती र जटायु भाई दुइ हौं ❀ हाम्रो बुझौं बल् भनी
आकाश् तर्फ गयौं ऊड़ि पुगिगयौं ❀ श्रीसूर्य निम्नै पनि
ताहाँ भाइ जटायुले त अति ताप् ❀ मान्या र छोप्याँ जसै
बाँच्याभाइजटायु वयारुँमगिर्यो ❀ मेराडढ्याप्वाँख् तसै ३८
आकाश्देखिगिरेर विन्ध्यगिरिमा ❀ तीन् दिन् त मूर्छाभयाँ
ब्युँझ्याफेर्जबचन्द्रमामुनिमिल्या ❀ तिन्कानजिक्मागयाँ
सोध्यातीऋषिले र हाल्सबभन्याँ ❀ आफ्नोनिपत्को गति
मेरो चित्त बुझाउनाकन भन्या ❀ सब्दुःख हुन्छन्जति ३९
यस्तो हुन्छ बिपत्ति गर्भ रहँदा ❀ यो हुन्छ यौवन् महाँ
यस्तो हुन्छ बुढा हूँदा त मनु के ❀ थाहै छ सब्मन् महाँ
जाहाँ देह बन्यो र दुःख छ भनी ❀ पर्दैन भन्नै पनि
जाहाँ देह बन्योर दुःखछ चिन्ह्याँ ❀ साँचो कुरा हो भनि ४०
तस्मात् दुःख नमान देहछ त रोग् ❀ छुट्तैन दुःखै सही
श्रीरामकोअवतार् हुन्याबखतत क् ❀ एही जगामा रही
केही काल बिताउ राम अवतार् ❀ होला र सीता जसै
हर्ला रावणले र तेस् बखतमा ❀ सीताजि खोज्नै तसै ४१
वीर्वीर्वानरआउनन्तिसँग भेट् ❀ होला उ बेला महाँ
सीताको समचार् जसैत कहुला ❀ प्वाँख्उम्रनन्फेर् तहाँ
भन्थ्या सोहि कुरा जसै पुगिगयो ❀ इ प्वाँख् उम्र्या पनि
प्वाँख् देखाइ बिदा भई उड़ि गया ❀ जाऊ तिमिलौ भनि ४२
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अङ्गदूवीरहरुखुश्भयाखवरमिलिन् ❀ सीता भनी सब् जसै
लाग्या गम्न समुद्रलाई र गमन् ❀ गर्नै नसक्नू कसै
फेरीताप्मनमापरयोरअतिशोक् ❀ अङ्गदूजि गर्दा भया
अङ्गदूलाइ बुझाउनाकन अघी ❀ श्रीजाम्बवानूजीगया४३
ऋक्षराज हुन् जाम्बवान् इ नी ❀ विधिजिकाइ हुन् पुत्र ने पनि
श्री रघुनाथको साथ भैकन ❀ खोज्न ती गया जानकी कन ४४
साहेब्!शोक्रतिमर्कदापिनहवस् ❀ जाउन्हनूमान्भनी
अङ्गदूलाइ बुझाइ फेरि हनुमान् ❀ जीका नगीचूमा पनि
पौंची बेस् स्तुति गर्दछन्किनयहाँ ❀ चुप्चाप् भई दूर् रह्यौ
राम्कोकामनिमित्तमात्रहनुमान् ❀ यो जन्म लींदाभयौ४५
क्यानर्शान् बलको गरौं जबतिमी ❀ जन्म्यौ उसैकाल् महाँ
पाक्याको फल ठानि सूर्यकनता ❀ इच्छा लिन्या भै तहाँ
आकाश्मा जब ता कुदौदुइहजार् ❀ कोशूतक्पुगीफेर्झर्यौ
यस्तोबालकमै थियौ किनयहाँ ❀ कोश्चार्शयैमाडर्यौ४६
सून्या सब् हनुमानले स्तुति तहाँ ❀ जो जाम्बवान्ले गर्‍या
साह्रै खुश् हनुमान् भएर खुशिले ❀ गर्जी अगाडी सर्‍या
पर्वत् तुल्य बडो स्वरूप् धरी बचन् ❀ बोल्या म सागर् तरी
लङ्का भस्म गराइ रावण समेत् ❀ सब् सैन्य चूरौंगरी ४७
सीता लीकन आउँछु कि रिसले ❀ झुराइ्याइ रावण्पनि
ज्यूँदै दाखिल गर्छु राम चरणमा ❀ सूनी हजुर्को भनि
कीताछन्तिसितायहाँभनिखबर् ❀ मात्रै सिताको लिई
फिर्छू श्री रघुनाथका चरणमा ❀ तनूमनूबचनूसबूदिई४८

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

श्री रामको चरणारविन्द मनमा ❀ राखेर उठ्ता जसै
बोल्या श्री हनुमानले यति कुरा ❀ श्री जाम्बवान्ले तसै
भन्छन् श्री हनुमानलाइ तिमिले ❀ भेट् मात्र ऐल्हे गरी
फर्की आउ सिताजिको खबर ली ❀ एक्लै नलड्न्या गरी ४९
रुनामित्का सँग लागि गैकनपछी ❀ सक्भर् लडौला तहाँ
भन्दा खूशि भई बिदा पनि भया ❀ तीकुट्न् मन्सुन् महाँ
लाल् मुख् पीतशरिर् गिरीउपरमा ❀ जस्मै हनूमान् गया
सब् प्राणिहरुले तहाँ ति हनुमान् ❀ जीलाइ हेर्दा भया ५०

इति सुब्बा होमनाथात्मज पं० केदारनाथ र पं० रामजी उपाध्यायकृत क्षेपक समेतको नेपाली
कवि भानुभक्ताचार्यकृत रामायण किष्किन्धा काण्ड समाप्त ।



नेपाली साहित्यगगनमा सूर्य झैं प्रसिद्ध सुब्बा होमनाथ केदारनाथजीका ग्रन्थरत्न
अठारहपर्व महाभारत चमड़ा ढकनीको दाम २५।
श्री कृष्णचरित्र चमड़ा ढकनीको दाम १०।
आठै काण्ड रामायण चमड़ा ढकनीको दाम १०।
ठूलो श्रीमद् देवीभागवत चमड़ा ढकनीको दाम ९।
सचित्र नेपाल दिग्दर्शन इतिहास १ के दाम ८।

यो समग्र पुस्तकको सेट एकै पटक रु० १०) पेशगी पठाइ मगाए खर्च पनि माफ हुन्छ ।

पुस्तक पाइने ठेगाना—
सुब्बा होमनाथ केदारनाथ,
हितैषी कम्पनी
बाराणसी १ ( बनारस सिटी । )

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations



सुब्बा होमनाथात्मज केदारनाथजी र पं० रामजी उपाध्यायकृत क्षेपक समेतको

❋ महाकवि पं० भानुभक्ताचार्यकृत ❋




हनुमान ले समुद्र तर्नू सुरसा संतुष्टी सगर चरित्र सिंहिका वध

तर्नू क्षार समुद्र आज सहजै ❋ मन्न्या इरादा धरी
श्री रामको चरणारविन्द मनले ❋ अत्यन्त चिन्तन्गरी
भन्छन्वीरहरुलाइ ताहिं हनुमान् ❋ हे वीर हो ! पार् तरी
सीताजीकन भेट्तछु म अहिले ❋ जान्छू बडो वेग्गरी १
पापी जन् पनि रामका स्मरणले ❋ संसार पार् तर्छ ता
राम्कै कामनिमित्तश्रौंठी सँगली ❋ जान्छू दुतै हूँ म ता
के डर् क्षार समुद्र तर्न सहजै ❋ पौचन्छु लङ्का भनी
चारै पाउ जमिन् विषे धसि कुद्या ❋ हैदै तमाशा पनि २
दक्षिण् तरफ् मुख गरीकन कुदून बस्ता
उपर् नजर् दि अघिका दुइ पाउ धस्ता
सोझो गराइकन घाँटि कुद्या जसै ता
[illegible] ता ३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आकाश् मार्गगरी कुदे हनुमान् ❀ उड्थ्या ति आकाशमा
सीताजीकन भेटि फर्किकन फेर् ❀ रामचन्द्रका पासमा
पुग्ने अक्कल बल् छ छैन इनको ❀ सारा बुझौं यो भनी
इन्द्रादिहरुले खटाइ सुरसा ❀ जल्दी पठाया पनि ४
जल्दीगै सुरसा अघिल्तिर बसिन् ❀ साम्ने हनूमानका
के भन्छन् हनुमान् भनेर खुशिभै ❀ बार्ता गरिन् स्वानका
भोकी धेर्‌दिनकी म खोजि हिड्थ्याँ ❀ के खाँ अहारा भनी
पायाँ बल्ल यहाँ मिल्यौ तिमि त एक् ❀ साह्रै भयाँ खुश् पनि ५
आऊ लौ पस मूखमा जब भनिन् ❀ फेरी हनूमान् तसै
भन्छन् आजसिता नभेटिकनता ❀ पर तीन मुख्मा कसै
सीता भेटि म फर्कुला र रघुनाथ् ❀ ज्यूका हजुरमा गई
बिस्तार् बिन्तिगरेर आइ पसुँला ❀ तिम्रो अहारा भई ६
यस्तो बात सुनि भन्दछिन् ति सुरसा ❀ मेरा मुखैमा पसी
निस्की जाउ नहीं भन्या म बलले ❀ पक्रेर दाह्रा घसी
मार्छू एति भनिन् र लौ तब यहाँ ❀ मुख् बाउ चाँडो भनि
चार्‌कोश्‌कोतशरीर्‌गरिकन बऱ्या ❀ आफू हनूमान्‌पनि ७
चार्‌कोश्‌का हनुमान देखि सुरसा ❀ निश्‌कोशको मुख्‌गरिन्
चालिस्‌कोश्‌हनुमान्‌भएअसिकोश् ❀ मुख्‌फेरितिन्‌ले धरिन्
जल्दी फेर हनुमानले छ बिश कोश् ❀ को रूप् गराइ बऱ्या
फेर दुईसय कोश मुख् जब गरिन् ❀ अंङ्गुष्ठ भैं भै पऱ्या ८
निस्क्या जल्दि र भन्दछन् ति हनुमान् ❀ हे देवि! मुख्‌मा पसी
निस्कयाँ जान्छु मता अवश्य अब ता ❀ बन्दैन कामता बसी
अक्कल्‌बल्‌ासितको नचन्‌जब सुनिन् ❀ यस्तो हनूमानको
आफ्नो सत्यकुरा तसैसत्र कहिन ❀ छाडिन् कुरा स्वानको ९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized by Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सबैका काम् ति मिसाधि आउ हनुमान् ❀ यो बल् छ तिम्रो भनि
चीन्ह्या मन्छु म इन्द्रका हजुरमा ❀ तिम्रो पराक्रम् पनि
बल् बुझ्नै भनि इन्द्रका हुकुमले ❀ आएकि ता हूँ भनि
खुश् भै र वर्ग बिषे गइन् ति सुरसा ❀ कूद्या हनुमान् पनि १०
मैनाक् पर्वतलाई त्यै घरि मन्या ❀ फेर् सागरैले तहाँ
जुन राजा सगरैजिले गरि भयाँ ❀ प्रख्यात् म सागर यहाँ
हुन् ई पूर्वज रामका क्षितिपती ❀ आहूकजीका सुत
जन्म्या साठि हजार पुत्र इनका ❀ संसारमा विश्रुत ११
इर्ष्याले गरि इन्द्रले सगरको ❀ यज्ञाश्वलाई हरी
आश्रममालगि श्रीकपिल् मुनिजिका ❀ बाँधिदिया त्यस् घरी
खोज्दै त्यो हयलाइ पुत्र नृपका ❀ फेर् साठि हज्जार जन
पातालमा पुगि अश्वलाइ तिनले ❀ देख्या कपिल्का सँग १२
गाली ती सबले गऱ्या अति तहाँ ❀ चोर् हुन् भनी तिन्कन
भ्रमले गलित गऱ्या ठूलो ति सबले ❀ भस्मै भया सब् जन
तिन्कै वंशज श्री भगीरथजिले ❀ ठूलो तपस्या गरी
गंगाजीकन ल्याइ वंशकन सब् ❀ मुक्तै गऱ्या त्यस् घरी १३
उन्कै वंश महाँ भयो प्रभुजिको ❀ श्री राम औतार् यहाँ
तिन्का काम निमित्त आज हनुमान् ❀ जान्छन् ड लङ्का महाँ १४
थाक्या हुन् हनुमान् निसाइ फलफुल ❀ खाउन् र जाउन् भनि
भन्दा सागरको बचन् सुनि तहाँ ❀ निस्क्याति मैनाक् पनि
अर्को एक मनुष्यको स्वरुप ली ❀ हात् जोरि बिन्ती गऱ्या
आई फलफुल खाइ जाउ हनुमान्! ❀ भन्दै अगाडी सऱ्या १५
आज्ञा सागरको हुँदा चरणमा ❀ आयाँ म एल्हे भनी
मैनाकले यति बिन्ति बात जब गऱ्या ❀ बोल्या हनुमान् पनि

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रामको काम् नगरी बसेर कसरी ❀ खानू म जान्छू यसै
हातले छुन्छु म लौ भनेर खुशिले ❀ छोएर कूद्या तसै १६
केही दूर् हनुमान् पुगेपछि तहाँ ❀ एक् सिंहिका राक्षसी
छाया पक्रि उ जन्तु खैंची बलले ❀ खान्थी जलैमा बसी
पाताल् वासिनी सिंहिका जुन थिइ ❀ सागर् महाँ बस्थियो
घुम्थी रातमहाँ थिई जननि यो ❀ प्रख्यात् ग्रहै राहुको १७
छाया पक्रि उ तान्न लागी हनुमान् ❀ ज्यूको गती बन्द भो
कस्ले बन्द गर्‍यो गती भनि दिशा ❀ दस्मा जसै दृष्टिगो १८
देख्या तल्तिर दृष्टि दीकन तहाँ ❀ जस्सै नजर्मा परी
एकै चोट् दुइ लात् दिएर सहजै ❀ छुश्रुक्क ताहीं मरी
ताहाँ देखि कुदी गएर हनुमान् ❀ पौंच्या जसै तीरमा
लङ्कापूरि तहाँ त्रिकूट गिरिका ❀ देख्या उपर् शीरमा १९

हनुमानजीको लङ्का प्रवेश लङ्किनी-संवाद

चारिपरि ताहिं तीर्मा वृक्ष फल्फुल् भरी छन्
जउन बनमहाँ ता गर्दछन् पक्षिले गुन्
भ्रमरहरु लताका फूलमा हल्लि हल्लि
घुनुनु घुनुनु गर्दै हिंड्दछन् बल्लि बल्ली २०
नजर चारिपरीको जो छ शोभा नजर् भो
त्रिकुट गिरि उपर्का पूरिमा फेर् नजर् गो
चारिपरि परखाल् छन् बीच बीच्मा छ खाना,
सहजसित ख्रुले गर्न के सक्छ दाना २१
अति तखत परेको खुब् अगम् देखि लङ्का
यहि घरि पसि जाँ की राति जाँ एति शङ्का
गरिकन ठहराया याहि बस्छू र राती
सहजसित म जाँला जान् ता राति जाती २२

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ताहिं बसि यति गम्ले बाँकि दिन् सब् बिताई
दिन बिति जब रात् भो जान पाऊ चलाई
स्वरुप पनि ति सानू ली पर्याथ्या जसै ता
दुगुरि नजिक आइन् लङ्किनी पो रैत ता २३

को होस्? आजमलाइ केहि नगनी ❋ यो मित्र जान्या मानी
चोरै होस् भनि लात् उठाइ तिनिले ❋ एक् चोट हानिन् पनि
ठोक्या बाम मुठी उठाइ हनुमान् ❋ जीले जमिन्मा परिन्
छाद्दै ताहिं रगत उठेर झटपट् ❋ हातजोरि बिन्तीगरिन् २४
लङ्कापूरि ति हून् ति राक्षसि भई ❋ बस्थिन् सदा द्वारमा
जानिन् श्रीहनुमानभनेर जब चोट् ❋ पाइन् चलिन् सारमा
लङ्किनी हूँ मलाइ ता जितिलियौ ❋ यस्ले सक्यो राज्गरी
रावणको त मरण हुन्यानखतभो ❋ आयो मरण्को घरी २५
ब्रह्माजी अघि भन्दथ्या प्रभुजिको ❋ हून्या छ रामावतार्
हर्ला रावणले सिता र रघुनाथ् ❋ सुग्रिवथैं मित्रचार्
गर्नन् सुग्रिवले पनी दश दिशा ❋ सीताजीकोखोज्खबर्
गर्नालाइ पठाउनन् बिरहरू ❋ छानेर खुब्खुब्जबर् २६
तिन्मा एक्बिर आउला राति मिले ❋ लात् मारियौली जसै
हान्ला बाम मुठी उठाइ र रगत् ❋ छाद्दै गिरौली तसै
रावणको तहिंसम्म आयु छ भनी ❋ भन्थ्या रसो बात सुनी
ब्रह्माको वचनै प्रमाण्गरि भन्याँ ❋ लौमर्छ रावण् पनी २७
जाऊ भेट सिताजिलाइ ति अगम् ❋ भित्री बधैंचा महाँ
अशोक्का वनमा छ वृक्ष बढिया ❋ एक् शिंशपाको तहाँ
ताहीं छन् प्रभुकी प्रिया वरिपरी ❋ छन् राक्षसी गण पनि
भेटी गै रघुनाथथैं मन सबै ❋ यस्तानिपतछन्भनि २८

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuyan Vani Trust Donations

धन्यै भयाँ म अहिले प्रभुको स्मरण भो
संसारको भय छ जो उत आज दूर् भो
जस्तो मिल्यो मकन सङ्ग र भक्ति ऐल्हे
यस्तै रहोस् यहि म पाउँ नबिर्सु कैल्हे २९

रावण भयप्रदर्शन सीतादर्शन र हनुमानसीतासंवाद

जस्रै श्रीहनुमान् पुग्या सहजमा❀ लङ्का समुद्रै तरी
तस्रैजानकिकोफुर्योनजरनाम्❀हातै समेत् खुब् गरी
रावणकोपनिबामहात् नजरनाम्❀ फूर्यो रघुनाथको
दक्षिण अङ्ग फुर्यो उसै बखतमा❀खुश्मन्भयोनाथको३०
सानो रुप लिई पसी सब शहर❀ हेर्दै बिचार् खुब् गरी
रावण्को दरबार्बिशेष्गरिढुँड्या❀ चोटा र कोठा भरी
पायानन् र कता म जाँ भनि तहाँ❀मन्मा बिचार्भो जसै
सम्भयालङ्किनीकोबचन्रति गया❀अशोक बन्मा तसै३१
जो जो वृक्ष थिया ति इन्द्रपुरिमा ❀सो सो त सब्छन् तहीं
रत्नैकासिंढिसाफ् असल्जलभरी❀ यस्तो तलाऊ कहीं
फल्फुल्ले अतिभार् भए र रुखका❀ हाँगाहरू सब् पनि
लच्केका भ्रमरा र पन्छि बहुतै❀रूख्मा बस्याका अनि३२
बीच्बीच्मासुनकाहबेलिपनिछन्❀उच्चा मणिकोछ थाम्
जस्मा छन् कति गर्नु बर्णन यहाँ❀हेर्यातहाँपनिकका‌म्
यस्तो सुन्दर बन् नजर् गरि सबै❀ डुल्दै हनूमान् गया
देख्या सुन्दर शिंशपा र खुशि भै❀ताहींतिदाखिल्भया ३३
अधिक गभिर छाया सूर्यको ताप् नपर्न्या
उपर अति पहेला बेस् चरा मात्र बस्न्या
वरिपरी पनि नाना राक्षसीको छ घेरा
रुख मनि ताहिं सीता देखिइन् फेद नेरा ३४

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मोकीमैलि निन्याउरीनत कपाल् ❀ कोरेकि सब् केशउसै
लट्टामात्रगरयाकिखालिभुमिमा ❀ रूँदै बस्याकी त्यसै
राम् राम् राम् यतिमात्र बोलिरहँदी ❀ देख्या र साना भई
पातकाअन्तरमालुकयातिहनुमान् ❀ रुखका उपर्मा गई ३५
भन्छन् श्री हनुमान् तहाँ मनमनै ❀ एल्हे कृतार्थै भयाँ
जो सीताकन देखि आज खुशिले ❀ सीता समिप्मा रह्याँ
साइँयाँकाम्पनिरामकोभनितहाँ ❀ खुशी भयाथ्या जसै
अन्तःपूर महाँ भयो र खलबल् ❀ त्यो शब्दसून्या तसै ३६
के को शब्द भयो भनेर हनुमान् ❀ लुकयाति झन् पातमा
आयो रावण जल्दिताहिं नजिकै ❀ सब् रानी ली साथमा
कैल्हे मर्छु म रामदेखि अझतक् ❀ सीता हरयाँ ता पनि
आयानन् रघुनाथ् भनेर रहँदा ❀ देखेछ स्वप्ना पनि ३७
रामको दूत्आतिबाँदरआनर अशोक् ❀ बन् भित्र आई पसी
सीताजीकन देखिने गरि तहाँ ❀ पात् भित्र लुकी बसी
मौका हेरिरहेछ हर्न भनि यो ❀ स्वप्नामिलेथ्यो जसै
साँचै हो कि भनेर दौड़िकन झट् ❀ आयोनजिक्मातसै ३८
साँचै पो यदि हो भन्या असल भो ❀ दुर्वाच्य सीता महाँ
जाई बोल्छु म सो सुनेर रिसले ❀ जाला र मन्ला तहाँ
मेरो दुष्ट बचन् सुनेर रघुनाथ् ❀ आएर मार्नन् भनि
यस्तोनिश्चय मन् गरी नजिकगै ❀ दुर्वाच्य बोल्योपनि ३९
सीताले पनि दुष्टलाइ नजिकै ❀ देखी अधोमुख् गरिन्
श्री रामको चरणारविन्द मनले ❀ अन्तःकरण्मा धरिन्
चुप् लागी जननी रहिन् जब तहाँ ❀ सो देखि रावण् तहाँ
लाग्यो भन्न मलाइ देखिकिन हो ❀ लायौ अधोमुख् यहाँ ४०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

राम् मेरा पति हुन् भनेर तिमिपी ❀ मन्छयौ उ मन्छन् कहाँ
मेरी हो यदि मन्दथ्या तिनि मने ❀ आऊनू पर्थ्यो यहाँ
माया छैन तिमी उपर् नबुझि यो ❀ शोक् मात्र गर्छ्यौ उसै
यौवन् व्यर्थ गयो विचार नगरी ❀ यौवन्अफाल्छ्यौयसै ४१
बित्याकाल नफिर्छ व्यर्थ मनमा ❀ शोक्गर्दछयौ योकति
मैलाई पति मान आज तिमिले ❀ हुन्छू म तिम्रो पति
मेरी पत्नि भयौ भन्या त सबकी ❀ मालिक् हुनेछौ म ता
साह्रै प्रेम् गरि राख्नुँला बुझ यहाँ ❀ बैगूनी हुन् राम ता ४२
मानिस्मूर्ख कृतघ्नमानिस महाँ ❀ साह्रै अधम् जो त छन्
शक्तिकापनिकम्तिराम् पनियहाँ ❀ आऊन के सक्दछन्
तस्मात् छोड़ नराख रामतिर मन् ❀ यस्तो भनेथ्यो जसै
लाल् लाल् नेत्रगराइ पूरा रिसले ❀ बोलिन्सिताजीतसै ४३
पाजी रावरा! बोल्दछस् कति यहाँ ❀ दुर्वाच्य बकबक् गरी
राघवदेखि डराइ छल्न भनि एक् ❀ सन्न्यासिका रूपधरी
जस्तै यज्ञ विषे हवी कुकुरले ❀ हर्छन् उसै चालले
रामलक्ष्मरा न हुँदाहरिस् तँबुझिले ❀ मर्लास् यसै कालले ४४
सागर् शोषि किसाँधु लाइ रघुनाथ् ❀ आएर घेरा दिई
तेरो वंश विनाश् गरेर पछि फेर् ❀ प्रारा खैंचि तेरो लिई
लैजानन् रघुनाथ् मलाइ भनि यो ❀ दीईन् जवाफ् पो जसै
लाल्लाल्नेत्र गराई खड्गपनिली ❀ काट्नैतयारभोतसै ४५
मन्दोदरी विनति गर्न अगाड़ि सर्दी
यो खड्ग टारुँ कसरी भनि चित्त धर्दी
पाऊ परीकन तहाँ अति बिन्ति पारिन्
सब् रीस् शमन् पनि गराइ त खड्ग टारिन् ४६

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रावण्की पटरानि मुख्य माहर्षी ❀ मन्दोदरी जो त हुन्
कन्यातुल्य सुकीर्ति शालिनि भई ❀ अत्यन्त राम्रो थिइन्
हैमा नामकि अप्सरा जननि हुन् ❀ औ बाबु दानव् मय
इन्का हुन् सुत वीर अक्षय कुमार् ❀ औ इन्द्रजित् नामक ४७

हूकुम् रावणले तहाँ यति दियो ❀ हे राक्षसी ! ई सिता
मैन्हा दूइ यसै बसुन् तब उपर् ❀ मेरा शयन्मा कि ता
बस्निन्नारितनपोमानिन्यदिभन्या ❀ काटेरटुक्टुक् गरी
तर्कारी मुटुना बनाउनु असल् ❀ मीठा मशाला धरी ४८

मासु खाइ म छोडुँला अम पनी ❀ चेताउ एती भनि
रावण् फर्कि गयो ति राक्षसिहरु ❀ एक्मुख्भयासब्आनि
एक्भन्छेकि नन्यर्थ यौनसक्यौ ❀ रावण् गराऊ पति
दोश्रीकेभनिउठ्तेछकिकातिबार् ❀ भन्छेस्तँथाक्छेस्काति ४९

काट्नै पर्छ नकाटी हुन्न भनिजात् ❀ गर्दै थिई आर्के ता
हातमा ली तरवार दौडि पनि गैं ❀ भन्दै म काट्छू सिता
अर्कीघोर्मुखबाइडर् दिन नजिक् ❀ धाई सिताथैं जसै
बूढी राक्षसी एक्थिई त 'त्रिजटा' ❀ त्यस्ले हटाई तसै ५०

लागी भन्न अभागी दुष्टहरु हो ! ❀ के दुष्टका मैं माति
गर्छौ छोड निरोध् नराख गर खुब् ❀ सीताजिको नै स्तुति
पाउमा परि दण्डवत् गर सबै ❀ मालिक् इनै हुन् भनी
मेरो आज वचन् लियौ पनि भन्या ❀ खुब् हीत होला पनि ५१

स्वप्नाको सुन भन्छु लक्षण यहाँ ❀ श्रीराम् सिताका पति
ऐरावत् उपरै चढेर सँगमा ❀ भाई लिई वीर अति
याहाँ आइ रिसाइ भस्म सब यो ❀ लङ्का गराई दिया
रावण् मारि सिता लिएर सँगमा ❀ पर्वत् उपर् पो थिया ५२

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रावण् गोमय कुण्डमा कुल समेत् ❀ खुब् तेल मर्दन् गरी
बुड्थ्यो सब् मुड आफना उनिउसै ❀ मुड्को त माला धरी
श्रीराम्का नजिकै बिभीषण थिया ❀ भक्ती प्रभूको धरी
गथ्या खुब टहल् बहुत् खूशि हुँदै ❀ तन्मन् बचन्ले गरी ५३
राम्ले रावणलाइ आज सहजै ❀ मार्छन् कुलै साफ् गरी
रावण्को अब बृद्धि छैन यसको ❀ आयो मरण्को घरी
राम्का भक्त बिभीषणै अब उपर् ❀ बस्नन् यहाँ राज् गरी
जस्तो हुन्छ हुकुम् सितापतिजिको ❀ सोही शिरोपर् धरी ५४
यस्तो स्वप्न भयो रसब् भनिसकयाँ ❀ इती भनी चुप जसै
लागीथीं त्रिजटा ति बात सुनि डरया ❀ सब् राक्षसीगण् तसै
निद्राका बशमा सबै परिगया ❀ सीता बहूतै रूँदी
आधार् कोहि न पाउँदा अधिक ताप् ❀ मानेर बिह्वल् हुँदी ५५

सीता ताप हनुमान सम्मुख उपस्थित

भोकी शोक् गरि भन्दछिन् अब यहाँ ❀ ऐल्हे कसोरी मरूँ
इन्का हात परेर मर्नु नतिको ❀ आफैं म मर्छू बरू
ताप्ले पूर्ण हूँदा उपाय अरु थोक् ❀ केही नजान्दी कहै
मन्मा शान्ति नपाउँदा बिरहले ❀ देख्थिन् अँध्यारो सबै ५६
राम्मा चित्त दिएर मर्नु बढिया ❀ मानेर सीता तहाँ
झुण्डीन्या मतलब् लिई खडि भइन् ❀ पक्रेर हाँगो महाँ
राक्षस्का बिच मा बसी जिउनु धिक् ❀ मर्नू निको मर्छहू
चुल्ठो लामु छ झुण्डिनाकन यहाँ ❀ डोरी म यै गर्दछु ५७
यस्तो निश्चय सुर् गरेर ति सिता ❀ झुण्डीन आँटीन् जसै
काम् बितलाअ निसानु बोलि झट्पट ❀ बोल्या हनूमान् तसै
भारतवर्ष बिषे मणी मुकुट मैं ❀ नाम् ता अयोध्या भनि
ठूलो एक शहर् थियो मणिमयी ❀ सुन्दर [illegible] ५८

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुन्दर
का. २



१ सीताजीलाई प्रमाण दिलाउन हनुमानले रामको औंठी दिएको ।

२ हनुमानले रावणपुत्र अक्षयकुमार लाई मारेको ।





४ हनुमानले लङ्का दहन गरेको ।

३ हनुमानले राक्षसगणलाई आफ्नो पुच्छर उठाउन लगाएको ।

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

इक्ष्वाकूका कूलैमाअतिनालि दशरथ्जीर् महाराज् रह्याछन्
तिन्कातिन्रानिमाहाँगुणीगुणीअतिनीर्चारछोराभयाछन्
जेठा राम्जी ति चार्मा उहिपछि त भरतजी र लक्ष्मण् इ तिनै
फेरीशत्रुघ्न कान्छासकल गुणमहाँकमित छैनन् इ कोनै ५९
जेठा राम पिताजिका हुकुमले ❀ सब् राज्य छोडी दिई
बन्मावर-न चल्यान हुत् खुशि हुँदै ❀ सीता र लक्ष्मण् लिई
एक् दिन् पञ्चवटी गया प्रभुतहाँ ❀ डेरा प्रभुको पर्‍यो
रावण्ले अति छल् गरेर ताहिं गै ❀ सीताजिलाई हर्‍यो ६०
राम्लक्ष्मण्नहूँदा सितापनितहाँ ❀ चोरी जसैता हर्‍यो
मेरी आज सिताहर्‍यो भनि बहुत् ❀ खेद् रामलाई पर्‍यो
जान्थ्याखोजिसिताजिलाइ बनमा ❀ फेला जटायू पर्‍या
तिन्माथि करुणा भयो प्रभुजिको ❀ ताहीं जटायु तर्‍या ६१
भेट् सुग्रिव्सित भोपछि प्रभुजिको ❀ लाई मित्यारी अनि
बालि मारि रजाइँ बक्सनु भयो ❀ मित् हुन् इ मेरा भनि
वीर् वीर् बानर छानि सुग्रिवजिले ❀ सीताजि खोज्नै भनि
हुकुम् बक्सनुभो र ती सब गया ❀ सीताजिखोज्नै पनि ६२
तिन्मा एक् बिरता म हूँ मत यहाँ ❀ आयाँ समुद्रै तरी
सम्पाती सित भेट् हुँदा खबरभो ❀ उन्का बचन्ले गरी
लङ्का दाखिल भै गयाँ छिनमहाँ ❀ राम्का प्रतापले गरी
फुत्की लङ्किनी देखि निर्भय भई ❀ अशोकबन्मा परी ६३
देख्याँ सुन्दर बाटिका बरिपरी ❀ रुख् बेस् लताले गरी
बेह्रेको चहुँओर रत्न सरिका ❀ फल्फूल् फल्याका भरी
देख्याँ आज सिताजिलाइ र यहाँ ❀ आनन्द पायाँ भनि
एती बिन्ति गरेर चुप् भइरह्या ❀ ताहाँ हनूमान् पनि ६४

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सीताजिले जब इ बात् क्रमले सुनीथिन्
आश्चर्य भैकन वरीपरि हेरि एक् छिन्
कोही नदेखि ति सिता खरुलाइ ताहाँ
मान्छिन् कुरा इ कहनै जनको छ याहाँ ६५
भ्रम् हो भनू पनि भन्या सब चेत् छ मेरा
स्वप्ना कसोगरि भनू निंद छैन मेरा
जो हो इ बात कहने उ अगाडि आई
अमृत् वचन् इ सब आज भनोस् मलाई ६६
सीताजिको यति वचन् जब सुन्न पाया
सानू स्वरुप् लि हनुमान्जि अगाडि आया
दर्शन् प्रणाम् पनि गरेर सिताजिलाई
ताहिं खडा भइ रह्या अति हर्ष पाई ६७
लाल् मुखपीतशरिर् स्वरूप्पनिअधिक् ❀ सानूभँगेरा सरी
धोरका हनुमान देखि मनले ❀ आफैं त शङ्का गरी
रावण्को छल हो कि यो भनि तहाँ ❀ लाइन् अधो मुख् जसै
शङ्का भो अब माइलाइ भनि भट् ❀ बोल्याहनूमान्तसै ६८
हे मातर् ! म त दास हूँ हजुरको ❀ राम्का हुकूम्ले गरी
आयाको छु हजूरका खबरमा ❀ गम्भीर् समुद्र तरी
राजा सुग्रिवको त मंत्री पनि हूँ ❀ वायू पिता हुन् पनि
एति बिन्ति गरेर चुप् भइ रह्या ❀क्या हुन्छ मर्जी भनि६९
सीताजी पनि भन्दछिन् कसरि यो ❀ जानू म मानिस् पनि
बाँदर् साथ मित्यारी लाउँछ कतै ❀क्याहुन् कुराको जनी
एती बोलि सिताजि चुप् भइ रहिन् ❀ साँचो नमानी जसै
फेर् वृत्तान्त गरी सुनाइ सब बात् ❀ औंठी दिया पो तसै ७०

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

औंठीदीकन फेर्प्रणाम् पनिगरी ❀ जस्सै हनूमान् बस्या
हेरिनु औंठी जसै उसै बखतमा ❀ हर्षाश्रुधारा खस्या
बर्बर् आँशु खसाउँदै प्रभुजिको ❀ औंठि शिरोपर् धरिनु
सान्है खुश् हनुमान् उपर् भइ तहाँ ❀ प्राण्भैंपियारोगरिनु ७१
हित गरि हनुमान्जीलाइ भन्छिन् ति माता
म कन तिमि भयौ खुब् प्राणका आज दाता
तिमिसित रघुनाथ्ले खूब बिश्वास मान्या
तब म निर पठाया एहि कामले त जान्या ७२
अब त तिमि हनूमान् जल्दि गै रामलाई
भन बिपति परयाको देखि हाल्यौ मलाई
जुन तरह म उपर्मा रामको हुन्छ माया
उहि गरि तिमिले खुब् युक्तिले बिन्तिलाया ७३
जिन्तिन् शरीर महिना दुइ ता म धर्छु
ताहाँ पछीत तिमी निश्चय जान मर्छु
खान्याछ दुष्ट तरकारि बनाइ जान
छैनन् यहाँ अरु सहाय मलाइ ठान ७४
तस्मात् अवश्य इ दुई महिना नजाई
सुग्रीव् समेत् सकल सैन्य लिएर आई
यस् दुष्टलाइ सब बंश समेत् मारुन्
यो दुःखबाट अब नाथ मलाइ तारुन् ७५
सिपसित गरि बिन्ती खुब् दयालू बनाया
जति छ फजिति मेरो यो सबै थोक् जनाया
यति बिनती गरेमा पाउला धर्म धेरै
सकल मनि सवयाँ बात् के भनू बेरबेरै ७६

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बिन्ती श्रीहनुमानले पनि गऱ्या ❀ माता ! म सेवक् त हूँ
रुनामितकाइनिपत्सैन्मक हुँला ❀ धेर् बात यहाँ क्या कहूँ
राम्लक्ष्मण्दुइभाइ सुग्रिवसमेत् ❀ बानर् करोडौं लिई
वैरीरावणको बिनाश्गरि दिनन् ❀ धेरा शहर्मा दिई ७७
रुनामित्लाई लिएरफेरि रघुनाथ् ❀ जानन् अयोध्या महाँ
आवैनन् रघुनाथ् भनेर मनमा ❀ शङ्कै नलागोस् यहाँ
योबिन्तीसुनिभन्दछिन् तहिँसिता ❀ रामचन्द्रजी क्या गरी
सेना लीकनआउननूआतिगभिर् ❀ यस्तो समुद्रै तरी ७८

जननि कन बुझाया यो हुकुम् सूनि ताहाँ
मइँछु प्रभुजिको दास् बोकुँला पीठ माहाँ
रघुपति दुइ भाईलाई के दुःख पर्छन्
सकल अरु र सुग्रीव् कूदि आफैं त तर्छन ७९

जननि ! म त बिदा झट् पाऊँ मर्जी त सून्या
अब त उहिं गया पो हुन्छ काम् जल्दि हुन्या
जउन चिज दिंदामा राम बिश्वास मान्छन्
उहि चिज अब पाउँ जान्छु दिन् मात्र जान्छन् ८०

यति सुनि आधिदेखी केशपाश्मा धऱ्याको
मीरा झिकि दिइ हालिन् रामको मन् पऱ्याको
मीरा दिइ तब भन्छिन् चित्रकूट्मा भयाको
शरण परि नजर् दी काग बाँची गयाको ८१

जयन्त कागको कथा

एक्दिन्हेहनुमान् ! मचित्रकुटमा ❀ राम्कानजिक्माथियाँ
मेरा काखमहाँ सुत्या र रघुनाथ् ❀ हात्को तकीया दियाँ
मेरा लाल् दुईपाउ देखिकनकाग् ❀ आई ठुँग्थ्यो जसै
लाग्यो बग्न रगत न थामिनगई ❀ धाराबग्या मैं तसै ८२

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ट्यूँम्फी श्री रघुनाथले नजर भो ❀ताहीं थियो काग् पनि
फर्यांवयाएकतृणालीतहाँप्रभुजिले ❀त्यो काग मार्छू भनि
त्योकाग्चौधभुवनडुल्योकहिंपनी❀ पाएन आधार् जसै
मेरो आइ शरण् परीकन तहाँ❀माफ्मागनलाग्योतसै८३

त्यो इन्द्रको सुत जयन्त थियो र त्यस्ले
चिन्हेन राम प्रभु हुन् भनि केहि पैल्हे
शक्ती कति छ बुझ्ने मनले विचारी
टुँग्यो मलाइ गइ काग्सरि रूपधारि ८४

फेरी आज शरण् पर्यो भनिदया ❀आयो उ काग्मा जब
मैंमाथी त दया कसो न हुनगो❀भन्थिन् भन्या यो सब
हातजोरीकनबिन्तिफेरिहनुमान् ❀बीर् गर्नलाग्या तहाँ
सन्धान् केहि नपाउँदा हजुरको ❀आऊन ढिल्भो यहाँ८५
रावणले हरि ली गयो भनि खबर् ❀हुन्थ्योत बाँच्थ्यो कहाँ
योबिन्तीहनुमानको जब सुनिन् ❀भन्छिन् सिताजी तहाँ
देख्छू रूप त सानु मानु भँगिरा ❀ जत्रो कसोरी लडी
राक्षस्नाशतिमि गर्दछौ कितठूला❀ हुन्छौस्वरूपको बढी८६
तिम्रो रुप् अति सानु देख्छू अरुता ❀कत्रा हुनन् भन् भनि
सम्झन्छू मनले र गर्छू मनमा ❀ आश्चर्य मान्छू पनि
यस्तोमर्जि सिताजिको सुनितहाँ❀ पर्वत् सरीका भया
मेरू पर्वत झैं भएर हनुमान् ❀साम्ने खडाभै रह्या ८७

जब त ति हनुमान्को रूप् ठुलो देखी लीइन्
खुशि भइ तहिं बीदा माइले जल्दि दीइन्
अब त तिमि हनुमान् ! वृक्ष चाला छिपाऊ
इनिहरु सब् देख्नन् कूदि फेर् जाइ जाऊ ८८

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यति सुनि हनुमान्‌ले फेरि बिन्ति लगाया
सहजसित म जान्थ्याँ केहि फल् खान पाया
वरिपरि फलफुल् छन् मर्जि मात्रै म पाउँ
हुकुम् बिनु कसोरी आज आफैं म खाऊँ ८९

अशोक वाटिका हरूको नास र अक्षय कुमार वध

यति बिनती गर्‍याथ्या खानको मर्जि पाई
खुशि भइ फल खाई माइथ्यैं फेरि आई
चरणा परि बिदा भै क्यै गया दूर् जसै ता
अलिकती कछु काम् फेर् गर्न आँट्या तसै ता ९०
आफ्नैमन्‌मनभन्दछन्‌तिहनुमान्❀जुन् वीर दूत् भै गई
जत्तीस्वामितको हुकुम् छ उतिमा ❀ मात्रै चनाखो भई
उत्ती काम् गरिफिर्छ पो पनि भन्या❀ त्योदूत्‌अधमहो भनी
भन्छन्‌सब् दुनियाँ म भेटिकन जाँ❀ कर तो छ रावणपनि ९१
यति गमि ति बगैँचा नाश् न मन्सुन् चलाई
खुशि भइ ति महावीर् जल्दि फेर् फर्कि आई
सकल वन उखेल्दै चौकि सम्पूर्ण मार्‍या
फगत जननि बस्न्या एक शिशौं शेष पार्‍या ९२
जब त वन बिनाश्या राक्षसी जल्दि आई
पुगि नजिक सिताका सोधि सीताजिलाई
भनन तिमि सिताजी ! वीर यो क्यान आयो
अति असल बगैँचा क्यान मैदान् बनायो ९३
यति सुनि तहिं सीता भन्दछिन् के म जानूँ
बिपति परिरहेकी हूँ म ता चानुमानूँ
तिमि बुझ्न सबै बात् हो कउन् क्यान आयो
अति असल बगैँचा क्यान मैदान् बनायो ९४

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सकल छल त हो यो राक्षसै मर्छ माया
जब त यति भनीथिन् राक्षसी सब् डराया
कहन भनि गया सब् रावणौका हजुर्मा
पुगि कहन ति लाग्या जेसक्या त्यो विसुर्मा ९५

ऐल्ह हे नृपराज् ! अधीक बलियो ❁ आयो र बानर् यहाँ
सीताजी सँग केहि बात्चित गरी ❁ कूद्यो बधैंचा महाँ
सारा रुख् सहजैउखेलिकनसाफ् ❁ मैदान् बनाईदियो
चौकि चूर्ण गरी हवेलि पनि सब् ❁ नाशीनस्याकोथियो ९६
आयौं हामितबिन्तिगर्न भनि यो ❁ बिन्ती गर्याथ्या जसै
सूनी जल्दि उठेर पक्रन भनी ❁ लश्कर् पठायो तसै
हूकुम् पाइ त लाख लश्कर गयो ❁ पक्रेर ल्याऊँ भनि
एक्लाख्लश्करलाइदेखिहनुमान् ❁ अत्यन्त गर्ज्या पनि ९७
त्यो शब्दै सुनि मोह लश्कर भई ❁ छोड्या हतीयार् पनि
सब्मार्याहनुमानले बराम्हाँ ❁ ईहुन् मुसूमा भनि
लौहस्तम्भ उठाइ साफ् सब गर्या ❁ सम्चार पुगेथ्यो जसै
रावण् खुब रिसाई फेर् पनि ठुलो ❁ सेना पठायो तसै ९८
सेनाका पति पाँच् गया हुकुमले ❁ ठूलै थिया ती पनि
तिन्लाई पनि साफ् तहाँ गरिदिया ❁ उस्तै मुसूना गनी
फेर् मन्त्री सुत सात् गया हुकुमले ❁ सेना समेत् घेर् लिई
लौहस्तम्भ उठाइ साफ् गरि दिया ❁ सब्लाईठक्कर्दिई ९९
सात् मन्त्री सुतलाइ सैन्य सहितै ❁ सारी सक्याथे जसै
कान्छो रावणा पुत्र अक्षयकुमार् ❁ पो लड्न आयो तसै
भारी फौज लिएर त्यो पुतलि भैं ❁ आई जसै ता पर्यो
आकाश्मा कुदिलौहदण्डशिरमा ❁ ठोक्यासहज्मामर्यो१००

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पैल्हेत्यसकनमारि फेरिसबसब् ❀ सेनासमेत्नाशगर्‍या
आउँदै तहिं बालिका पुतलि भैं ❀ फेरीअनेक् बीर् मर्‍या
सब् राक्षस्हरूलाइ मारिसाकि फेर् ❀ आउँछ कुन्बीर् भनि
लौहस्तम्भ लिई खडा भइरह्या ❀ ताहाँ हनूमान्पनि १

जब त अति पियारो पुत्र कान्छो मर्‍याको
खबर कहन आया फौज् समेत् नाश् गर्‍याको
तब त अधिक ताप् भै खूब रावण् रिसाई
अब त गइ म आफैं मार्दछू तेसलाई २

इन्द्रजीत परिचय हनुमानजी बाँधिनु र रावणहनुमान संवाद

की मार्छू कि त बाँधि ल्याउँछु यहाँ ❀ तेरा नजिक्मा भनि
रावण्ले यति इन्द्रजीतसित भन्यो ❀ त्यस् इन्द्रजीत्ले पनि
हात्जोरीकन बिंति गर्छ म छँदै ❀ आफैं हजुर्ले तहाँ
जानूपर्छ कतै कहीं सहजमा ❀ ल्याउँछू बाँधी यहाँ ३

जन्म्यो मेघ समान नाद गरि त्यो ❀ सोही कुराले गरी
त्यस्को नाम प्रसिद्धभो जगतमा हाँ ❀ फेर् मेघनाद् त्यस्घरी
बाँध्या रावणलाइ युद्ध भुमिमा ❀ श्री इन्द्रजीले जब
जीत्यो इन्द्रकनै र इन्द्रजित भै ❀ यस्को चल्यो नाम् तब ४

एती बिन्ति गरी चढ्यो रथ महाँ ❀ बयै फौजपनीसाथलिई
आयोत्योहनुमान्थियाजुनतरफ ❀ साम्ने मूहुडा दिई
देखा श्री हनुमानजे जब तहाँ ❀ गर्जेर साम्ने भई
लौहस्तम्भ लिई कुदेर झटपट् ❀ आकाशबीच्मा गई ५
लौहस्तम्भ उचालि घुम्नकन ता ❀ लाग्या गरुड्भैं जसै
पाँच्बाण्छोडिलगाईआरुआनिथपी ❀ फेरी लगाया तसै
बाण्लाग्योभनिइन्द्रजीतखुशिभई ❀ गर्ज्यो जसै ता तहाँ
घोडा सूत रथ चूर्णपारि हनुमान् ❀ कुद्याआस्मियाकाशमहाँ ६

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फेर् अर्को रथमा चढ्या र अनता ❀ बाँध्छू म ऐल्हे भनि
फर्याँवयोजल्दिरब्रह्मपाश्तिहनुमान्❀जीलाइ बाँद्योपनि
बाँधी श्री हनुमानलाइ सँग ली ❀ फर्केर दर्बार् गयो
बाँधेका हनुमान देखि शहरै ❀ सम्पूर्ण खूशि भयो ७
जुन्राम्कोचरणौंस्मरण्गरिसहज्❀अज्ञानपाश् नाश् गरी
वैकुण्ठै सब पुग्दछन् पनि भन्या ❀त्यस् ब्रह्मपाश्मा परी
बाँधिन्थ्या हनुमान् कहाँ तर पनी❀ बन्धन् पर्या मैं भया
रावण् लाइ त भेटि जाउँ भनिती ❀ चुप्चाप लागी गया ८
बाँद्याकाहनुमानलाइ लिइसाथ्❀त्यो इन्द्रजीत् बीर् तहाँ
लागेथ्यो घरजानलाई जब ता ❀ आएर रस्ता महाँ
रीस् फेर्या पुरबासिले पनि मुठी ❀ ऊठाइ हानी जब
रिस्फेर्छन्मुसुना भनेर हनुमान् ❀ चुपचाप लाग्या तब ९
पैल्हे ता ब्रह्मपाश्मा परिकन अक्षरा भर् बाँधिने काम थीयो
ब्रह्माको बाक्य साँचो गरिकन पछि त्यो पाशले छाडि दीयो
बन्धन्देखीतखुस्वयातरपनिहनुमान्भेट्नमन्सुब्धर्याका
पौंच्यारावणाछ जाहाँखुशि भइस्अरुता बान्दथ्यापाक्रियाका१०
रावण बीरपनि मन्त्रिबर्गसँगमा ❀ भारी सभामा थियो
पौंच्योताहिंइन्द्रजीत्तिहनुमान् ❀ जीलाइ सुम्पी दियो
हात्जोरीबिनतीगर्योअतिहारिप्❀ बानर् छ सेना पनि
धेरै नाश गरेछ आज भइँले ❀ ल्यायाँखुनीहो भनि ११
जो गर्नु अब पर्छ मंत्रि सँगमा ❀सल्लाह बात्चित् गरी
यस्कोआजठिकान्लगाउनुहवस् ❀ मन्मा बिचार्खुब्गरी
एती बिन्ति सुन्यो र इन्द्रजितको❀ हेर्यो नजर्ले तहाँ
लाग्योसोद्दन प्रहस्तलाइकिनयो❀ आयाछलौसोध्यहाँ १२

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अरसल्मापनिवयामनूआतिअसल् ❀ मेरो बघैंचा पनि
नाशयोबीरपनिनाशगरयोमकनता❀मानू भुसूनै गनि
हुकुम्योसुनीत्योप्रहरतहनुमान् ❀ जीका अगाडी गर्ड
लाग्योसोदनसबैकुरापनिबहुत् ❀ आधार दीने भर्ड १३
यै बीच्मा न डराइ रावरा तरफ् ❀ साम्ने नजर् दी तहाँ
बोल्या श्री हनुमानले तँ बुझिले ❀ काम्ले म आयाँ यहाँ
मार्याजस्किहरिस्उनैजगतनाथ् ❀ राम्को म दास् हुँ अति
बुद्धी भ्रष्ट भयाछ आर्ति दिन पो ❀ आयाँ न ले यो मति१४
आया राम मतङ्ग पर्वत विषे ❀ लक्ष्मण् सहित् भै जब
लाया सुग्रिवले मित्यारि खुशिभै ❀ राम्चन्द्रजीथ्यैं तब
बाली मारि रजाँइँ बक्सनु भयो ❀ सुग्रीव राजा भया
सीता खोजन हुकुम् हुँदा बिरहरू ❀ फेर्दशदिशामागया१५
एक्बीर् ता भइहूँ हुकुम् शिरउपर ❀ लीएर् आयाँ यहाँ
पायाँ देरुन सिताजिलाइ दुत हूँ ❀ राम्को छालेन्थ्याँकहाँ
बानर हूँ म उखेलि साफ्गरिदियाँ ❀ तेरो बघैंचा अनि
आया मार्न मलाइ जो अघिसरी ❀ उन्लाइमार्याँपनि१६

यो इन्द्रजीत् गइ यसै बिचमा मलाई
बाँधेर ल्याइकन आज दियो तँलाई
बन्धन् परयो भनि नठान् तँ दियाँ जनाई
खूला हु आर्ति पनि दिन्छु म सुन् तँलाई १७
लोक्को गती सब बिचार् गरि आज तैंले
यो राक्षसी मति न ले हित भन्छु मैले
ब्राह्मरा् तँ होस ऋषि पुलस्त्यजिको त नाती
राक्षस् कसो गरि तँ होस बुझिले न भाँती १८

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आत्मा स्वरूप उ त ज्ञान् छ स्वरूप कहाँ
जाती र वर्ण लिइ भन्न सकिन्छ याहाँ
यो आत्मरूप भनि नित्य विचार गर्नू
आनन्दमा रहूँ भने मति एहि धर्नू १९

जो यो लोक विषे प्रपञ्च छ सबै ❀ जान् स्वप्न जस्तो भनि
सूतुञ्ज्याल् स्वपना छ रात्य उठिता ❀ लाग्दैन साँचो पनि
त्यस्तै ज्ञान् त भयो भन्या त्रिभुवनै ❀ मर्देख्छ आत्मै फगत्
अज्ञान् रूप् निंदमा भुल्यो पनि भन्या ❀ देखिन्छ नाना जगत् २०

आत्मा सत्य म हूँ भनेर बुझिले ❀ यस् देहलाई पनि
झूटो जान् पृथिवीर जल् हरू मिली ❀ झूटो बन्याको भनि
तर्लास् यो भन मालिइस् पनि भन्या ❀ तान्यो उनै विष्णु हुन्
जो हुन् विष्णु उ राम हुन् शरण पर् ❀ रीस उठ्छ तेरो तमन् २१

यस्तो मूर्खपना त छोड लिइ तँजा ❀ सीता शरण्मा तँ पर्
खुश् हूनन् रघुनाथ् शरण् परिगया ❀ यो दुष्ट चाला नगर्
राम्को भक्ति नराखि आज कसरी ❀ संसार तर्लास् उसै
पर्ला जन्मनु मर्नु यै फजितिमा ❀ छुट्तैन यो ता कसै २२

यो जानी कन भक्ति गर् शरण पर् ❀ राम्का हजुर्मा गई
आत्मालाइ नरक् विषे न लइजा ❀ यस्तो तँ जान्न्या भई
सीताराम् सित को विरोध् गरि तँ हेर् ❀ गिर्लास् नरक्मा जब
फेर् उत्तीर्ण हुनू कठिन् छ बुझिले ❀ अर्ती दियाँ यो सब २३

यस्तो बात हनुमानको जब सुन्यो ❀ रावण् रिसायो तहाँ
लाल् लाल् नेत्र गराई भन्न ड कुरा ❀ लाग्यो सभा बीच् महाँ
मेरो डर् रति भर् नराखि बहुतै ❀ के बोल्दछस् रे ! यहाँ
राम् लक्ष्मण् दुइ भाइलाइ सहजै ❀ मार्छू म छोड्छू कहाँ २४

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुग्रीव्‌लाइ तँलाइ मार्छु पछि फेर् ❀ मार्छु सिताजी पनि
राम् लक्ष्मणसित के डराउँछु यहाँ ❀ मार्नन् मलाई भनि
तिन्का वानरसैन्यको पनि विनाश् ❀ गर्न्याछु एती जसै
बोल्यो रावणले सुनीकन तहाँ ❀ बोल्या हनुमान्‌तसै २५

यसरि किन बहुतै गर्दछस् शेखि धेरै
प्रभुकन त परै राख् जोरि छैनस् तँ मेरै
अघि सरुँ त तँ जस्ता कोटिं रावण् म मारूँ
हुकुम त नभयाको मार्न पो आज क्यारूँ २६

यस्तो बात हनुमानको सुनि तहाँ ❀ रावण् रिसायो अति
साँचै हुन् इ कुरा तथापि मनमा ❀ लिन्थ्यो कहाँ दुर्मति
यो वानर्‌कन काट लौ अब भनी ❀ यस्तो हुकुम् पो दियो
हातमा जस्‌हतियार लिई अघि सर्‌यो ❀ जुन्‌वीर् नजिक माथियो
त्यस बिच्‌मा त विभीषणौ अघि सरी ❀ हात्‌जोरि बिन्ती गर्‌या
दूत हो यो अधिराज्! कुरा पनि नहाँ ❀ लै जान्छ को यो मर्‌या
चीन्हो केहि लगाइ छोड्‌दिनु हवस् ❀ जावस् खबर् विस्तार् गरोस्
एसै वानर्‌का कुरा सुनि यहाँ ❀ आउन् ति संग्राम् परोस् २८

साँचो भन्यो भनि बुझी कपड़ा मगायो
तेल् घीउले मुछि पुच्छर् भरि बेर्न लायो
हूकुम् दियो अब जलाइ त बाँधि लेऊ
सारा शहर् भरि घुमाइ त छोडि देऊ २९

जावस् ठुठो पुछर लीकन फर्कि बाहीं
पुच्छर् डटी नसकि छोड्‌नु हुँदैन काहीं
यस्तो हुकुम् जब दियो तब बाँधिलीया
आगो पनी पुछरमा त लगाइदीया ३०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बाँध्याका हनुमान् लिएर खुशि भै ❀ मेरी अगाड़ी फुकी
लाग्या घुमन् शहर् ति राक्षसहरू ❀ चोर् हो भनी खुब् मुकी
चुप् लागी हनुमान् पनी खुरुखुरु ❀ गम् हेरि हिंड्दै गया
ढोका पश्चिम जुन् थियो शहरको ❀ ताहाँ ति साना भया ३१
बन्धन् देखि त खुस्नाकि सूक्ष्मरुपले ❀ पर्वत् सरीका भया
ठूलो स्तम्भ उठाइ राक्षस अनेक् ❀ मारेर कुद्दै गया
बल्दो लामु पुछर् लिएर घरघर् ❀ कुद्दै शहर्मा डुली
पोल्या सब् शहरै छुटेन कहिं घर् ❀ बाँकी कतै एक् मुली ३२
लाग्यो बल्न शहर जलेर सब घर् ❀ सब् बन्द बाटो भई
भागी जान नपाउँदा हुँदि अनेक् ❀ राक्षस् अटाली गई
फाल् हाली कन अग्निमा परि मर्‍या ❀ यो चाल् शहर्मा भयो
पोल्या नन् घर एक् बिभीषराजको ❀ त्यै मात्र बाँकी रह्यो ३३
एती काम गरीसकी पुछरको ❀ आगो निभाऊँ भनि
कूदी जल्दि समुद्रमा पुछर त्यो ❀ चाँडो निभाया पनि
अग्नीले पनि मित्र पुत्र भनि ताप् ❀ केही गर्‍यानन् तहाँ
सीताको पनि प्रार्थना हुनगयो ❀ उद्ध्याहनुमान् कहाँ ३४
रामको फगत् स्मरणाले पनि दुःख छुट्छन्
आध्यात्मिकादि हरु ताप् पनि जल्दि छुट्छन्
साक्षात् उनै प्रभुजिका दुत भै गयाका
डढ्थ्या तहाँ ति हनुमान् किन हित भयाका ३५

सीताजी सँग विदाभै हनुमान फर्कि अंगदादिसंग भेटनु

फिर्न्या मन् सुनली सितासित बिदा ❀ माग्नै हनूमान् गया
बीदा खुशि भएर बक्सनुहवस् ❀ जान्छू म भन्दा भया
आउँछन् रघुनाथ् अवश्य भनि यो ❀ बिन्ती गर्‍याथ्या जसै
साह्रै शोक् मनमा गरीकन सिता ❀ बयै भन्न लागिन् तसै ३६

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
तिमिकन नजिकैमा देख खुब् खुशि हुन्थ्या
घरिघरि रघुनाथ्का मिष्ट वार्ता म सुन्थ्याँ
अब कसरि म यस्तो दुःखले प्राण धर्छु
तिमि पनि फिरि जान्या फेरि तापमा म पर्छु ३७
सीताका इ वचन् सुनेर झटपट् * हात्जोरि बिन्ती गर्‍या
यस्तोशोक्अबबाडिबक्सनुहबस् * आपत्ति साह्रै पर्‍या
ऐल्हे दाखिल गर्छु राम् चरणमा * बोकी हुकुम् लौ हवस्
यैरै शोक् किन गर्नु हुन्छ मनमा * योशोक् दुरैमा रहोस् ३८
सीताजी तब भन्दछिन् म त न जाँ * जाऊ तिमि मात्र गै
बिस्तारैबिन्तिगरेरजल्दिरघुनाथ् * लीएर आऊ सँगै
राम् आईकन दुष्टलाइ सहजै * मारी मलाई सँगै
लैजानन् तब पो त कीर्ति रहला * के हुन्छ एसै म गै ३९
सीताकोजबत्यो हुकुम् हुनगयो * बीदा हनूमान् भया
तीन् बेर् जल्दि परिक्रमा गरि तहाँ * पाऊ परी ती गया
पर्वतमाथिचढी स्वरूप्पनिठुलो * पर्वत् सरीको धर्‍या
आकाश् मार्ग लिइ कुदेर खुशिले * सुन्शब्द ठुलो गर्‍या ४०
सून्या शब्द ति अङ्गदादि हरुले * बोल्या परस्पर् पनि
शब्देले बुझियो अवश्य सहजै * भेटेर आया भनी
यस्तो बात तिरमा बसेरजब बीर् * गर्दै थिया सब् जहाँ
पौंच्या श्री हनुमान् पनीखुशिहुँदै * नाच्तै दगुर्दै तहाँ ४१
भेट् भो अङ्गद बीरहरूसित जसै * बिस्तार्कुरा सब्गर्‍या
सारा वानरले धरी पुछरमा * बार्बार चुम्बन्गर्‍या
नाच्याकोहिखुशी भएरयहिरीत् * गर्दै ति रामथैं गया
सुग्रिव्को मधुबन् मिल्यो पथ बिषे * ताहाँ ति अङ्गदा भया ४२
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बिन्ती अङ्गदथैं गर्‍या ति सबले ❀ खाऊँ इ फल्फुल् भनि
अङ्गदले पनि खाउ जाउ हनुमान् ❀ जीका प्रसादले भनि
दीया मर्जि र खाऊँ फल्फुल् भनी ❀ बानरगण्थ्या जसै
चौकी बानरका थिया सब तहाँ ❀ आयार रोक्या तसै ४३
रोक्न्याबानरलाइ लात् दिइ पिया ❀ मीठो मधूरस् तहाँ
त्यो चुक्ली दधिवक्रले लिइ गया ❀ सुग्रीवजी छन् जहाँ
सब् बिस्तार् दधिवक्रले जब गर्‍या ❀ लूट्या मधूबन् भनि
लुट्पिट्कोसमाचार्सुनेरपनिरीस् ❀ ऊठेन कत्ती पनी ४४
भेट्याछन्बुझियो सीताकन नता ❀ लुट्थ्या मधूबन् कहाँ
ई बात् सुग्रिव गर्दथ्या प्रभुजिका ❀ कान्मापर्‍योत्योतहाँ
सीताकोपनिनाम्लिएरतिमिले ❀ के बोल्दछौ बात् भनि
सोधीबक्सनुभो र सुग्रिवजिले ❀ बिंतीगर्‍यासब्पनि ४५
हे नाथ्! एक् मधुबन्थियोअतिअसल् ❀ मेरो बधैंचा तहाँ
ऐल्हे ता हनुमान्हरू बलजफत् ❀ ताहाँ गई क्षण् महाँ
लूट्याछन् मधुबन् खबै तरहका ❀ चौकी कूट्याछन् पनि
आया आज फिराद गर्न मधुबन् ❀ लूट्यारकुट्याभनि ४६
सोही बात म गर्दछू रघुपते ! ❀ तिन्ले सिताजीकन
भेट्याछन् तब पो लुटेर मधुबन् ❀ रोक्ता कुट्या इन्कन
त्यो बिन्ती गरि जल्दि सुग्रिवजिले ❀ ती चौकिलाई तहाँ
दीया शीघ्र हूकुम् गइ तिमिहरू ❀ चाँडै पठाऊ यहाँ ४७

( हनुमानजीले श्रीरामचन्द्र कहाँ सिताजीको समाचार पुऱ्याउनु

आउन् श्री हनुमान्हरु अब यहाँ ❀ चाँडो भनी यो जसै
दीया निर्भय दी हुकुम् उहि बखत् ❀ फर्केर दौड्या तसै
मामासुग्रिवकाथिया ति दधिमुख् ❀ जाइ सुनाई दिया
खूशी भै हनुमान्हरु झट पुग्या ❀ जाहाँ रघूनाथ् थिया ४८

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रामसुग्रीव्कन दण्डवत्‌गरिलिया ❀ साम्ने जमिन्‌मा परी
सब्‌बिस्तार्‌हनुमानलेतहिंगर्‌या ❀ सो हाल एक्‌एक्‌ गरी
भेट्याँ नाथ! सिताजिलाई मईले ❀ लङ्कापुरीमा गई
जस्तै देखि लियाँ सिताकन तहाँ ❀ सानू स्वरूप्‌को भई ५९
पात्‌का अन्तरमालुकीजननिका ❀ साम्नेनजिक्‌मारह्याँ
जो वृत्तान्त थियो सबै हजुरको ❀ त्यो सूक्ष्मरूप्‌ले कह्याँ
भोकी दुब्लि हजूर दूर रहँदा ❀ सम्भेर साह्रै रुँदी
रामरामबोल्दिअनाथ्‌भईकनबहुत ❀ बिह्वल्‌निरन्तर्‌हुँदी ६०
अशोक्‌कावनमाशिशौंपानिछएक्‌ ❀ त्यै वृक्षका बीचमा
भुण्डीन्या मतलब्‌ लिई खडि भइन्‌ ❀ सूनिन्‌ उसै बीच्‌महाँ
त्योवृत्तान्त सुनी हुकुम्‌पनिभयो ❀ को होस्‌ तँ बोल्‌यहाँ
क्यालूकिकनबोल्दछस्‌अबनलुक्‌ ❀ आईज साम्ने महाँ ६१
पायाँ एति हुकुम्‌ जसै जननिको ❀ वानर्‌ स्वरूप्‌ले गयाँ
कोहोस्‌भन्‌भनीसोधिबक्सनुभयो ❀ फेर्‌ बिन्ती गर्दोभयाँ
सब्‌ वृत्तान्त गरीसकी हजुरको ❀ औंठी दियाथ्याँ जसै
बर्‌बर्‌आँशु खसाल्‌नु भो जननिले ❀ विश्वासलाग्योतसै ६२
आफ्नोदुःख हवाल्‌सबै कहनु भो ❀ यस्ता विपत्‌ छन्‌ भनि
आऊँछन्‌ रघुनाथ्‌ भनेर वहुतै ❀ मैले बुझायाँ पनि
आज्ञाभो रघुनाथका हजुरमा ❀ सब्‌ दुःख मेरो कही
लङ्कामा प्रभुको सवारि तिमिले ❀ चाँडो गराऊ गई
बातचित्‌ गरी जब यताततिर फिर्न लाग्याँ
निश्वाश पार्न जननीसित चीज माग्याँ
चूडामणि दिनुभयो शिरमा रह्याको
कागको कुरा कहनु भो अघिको भयाको ६४

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लक्ष्मणलाइ अनाथ बात भइले ❀ बोल्याकि तू ता पनि
त्योरीस्लक्ष्मणलेकदापिनालिउन् ❀ एसो भनीथिन् भनि
हात्जोरीकनाबिन्तिखुप्गरिलियाँ ❀ एती हूकुम् भो जसै
सब् वृत्तान्तसुनी बिदा पनि भयाँ ❀ फर्केर आयाँ तसै ६६
माईसित बिदा भई जब फिर्याँ ❀ मन्मा लहड् यो गयो
रावणलाइ नभेटि जाँ म कसरी ❀ भन्न्याँ बिचार् पो भयो
भेटी रावणलाइ आर्ति पनि दी ❀ फिर्नू असल् हो भनि
फर्कीद वनतगर्याँ अशोकवनको ❀ मार्याअनेक् बीर्पनि
कान्छो रावणपुत्र अक्षयकुमार् ❀ मार्याँ र रावण् जहाँ
थीयो ताहिं गई भन्याँ हित वचन् ❀ टेरेन केही तहाँ
गर्थ्योबक्वककबात्अनेक् तरहको ❀ मैले भुसूनै गनी
रावणकैआधि खाक्पनी गरिदियाँ ❀ पोलेर लङ्का पनि ६७
एती काम गरी यहाँ हजुरमा ❀ आयाँ म ऐल्हे भनि
सारा बिन्ती गरी खडा भइरह्या ❀ ताहाँ ति सेवक् बनी
श्रीरामले पनि काखमा लिनुभयो ❀ सर्वस्व दिन्छू भनी
बातले चित्त बुझाइबक्सनु भयो ❀ सर्वस्व यै हो भनि ६८
मैलेखुश्भइकाख् दियाँ यदि भन्या ❀ फेर् दीनु बाँकी रति
केही चीज् रहँदैनसब् मिलिगयो ❀ यो बात् बताऊँ कति
काख्माराखिहुकुम्भयो पति जसै ❀ खूशी हनूमान् भया
आनन्दाश्रु गिराइ भक्ति रसले ❀ हाजिर् हजुर्मारह्या ६९

धन्य हुन् इ हनुमान् इ सरीको
कोहि छैन अरु भक्त हरीको
भक्ति खुब् गरी त काख् पनि पाया
लोकमा अधिक धन्य कहाया ६०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जस्को पुजा तुलसि मात्र चढाइ गर्छन्
उस्ता पनी त भवसागर पार तर्छन्
ई ता उनै प्रभुजिका दुत हुन् त काहाँ
सक्नूछ वर्णन गरी इनको त याहाँ ६१

इति सुब्बा होमनाथात्मज पं० केदारनाथ र पं० रामजी उपाध्यायकृत क्षेपक समेतको नेपाली कवि भानुभक्ताचार्यकृत रामायण सुन्दर काण्ड समाप्त ।




नेपाली साहित्यगगनमा सूर्य झैं प्रसिद्ध सुब्बा होमनाथ केदारनाथजीका ग्रन्थरत्न

अट्ठारहपर्व महाभारत चमड़ा ढकनीको दाम २५।
श्री कृष्णचरित्र चमड़ा ढकनीको दाम १०।
आठै काण्ड रामायण चमड़ा ढकनीको दाम १०।
ठूलो श्रीमद् देवीभागवत चमड़ा ढकनीको दाम ९।
सचित्र नेपाल दिग्दर्शन इतिहास १ के दाम ८।

यो समग्र पुस्तकको सेट एकै पटक रु० १०) पेशगी पठाइ मगाए खर्च पनि माफ हुन्छ ।

पुस्तक पाइने ठेगाना—

**सुब्बा होमनाथ केदारनाथ,**

हितैषी कम्पनी

बाराणसी १ ( बनारस सिटी । )

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुब्बा होमनाथात्मज केदारनाथजी र पं० रामजी उपाध्यायकृत क्षेपक समेतको

❀ महाकवि पं० भानुभक्ताचार्यकृत ❀




श्रीरामको लङ्का पुग्न चिन्ता, हनुमान द्वारा लङ्का वर्णन

लङ्कापुरी सकल खाक् गरि सैन्य मारी
फेरी समुद्र सहजै तरि आइ नारी
सीताजिको जब सबै समचार् बताया
श्री रामले ति हनुमान्कन खुब सह्राया १
भन्छन्श्रीरघुनाथ् अहो! इहनुमान् ❀लेखुब्ठुलोकाम्गर्‍या
एक्लै गैकन रावणादि बिरको ❀ शेखी इनैले हर्‍या
यत्रो क्षीर समुद्र कूदिकन फेर् ❀ खाक् गर्नु लङ्काकन
को सक्ला सब डर्दछन् इजति छन् ❀ इन्द्रादि धौताजन २
सुग्रिव्का सब मन्त्रिमा इ सरिको❀होला न कोही भया
छोरो रावणको निभाइकन ता ❀ साम्ने उसैका गया
सेवक्ले जति गर्नुपर्छ उति सब् ❀ सेवा इनैले गर्‍या
सीताको समचार् सुनाई मनको❀हाम्रो ठुलो ताप् हर्‍याउ

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

वीर् हुन् ई हनुमान् र कूदिकन् गै ❀ कूदेर आया यहाँ
यो सागर् कसरी तरी म अहिले ❀ पौंचन्छु लङ्का महाँ
गैह्रो क्षीर समुद्र यो छ बिचमा ❀ जल्माअनेक् जन्तु छन्
सो सागर् कसरी तरिन्छ मनिखन् ❀ आत्तिन्छ मेरो त मन् ४
रावणलाइ कसोरि मारुँ कसरी ❀ तारूँ म फौज् यो भनि
चिन्ता हुन्छ कसोरि पाउँछु अहो! ❀ सीता पियारी पनि
राघव्का इ बचन् सुनीकन तहाँ ❀ सुग्रिव् अगाड़ी सरी
गर्छन् बिन्ति हजूरमा रघुपते ! ❀ क्या हुन्छ चिन्ता गरी ५
यो फौज् वानरको ठुलो छ बलियो ❀ लड्न्या छ धूँडा धसी
अग्नीमा पनि पस्नु पर्दछ भन्या ❀ पस्न्याछ कम्मर् कसी
सागर् तर्न उपाय मात्र त हवस् ❀ यो फौज जावस् तरी
रावण्मार्न कठिन् छ क्या सहजमा ❀ मारिन्छ एसै धरी ६
मेरो चित्त महाँ त यो छ रघुनाथ्! ❀ साम्ने हजुर्को परी
लड्न्या बीर् कहिँ छैन कोहि अहिले ❀ सारा तिनै लोक् भरी
हाम्रो निश्चय जीत हुन्याछ बटिया ❀ देखिन्छ लक्षण् पनि
मार्छौं राक्षसलाइ नाथ ! सहजै ❀ साना मुसूना गनी ७
सुग्रिव्का इ कुरा सुनी हुकुम भो ❀ श्री रामजीले तहाँ
जुन् पाउले तरिइन्छ सोहि गरुँला ❀ कस्तो छ लङ्का महाँ
लङ्काको अकबाल् सुनी त पहिले ❀ कस्तो छ तेस्को तखत्
सब् जानीकन पो गया जितियला ❀ यै हो निचार्को बखत् ८
ठाकुर्का इ बचन् सुनेर हनुमान् ❀ ताहाँ अगाड़ी सरी
बाँधी अञ्जलि भक्ति साथ पदमा ❀ शिर्लाई फेरी धरी
गर्छन् बिन्ति जगत्पते ! रघुपते !! ❀ लङ्कापुरी सुन्दरी
देखिन्छे, जाति देख्तछन् ति सबैको ❀ लिन्छे मन सब् हरी ९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्रीकुट पर्वतका उपर् छ सुनको ❀ पर्खाल् छ चारौं तरफ्
थामै छन् मीणाका जडउन् घर महाँ ❀ देखिन्छ तिन्को फरक्
एक् खाना त समुद्र भो अरु तहाँ ❀ अर्को खन्याको पनि
पर्खाल्का छ नाजिक् विशालरुपको ❀ वैरी नआउन् भनि १०

घर पनि सुनकै छन् गल्लि फेर् छन् सुनैका
मणि जडित हुनाले बढ्छ शोभा कुनैका
घुमिघुमिकन हेर्याँ सब् बगैंचा तलाऊ
सतज सित कसैको केहि लाग्दैन दाऊ ११

ढोका छन् चार् शहरका तहिंनिरहरुको फौजठूलोबस्याको
जोताहाँ पर्न जाला उससित लडी खुब् मर्न कम्बर् कस्याको
एक् अर्बुद् पूर्व ढोकातिर अति बलबान् जङ्गि पाले बस्याका
राक्षस् छन् हात्तिघोडा रथहरु खजिती लि खडा भैरह्याका १२

ढोका पीछे यसै रितिसित सब पहरा छन् खडा नित्य ताहाँ
एतीजम्मा छ फौज्सब् भनिकन तखबर् पाइसक्नु छका हाँ
यस्तो मजबूतको फौज् छतपनि उसको ८ बस्तचौथाई पार्याँ
लंका पोलेर सब् खाक् गरिकन सहजै वैरिको शेखि झार्याँ १३

यहिं ढिल किन रुनामित् जाउँ सागर् छ जाहाँ
कछु ढिल तहिं हाला तर्नु पर्या छ ताहाँ
यति बिनति हनूमान्ले गर्याथ्या जसै ता
हुकुम पनि ति सुग्रिवलाइ भैगो तसै ता १४

हे सुग्रीव सखे ! असल् विजयको ❀ ऐल्हे मुहूर्तै पर्यो
यस् साइत महाँ मुहूर्त न चुकी ❀ जस्ले त साइत् गर्यो
त्यस्ले जित्छ अवश्य यै बखतमा ❀ प्रस्थान फौज्ले गरुन्
मेरो दक्षिण नेत्र फर्छ अहिले ❀ लड्नलाइ छन् सधैं खडा रुन् १५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रावणलाइ कुलै समेत् बध गरी ❀ ल्याउन्छ सीता अब
बानरकोजातिफौजझट्अबचलोस् ❀ लागेर बाटो सब
लक्ष्मण् अङ्गदमा चढुन् दुइ जना ❀ चढ्छौं हनुमान् महाँ
सुग्रिवलाइ यती हुकुम् दिइ गर्‍या ❀ प्रस्थान् प्रभूले तहाँ १६
रामसुग्रिवहनुमानमहाँचढिचल्या ❀ लक्ष्मणजि अङ्गद महाँ
बानरकोसबफौज्चल्योपृथिविसब् ❀ छोपेर जाहाँ ताहाँ
चाहींदैन रसद् सबै बिरहरू ❀ खान्छन्तिफल्फुल्फगत्
गर्जन्छन् अति मेघ गर्जन सरी ❀ सब्काँप्नलाग्योजगत् १७
रातदिन्फौंजहिंडी टिकेनाबिचमा ❀ काहीं कतै एक् घरी
बिन्दयाचल्तकनाघिफेरिमलया ❀ चल् नाघि यसै गरी
पौंच्यो क्षीर समुद्रका तिरमहाँ ❀ डेरा प्रभूको पर्‍यो
बानरको सब फौजले खचित भै ❀ साराकिनारा भर्‍यो १८
बानरको सब फौज् तहाँ हुकुमले ❀ तीरमा जसै ता बस्यो
सागर् तर्न उपाय् केहि नहुँदा ❀ मनमा ठुलोताप् पर्‍यो
भन्छन् बीरहरु यो समुद्र कसरी ❀ तर्नै कठिन् भो यहाँ
यसलाई न तरी त जानु कसरी ❀ हींडेर लङ्का महाँ १९
सब्राक्षस्कनमार्दथ्यौंयहिबखत् ❀ सागर् तरी पार् गया
आपुस्मा यति बात् बराबर गरी ❀ जम्मा प्रभूथ्यैं भया
सीताजीकनसम्झिसम्झिरघुनाथ् ❀ ज्ञानै स्वरूपी पनि
लाग्या गर्न बिलाप् अनेक तरहले ❀ सीते!कहाँ छौ भनि२०
रामको नाम फगत लिन्याकन पनि ❀ सब् दुःख ताप् टर्दछन्
आफैं श्री रघुनाथलाई पनि क्या ❀ सन्ताप् कतै पर्दछन्
सच्चितरूपपरिपूर्ण अद्वितियएक ❀ आत्मा स्वरूपी पनी
गर्छन्मानिसमैं बिलाप्पनिअनेक् ❀ [illegible] दुःखी बनी २१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

कुदि कुदि सब लंका पोलि फेर् पुत्र मारी
बहुत बिरहरुको सैन्य सब् ध्वस्त पारी
गरिकन तब भेट्घाट ती हनुमान् फिर्याको
सुनिकन तहिं रावण् भैगयो नूर् गिर्याको २२
उहि बखत महाँ त्यो मन्त्रणा गर्न लाई
सब बिरहरु ताहाँ डाकन जल्दी पठाई
वरिपरि बब राखी मन्त्रिथैं मन्नलाग्यो
कसरि सहज उम्की त्यो हनूमान भाग्यो २३
अब त जसरी मेरो हुन्छ हित् सो चिताऊ
बुझिकन सबले एक् मन्त्रणा लौ बताऊ

रावण लाई सभासद हरूले रामसँग युद्ध गर्नें हौसला बढाउनु

तिमि सबकन नाघी काम सिद्ध्याइ भाग्यो
मकन त हनुमान्का कामले लाज लाग्यो २४
यति हुकुम सुनी सब् धोचियाझ ति जाग्या
अघि सरिसरि बिन्ती शेखिको गर्न लाग्या
किन अधिक हजुरले गर्नु रामदेखि शङ्का
कसरी सहज जित्ला यो अगम् दिव्य लङ्का २५
कति बिनति गरौं धेर् इन्द्रजित् पुत्र जस्को
छ त कसरि त जित्छन् पुग्छ जोर आज कस्को
फगत हजुरको एक् पुत्रले इन्द्र जीत्या
यहि बुझि अरु दिक्पालका समेत् शेखि बीत्या २६
अधिपति 'मय' हुन् सब् दैत्यका सो डरैले
खुरु खुरु यहिं आई छोरि सुम्प्या करैले
अरु अब कहिँ छन् क्यानिर् हजूरै सरीका
सब बिर बशमै छन् ई तिनैलोक् भरीका २७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अलिकति हनुमान्‌ले जो यहाँ बीर मार्‌यो
कुदिकुदि सब लङ्का पोलि फेर् ध्वस्त पार्‌यो
उ त फगत यसैले गर्न के सक्छ मन्दा
चुक भइ गरिहाल्यो फेरिको क्या छ धन्दा २८
हुकुम दिनुहवस् लौ दश् दिशा बीर जाऊन्
जति जति अघि सर्छन् मारि तिन्‌लाइ आऊन्
सकल पृथिविमाका बानरै हुट्टि गर्छौं
सकल हजुरको ताप् एक् छिनैमा त हर्छौं २९

कुंभकर्णले रावणलाई रामको शरण पर्नीको निम्ति संम्झाउनु

एती गर्न गरी सबै ति बिरले ❁ बिन्ती गर्‌याको सुनी
मेरो मत् पनि बिन्ति गर्दछु भनी ❁ आफ्ना मनैले गुनी
बिन्ती गर्दछ कुम्भकर्ण बिरले ❁ हेनाथ्! लियौ के मति
सीतालाइ हरेर भूल् अति गर्‌यौ ❁ कुन् हुन्छ तिम्रो गति ३०
श्री राम्‌चन्द्रजिले अवश्य अघि नै ❁ देख्थ्यात एक्‌बाणाध्धरी
तिम्रो प्राण लिन्या थिया सहजमा ❁ केबाँच्तथ्यौ त्यस्‌घरी
सीता चोरि हर्‌यौर पो तिमि बच्यौ ❁ को टिक्छ साम्नेपरी
त्यस्‌को फल्‌तिमि भोग्दछौ अब यहाँ ❁ मार्छन्‌कुलैसाफ्‌गरी ३१
राम्‌जी हुन्‌प्रभु हुन्‌अनन्त अघि नाथ् ❁ चौधै भुवन्‌का धनी
लक्ष्मी हुन् जगदम्बिका त उनकी ❁ पत्नी इ सीता पनि
सब् राक्षस्‌हरु नाश् गराउन यहाँ ❁ सीता तिमीले हर्‌यौ
साँचा हुन् इ कुरा अवश्य तिमिले ❁ यो नाश्‌कोपथ्‌धर्‌यौ ३२
जुन्‌काम्‌गर्न् उचित्‌थिया न उहि काम् ❁ भूल्‌ले गर्‌यौ तापनि
सब्‌हाम्राभरले गर्‌यौ अधिक बीर् ❁ छन् भाइ छोरा भनि
लड्छौं निश्चय भाइ बन्धु पनि सब् ❁ हामी जती छौं यहाँ
यस्तो यो अदना कुराकन लिई ❁ शोक गर्नपर्ला कहाँ ३३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुन्दर का.४



१ वानरगणले समुद्रमा पुल बाँधेको ।



सीता फिराउने सल्लाह दिंदा रावणले विभीषणलाई निकालेको । २

३ शरणागत विभीषणलाई [illegible] लिएको ।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लंका का १

१ रावणले अटालीमा बसी रामका
सैन्यहरूलाई हेरेको ।



२ रामदूत अंगदको खुट्टा उठाउँदा
रावणको मुकुट खसेको ।

३ रामलक्ष्मण मेघनादको
नागपाशले बाँधिएको ।



४ इन्द्रजितले राम र लक्ष्मणलाई
नागपाशले बाँधदा गरुड आइ मुक्त गरेको ।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यस् कुम्भकर्ण बिरले सब यो भन्याको
श्री रामलाइ परमेश्वर मानियाको
सून्यो र इन्द्रजित भन्छ हुकुम् म पाऊँ
सेना समेत् सहज रामकन मारिआऊँ ३४
यस्तै तहाँ बीरहरू सब बिन्ति पार्थ्या
केवल् गफै गरि मुखै तरवार मार्थ्या
श्री रामभक्त ति बिभीषण ताहिं आई
बिन्ती गर्‍या हित बचन् मनले चिताई ३५

विभीषणको अर्ति सुनी रावणले उनलाई निकाली दिनू

श्री रामजीसित बिरोध् किन हो गर्‍याको
सीताजिलाइ तिमिले किन हो हर्‍याको
श्री रामचन्द्रकन सक्तछ जित्न कस्ले
मार्‍या खर-त्रिशिर-दूषण बीर जस्ले ३६
ठूला भन्नु इ कुम्भकर्ण बिर हुन् ❀ के चल्छ इन्को पनि
शेखी गर्दछ व्यर्थ इन्द्रजीत यो ❀ राम्लाइ जित्छू भनि
शेखी गर्नु जती छ सब् यहिं गरून् ❀ को टिक्छ साम्ने परा
सब् राक्षस्हरु नाश हुन्नन् जब तहाँ ❀ चेत्नन् चुके को घरी ३७
सीताजी ग्रह तुल्य भैकन सबै ❀ खाक् गर्न आँटिन् यहाँ
यो प्राणान्त बखत् भयो भ्रम पनी ❀ चेत् छैन चेत् गो कहाँ
बाच्नाको यदि मन् भया यस घरी ❀ श्री रामजीथैं गई
सीता सुम्पिदिनू तहाँ चरणमा ❀ सोझो र साम्ने भई ३८
श्री रामचन्द्रजि फौज् लिईकन यहाँ ❀ आई न लड्दै गया
आयो आज शरण्पर्‍यो भनि बहुत ❀ गर्नन् प्रभूले दया
चाँडै आज सिताजि सुम्पनु हवस् ❀ सीताजि लङ्का रही
बाँची सक्नु कदापि छैन प्रभुथैं ❀ काहीं शरण्मा गई ३९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हितश्रमृतसरिकोनिभीषराजिको ❀ सून्यो बचन् यो जसै
लिन्थ्योत्योइकुराकहाँश्रधिक मन् ❀ रावरा रिसायो तसै
लाग्यो भन्न रिसाइ श्राज सुन यो ❀ शत्रू सरीको भयो
मेरो शत्रु ति रामचन्द्रसित खुब् ❀ प्रेमनरनयस्कोगयो४०
श्रापन्नोज्ञातिबढ्यो भन्याश्ररुसनै ❀ ज्ञाति गिरोस् योभनि
भन्छन् निश्चय भन्दथ्या उहि छटा ❀ यस्ले जनायो पनि
ऐल्हे मारिदिन्या थियाँ श्ररु भया ❀ भाई भयो क्या गरूँ
राक्षस्का कुलमा श्रधम् यहि भयो ❀ धिक्कार दिन्छू बरू४१
मेरो श्राज नजीकमा रहनको ❀ लायक् तँ छैनस् भनि
धिक्कार्होतँश्रधम्भइस्भनिबहुत ❀ धिक्कार्दियोफेर्पनि
धिक्कार्कोयतिबातसुन्यारातिनले ❀ श्री राममा मन् दिई
श्राकाश् मार्ग गरेरझट् हिंडिगया ❀ चार्मन्त्रिसाथ्मालिई४२
लाग्या फेरि ति भन्नलाइ श्रधिराज्! ❀ हीतै भन्याँ ता पनि
धिक्कार्पोतिमिलेगरयौनबुझिन्छन् ❀ शत्रूसमान्होस्भनि
दाज्यू हौ पितृ तुल्य छौयति सही ❀ ऐल्हे श्रलग् लौ भयाँ
खूशीमै तिमीराज् गरया म त उनै ❀ राम्का शरण्मागयाँ४३
काली हुन् जगदम्बिका भगवती ❀ सीताजिराम् कालहुन्
भू भार् हर्न निमित्त यो छ श्रवतार् ❀ बाँच्न्याछ पापी कउन्
श्रीराम्को मतलब् छ मार्न तब पो ❀ फिर्दैन तिम्रो मति
काल्रूप् श्रीरघुनाथको श्ररू यहाँ ❀ कोबुझ्नसक्छन्गति४४
राक्षस्का कुलको हुन्याछ श्रब नाश् ❀ छोड्छन् प्रभूले कहाँ
तिम्रो नाश् कसरी म देखुँ श्रबलौ ❀ जान्छू प्रभू छन् जहाँ
खुशी मै चिरकाल तक् गर यहाँ ❀ राज् खुब् चिरायुष्भया
एती बिन्ती गरी बिभीषरा तहाँ ❀ ऊडेर रामथ्यैं गया ४५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

चार् मन्त्री सँगली बिभीषण गया❀ श्री रामका पासमा
वाहाँ जान डराइ सन्मुख भई ❀बोल्या ति आकाशमा
हे नाथ्! आज शरण् परयाँ चरणमा❀ आई म सेवक् भनि
उच्चा शब्द गरीगरया बिनीत धेर्❀वृत्तान्त आफ्नो पनि ४६
हे राम्! रावण कुम्भकर्ण बिरको❀ भाई बिभीषण् म हूँ
रावण् आज अधम् भयो हजुरमा❀बिस्तार् कहाँतक् कहूँ
सीता बया न हरयौ फिराउ भनि नाथ्!❀हीतै भन्याथ्याँ पनि
झन् धिक्कार् गरी खड्ग लीकन उठ्यो❀काट्छू तँलाई भनि ४७
यस्तो रावणले गरयो र रघुनाथ्!❀आयाँ शरणमा म ता
संसार पार सहज् उतार्छ जसले ❀ सो छाडि जानू कता
यस्तो बिन्ति सुन्या बिभीषणजिको❀ सुग्रीवजीले जसै
रावण्को छल मैं बुझेर झटपट् ❀बिन्ती गरयायो तसै ४८

बिश्वाश् नमान्नु रघुनाथ् ! इ त दुष्ट पो हुन्
गर्नन् इ औसर परयापछि देहमा खुन्
मर्जी हवस् इ सब पक्रि बिभाइ हालुन्
भाइ त हूँ पनि भन्यो उ छँदैछ मालुम् ४९

बिश्वाश् कत्ति नमानि बक्सनु हवस्❀सब् दुष्ट पो हुन् इ ता
रावण्कै यदि भाइ हो त किन देर्❀ गर्न्या नमारी उ ता
जैल्हे पर्दछ छिद्र उस् बखतमा ❀ मार्नन् दगा इ गरी
मार्नालाइ हुकुम् हवस् सहजमा❀मारिन्छ एसै घरी ५०
मेरो मत् बिनती गरयाँ हजुरको❀इच्छा छ के नाथ्! यहाँ
त्यस्तो सुग्रिवको सुनेर बिनती❀ श्री राम बोल्या तहाँ
हे सुग्रीव सखे! म आँटु त सबै ❀लोक् १४ नस्त एल्हे गरी
फेर् सृष्टी क्षणमा गरूँ सहजमा❀लाग्दैन एक् क्षण्भरी ५१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

तस्मात् भक्त बुझेर निर्भय दियाँ ❀ आउन् ति ल्याऊ यहाँ
त्यै माथी पनि शत्रुदल् यदि भया ❀ माथ्यौं म छोड्थ्या कहाँ
शत्रूका तिरका इ हुन् तर पनी ❀ आया शरणमा यहाँ
तस्मात् कारण राखनुपर्छ सँगमा ❀ इनलाई छोड्छू कहाँ ५२

एकै बखत पनि शरण् भनि जो मलाई
समझेर पर्दछ शरण् त्यस दीनलाई
लिन्छू शरण् यदि हवस् रिपु नै त पैल्हे
मेरो छ यो ब्रत कसोरि म छोड्छु ऐल्हे ५३

श्रीरामचन्द्रजिका हुकुम् यति हुँदा ❀ ल्याई बिभीषण् कन
पौंचाया रघुनाथका हजुरमा ❀ सुग्रीवले तत्क्षण
श्री रामचन्द्रजिको बिभीषणजिले ❀ पाया र दर्शन् तहाँ
खुब् साष्टाङ्गगरी प्रणाम् पनि गर्‍या ❀ पत्रेर पृथ्वी महाँ ५४

दर्शन् श्री रघुनाथको जब मिल्यो ❀ खूशी बिभीषण भई
जो जो पीर थियो अगाडि मनमा ❀ सारा तुरुन्तै गई
सर्वात्मा रघुनाथको स्तुति गर्‍या ❀ ईश्वर् इनै हुन् भनि
तिन्को त्यो स्तुतिले तहाँ रघुपती ❀ खूशि हुनूभो पनि ५५

क्या माग्छौ वर मागदिन्छु म भनी ❀ हूकुम् भयाथ्यो जसै
भक्ती मात्र थियो तहाँ मन महाँ ❀ त्यो भक्ति माग्या तसै
हे नाथ्! भक्ति रहोस् सदा हजुरमा ❀ कैल्हे नबिग्रोस् मति
झूटा मान्छु म भक्तिदेखि अरू चीज् ❀ यो सृष्टिमा छन् जति ५६

तस्मात् कर्म बिनाश गर्नकन यो ❀ ध्यान् मात्र तिम्रो हवस्
एतीले म कृतार्थ छू विषयसुख् ❀ सम्पूर्ण दूरै रहोस्
केवल् भक्ति मिल्या प्रसन्न छु भनी ❀ बिन्ती गर्‍याथ्या जसै
होला लौ तिमिलाइ भक्तिभनि फेर् ❀ दीनूभयो वर् तसै ५७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ऐल्हे तिमिले गर्यौ स्तुति जउन् ❀ जस्लै यती पाठ् गरोस्
त्यस्लाई पनि बर् म दिन्छु सहजै ❀ संसारसागर् तरोस्
एती भन्न विभीषणसौसित हुकुम् ❀ भो फेरि लङ्कामहाँ
राज् दिन्छू अहिले भनीकन लहड् ❀ आयो र मन्मा तहाँ ५८
भाई लक्ष्मणलाइ मर्जि पनि भो ❀ हे भाई ! लङ्का महाँ
राज् गर्नन् पछि ई म दिन्छू अभिषेक् ❀ इन्लाइ ऐल्हे यहाँ
ल्याऊ जल् तिमी जाइ सागर महाँ ❀ भन्न्या हुकम् भो जसै
दौडी सागरमा गई क्षण महाँ ❀ ल्याईदिया जल् तसै ५९
राजा भै तिमिले रह्या अब उपर् ❀ लङ्कापुरीको भनि
श्री राम्चन्द्रजिले विभीषण उपर् ❀ दीया अभीषेक् पनि
लङ्काका अधिराज् विभीषण हुँदा ❀ सुग्रिव्हरू खुश् भया
चाँडो सुग्रिवजी विभीषणजिका ❀ साम्नेनजीक् भागया ६०
खूशी भैकन अङ्कमाल् पनि गरी ❀ सुग्रीव भन्छन् तहाँ
सेवक् हौं सब रामका तर तिमी ❀ छौ मुख्य सब्मा यहाँ
यस् रावणकन मार्नलाई अधिराज्! ❀ साहाय देऊ भनि
सुग्रिव्ले यति बात् गर्या जब तहाँ ❀ बोल्या विभीषण् पनि ६१
हे सुग्रिव् ! प्रभुमा सहाय दिनको ❀ के शक्ति मेरो यहाँ
तिन्लोक्का अधिनाथ् परात्पर रघुनाथ् ❀ आफैं खडा छन् जहाँ
दास् हूँ श्री रघुनाथको म गरुँला ❀ सब् बात भर्सक् गरी
यस्ता बातचित गर्दथ्या तिनिहरू ❀ ताहाँ त तेसै घरी ६२

रावणको शुकद्वारा सुग्रीव लाई चेतावनी र रामद्वारा त्यो बाँधिनू

रावण्को शुकनाम दूत नभमा ❀ आएर साम्ने भई
ताहाँ जान त डर् भयो र डरले ❀ आकाश बिच्मा रही
लाग्यो सुग्रिवलाइ भन्न कपिराज्! ❀ सुग्रिव् ! खराबी भयो
रामलक्ष्मणसित को मिलाप् भनि सत को ❀ वैरी हुन्या भन् गयो ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भाई हौ मितका जनाउनु असल् ❀ सम्झौं तँ लौ जा भनि
हुकुम् रावणको भयो र अहिले ❀ याहाँ म आयाँ पनि
तस्मात् रावणको हुकुम सुना तिमी ❀ क्या काम आयौ यहाँ
सब् लश्कर् लिइ फर्किजाउ तिमिले ❀ फेर् राजधानी महाँ ६४
लङ्का यो जिति सक्नु छैन अहिले ❀ इन्द्रादिले ता पनि
बानर् पो तिमि हौ त के गरुँ कुरा ❀ यो स्थान् जितौंला भनि
सीताजी अहिले हर्याँ त मइँले ❀ श्रीरामको पो हर्याँ
भाई हौ मितका विरोध् न गर यो ❀ तिम्रो विराम् क्या गर्याँ ६५
मेरै भाइ समान हौ भन तिमी ❀ हित् जानि अर्ती दियाँ
जो गर्छौ गर फर्कि जाउ म त हित् ❀ गर्दैछु गर्दै थियाँ
यस्तो रावणको हुकुम् छ कपिराज्! ❀ एती भनेथ्यो जसै
पक्र्या बानरले र खैंचिकन खुब् ❀ हान्या मुठीले तसै ६६
बानरले बहुतै फजित् जब गर्या ❀ हेराम्! मर्याँलौ भनि
श्री रामचन्द्र सुनुन् भनेर शुकले ❀ साह्रै करायो पनि
दूत हूँ मार्न उचीत होइन भनी ❀ बिन्ती गर्याथ्यो जसै
कुट्नू छैन भनी हुकुम् हुन गयो ❀ सूनेर छोड्या तसै ६७
बानर्देखि छुट्यो जसै झट उडी ❀ आकाश बीचमा गयो
क्या उत्तर दिनुहुन्छ पाउँ म जनाफ् ❀ जान्छू म भन्दो भयो
त्यस्को सुग्रिवले जनाफ् तहिं दिया ❀ मितदाज्यू होस् ता पनि
बाली झैं गरि मारुँला अधम होस् ❀ भन्दीन दाज्यू भनि ६८
श्री रामचन्द्रजिको सिता हरि कहाँ ❀ उम्केर जालास् उसै
यो बात् रावणथ्यैं भनेस् भनि कह्या ❀ सुग्रीवजीले तसै
यस्तो सुग्रिवले जनाफ् जब दिया ❀ रामको हुकुम् भो तहाँ
पक्रुन् बानरले नछोड अहिले ❀ क्यै दिन् रहोस् यो यहाँ ६९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

श्री रामचन्द्रजिको हुकुम् यति हुँदा ❀ त्यो शूक बन्धन् पर्‍यो
त्यस् मन्दा अघिप्राइ शार्दुल फिरी ❀ बिस्तार् उसैले गर्‍यो
बिस्तार् शार्दुलदेखि राम बलको ❀ सून्यो र रावण् पनि
चिन्तामा परिगैगयो अति ठुलो ❀ आयाछ लश्कर् भनि ७०

सागर प्रति रामको क्रोध, समुद्रले क्षमा माग्नु र सेतु बन्धन ।

त्यै बीच्मा रघुनाथ्‌रिसाउनुभयो ❀ आएन सागर् भनि
लाल्‌लाल् नेत्र गराइ लक्ष्मणजिको ❀ साम्ने हुकुम् भो पनि
हे भाई ! तिमी हामिलाइ यसले ❀ सामान्यमानिस्‌गनी
भेटै आज गरेन हेर अहिले ❀ यस्‌कोतमाशापनि ७१
सागर् शोषण गर्नलाई धनुली ❀ बाण्‌खिंच्‌नुभो फेर् जसै
काँपिन् भूमिपनी भयंकर स्वरूप् ❀ रामलाइ देखिन् तसै
चार्‌कोश्‌तक्‌त समुद्रको जल पुग्यो ❀ दश्‌दिक् खँद्‌यारो भया
जो जन्तू जलमा थिया ति पनि ता ❀ सब् खल्‌बलाई गया ७२
त्यस्तो देखिइराइ सागर तहाँ ❀ सुन्दर् स्वरूप् एक् धरी
भेटी खातिरलाइ रत्नहरू बेस् ❀ लीएर झट्‌पट् गरी
श्री रामचन्द्रजीका गया शरणमा ❀ भेटी अगाडी धरी
पाऊमा परि दण्डवत् पनिगर्‍या ❀ सब् शोखिशानदूर् गरी ७३
हात्‌जोरि स्तुतिबिन्तिधेर् जब गर्‍या ❀ हे नाथ् ! म हूँ जड यसै
सीतानाथ् प्रभुलाइ जानु कसरी ❀ क्यै चेत् नपाई उसै
चेत् ऐल्हे प्रभुले दिंदा हजुरका ❀ आई शरण्‌मा पर्‍याँ
बाटो दिन्छु दया रहोस् मछु अनाथ् ❀ माफ् पाऊँ बिन्ति गर्‍याँ ७४
सागर्‌का ति बचन् सुनी हुकुम भो ❀ साँचो भन्यौ ता पनि
बाँणाकोस्थान खटाउनाकन पर्‍यो ❀ यस्‌लाइ लौहान् भनि
मेरो बाण् त अवश्य काम नगरी ❀ फिर्दैन कैल्हे यसै
ज्यान् राख्छौ त अवश्य देउ बदला ❀ टर्दैन यो बाण् कसै ७५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

श्रीरामचन्द्रजिको हुकुम् यति सुनी ❀ हात् जोरि बिन्ती गर्‍या
पापी छन् द्रुमकल्पमा आहिर हुन् ❀ उत्तर् दिशामा पर्‍या
ठाकुर्‌का यहिबाँणाले जाति ति छन् ❀ पापी सबै नाश् गरोस्
यस्‌काम्‌लेमअनाथ्‌गरिन्नहजुरका ❀ दास्‌कोसबैताप्‌हरोस्
यति बिनति गर्‍याको सूनि खुब् हर्ष मानी
अभय पनि दिनू भो तोहि बाण् जल्दि हानी
रिसासित गइ बाण्‌ले पापीको नाश् गराई
अनि फिरिकन ठोकामा पर्‍यो शीघ्रआई ७७
त्यै बीच्‌मा ति समुद्रले चरणमा ❀ पश्रेर बिन्ती गर्‍या
कीर्ती खुब् रहन्याछ सेतु बाँलियो ❀ हालेर लश्कर् तर्‍या
सेतू बाँध्‌न् महाँसमर्थ नल छन् ❀ उन्‌ले त बर्दान् पनि
पायाको छ इ विश्वकर्मसुत हुन् ❀ बाँधुन् उ सेतू भनि ७८
एति बिन्ती गरेर पाउ परि फेर् ❀ सागर् अदृश्यै भया
सागर्‌को बिनती सुनी नलपनी ❀ राम्‌का हजुर्‌मा गया
विश्वैकर्म र अग्निका क्रमसँगै ❀ नल्‌नील पुत्रै थिया
एक्‌दिन् क्वैं ऋषिका समुद्रतटका ❀ आश्रम् विषे ती गया ७९
बस्थ्या ताँही दुई जना खुशिभई ❀ दाज्यू र भाई सरी
प्रेम् गर्थ्या ऋषिहेरू ती दुइ कनै ❀ पुत्रै समान्‌को गरी
बाँदर् भै उहि माथि पुल् पुलिइ तो ❀ फेर् बाल्य चाञ्चल्यले
शालिग्राम शिला लगी उदधिमा ❀ हाल्थ्या सदा खेलले ८०
सोही कारण भन्दछन् ऋषिहरू ❀ साह्रै रिसाई तहाँ
छोयाको तिमिले शिला त नडुबोस् ❀ उत्रेर पानी महाँ
डुब्न्या छैन समुद्रमा पनि शिला ❀ भन्न्या परी श्राप् उही
सोही कारण सेतु बाँध्न तिनमा ❀ औसर् मिलेथ्यो तहीं ८१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हूकुम् भो नललाइ सेतु तिमिले ❀ चौडो बनाऊ भनि
लश्कर् साथ लिएर जल्दि नलले ❀ सेतू बनाया पनि ८२

खुशि भइ नलले सब् बीरको तेज् जगाई
बीरधीर जीत छन् सब् बृक्ष पर्वत मगाई
आधि सरिकन सेतू बाँद नलाग्या जसै ता
शिव तहिं रघुनाथ्ले एक थाप्या तसै ता ८३

रामेश्वर्भनिनाम्चलोस्भुवनउपर् ❀ संकल्प याहाँ लिई
गंगाजल्लिनकाशिगैकनउजल् ❀ ल्याई नुहाई दिई
फ्याँक्लाकामरुफेर्समुद्रजलमा ❀ जस्ले बगोस् यो भनि
त्योलन् मुक्तहनस् भनेर रघुनाथ् ❀ कोयो हुकुम् भो पनि ८४

बाँद्या सेतू छपन्न कोश पहिले ❀ दोश्रा दिनैमा असी
कोश्चौरासीसक्यातृतीयदिनमा ❀ कम्बर् सबैले कसी
कोश् अठ्ठासि सक्या चतुर्थदिनमा ❀ बाँकी बयान्नब्ब कोश्
पाँचौदीन महाँसक्या नजरमो ❀ निस्केन एक् काहीं दोष् ८५

श्रीरामको लंकायात्रा र अंगदरावण संवाद

तेही मार्ग गरेर फौज् सब तर्‍यो ❀ ढाक्या त्रिकुट् पर्वतै
टापू ढाकिदियो रहेन बिचमा ❀ खाली भन्याको कतै
भाईलाई चढाई अङ्गद महाँ ❀ आफू हनुमान् महाँ
चढ्नू भो रघुनाथ् र जानु पनि भो ❀ थीयो जगाऊँच् जहाँ ८६

(छपक) सुब्बा होमनाथात्मज केदारनाथजी कृत रावणअङ्गदसम्वाद

आज्ञा भो रघुनाथको उहि बखत् ❀ अङ्गद्जिलाई पनि
रावण्लाइ तिमी गएर अहिले ❀ सम्झाइ आऊ भनि
त्यस्को जो छ बिचार त्यो सब कुरा ❀ जानी अगाड़ी महाँ
सोही माफिक काम गर्नुछ उचित् ❀ हामीहरुले यहाँ ८७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आज्ञा त्यसरितको तहाँ हुनगया ❀ श्री रामजीको जसै
पाऊमा परि झट् बिदा भइगया ❀ बालीकुमार् ती तसै
रावण्को डर क्यै नराखी मनमा ❀ जाँदा ति वीर् त्यो घरी
साम्ने राक्षस पर्दथ्या जति ति सब ❀ मार्थ्या सहज्मै धरी ८८
लङ्का भस्म गराउन्या अघि यहाँ ❀ यै बानरै हो भनि
लाग्या भाग्न डराइ राक्षस सबै ❀ छाडेर पालो पनि
अङ्गद् द्वारमहाँ पुग्या त्यसरि गै ❀ लङ्कापुरीमा जसै
त्यो द्वार् बन्द थियो र लात ऊसमा ❀ हान्या बलैले तसै ८९
त्यो ढोका खसिगो र अङ्गद बढी ❀ लङ्कापुरीमा गया
खेल्थ्यो रावणपुत्र एक पहिले ❀ त्यसलाइ भेट्ता भया
बातै बात महाँ तहाँ ति दुइको ❀ खुब् क्रोध बढ्नै गयो
साह्रै वीर तरुण् हुँदा ति दुइ जन् ❀ युद्धै भयंकर् भयो ९१
क्यै बेर युद्ध गरी ति अङ्गदजिले ❀ त्यो राक्षसैको तहाँ
गोडा पक्रि तहाँ घुमाइकन खुब् ❀ पक्र्या जमीनै महाँ
त्यसमै ज्यान गयो र तेस् असुरको ❀ राक्षस् तहाँ जो थिया
भागी त्यस् स्थलदेखि ज्यान् ति सबले ❀ आफ्नू बचाई लिया ९१
बाटामा अरू भिल्दथ्या असुर जो ❀ रावण् छ ताहीं भनि
दिन्थ्या मार्ग बताइ सब् ति डरले ❀ सोद्धै न सोध्या पनि
यस् रितले जब अङ्गदै पुगिगया ❀ रावण् रहन्थ्यो जहाँ
खाली आसनदेखि एक् तहिं नगीच् ❀ वस्ता भया त्यसमहाँ ९२
बीस हात् दश् मुख देह पर्वत समान् ❀ शस्त्रास्त्र हात्मा धरी
मन्त्रीवर्ग लिएर रावण तहाँ ❀ बस्थ्यो महेन्द्रै सरी
देखी अङ्गदलाइ ढीट बहुतै ❀ मन्त्री नगीच् जो थियो
को हो बानर सोध् भनेर रिसले ❀ त्यसलाइ आज्ञा दियो ९३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मन्त्रीले नसुध्याउँदै ति सब बात् ❀ गर्जेर अङ्गद् तहाँ
लाग्या रावणलाइ भन्न इ कुरा ❀ सब्का अगाडी महाँ
हे राक्षस्पति ! मित्र हौ तिमी यहाँ ❀ मेरा पिताका भनि
क्यै हित् बात भनूँ भनेर अहिले ❀ आईगयाँ मै पनि ९४
नाती हौ तिमी श्रीपुलस्त्य ऋषिका ❀ भारी तपस्या गर्‍यौ
इन्द्रैलाइ समेत् जितेर तिमिले ❀ सातो अमर्को हर्‍यौ
त्यै कारण् अभिमान् गरेर अथवा ❀ मोहै हुनाले गरी
ल्यायौ व्यर्थ तिनै भुवन्कि जननी ❀ सीताजिलाई हरी ९५
जो भन्छू हितको कुरा उहि गर्‍या ❀ छोडी विरोध् मन्महाँ
तिम्रो सब् अपराध माफ् गरिदिनन् ❀ श्री रामजीले यहाँ
सीताजीकन सुम्पि ती प्रभुजिका ❀ झट्पट् शरणमा पर
माफ् पाऊँ अपराध् गर्‍याँ भनि तिमी ❀ हात्जोरि बिन्ती गर ९६

त्यस्तो कुरा सुनि ति अङ्गद्लाइ हेरी
लाग्यो रिसाइकन रावण भन्न फेरी
को होस् यसोरि बढि बात् गरन्या तँ ऐल्हे
तेरा पितासित मित्यारि गर्‍या म कैल्हे ९७

त्यस्तो कुरा सुनि ति अङ्गद ताहिं फेरि
लाग्या जवाफ दिन रावलाइ हेरी
श्री रामका चरणमा मन आफ्नु धर्न्या
बालिकुमार म हूँ अङ्गद नाम गर्न्या ९८

बालीको जब नाम त्यो सुनिलियो ❀ संकोच् हुनाले गरी
लाग्यो रावण भन्न अङ्गद तरफ् ❀ हेरेर सोही घरी
बाली बानरलाइ जान्दछु म खुब् ❀ त्यस्कै भया पुत्र तँ
जन्मीछस् कुलघातकै हुनगई ❀ भन्न्या विचार् गर्छु म ९९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

गर्भैपात् नभएर जन्म लिइछस् ❀ तँले त व्यर्थै महाँ
सेवक् हूँ भनि भन्दछस् तँ कसरी ❀ राम् जङ्गलीको यहाँ
तैँले सेवक तेसको हुनुपर्‍यो ❀ कारण् यहाँ कुन् भई
वालीको त कुशल् बता अब सबै ❀ जस्तो छ त्यो सब् कही १००

त्यस्तो रावणको कुरा सुनिलिया ❀ ती अङ्गदैले जसै
लाग्या त्यस्कन ती जवाफ् दिन तहाँ ❀ ठट्टा गरी धेर् तसै
दश् दिन्मा तँ स्वयम् गएर अब लौ ❀ वाली रहन्छन् जहाँ
सोध्यास् आफ्नु ति मित्रको कुशल सब् ❀ तिन्का सँगैमा तहाँ १

जुन् हालत् हुनजान्छ राघवजिका ❀ सङ्गमा विरोधै गरी
भन्याछन् ति कुरा पनि तँ सित लौ ❀ तिन्ले सबै त्यो घरी
हे पापी ! रघुनाथका सँग महाँ ❀ जस्ले विरोध् गर्दछन्
तिन्को हुन्छ कुशल् कहाँ सकल ती ❀ त्यै रीतले मर्दछन् २

ब्रह्माजी शिवजी र सब् ऋषिहरू ❀ जुन् रामजीको यहाँ
गर्छन् भक्ति ठुलो तिनै प्रभुजिको ❀ वस्ता त सेवा महाँ
कुन् रीत्ले कुलघातकै हुन्गयाँ ❀ तेरा समान् दुष्ट जन्
जो छन् ती यसरी अघी सरिसरी ❀ दुर्वाच्य वात् बोल्दछन् ३

त्यस्तो अङ्गदको कुरा सुनिलियो ❀ त्यो रावणैले जसै
लाग्यो क्रोध् गरि भन्न लाइ इ कुरा ❀ तिन्का सँगैमा तसै
हे नीच् । रीति छ मार्नलाई नहुन्या ❀ कवै दूतलाई भनि
राख्छू आज दया तँलाइ नहिं ता ❀ मार्थ्यां अवश्यै पनि ४

यस्तो रावणका कुरा जब सुन्या ❀ ती अङ्गदैले तहाँ
लाग्या गर्न जवाफ यस्तरहको ❀ फेरी उसै बीचमहाँ
ठीक् हो नीति ठुलो बुझेर तइँले ❀ छल्ले परस्त्री हरिस्
त्यस्तै नीति बुझीलिने भइ दया ❀ मेरा उपर्मा गरिस ५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

वैन्हीको अघि नाक कान उसले ❀ काटी दियाथ्या यहाँ
गर्छस लक्ष्मणका उपर् पनि दया ❀ धर्मै बुझी मन्महाँ
त्यस्तो धर्म र शीलता छ जसको ❀ प्रख्यात् तिनै लोक् भरी
दर्शन् आज मिल्यो मलाइ उसको ❀ भाग्यै हुनाले गरी ६

यस्तो छेड सुनीलिएर रिसले ❀ रावण् तहाँ चूर् भयो
हेरी अङ्गद तर्फ सामु सबका ❀ फेर् भन्न लागीगयो
कैलाश् पर्वत तक् उडाउन सक्या ❀ मैले बलैले गरी
कस्ले सक्तछ जित्न लौ मकन ता ❀ रणगा अगाडी सरी ७

ती राम लक्ष्मण दुवै नर जङ्गली हुन्
हुन् शिल्पकार नल नील दुवै ति छन् जुन्
ती जाम्बवान् हुनगया अब धेर बूढा
सुग्रीव् विभीषण दुवै पनि हुन् भगूवा ८

सक्तैन क्वै मसित लड्न तहाँ जती छन्
आया यहाँ ति सब मर्न हुनै गई मन्
त्यै एक बानर फगत् बलवान् छ ताहाँ
जस्ले गर्‍यो उधुम क्यै अघि आइ याहाँ ९

लाग्या अङ्गद भन्नलाइ इ कुरा ❀ फेरी उसै बीच्महाँ
हे रावण् ! तइँले बयान् गरिलिइस् ❀ जुन् बानरैको यहाँ
सुग्रीव्को अति तुच्छ सेवक उ हो ❀ बाँध्या असुर्ले भनि
किष्किन्धा पुरि फेर् ठुलो शरम भै ❀ फर्केन सोही पनि १०

त्यसतो निर्वल शक्तिले रहितको ❀ क्वै छैन बानर् अरू
सक्छन् मार्न सबै असुर्कन कही ❀ एक्एक् ति बानरहरू
त्यसतो अङ्गदको कुरा जब सुन्यो ❀ हाँसेर ठट्टा गरी
फेरी रावण भन्नलाइ इ कुरा ❀ लागीगयो त्यै घरी ११

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
हेनीच् ! बानर होस् तँ धन्य सबहुन् ❀ बानरहरू छन् जति
नाच्नू कुद्नु गरी अनेक् तरहले ❀ शर्मै नराखी रति
खुश् गर्छन् जनलाइ स्वामिहरूको ❀ हित् गर्न खातिर् महाँ
तैले भन्नु सबै इ बातहरू हुन् ❀ तेस्तै प्रकार्का यहाँ १२
त्यस्तो रावणको कुरा जब सुन्या ❀ यस्ले हियायो भनि
लाग्या क्रोध गरेर भन्न इ कुरा ❀ फेर् अङ्गदैले पनि
हे रावण् ! सुनिले म गर्दछु बयान् ❀ तीन् रावणै यो यहाँ
कुन्होस् तीन् उनमा नढाँटि तँ भनेस् ❀ मेरा अगाडी महाँ १३
यौटा रावण् बलीका सँग लडन भनी गो रसातल् छ जाहाँ
पक्रथा बालक्हरूले उसकन बिचमै खेलका निम्ति ताहाँ
देख्या राजा बलीले गइकन जब त्यो छोड् दिया तेसलाई
त्यो रावण् फर्कि गैगो उहिधरि घरमा ज्यान आफ्नू बचाई १४
अर्को रावण् थियो जो लडन भनि र गो कार्तवीर्यैजिका सङ्
त्यस्लाई पक्रि बाँध्या बलसित उनले बर्ष धरी तक् गरी जङ्
भ्यालखान्मा राखि क्यैदिन् उसकन उनले आफ्नू कैदी गराया
नाती जानी पुलस्त्य ऋषि गइकन फेर् तेसलाई छुटाया १५
बालीका साथ अर्को लडन भनि गयो रावणै जौन याहाँ
तीन्लोक् तिन्ले घुमाया उसकन बलले च्यापि ली काखिमाहाँ
रावण् नामका भयानन् अझतक अरु क्वै तीन तो छोडि कैल्हे !
कुन् रावण् होस् ति तिन्मा मकन सब बता बात खोलेर ऐल्हे १६
अङ्गद्को ति कुरा सुनेर रिसले ❀ दाँत् कट्कटाई अति
लाग्यो भन्न पनि तहाँ इ सब बात् ❀ त्यो राक्षसैको पति
सोही रावण जान् मलाइ जसले ❀ तीन्लोक् बशैमा गर्‍यो
दिक्पालहलाइ सहज् जितेर जसले ❀ सातो दि सबको हर्‍यो १७
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यो हो राम मनुष्य फेर् म उसको ❀ कुन् डर् यहाँ मान्दछू
भालू बानरहेरु सब् त भुसुने ❀ माफिक् भनी ठान्दछू
तस्मात् बक्बकधेर् नगर् तँ पनि फेर् ❀ बालिस् भन्या क्यै यहाँ
मारी दिन्छु तँलाइ कत्तल गरी ❀ मैले यसैबीच् महाँ १८
पैल्हे मारि तँलाइ लक्ष्मण सहित् ❀ त्यो रामको बध् गरी
मार्न्याछू सब ऋक्ष बानर हरू ❀ जो छन् इ पृथ्वी भरी
यस्ता रावणको कुरा सुनिलिया ❀ ती अङ्गदले जसै
लाग्या लात बजार्नलाइ रिसले ❀ पृथ्वी तलैमा तसै १९
लागिन् डग्मग गर्न भूमि बहुतै ❀ सोही दमक्ले गरी
रावण्को सब गिर्न गो मुकुट फेर् ❀ ताहीं जमीन्मा झरी
पक्र्यो रावणले मुकुट्हरु अनेक् ❀ आफ्ना भर्न्याका तहाँ
फ्याँक्या अङ्गदले मुकुट्हरु ति क्यै ❀ आफ्ना तरफ् फौज्महाँ २०
त्यो हाल् देखि लिएर रावण तहाँ ❀ साह्रै मलीन् भ गयो
सौचान् भैकन आफ्नु आसन उपर् ❀ चुपचाप लागी रह्यो
तेजोबध् गरिदिन्छु खुब् म अहिले ❀ यस् रावणैको भनि
हेरी रावण तर्फ अङ्गदजिले ❀ भन्दाभया यो पनि २१
हे रावण् ! जति छन् इ राक्षसहरू ❀ तेरा अगाडी महाँ
मेरो एक चरण उठाइ त लिउन् ❀ आएर एक् एक् यहाँ
सोही एक चरण् उठाउन सक्या ❀ त्यै हार मानी लिई
फर्कन्छौं सब हामि बानरहरू ❀ यो युद्ध छोडीदिई २२
रावण्ले खुशि भै ति अङ्गदजिको ❀ त्यो बात मानीलियो
तिन्को त्यो चरणै उठाउन तहाँ ❀ सब्लाइ आज्ञा दियो
अङ्गद्को चरणै उठाउन भनी ❀ क्रम्ले ति राक्षस् गया
सारा शक्ति लगाउँदा नसकि ती ❀ अत्यन्त लज्जित् भया २३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आफैं रावण फेर् उठाउन गया ❀ तिन्का चरण् त्यो जसै
लाग्या रावणलाइ भन्न इ कुरा ❀ हाँसेर अङ्गद तसै
मेरो पक्रि चरण् हुँदैन अहिले ❀ उद्धार तेरो कुनै
श्री रामको तइँले चरण् धरिलिया ❀ उद्धार गर्नन् उनै २४
अङ्गदका ति कुरा जसै सुनि लियो ❀ अत्यन्त लज्जित् भई
फर्की रावण त्यो बस्यो उस बखत् ❀ सिंहासनैमा गई
फर्की अङ्गदजी पनी उहि बखत् ❀ आफ्ना फउज्मा गया
लङ्कामा जति बात भो सकल त्यो ❀ विस्तार गर्दा भया २५

श्रीरामको लंका दर्शन शुकपूर्व वृत्तान्त

ताहीं राज् भइ त्यो विचित्र नगरी ❀ रामले नजर् भो जसै
त्योरावण् कन कौशिमाभइ तमाश् ❀ हेर्थ्यौं नजर् गो तसै
त्यै बीच्मा शुकलाइ छोडि दिनुभो ❀ दौडेर त्यो शुक् गयो
रावण्सीत तुरन्त गैकन सबै ❀ विस्तार गर्दो भयो २६
पैल्हे हे अधिराज् ! गयाँ हजुरको ❀ हूकुम् हुनाले तहाँ
बाँधी वानरले पर्याँ सकसमा ❀ आऊँ कसोरी यहाँ
ऐल्हे पो रघुनाथको हुकूमले ❀ छोड़ी दिया जा भनि
बाँच्याँ बल्ल भनेर हर्षसित खुब् ❀ भागेर आयाँ पनि २७
आयो फौज् रघुनाथको अति ठुलो ❀ याहीं समुद्रै तरी
जीती सक्नु कठिन् हुन्याछ बलले ❀ ऐल्हे लडाइँ गरी
सीताजी लगि रामका चरणमा ❀ की आज पर्नुहवस्
लड्नै मन्छ भन्या तुरुन्त अब लौ ❀ संग्राम गर्नूहवस् २८
रामकोएक्समचार्मभन्दछुहरिस् ❀ सीता कउन् मन् लिई
संग्राम् गर्न अगाडि सर् बखत भो ❀ सामने मुहूडा दिई
भोली ध्वस्त गराउँछू अघि खबर् ❀ दीयाँ उचित् हो भनि
हाँक् दिन्छू अब हेर छोड्दिन यसै ❀ मैले नमारी पनि २९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

देरुनूभो रघुनाथले र झट बाण् ❀ छोडी दिनुभो जसै
त्यस्बाणलेदशछत्रदशमुकुटसब् ❀ काटी खसाल्यो तसै
आफ्नाछत्ररदशमुकुटजब गिर्‌यो ❀ लाजमानीरावणपनि
ओर्ली जल्दि अटालि देखि त गयो ❀ हान्नन् इ फेरी भनि ४२
दर्बार् भित्र पसि हुकुम् पनि दियो ❀ लौ लड्‌न जाऊ भनि
निस्कयालड्‌नभनीप्रहस्तहरूवीर् ❀ छाडि स्वास्थल् पनि
गैँडा ऊँट गधा र सिंहहरुमा ❀ वीर् वीर् सवारी भया
नाना शस्त्र र अस्त्र लीकन तहाँ ❀ सब्लड्‌नलाई गया ४३
चार्‌ढोकातिरबाटनिस्ककनफौज् ❀ साम्नेभयाथ्याजसै
बानर्‌ले नजिकै गई कति जना ❀ घेरीलियो झट् तसै
रावणकोसबफौज निस्कन तहाँ ❀ पाएन ठाउँ पनि
गर्जन्छन् सब वीर बानरहरु ❀ राम्चन्द्रजित्छन्भनि ४४
यस्तैरितिसितहान्नमार्नपनिसब् ❀ लाग्या ति बानर्‌हरु
राक्षस्‌को पनि फौज् हटेन डरले ❀ प्राणछोड्‌न लाग्यो बरु
संग्राम् यस् रितले जसै हुनगयो ❀ ताहीं ति बानर् भन्या
श्री राम्‌को करुणाकटाक्ष हुनगै ❀ अत्यन्त योद्धा बन्या ४५
राक्षस्तर्फ भन्या घट्यो बल सबै ❀ ठूला ठुला वीर् मर्‌या
मार्‌या बानरले ति राक्षस सबै ❀ चौथाइ बाँकी गर्‌या
आफ्नाफौज्सबनष्टदेखिकनफेर् ❀ साह्रै लडाका शुरो
आयो इन्द्रजितै म लड्‌दछु भनी ❀ सर्वास्त्रमाको पुरो ४६
ब्रह्मैपाशकन छोडि त्यस् असुरले ❀ सब्फौजको नाशगर्‌यो
श्री राम्‌लेपनी ब्रह्मपाश् अतिठुलो ❀ जानेर मान्नै पर्‌यो
एकछिन् चुप्रहनू भयो र रघुनाथ् ❀ फेरी तयारी भई
एल्हे मार्दछु मेघनादकन भनी ❀ साम्ने उसैका गई ४७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
माग्नूभो धनु देउ लक्ष्मण भनी ❀ श्री रामजीले जसै
मार्छन्की भनि मेघनाद डरले ❀ फर्केर भाग्यो तसै
भाग्दैमा प्रभुजी मुसुक्क मनले ❀ हाँसेर भन्छन् स्रनि
यो बच्चापनि जोरिखोज्छ भकनै ❀ सम्भन्छ कच्चाभनि ४८
पृथिवितल गिर्याका बीर् बचाउनलाई
हुकुम प्रभुजीको भो बीर् हनूमानलाई
ढिल नगर हनूमान् क्षीर सागर् त जाउ
तिहिं छ अगम पर्वत् द्रोण लीएर स्राउ ४९
टिपि पिंधिकन रुबाई औषधी फौज् बचाउ
यति गरि शुभ कीर्ति दश् दिशामा चलाउ
हुकुम सुनि तुरुन्तै द्रोण लीएर स्राया
पृथिवितल गिर्याका बीरलाई बचाया ५०
यति गरि हनुमान्‌ले कीर्तिले लोक छाया
लगिकन उहि फेरी द्रोण राखेर स्राया
जब त परिगयो त्यो औषधी पेटमाहाँ
भईकन तब संज्ञा नाच्न लाग्या ति ताहाँ ५१
लाग्या बानर सैन्य गर्जन त्यसै ❀ बीच्मा त रावण् तहाँ
लाग्यो भन्न मलाइ मार्न बलवान् ❀ यो शत्रु स्रायो यहाँ
जाऊ लौ स्रतिकाय बीर्हरु तहाँ ❀ कम्मर् कसी शूर मै
मार्याछु त्यसलाई बस्छ घरमा ❀ जो लड्नलाई न गै ५२
हूकुम् यो स्रतिकाय बीरहरुले ❀ सूनेर कम्मर् कसी
पौच्या बानर सैन्य मार्न हतियार् ❀ छोड्या स्रगाड़ी बसी
बानर्ले पनि वृक्ष पर्वत मुठी ❀ दाह्रा नङैले गरी
रावणकोबलकोनि नाश् गरिदिया ❀ ताहीं स्रगाड़ी सरी ५३
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रावणलाइ सुनाउनु यति थियो ❀ हे शुक! सुनाईदियास्
तैं जान्छस् त पठाउँको अरु तहाँ ❀ यो बातसुनाईदियास्
यस्तो श्री रघुनाथको हुकुम मो ❀ मन्नू समाचार् मानि
साँचोबिन्तिगरीसबयाँसकलबात् ❀ मैले हजुरमा पनि ३०
मेरो राय म बिन्ति गर्दछु अहिले ❀ राम् हुन् जगतका पति
जीतीसक्नु कदापि छैन अरुले ❀ के मो हजुर्को मति
सीता आज लगेर सुम्पनुहवस् ❀ रामका चरणमा परी
बाँच्न्याँ एहि उपाय देख्छु नाहिं ता ❀ आयो मरणकोघरी ३१
यो बिन्तीशुकलेगर्योर सुनिखुब् ❀ रावण् रिसायो तहाँ
लाग्यो भन्न मलाइ पाजि शुक यो ❀ अर्ती दिन्या भो यहाँ
औरै कोहि भया त निश्चय यहाँ ❀ मारीदिन्या पो थियाँ
तेरो गुण् अघिको थियो र गुणले ❀ बाँचिस्बिदाजा दियाँ ३२
रावणले शुकलाइ जा भनि तहाँ ❀ बीदा जसै ता दियो
त्योशुक्ब्राह्मणहो अघी पछिशराप् ❀ पर्दा त शुक् त्यो भयो
राक्षस् हुनू शराप् पनी तहिं छुट्यो ❀ बीदा तुरुन्तै भयो
रावणदेखि बिदा भयो र पछि ता ❀ शुक् ब्राह्मणै भैगयो ३३
ब्राह्मणहुन्घरमा थिया शुक ऋषि ❀ एक्दिन्अगस्तीगया
भोजन् दिन्छु अगस्तिलाइ म भनी ❀ निम्ता ति गर्दा भया
स्नान् तर्पण गरि आउँछू म तभनी ❀ हीँड्या अगस्ती जसै
आयो रावण वज्रदंष्ट्र रिसले ❀ पायो र अन्तर् तसै ३४
जस्तोरूपछअगस्तिकोउहिरुप् ❀ धार्यो र बोल्योपनि
मासू खान मलाइ देउ तिमिले ❀ इच्छा छ मेरो भनि
यस्तो छल् पहिले गर्यो र पछि फेर् ❀ खान्या बखतमा पनि
मासूमानिसकोलगीमिसीदियो ❀ ठीक्शुक्किपत्नीबनी ३५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

देखी मारू अगस्तिको रिस उठ्यो ✻ दीया शरापै पनि
मारूमानिसको दिइस्‌तँ तमयास्‌ ✻ राक्षस्‌ अवश्यै भनि
शुक्ले बिन्ती गर्‍या खबर्‌ हुन गई ✻ यो छल्‌ पर्‍याको जसै
चाँडै मुक्ति हुन्या अगस्ति ऋषिले ✻ बेला बताया तसै ३६
हे शुक्‌! राम्‌ अवतार्‌ हुन्याछनस लौ ✻ रावण्‌ कहाँ गै तहीं
रामको दर्शनपाउला तिहिं शराप्‌ ✻ छुट्ला नजाऊ कहीं
यस्तो आर्ति अगस्तिको सुनि उसै ✻ माफिक्‌ गर्‍याको थियो
रामका दर्शनले शराप्‌ छुटि गयो ✻ फेर्‌ज्ञाति आफ नै लियो ३७
रावण्‌की महतारिको पनि पिता ✻ हूँ हित्‌ म भन्छू भनि
रावण्‌का नजिकै गई तब भन्यो ✻ त्यो माल्यवान्‌ले पनि
राम्‌ नारायण हुन्‌ सिताकन पनी ✻ लक्ष्मी बुझी ज्ञानले
चाँडो सुम्पि त हाल राख मनादि ✻ पूजा गरी ध्यानले ३८
उल्का हुन्छ अनेक्‌ अनेक्‌ शहरमा ✻ उत्सव्‌ भन्याको रति
काँहीं छैन बताउँ क्या असुरराज्‌! ✻ याहाँ हजुर्‌मा कति
तर्‌मात्‌ बिन्तिछ यो बहुत्‌ हजुरमा ✻ हित्‌जानि लीनूहवस्‌
सीतानाथ्‌कन ईश्वरै बुझि सिता ✻ सुम्पेर दीनूहवस्‌ ३९
त्यो बिन्ती सुनि माल्यवान्‌सित बहुत ✻ रावण्‌ रिसायो अनि
लाग्यो भन्न अशुभ समान तिमिले ✻ बोल्छौ बुढा भै पनि
क्याले राम्‌ परमेश्वरै पनि भन्यौ ✻ मानीसलाई यहाँ
लिन्छन्‌ बानरको सहाय जसले ✻ त्यो हुन्छ ईश्वर्‌ कहाँ ४०
तिम्रो बात्‌ सुनि चित्त पोल्छ बहुतै ✻ जाऊ घरैमा भनि
मन्त्रीवर्ग लगाइ साथ घरमा ✻ जल्दी पठायो पनि
रावण्‌ उच्च अटालिमा बसि कति ✻ आया बडा बीर्‌ भनि
हेर्दै लड्न खटन्‌ गरीकन हुकुम्‌ ✻ दिन्थ्यो तिलड्थ्या पनि ४१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मार्नू भो रघुनाथले कति तहाँ ❀ सुग्रीवजीले कति
अङ्गद् श्री हनुमान लक्ष्मण डनै❀ वीर्ले गिराया कति
राक्षस्मा करुणा भयान र तहाँ ❀ राक्षस् मरी गै गया
श्रीराम्को करुणा कटाक्ष हुन गै❀वानर् बलीयाभया ६४
सर्वेश्वर् सर्वरूपी प्रभुकन यसरी लड्न पो क्यान पर्थ्यो
नाक्नाराम्एक्छोडिदीयापनीरिपुहरुकोनाशउसैलेतगर्थ्यो
मायाले सच्चिदात्मा नर भइ नर कै युद्ध लिलादि गर्छन्
जुन्लीलाले त पापी अधम पतितको पाप सन्तापहर्छन् ६५
रावणाले अतिकाय वीरहरुको ❀फौज् मारियाको जसै
सून्यो दुःखि भएर पूर्ण रिसले ❀खुब्लड्न आँटयोतसै
सुन्दर् एक् रथमाचढयोरहतियार्❀शस्त्रास्त्र सब्फेर्लियो
लङ्का रक्षा गर्नु इन्द्रजितले❀भन्या हुकुम्योदियो ५६
केही फौज् पनि साथमा लिइगयो❀ श्री रामजी छन् जहाँ
रोक्या वानर सैन्यले र रिसले ❀मार्योअनेक्वीर्तहाँ
सुग्रीवादि बड़ा बड़ा जति थिया❀वीर् वीर् तिनैले पनि
जीतीसक्नुभएनसब्कनजित्यो❀पार्योजमिन्मापनि ५७
देख्यो विभिषणजिलाइ गदा लियाका
श्री रामका चरणमा दृढ मन् दियाका
मन् मुख्य शत्रु त यही छ भनेर ठान्यो
साह्रै रिसाइकन शक्ति उठाइ हान्यो ५८
आयो शक्ति तहाँ विभीषणजिको❀प्राण् खैंचन्या सुर् गरी
लक्ष्मणले तहिं झट् बचाउनु भयो❀ आफू अगाडी सरी
शक्ती लक्ष्मणलाइ बज्रन गयो ❀लक्ष्मण त मूर्छा पर्या
मूर्छा पर्नु कहाँ थियो प्रभुजिले ❀चेष्टा नरैको गर्या ६९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लक्ष्मणलाई उठाउनाकन तहाँ * दौडेर रावण् गयो
सक्थ्यो रावणले उठाउन कहाँ * आश्चर्य मान्दो भयो
लक्ष्मण्लाइ उठाउन्या वखतमा * देख्या उठ्यो रीस् पनि
चाँडो श्रीहनुमान् गया नजिकमा * रावण् गिराऊँ भनि ६०
हान्यो वज्र समानको त मुठिले * त्यो चोट लाग्यो जसै
रावण् हो बलवान् तथापि रगतै * छाडै गिर्यो पो तसै
लक्ष्मण् श्रीहनुमान देखि खुशि भै * साह्रै हलूका भया
चाँडो हात विषे उठाइ हनुमान् * राम्चन्द्रजीथ्यैं गया ६१
लक्ष्मण् नारायणै हुन् भनि बुझि डरले शक्तिले छोडिदीयो
रावण् मूर्छा पर्याको पनि उठिउनखत्फेर् धनूर्बाण लीयो
सीतानाथ् श्रीजगन्नाथ् प्रभुपनि हनुमान्बीरका काँधमाहाँ
चढ्नूभोलइनमन्सुन्गरिकनालिनुभोफेर धनुर्बाणताहाँ ६२
टङ्कार् खुब् धनुको गरी हुकुम भो * उम्केर जालास् कहाँ
तेरा बन्धु सबै निभाइ रणमा * मार्छु तँलाई यहाँ
रावण्ले तिबचन्सुन्योरनिजवाफ् * भै रीस् मनैमा लियो
हान्यो श्री हनुमान लाइ शर ले * घाऊ लगाई दियो ६३
घाऊ श्री हनुमानका शरिरमा * देख्नू भयाथ्यो जसै
साह्रै रीस् उठि कालरुद्र सरिको * ठाकुर् हुनूभो तसै
घोडा रथ् ध्वज सूत शस्त्र धनु सब् * छत्रै पताका पनि
काटी रावणलाइ हान्नु पनि भो * मूर्छा परोस्यो भनि ६४
लाग्योबाण् रघुनाथको रतिहिंत्यो * चाँडो धरामा गिर्यो
हात्माफेर् धनु थाम्न शक्तिन हुँदा * छूटेर ताहाँ झर्यो
त्यै बीच्मा शिरको किरीट शरले * काटी खसाली दिया
रावण्को सब शोखिशान् प्रभुजिले * खैंचेर ताढीं लिया ६५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बाधा रावणलाई खुब हुनगयो * निंदा प्रभूले पनि
ऐल्हे जा घरमा भनी दिनुभयो * भोली लडौंला भनि
शेखीशान् रतिभर् तहाँ न रहँदा * रावण् मर्‍या मैं भयो
फेरा लड्न भनेर शक्तिन हुँदा * लाजमानि घर्मा गयो ६६

राम र रावण को प्रथमयुद्ध लक्ष्मण मूर्च्छा पर्नु र हनुमान द्रोणाचल लिन जानू

लक्ष्मण् मूर्छित मैं भया र रघुनाथ् * शोक् गर्न लाग्या हरि
जस्तो मानिस गर्छ सोहि रितको * चेष्टा अनेकौं गरी
लक्ष्मणलाइ बचाउ फेरि हनुमान्! * ली आउ औषधि भनि
हुकुम श्री रघुनाथको तहिं हुँदा * दौड्या हनूमान् पनि ६७

बाबूले राज्य मेरो भरतकन दिया * फरी सीताजि लाई
हर्दोभो रावणले अनुज पनि गिर्‍या * बाणको चोट खाई
मैले मार्‍याँ हजारौं रिपुगण रणमा * लाशको पारि घान
सोही मैले अहोले सकिन किन यहाँ * भाइको राख्न प्राण ६८
हे प्यारा भाइ मेरा! तिमि विन अहिले * टुट्नगो सब् सहारा
आश्वाशन् देउ झट्टै उठिकन दुखि यो * दाज्यूना बेसहारा
मेरो निम्ती अनेकौं दुख सहि तिमिले * घोर वन् भित्र आयौ
मेरै लागी लडाइँ गरिकन अहिले * प्राण सम्मन् गुमायौ ६९
द्रोणाचल् पर्वतैमा बुटि लिन हनुमान् * छन् गयाका ति भैले
फक्यानन् यस्घरी तक् कतितक सहनू * पर्छ यो कष्ट मैले
आधागत् वित्न लाग्यो तर पनि कपि ती * आउन्या नाम छैन
हे भाई! न्यूँ झ झट्टै तिमिविन म पनी * क्यै गरी बाँचदीन ७०
आई यं घोर बन्मा तिमिसित यसरी * फेर विछोट् हुन्छ भन्न्या
जान्दो हूँ ता पिताको वचन पनि तहाँ * निश्चये तोडिदिन्थ्याँ
मिल्छन् संसारमा सब सुत धनगृह स्त्री * नित्य यत्नै गरेमा
आफ्नो यौटै सहोदर अनुज त कहिल्यै * मिल्न सक्तैन लोक् मा ७१
तस्मात् हेभाइ! तिम्रो सहि यसरि विछोट् * बाँच्न सक्तैन राम
तिम्रै साथ्ला खुशीले मिनाकन म पनी * जाउँला स्वर्ग धाम

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
औषध् लीन गया जसै ति हनुमान् ❀ चाल् पाइ रावरा् पनि
रात्रीमा उठि कालनेमि सित गो ❀ वयैविघ्न पारूँ भनि
राजा रावरालाइ रात्रि बिचमा ❀ देख्यो खकरमात् जसै
सन्मान् खुब् गरि बिन्ती गर्दछ तहाँ ❀ त्यो कालनेमी तसै ७२
हेनाथ्! के परिखाज खाउनुभयो ❀ यो रात्रिका बीच् यहाँ
त्योबिन्तीसुनि कालनेमिसित सब् ❀ बिस्तार्न तायो तहाँ
यस्तो भोसुन कालनेमि! आहिले ❀ लक्ष्मरागिर्याकाथिया
तिन्लाई पनि फेर् नचाउन ठुलो ❀ रामचन्द्रले सुर्लिया ७३
औषध् लीन भनेर आज हनुमान् ❀ द्रोणाचलैमा गयो
चाँडो गैकन विघ्न पार तिमिले ❀ लौ जाउ बेला भयो
मायाले मुनि भेष् धरेर हनुमान् ❀ लाई भुलाऊ गई
सक्न्याछौ तिमिले भुलाउन पनी ❀ योगी सरीका भई ७४
यस्तो रावराले हुकुम् जब दियो ❀ लौ विघ्न गर् जा भनी
रामईश्वर् बुझि कालनेमि बिरले ❀ वयैबिन्ती पार्योपनी
एतीहित् बुझी बिन्तीगर्दछु आधिराज्! ❀ हीतै भन्याको भनी
मेरो बिन्ती सधाइ बक्सनु हनस् ❀ होलाठुलो हित्पनि ७५
ज्यान्कोआश्पनिकत्तिछैनआधिराज्! ❀ दीन्याछुयोज्यान्पनी
जीतीन्या तर छैन जान्दछ त हुन् ❀ चौधै भुवन्का धनी
भाई बन्धु मराइ बाँचिकन पो ❀ क्या शोख् छ राजाभई
ईश्वर् हुन् पर रामका शरणमा ❀ ऐल्हे तुरून्तै गई ७६
सीतासुम्पिदि हाल राज्य पनियो ❀ देऊ बिभीषण् गरुन्
खूशी भैकन आज देखि रघुनाथ् ❀ तिम्रो विपत्ती हरुन्
जाऊ लौ वनमा र लेउ मनमा ❀ आत्मै बिचार्को मति
मायाले त भुलाउँ छिन् जगतमा ❀ ... ७७
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations



१ कुम्भकर्णलाई गणहरूले
सिंहनाद गरी उठाएको ।



२ श्रीरामचन्द्र र कुम्भकर्ण युद्ध ।

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




१ मेघनाद हनुमान युद्ध ।

२ मेघनादको यज्ञलाई लक्ष्मणले विध्वंश गरेको ।

३ रावणले लक्ष्मणलाई बाणहानी मूर्छा पारेको ।

४ लक्ष्मण मूर्छा पर्दा रामले शोक गरेको ।

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आत्मा चिन्नु अवश्यपर्छ आधिराज्! * एकाग्र भै ध्यान् धरी
आत्मा चिन्न समर्थ होउ नसक्या * राम् भज्नु एक् मन् गरी
कौस्तुभ् हारकिरीट केयुर अनेक् * भूषण् शरीर्मा धरी
हाम्ना यै हृदयारविन्द बिचमा * राखेर खुप् ध्यान् गरी ७८
सीतारामकन भज्नुपर्छ आधिराज्! * राम् हुन् जगत्का पति
ईश्वर् जानि अवश्य छोड तिमिले * यस्तो विरोधूको मति
एती बिन्ति गरेर चुप् भइ रह्यो * त्यो कालनेमी तहाँ
अमृत्तुल्य वचन् सुन्यो तपनि त्यो * लिन्थ्यो अधम्ले कहाँ ७९
रावणले त रिसाइ तेस्कन तहाँ * मन्मार्न मन्सुब् धर्‍यो
मार्नैं मन् बुझि कालनेमी बिरले * फेर् बिन्ति ताहाँ गर्‍यो
यस्तो वयान रिसानी हुन्छ आधिराज्! * ऐल्हे तहाँ मै गई
सर्कार्को सब काम बन्दछ भन्या * जान्छू तयारी भई ८०
एती बिन्ती गरेर तेहि बिचमा * ऊठेर दौड्यो पनि
लाग्यो गर्न उपाय फेरि हनुमान् * फिर्नैं नपाऊन् भनि
रस्तामा गइ एक् तपोवन असल् * त्यस्ले तयारी गर्‍यो
मायाले फुलको र फल् सहितको * बृक्षादिले वन् भर्‍यो ८१
एक् आश्रम् पनि कल्पनातिहिं गर्‍यो * आफू मुनीश्वर् बनी
तेसै आश्रममा बस्यो र हनुमान् * लाई छलूँला भनि
तेस्का शिष्य अनेक् थिया बरीपरि * ताहीं हनुमान् गया
वयादेख्या आघि कोही आश्रम यहाँ * थीयान भन्दा भया ८२
कस्को आश्रम हो बुझी जल पिई * जाँला म जल्दी भनि
बुझ्नै खातिर तेहि आश्रम विषे * पौंच्या हनुमान् पनि
योगी भैं भइ कालनेमि शिवको * पूजा बिधान्ले गरी
कुन्रितले हनुमानलाइ ठगुँला * भन्न्या इरादा धरी ८३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
थीयो आश्रम भित्र, दर्शन गरू ❀ भन्या इरादा धरी
योगेश्वरूमुनिभवितराखिहनुमान् ❀ ज्यूले नमस्कार गरी
दूत हूँ श्रीरघुनाथको म हनुमान् ❀ भन्छन् मलाइ पनि
औषधल्याउनको हुकुम प्रभुजिको ❀ हूँदा म आयाँ भनि ८४
सब् वृत्तान्त गरेर जल् पिउनको ❀ इच्छा बहुतै थियो
खोज्या जल् हनुमानले र खुशि भै ❀ तेसले तहाँ जल् दियो
आऊ फल् फुल खाउ पीउ हनुमान् ❀ ठण्डा छ यो जल् पनी
साह्रै हतपत गर्नु छैन तिमिले ❀ केल्हेम जाँलाभनि ८५
योगी हूँ सब जादछू म अहिले ❀ रामले नजर् खुप्गरी
लक्ष्मणलाइ बचाइ बक्सनु भयो ❀ सम्पूर्ण बाधा हरी
बानर्कोपनि फौज् खडासनभयो ❀ एती भन्याथ्या जसै
तिर्खा मेटिइन्या नदेखि जलले ❀ बोल्याहनूमान्तसै ८६
तिर्खा ज्यादि छ जल् कमी छ यीतले ❀ मेट्टैन तिर्खा पनि
धेरै जल् छ कहाँ बताउनुहवस् ❀ बाहाँ त खाँला भनि
सुन्यो श्री हनुमानकोर इ बचन् ❀ बनै एक् तलाउ थियो
त्यै देखाउनलाइ एक अगुना ❀ शिष्यै पठाई दियो ८७
ऐल्हे जाउ र जल् पिएर हनुमान् ❀ फर्केर आऊ यहाँ
केही मन्त्रम दिन्छुत्यो सुनिगया ❀ मिल्न्याछ औषध् तहाँ
सून्या श्री हनुमानले र इ बचन् ❀ बेस् हो हवस् लौ भनि
पौंच्या जोल्द तलाउमा र हनुमान् ❀ बीरलेपियाजल्पनी ८८
ताहाँ तेहि तलाउभित्र मकरी ❀ बनै एकबस्याकीथिई
सैंची श्री हनुमानलाई निलुँला ❀ भन्या ठुलो मुर लिई
च्यापू च्याति पछारि ताहिं मकरी ❀ लाई निमाया जसै
स्त्रीको सुन्दर रूप् बनीर बिनती ❀ त्यो गर्न लागी तसै ८९
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

स्वर्गैमा म त अप्सरा अघि थियाँ❀नाम् धन्यमाली थियो
ब्राह्मणको त शरापले मकरिको❀रूप् यो बनाई दियो
तेसै रूपकन माग्निबसनु हुँदा ❀ आपत्ति मेरो गई
जान्छू स्वर्गनिषेमआज हनुमान्!❀जस्ताकितस्तैभई ९०
अर्को बिन्तिम गर्छू अर्ति सरिको❀त्योहो हजुरको खुनी
जस्लाईमुनीभन्नु हुन्छहनुमान्❀थीयो कहाँ त्यो मुनी
औषध्लीन गयाछ आज हनुमान्❀लौ बिघ्न गर् जा भनि
रावणले उपदेश् दियो र बलवान्❀त्यो कालनेमीपनि९१
बिघ्नै गर्न भनेर आइ अहिले❀यो चाल तेस्ले गर्‍यो
तेस्लाई तहिं मारि औषधि पनी❀ लैजाउ बेला टर्‍यो
यो बिन्ती गरि इन्द्रका हजुरमा ❀ त्यो धन्यमाली गई
आश्रममाहनुमान्फिर्याउहिबखत्❀केहीनजान्याभई ९२
देख्यो श्री हनुमानलाइ नजिकै ❀ आइपुग्याको जसै
मेरो काम् अब सिद्धगर्दछु भनी ❀ त्यो बोल्नलाग्यो तसै
एल्हे दिन्छु म सिद्ध मन्त्र हनुमान्❀ यो मन्त्र लेऊ पनि
देऊ लौ गुरु दक्षिणा पनि ठुलो ❀ मेरा गुरु हुन् भनि९३
छलछामकाइ बचन् सुनेरहनुमान्❀बीर्माउठ्योरिस्पनि
हान्या मुड्कि उठाइ तोहि बिचमा❀ लौ दक्षीणाले भनि
पायोचोट्तहिंमुड्किकोरमुनिभेष्❀ तेस्को तुरुन्तै गयो
जस्तो राक्षसको स्वरुप् अघिथियो❀सोहीस्वरूप्कोभयो९४
माया राक्षसको अनेक् तरहको ❀ त्योगर्न लाग्यो जसै
हान्या मुड्कि उठाइ फेरि शिरमा❀ताहीं मर्‍यो त्यो तसै
एती काम गरेर जल्दि हनुमान्❀ द्रोणाचलै मा गया
पर्वत् बोकि तुरुन्त फर्कि सहजै ❀लङ्कातरफ्तीहिंड्या ९५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भरत र हनुमानको भेट, हनुमानले सूर्यलाई काखी च्याप्नु

द्रोणाचल् गिरिलाइ बोकि हनुमान् ❀ फर्की ह्याका थिया
आकाश्मार्ग गरी उडीकन तिनी ❀ लंकातरफ् गै गया
हात्मा बाण धनुष् लिई भरतजी ❀ वस्थ्या अयोध्या महाँ
उड्दै आइपुग्या त्यहीं ति हनुमान् ❀ देख्या भरत्ले तहाँ ९६
राक्षस् हो भनि भान् परेर तिनले ❀ एक् बाण हान्या जसै
रामको नाम लिंदै खस्या ति हनुमान् ❀ पृथ्वी तलैमा तसै
हेऱ्या फेरि भरतजिले गइ तहाँ ❀ राम् नाम् सुन्याथ्या जब
रामको भक्त बुझेर हाल जतिहो ❀ रामको सुध्याया सब ९७
सीताजी हरिनू मित्यारि गरिन ❀ सुग्रीवका सङ्ग अनी
लङ्का पुग्नु र युद्धको सकल हाल् ❀ खोलेर विस्तार भनी
शक्ती लक्ष्मण लाइ लागि ति भया ❀ मूर्छित् र त्यै कारण
औषध् संजिविनी न चिन्ही गिरिनै ❀ लग्दोछु ऐले पुनः ९८
रात्रीमै यदि औषधी पगिगया ❀ बाँच्छन् ति लक्ष्मण् भनी
आँसू खूब गिराइ ती कपिशले ❀ विन्तीगऱ्या सब् अनी
यस्ता बात् कपिको सुनी भरतले ❀ पर्वत् सहित्नै तहाँ
पौंचायां तिनलाइ वाण् विच घरी ❀ तत्काल लंका महाँ ९९
द्रोणाचल् लिइ ती कपीश प्रभुका ❀ साम्ने पुग्याथ्या जब
देखि काखिविषे दिवाकर तहाँ ❀ आश्चर्य मान्या सब
रामले सोध्नुभयो कपीश ! तिमिले ❀ श्री सूर्यलाई किन
च्याप्यौ काखिमहाँ ? बताउ सब यो ❀ उत्सुक् छ मेरो मन १००
भन्छन् ती हनुमान् बुझाइ सबत्यो ❀ हे नाथ ! संजीवनी
खोज्दा डर् हुनगो मलाइ अतिनै ❀ रात् बित्न लाग्यो भनी
तस्मात् सूर्यजिका गयेर सँगमा ❀ अत्यन्त नम्रित् बनी
विन्ती खूब गरी भन्याँ उनि अलिक् ❀ ढीलो उदाउनू भनी १

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

धेरै विन्ती गऱ्या परन्तु रविले ❀ ध्यानै दियानन् जब
रामको भक्त महूँ भन्या इ अहिले ❀ काखीविषे हुनू तब
भन्दैमा उनि काखिमा हुनगया ❀ आयाँ लिइ साथ्महाँ
रामले त्यो सुनि सूर्यको स्तुति गरी ❀ बीदा दिनभो तहाँ २

खूशी खुब्रघुनाथ् तहाँ हुनुभयो ❀ औषध्सुषेण्ले गऱ्या
बाधा लक्ष्मणको सबै जातिथियो ❀ त्यो औषधीले हऱ्या
रावणमाथि दगा धरेर सहजै ❀ लक्ष्मणउठ्याथ्याजसै
बाँच्याभाई दया गऱ्यौ र हनुमान् ❀ भन्या हुकुम्भोतसै ३

रावणको त्रास

संग्राम्को मतलब् गरेर रघुनाथ् ❀ साम्ने हुनूभो तहाँ
बानर्कोपनिफौज्सबैअघिसऱ्यो ❀ त्योमन्रहन्थ्यो कहाँ
जस्तै सर्प गिराउछन् गरुडले ❀ सोही तमाशा गरी
रावण्लाइ गिराइबक्सनु हुँदा ❀ गीरेर मूर्छा परी ४

ऊठी दुःख बहूत पाइ मनले ❀ हारी गयाको थियो
श्री रामचन्द्रजिको प्रचण्ड बल सब् ❀ बुझन्यालहइखुप्लियो
बेस् सिंहासनमाबसीसकलबीर् ❀ राखी सभा खुब् गरी
लाग्यो भन्न म मर्छु हेर बिरहो ! ❀ रामका अगाडी परी ५

राम् नारायणहुन् अवश्य बुझियो ❀ चौधै भुवनका धनी
मानिस्कोअवतार्लिया प्रभुजिले ❀ मार्छन् मलाई पनि
मानिस् देखि त मर्नुपर्छ मइँले ❀ ब्रह्माजिको बर्छ यो
मानिस्भैरघुनाथ्सऱ्याअघिभन्या ❀ काल्टार्नसक्न्याछको

राजा बीर् अनरण्य सूर्य कुलमा ❀ थ्यैएक्महात्मा थिया
मैले व्यर्थ बिरोध् गऱ्याँ र उ बखत् ❀ तिन्ले शराप् यो दिया
मेरा वंश महाँ अवश्य अवतार् ❀ नारायणौले लिनन्
तेरो राक्षस वंश मारि सहजै ❀ तैंलाइ मारीदिनन् ७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

दीया एति शराप् र तेस् बखतमा ❀ राजा बिती पो गया
सोही पूर्ण गराउनाकन यहाँ ❀ श्री राम् तयारी भया
आया श्री रघुनाथ् मलाइ आहिले ❀ मार्नै इरादा धरी
मार्छन निश्चय आज मर्छु सहजै ❀ रामका अगाडी परी ८
भाई मूर्ख छ कुम्भकर्ण अझ तक् ❀ यस्तो पर्‍यो तापनि
सूत्याकै छ उठाइ ल्याउ आहिले ❀ चाँडो हुकुम् भो भनी
हूकुम् पाइ बड़ाबड़ा बिर गया ❀ ल्याऊँ उठाई भनि
पौंची जल्दि उठाइ झट् हजुरमा ❀ ल्याईपुर्‍याया पनि ९
पाऊमा परि कुम्भकर्ण बलवान् ❀ सामने बसेथ्यो जसै
रावणले पनिदीन्बचन् गरि सबै ❀ बिस्तार् सुनायो तसै
हेभाई! सुन कुम्भकर्ण! आहिले ❀ आपत् मलाई पर्‍या
छोरा नाति समेत् बड़ा बिरहरु ❀ ऐल्हे बहुतै मर्‍या १०
प्राणकोअन्त्य हुन्याबखतभइगयो ❀ बाँच्न्या उपायै कहू
राम् शत्रू बलवान् बुझिन्छ तिमिले ❀ साह्रै चनाखो रहू
गम्भीर् एहि समुन्द्रमापनि सहज् ❀ साँघू लगाई तर्‍यो
बानर्कोसबफौज्समेततारियहाँ ❀ घेर्बीर्कोनाश्गर्‍यो ११
बानरदेरूहूम बीर् अनेक्तरहका ❀ सूरा लडाकी बड़ा
हाम्रा लश्करकाअनेक्बीरमर्‍या ❀ बानर् सबै छन् खडा
तिन्कोनाश्गरिसक्नुदेख्तिनयहाँ ❀ कौनै उपायै गरी
नाश् तिन्को तिमिले गराउ आहिले ❀ चाँडो अगाडी सरी १२
रावणले इ बचन् बिलापसरिको ❀ बोली सकेथ्यो जसै
हाँस्योखुप्सितकुम्भकर्ण र तहाँ ❀ बिन्तीगर्‍योसाफ् तसै
मैलेक्यागरुँबिन्ति आज आधिराज्! ❀ पैल्हे गर्‍याँथ्याँ पनि
राम्नारायण हुन्सिताप्रभुजिकी ❀ हुन यो [illegible] भनी १३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मेरो बिन्ति सधैन तेस् बखतमा ❀ झन् खुप्रिसानीभयो
तेस्कोयोफलहोअवश्यअधिराज्! ❀जोमन्त्रकोज्यान्गयो
एक् दिन् पर्वतकाउपर् शिखरमा ❀ थीयाँ म रात्री महाँ
नारद्जीकन मध्यरात्रि बिचमा ❀देख्याँआकर्मात्तहाँ २४
सोध्याँ आउनुभो हजुर् किनयहाँ ❀ जानू छ काहाँ भनि
मेरो बिन्ति सुनेर सब् ति ऋषिले ❀ बिस्तार् बताया पनि
बिस्तार्लौसुनकुम्भकर्ण!अहिले❀जीतेर सब्लोक् लियौ
इन्द्रादीहरुलाइ दुःख तिमिले ❀ अत्यन्त साह्रै दियौ २५
सब् इन्द्रादि ति बिष्णुकोहजुरमा ❀ पौंची शरण्मा पर्‍या
यो रावणकन मारिदेउभगवान्! ❀भन्न्या त बिन्ती गर्‍या
ब्रह्माको वरदान् छ मर्नु तइँले ❀ मानीसदेखि भनि
मानिस्भैकनमारिबक्सनुहवस् ❀भन्न्याछ रावण्पनि २६
एती बिन्ति गरेर देवगण सब् ❀ पाऊ पर्‍याथ्या जसै
सोही रित्सितमारुँलाभनि हुकुम् ❀ श्री बिष्णुको भो तसै
सोही बात् परिपूर्ण गर्न रघुनाथ् ❀ ऐल्हे तयारी भया
मान्याछन् तिमिलाइ निश्चयभनी ❀ उठेर नारद् गया २७

तस्मात् अवश्य रघुनाथ् कन दैव जानी
इ वैरि हुन् भनि यहाँ रति भर् नमानी
यो वैर भाव तिमिले अब छाडिदेऊ
भक्ती गरी भजनको मति आज लेऊ २८

भक्ती मुख्य छ सर्व साधन महाँ ❀ भक्तीछसब् ज्ञान्दिन्या
भक्तीले सब मुक्त हुन्छ दुनियाँ ❀ यो नित्य जानी लिन्या
भक्तीहीन् भइ कर्म गर्दछ भन्या ❀ त्यो निस्फलै हो भनि
जानी श्री रघुनाथका चरणमा ❀ भक्ती लगाऊ पनि २९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हज्जारन् अवतार छन् प्रभुजिका ❀ रामावतारले सरी
अर्कौ छैन भजन् गर्‌यो पनि भन्या ❀ जस्का भजन्‌ले गरी
जान्छौ दुःख कतै नपाई सहजै ❀ संसार सागर् तरी
सोही धाम् पुगि जाउ पूर्ण रुपले ❀ जाहाँ रहन्छन् हरि २०

जो रामचन्द्र तिर रातदिन चित्त धर्छन्
रामको चरित्र पढि खुप्‌सित मग्न पर्छन्
तिन्‌का ति कर्मवशका सब पाप छुट्छन्
वैकुण्ठका सकल सौख्य तिनै त लुट्छन् २१

सुन्यो विन्ति र कुम्भकर्ण तिरको ❀ साह्रै रिसायो पनि
लाग्यो भन्न तँलाइ डाकिन यहाँ ❀ ज्ञान् सुन्न देलास् भनि
जस्तो भन्छुम सोहि मान्नु छ भन्या ❀ गर् युद्ध साम्ने सरी
सुत्नाको मतलब्‌छ पो पनि भन्या ❀ जासुत् पलङ्‌मा परी २२
रावणको इ वचन् सुनेर अहिले ❀ साह्रै रिसाया भनी
वयै उत्तर् न गरी उठीकन गयो ❀ खुब् लड्‌न आँट्यो पनि
पर्खाल् नाघिगयो र लड्‌न कन सुर् ❀ बाँधी करायो जसै
कालै तुल्य बुझेर वानार हरू ❀ साह्रै डराया तसै २३
बीर् बीर् वानरलाइ पक्रि मुखमा ❀ हाल्दै र निल्दै गयो
प्वाँख् लागीकन पर्वतै उडि तहाँ ❀ आइगया झैं भयो
सक्थ्या कुन् अधिघटिवन तेस्‌व खतमा ❀ तेस्‌का अगाडी सरी
वानर्‌को सब फौज् तहाँ हटि गयो ❀ साह्रै सकस्‌मा परी २४

दाज्यू भनी तहिं विभीषण भेट्‌न आया
पाऊ परीकन बहुत् गरि विन्ति लाया
कान्छो विभीषण महूँ करुणा म पाऊँ
लङ्का महाँ मकन बस्‌न मिलेन ठाउँ २५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सीता न राख घरमा तिमि सुम्पि देऊ
रामचन्द्रलाइ परमेश्वर जानिलेऊ
बिन्ती गर्‍याँ यति र लात् पनि मारि लाया
निवली तँ जा भनि मलाइ निकालि दीया २६
चार् मन्त्रि साथ् निस्कि म यहिं आयाँ
श्री रामका शरणमा परि बिन्ति लाया
ठूलो दया गरिलिया प्रभुले मलाई
आज्काल् खुशी छु रघुनाथ् सित बस्न पाई २७
बिन्ती बिभीषणजिको जब सुनिलीओ
भाई चिन्हीकन खुशी भइ काख लीयो
भाई ! चिरञ्जिवि रह्या तिमि दैव जानी
रामचन्द्रको गर भजन् अति हर्ष मानी २८
खुब् भक्त हौ बुझिलियाँ तिमिलाई भाई !
मन्थ्या चिन्हेर ऋषि नारदले मलाई
साँचो भयो ति ऋषिले जति हो भन्याको
प्रत्यक्ष देख्छु तिमि भक्त बडो बन्न्याको २९
भाई ! बिभीषण ! परै रहछु जल्दि जाऊ
संग्रामको बखतमा नजिकै न आऊ
यस्तो बचन् सुनि बिभीषण फर्कि आया
थामी न सक्नु भइ आँशु पनी खसाया ३०
बीदा भै जब ती बिभीषण फिर्‍या ❀ यो फौज् गिराऊँ भनि
लाग्यो घुम्न र कुम्भकर्ण बिरले ❀ धेर् फौज् गिरायो पनि
बानर्को सब फौजलाइ बलले ❀ थिच्दै र मिच्दै गयो
को सक्थ्यो अधिटिक्न तेस्बखतमा❀खुब्नाश गर्दो भयो ३१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मुद्गर् हाथ विषे लिएर रिसले ❀ त्यो घुम्न लाग्यो जसै
फौज्को नाश् बहुतै गर्‌यो र रघुनाथ्❀साह्रै रिसाया तसै
वायव्यास्त्र उठाइ मुद्गर समेत् ❀ हातै खसाल्छु भनि
हान्या श्री रघुनाथले र सहजै ❀काटी खसाल्या पनि ३२
गीरयो हात् जब कुम्भकर्णनिरको❀मुद्गर् सहित्को तहाँ
ठूलो शब्द गरेर फेरि रिसले ❀ आयो प्रभू छन् जहाँ
शाल्‌को वृक्ष उखेलि हान्न भनि त्यो❀आयो नजीक्मा जसै
सोही हात्पनि काटिबक्सनुभयो❀वानर्भयाखुश्‌तसै ३३
हातै गिरयो जब दुवै तब खुब् करायो
साह्रै रिसाइ रघुनाथ्‌तिर दौडि आयो
फेर् अर्ध चन्द्र सरिका दुइ बाण लीया
गोडा पनि सहज काटि खसालि दीया ३४
हात् पाउ केहि नहुँदा अति दुःख पाया
मुख् बाइ राम्‌कन निलूँ भनि धाइ आयो
राम्‌चन्द्रले पनि मुखै भरी बाण हान्या
त्यो देखि फौजहरुले अति हर्ष मान्या ३५
यै रीत् गरेर अधिबाट थला बसाया
फेर् हानी इन्द्रशरले शिर नै खसाया
ढोका थुन्यो शहरको शिरले र ताहाँ
गीउ उफ्रिगैकन पर्‌यो र समुद्र माहाँ ३६
ग्राहादि जन्तु मिचि नाश् बहुतै गरायो
इन्द्रादि देवगणको पनि ताप् हरायो
खुब् पुष्प वृष्टि रघुनाथ उपर् गराया
रामलाइ भेट्‌ने भनि नारद तहिं आया ३७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

नारदले स्तुति खूब गर्‍या प्रभुजिको ❀ नारायणै हुन् भनि
भोली देखि हून्या कुरा जति थियो ❀ सो सब् बताया पनि
हेनाथ्! वीर् यहि कुम्भकर्ण बिरहो ❀ यो ता सहज्मा गयो
ठूलो वीर् अब इन्द्रजित् छ उसको ❀ लौ भोलि बेला भयो ३८
भोली मर्दछ इन्द्रजित् पनि यहाँ ❀ लक्ष्मणजिका हात्परी
आफैं मार्नु हुन्याछ रावण भन्या ❀ पर्सी लडाई गरी
देख्न्याछन् मुनि देव सिद्धगणले ❀ त्यो सब् तमाशा भनि
नारद् ताहिं बिदा भई गइगया ❀ फेर् ब्रह्मलोक्मा पनि ३९
रावण्लेपनि कुम्भकर्ण तमर्‍यो ❀ भन्न्या सुनेथ्यो जसै
साह्रै दुःखितभै विलाप्पनि गरी ❀ मूर्छा पर्‍यो खूब् तसै
रावण्लाइ बुझाउनाकन अघी ❀ त्योइन्द्रजित्वीर् सर्‍यो
जल्दी बिन्ति गर्‍यो खडै छुम छँदै ❀ कुन्ताप् हजुर्मा पर्‍यो ४०

शक्ति प्राप्त गर्न रावणले होमगर्नु र इन्द्रजित वध

शत्रूको भय आज कत्ति नरहोस् ❀ ई शत्रु मै मारुँला
सब् शत्रूहरु मारि ताप् हजुरको ❀ चाँडै सहज् टारुँला
होम् गर्छु अब कुंभिला स्थल महाँ ❀ एल्हे तुरुन्तै गई
होम् सम्पूर्ण भया मलाइ अहिले ❀ अग्नी प्रसन्नै भई ४१
दीन्याछन् हतियार् तिनै लि गई ❀ संग्राम गर्छू जसै
कुन् साम्नेमइ टिक्छ तेस्बखतमा ❀ सब् नाश हुन्छन् तसै
एती बिन्ति गर्‍यो र होम्गरुँ भनी ❀ ऊठेर जल्दी गयो
भक्ती खूब् गरी कुम्भिला स्थलमहाँ ❀ होम्गर्नलाग्दो भयो ४२
सून्या त्यो समचार् विभीषणजिले ❀ होम् गर्नलाग्यो भनि
सब् विस्तार् रघुनाथका हजुरमा ❀ गै बिन्ति पार्‍या पनि
एल्हे हे रघुनाथ! इन्द्रजितले ❀ होम् गर्न लाग्यो भनि
सून्याँ यो र म बिन्ति गर्न अहिले ❀ आयाँ हजुरमा पनि ४३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
होमकोविध्न त गर्नुपर्छ अधिराज! ❀ होम् सिद्ध पाऱ्यो भन्या
राक्षस् योजिति सक्नु छैन कहिले ❀ ढ सन्न अजेयै बन्या
लक्ष्मणलाइ मलाइ बक्सनू भई ❀ हुकुम् हजुरस् लौ यहाँ
मार्दछन् लक्ष्मणले गएर अहिले ❀ त्योबाँच्नसक्ला कहाँ ४४
एती बिन्ति सुनी हुकुम् हुनगयो ❀ जान्छू म मार्छू भनि
फेरी बिन्ति गऱ्या बिभीषणजिले ❀ यस्तो छ यो वीर् पनि
खाँदै केहि न खाइ कत्ति न सुती ❀ रातदिन् नियम् खुब् गरी
जस्को बित्तछ बाह्र वर्ष उ पुरुष् ❀ त्यस्को अगाडी सरी ४५
त्यस्को प्राणलिन्याछ योछ वरदान् ❀ त्यस्लाइ यस्ले गरी
मारी सक्नु कदापि छैन अहिले ❀ कोही अगाडी सरी
रातदिन् कत्ति न खाइ कत्ति न सुती ❀ सब् दिन् रह्याका यहाँ
लक्ष्मण् छन् अब लौ हुकुम् दिनु हजुरस् ❀ त्यस्लाइ मारुन् तहाँ ४६
ईश्वर् प्रभु हौ रघुनाथ भाई
लक्ष्मण् त शेष् हुन् करुणा जनाई
भू-भार हर्नाकन जन्म लीयौ
यो रूप् भजन् गर्न बनाइ दीयौ ४७
रामले मर्जि भयो बिभीषण तरफ् ❀ हेरेर यो बात् पनि
साँचो बिन्ति गऱ्यौ म जान्दछु सबै ❀ त्यो वीर् छ तेस्तो भनि
हिंड्दै देखि न खाइ कत्ति न सुती ❀ लक्ष्मण् रह्याका पनि
जानीजानि म चुप् रह्याँ किन भन्या ❀ लाग्न्याछ यो काम् भनि ४८
लक्ष्मण्लाइ पनी हुकुम् तहिं भयो ❀ भाई! तयारी भई
केही फौज् पनि साथमा लिइ तहाँ ❀ ठेल्हे तुरुन्तै गई
चाँडै प्राण् लिइहाल इन्द्रजितको ❀ जान्छन् बिभीषण् पनि
सब्को छिद्र बताउनन् बखतमा ❀ यस्तो छ पार्दा भनि ४९
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हूकुम् यो रघुनाथको सुनि धनू ❀ लीई तयारी भया
रामको पाउ समाइ लक्ष्मण तहाँ ❀ वयै मन्न लागी गया
मेरो बाण् अब इन्द्रजीत निरको ❀ प्राणलाइ चाँडो हरी
पातालभोगवतीमहाँपुगीतहाँ❀निर्मल्हुननूरनानगरी ५०
एती बिन्ति गरी घुमी वरिपरी❀लक्ष्मण् चरणमा पर्‍या
बीदा भै रघुनाथको हुकुमले ❀ साइत तुरुन्तै गर्‍या
केहीफौज्लिइजाम्बवानूरनुमान्❀अङ्गदहरू साथ् गया
पौंच्या जल्दि र इन्द्रजीत निरको ❀फौज्लाइदेख्ताभया ५१
हुकुम् शिरोपर धरीकन जल्दि पौंची
लक्ष्मण् अघी जब सर्‍या धनुलाइ खैंची
लश्कर्हरू पनि अगाडि सरेर धाया
ताहाँ बिभीषण अघी सरि बिन्ति लाया
कालो मण्डल देखिइन्छ अघि जो ❀ त्यो फौजहो बीरको
टुक्टुक्पारिगिराइ बक्सनुहवस् ❀ सब् बीरका शीरको
ऐले जल्दि न हानि बक्सनु भया ❀ होम् सिद्ध गर्न्या छ यो
होम्कोसिद्धगर्‍यो भन्यापछीयहाँ ❀ जीतीनसक्नुछत्यो ५३
त्यस्फौज्लाइगिराइबक्सनुभया❀त्यो इन्द्रजीतबीर्पनि
होम् छोडीकन लड्न आउँछ यहाँ❀त्योफौज्गिरायाभनि
एही युक्ति तहाँ बिभीषणजिले ❀बिन्ती गर्‍याथ्या जसै
लक्ष्मणले पनि सैन्यमाथि शरको❀वृष्टी गराया तसै ५४
बानर्ले पनि वृक्ष पर्वत शिला ❀फौज्माथिफ्याँक्याजसै
राक्षस्को पनि फौज्अघीसरिसरी❀खुब् लड्न लाग्यो तसै
लक्ष्मणले शरले अनेक् तरहले ❀ मारेर नाश्या भनी
साह्रै क्रोध गरेर इन्द्रजित बीर् ❀होमछोडि आयोपनि ५५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पवनका बेग् रथमा यती धनु लिई❀ आउने अगाडि सरी
लाग्यो लक्ष्मणलाइ भन्न अब हेर्❀ मेरा अगाड़ी परी
आँटि भन्न भन्योर ताहिं नजिकै❀ थीया विभीषण पनि
तिन्लाई पनि सून् भन्यो तँ कुलको❀ शत्रु अधम् होस भनी ५६

एती भन्यो र रिसले रथमा बस्याको
सब्लाइ जित्न भनि कम्मर खुब् कस्याको
केही नटेरि अरु वानरलाइ हेलाँ
साह्रै गराइकन भन्छ पर्‍या इ फेलाँ ५७

बाण् हानि प्राण सबको म हरेर लिन्छू
तिम्रो शरीर् पृथिविमा म गिराइ दिन्छू
यस्तो बचन् सुनी ति लक्ष्मणजी रिसाया
हानेर बाण् तहिं तुरुन्त थला बसाया ५८

मूर्छा पर्‍यो दुइ घडी र खुरुक्क उठ्यो
लाल् लाल् नजर् गरि रिसाइ अगाडि छुट्यो
मेरो पराक्रम एती न बुझेर पैल्हे
हानिस् पराक्रम तँ लौ बुझिले न ऐल्हे ५९

एती भन्यो र मनले अति वीर मानी
लक्ष्मणजिलाइ तहिं सात् शर जल्दि हानी
दश् बाणले त हनुमान् विरलाइ हान्यो
भन् मुख्य शत्रु त विभीषणलाइ ठान्यो ६०

हान्यो फेर् सय शर् विभीषण उपर्❀ एती गर्‍याथ्यो जसै
काट्या लक्ष्मणले कवच् शरिरको❀ त्यो इन्द्रजित्को तसै
हज्जार् शर् कन हानि लक्ष्मणजिको❀ गात्को कवच्को पनि
टुक्टुक् पारि गिराउँदो तहिं भयो❀ मेरो गिरायो भनी ६१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

लक्ष्मण्ले पनि फेरि पाँच शरले ❀ घोड़ा र रथ् सुत धनू
काटीबक्सनु भो उसै बखतमा ❀ अर्को उठायो धनू
फेर् तेसै धनुलाइ काटिदिनु भो ❀ तीन् बाण्ले फेर् धनु
लीयो लक्ष्मण्लाइ धेर् शरले ❀ हान्योछिटो वयामनू ६२
बाणौले गरि सब भर्यो दश दिशा ❀ बानर् सकल्मापर्या
लक्ष्मणले पनि इन्द्रजीत बिरको ❀ प्राण्लीनमन्सुब्धर्या
जुन् इन्द्रास्त्र थियो उही धनु महाँ ❀ लाई अगाडी सर्या
चिन्तन् श्रीरघुनाथको गरि तहाँ ❀ जल्दी प्रतिज्ञागर्या ६३
धर्मात्मा यदि सत्य दासरथि छन् ❀ हुन् नाथ्जगत्काधनि
साँचै ता अब इन्द्रजीत् यहिं मरोस् ❀ एसै शैरले भनि
छोड्या बाण र इन्द्रजीत बिरको ❀ शीरै खसाया जसै
इन्द्रादीहरु पुष्पबृष्टि खुशि भै ❀ खुब्गर्नलाग्या तसै ६४
हर्षैले नगरा बज्यो पृथिबिको ❀ जुन् भारि हो सो गयो
हर्षैले 'जय'शब्दको ध्वनिपनी ❀ ताहाँ बहुतै भयो
लक्ष्मण्लेपनिशंखकोध्वनिरखुब् ❀ टङ्कार् धनूको गर्या
बानर्ले बहुतै गर्या स्तुति तहाँ ❀ आनन्दमासब्पर्या ६५
लक्ष्मणजी सबफौज्लिएर रघुनाथ् ❀ ज्यूका हजुर्मा गया
पाउमा परि दण्डवत गरि तहाँ ❀ सब् बिन्ति गर्दा भया
खूशी खुब् हुनुभो सुनेर रघुनाथ् ❀ हूकुम्भयो बेस्गर्यौ
मार्यौ इन्द्रजितै त आज तिमिले ❀ सब्शत्रुकोमूल्हर्यौ ६६
मेरो शत्रु अवश्य छैन अब बीर् ❀ जुन् बीरहो सो गयो
यस् रावणकनमार्नलाइ सजिलो ❀ यो बीर मर्दा भयो
ऐल्हे युद्ध हुँदा म मार्छू सहजै ❀ भन्न्या हुकुम् योभयो
रावणले पनि यो सुनेर समचार ❀ मूर्छा तहाँ भैगयो ६७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
अथ सती सुलोचना सम्वाद

काट्याथ्या जब हात इन्द्रजित को ❀ लक्ष्मणजिले रण्महाँ
वेग्ले हात उडेर त्यो गई खस्यो ❀ त्यस्को थियो घर् जहाँ
त्यस्की रानि सुलोचना तहिं थिइन् ❀ कस्कोखस्यो हात्भनि
बुझ्ना खातिरमा लिएर सगिनी ❀ दौडिन् ति आफैं पनि ६८
त्यो हात्लाई चिन्हेर आफ्नुपतिको ❀ साहैं ठुलो शोक् गरी
हे नाथ् ! देख्छु म क्या भनेर मुखले ❀ लोटिन् ति मूर्छा परी
मूर्छा केहि परेर चेत् जब भयो ❀ फेरी उसै बिच् महाँ
लागिन् गर्न विलाप ती अति ठुलो ❀ यस्ता प्रकार्ले तहाँ ६९
क्या आश्चर्य छ हेर जुन् इ पतिले ❀ ठूलो पराक्रम् गरी
द्यौता दानवहेरु सबक्न जित्या ❀ कुन् हाल् भयो यो घरी
स्वर्गैमा गइ इन्द्रलाइ जसले ❀ बाँधेर ल्याया यहाँ
यो हात् हो उनकै भनेर मइँले ❀ मान्नू कउन् रीत् महाँ ७०
बाहे वर्ष न खाइ कत्ति न सुती ❀ ब्रत् गर्दछन् जो अति
तेस्ता जन्हरुदेखि मात्र रणमा ❀ मर्थ्या इ मेरा पात
तेस्तो कुन् अहिले थियो र रणमा ❀ इन्को यहाँ ज्यान्गयो
बन्या बात मलाइ आज बहुतै ❀ सन्देह मन्मा भयो ७१
साँचै छू म पतिब्रता यदि भन्या ❀ आफ्नू हवाल् हो जति
यै हात् लेखि लिन्या छ आज करुणा ❀ राखी म माथी अति
रावण्की ति बुहारिका बचन यो ❀ सूनी लियाथ्या जसै
ल्याई पाटि खरी तहाँ धरिदिया ❀ केटीहरूले तसै ७२
साम्ने ती सबका उठेर उहि हात् ❀ त्यो इन्द्रजीत्को तहाँ
लाग्यो लेख्न खरी लिएर इ कुरा ❀ फेरी उसै बिच् महाँ
हे कल्याणि ! इ राम लक्ष्मण दुवै ❀ हुन् चौधलोक्का पति
मानिस् भैकन जन्मि पृथ्वि तलमा ❀ हाम्रो गराया खति ७३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यो समचार् तिमिलाइ नै दिन भनी ❀ यो हात् खसायाँ यहाँ
मेरो शीर छ यस् बखत् बुझिलिया ❀ रामचन्द्रका सङ् महाँ
त्यो शीर्लाइ मगाइ साथ उसकै ❀ आगो जलाई पसी
भस्मै आफ्नु शरिर् गराउ म बिना ❀ कुन्सुख्छ लोक्मावसी ७४

लेखी यै रितका अनेक् अरु कुरा ❀ त्यो हात् खसेथ्यो जसै
देखि सोहि सुलोचनाकन भयो ❀ विश्वास मन्मा तसै
स्वामीका सँगमा म जान्छु सति भै ❀ भन्न्या बिचार्ले गरी
शोक् सुर्ता सब छोड्दिएर मनको ❀ खूशी भइन् त्यै घरी ७५

रावणकी ति बुहरि रानि पनि फेर् ❀ बीर्इन्द्रजित्की ति हुन्
छोरी बासुकि नागकी ति हुन गै ❀ कमती थियो बातकुन्
तिन्को किन्नर् अप्सराहरु टहल् ❀ गर्ध्या तथापी पनि
आँतिन् ती सति जान स्वामी न भई ❀ व्यर्थै छ यो सुख् भनी ७६

आफ्नू जो धन रत्न दौलत थियो ❀ तिन्ले निकालीलिइन्
साहै खुशि भएर त्यै बखतमा ❀ सबलाई बाँडी दिइन्
पाल्कीमा चढि हात् लिएर पतिको ❀ फेरी उसै बिच्महाँ
लागिन् जान बिदा म हुन्छु भनि ती ❀ रावण रहन्थ्यो जहाँ ७७

त्यो समचार् जब फैलियो शहर भर् ❀ सब् पौरवासीहरू
लाग्यापाल्कि पछाडिशोक् गरि ठुलो ❀ छोडी सबै काम् अरू
बाजाहेरु बजाइ फौज् पनि ठुलो ❀ सङ्मा गयाको थियो
रावण्लाइ ति शत्रु हुन् कि भनि खुब् ❀ शङ्का गराई दियो ७८

सोही कारणले हुकुम् हुनगई ❀ त्यो रावणैको तहाँ
दौड्यो फौज उसै तरफ् अति ठुलो ❀ अस्त्रै लिइ हात् महाँ
चौतर्फै तिरबाट घेरिकन गै ❀ त्यो फौज पौंची गयो
देख्याथ्यो ति सुलोचनाकन जसै ❀ अत्यन्त लज्जित् भयो ७६

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यसूरित्ले ति सुलोचना जब पुगिन् ❀ रावण् रहन्थ्यो जहाँ
हात् जोडीकन बिन्ति यो गरिलिईन् ❀ तिन्ले उसै बिच् महाँ
हे नाथ् ! बाहुलि यो उडेर पतिको ❀ मेरो घरैमा झरी
लेख्तो भो जति बात् म भन्दछु सबै ❀ सुन्नूहवस् यो घरी ८०

ह्वैनन् मानिस राम लक्ष्मण दुबै ❀ हुन् चौध लोक्का पति
मानिस्को अवतार् लिएर अहिले ❀ हाम्रो गराया खति
मेरो शिर् रघुनाथले छ अझ तक् ❀ राखीलिएको तहाँ
मागील्यौ शिर त्यो गएर तिमिले ❀ ती नाथका सङ्महाँ ८१

मेरो त्यो शिर ल्याई सोहि शिरका ❀ सङ्मा सती भै गई
चाँडो आउ तिमी पनी म सित लौ ❀ दिव्यै स्वरुप्की भई
लेखी एति कुरा मलाई पहिले ❀ फेरी उसै बिच् महाँ
निश्चल् भैकन भूमिमा गिरि गयो ❀ योस्वामिको हात् तहाँ ८२

सोही कारण रामचन्द्रसित लौ ❀ माग्छू म त्यो शिर् गई
आज्ञा बक्सनुहोस् मलाइ अधिराज! ❀ चाँडो हजुर् खुश भई
यस् रित्ले ति सुलोचना गइ तहाँ ❀ बिन्ती चढाइन् जसै
लाग्यो रावण भन्न ताप् गरि ठुलो ❀ तिन्लाइ यो बात् तसै ८३

भर गरिकन मैले भाइ छोराहरूको
लडिन न गइ आज् तक् बल् बुझ्याँ ती अरूको
जब त ति कन मार्या बानरैले नरैले
कसरि भनु म वीर् हुन् ती सबैलाई ऐल्हे ८४

भन तिमि अरुको छन् वीर मेरा समान
तिनिहरु सब जस्तो यो मलाई न ठान
त्रिभुवन भरमा जो वीर छन् मुख्य ऐल्हे
लडिकन सहजैमा वश गर्याकोछु मैले ८५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

नल निल हनुमान राम लक्ष्मणहरूको
कतल गरि सहज् शिर् शत्रु पक्षी अरूको
यहि घरि तिमिलाई ल्याई सौंपन्छु याहाँ
तिमि कन किन पर्ला जान तेस् ठाउँ माहाँ ८६

शेखीका ति कुरा जसै सुनिलिइन् ❀ त्यो रावणको तहाँ
लागिन् भन्न सुलोचना बचन यो ❀ फेरी उसै बिच्महाँ
जस्ले गर्व हऱ्या सहज्सित यहाँ ❀ श्री पर्शुराम्को पनि
तेस्ता रामकन भन्नु हुन्छ कसरी ❀ सामान्य मानिस् भनी ८७

नाघी क्षीर समुद्रलाइ जसले ❀ आएर लङ्का महाँ
भस्मै यस् पुरको सहज् गरीदिया ❀ साम्ने हजुर्का यहाँ
जस्का माफिक कोहि छैन बलवान् ❀ ती वायु पुत्रै पनि
आज्ञा हुन्छ हजुर् कसोरि अहिले ❀ सामान्य बानर् भनि ८८

यस्तो बुद्धि लिएर जो हजुरले ❀ सीताजि हर्नू भयो
तेसैले सब पुत्र भाइहरुको ❀ ऐल्हे यहाँ ज्यान् गयो
रावण्लाइ सुनाइ एति पहिले ❀ फेरी उसै बिच्महाँ
तेस् ठाम् देखि उठेर ती चलिगइन् ❀ मन्दोदरी छन् जहाँ ८९

साम्नेमा गइ सासुका ति पहिले ❀ पश्री चरण्मा परिन्
जस्तो आफ्नु हवाल हो सकल त्यो ❀ खोलेर बिन्ती गरिन्
सब् बिस्तार बुहारिको सुनि तहाँ ❀ मन्दोदरीले पनि
सम्झाइन् सति जान हुन्न तिमिले ❀ मुख् हेरि मेरो भनि ९०

मानीनन् ति सुलोचना जब तहाँ ❀ कौनै प्रकार्ले गरी
लागिन् फेर् पनि भन्नलाइ इ कुरा ❀ मन्दोदरी त्यो घरी
हे कल्याणि ! विचार जो छ तिमिले ❀ ऐल्हे गऱ्याको यहाँ
साँचै हो बढ़िया छ सब तरह त्यो ❀ तिम्रा निमित्तै महाँ ९१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भेटी नारदजी अगाडी इ कुरा ❀ भन्थ्या मलाई पनि
श्री रामचन्द्र भई अवश्य भगवान् ❀ औतार लिन्याछन् भनि
मर्नन् रावण कुम्भकर्ण अरु सब् ❀ हात् देखि तिन्कै यहाँ
गर्नन् राज्य विभीषणै सकल यो ❀ बाँचेर लङ्का महाँ ९२
हुन्थ्यो त्यो ऋषिको कुरा किन झुटो ❀ त्यै कारणैले गरी
मान्दैनन् ति कुरा बुझाइ ससुरा ❀ भन्न्या बुझया यो घरी
जाऊ लौ शिर माग्न आफ्नु पतिको ❀ रामचन्द्रका सङ्महाँ
राख्याछन् करुणा अवश्य पनि ती ❀ तिम्रा उपर् खुब् तहाँ ९३
सुग्रीव् श्री हनुमान आदिक तहाँ ❀ बानर्हरु छन् जती
सेवाले रघुनाथको ति पनि सब् ❀ धार्मिक् भया हुन् अती
कान्छा छन् ससुरा गरेर बिनती ❀ रामचन्द्रका सङ् महाँ
तिम्रो मन्सुब जो छ पूर्ण सब त्यो ❀ गर्नन् अवश्यै तहाँ ९४
त्यसरित्ले ति सुलोचनाकन बिदा ❀ तिन्ले दिईथिन् जसै
पाल्कीमाथि चढेर त्यै घरि गइन् ❀ रामका समिपमा तसै
लाग्यो राक्षसको फउज् अति ठुलो ❀ तिन्का पछाडी महाँ
लाग्या बाद्य बजाउनाकन पनी ❀ खुब्शोक् जनाई तहाँ ९५
बालख् बृद्ध समेत् मिलि अति ठुलो ❀ त्यो फौज जम्बा भयो
रामका फौज् तिरमा चलाइ कदमै ❀ बढ्दै बराबर् गयो
क्यै दुर्बाट जनानी पाल्किकन त्यो ❀ देखी लीयाथ्या जसै
रामका फौज् तिरमा कुरा हुनगयो ❀ नाना प्रकार्को तसै ९६
इन्द्रजीत् मरिगो भनेर बुझ सब् ❀ डर् रावणैले लियो
सीताजीकन रामका हजुरमा ❀ ऐल्हे पठाई दियो
लड्नैलाई परेन लौ अब यहां ❀ जीत् भो यसैले गरी
भन्दै फौज् रघुनाथका जति थिया ❀ खबखश भया त्यो घरी ९७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यो फौजमा ति सुलोचना जब पुगिन् ❀ पाल्की अड्याई लिई
लागिन् हेर्न खडा भई नजरले ❀ चारौं तरफ् मन् दिई
अङ्गद् श्री हनुमान सुग्रीव समेत् ❀ बानरहरू छन् जति
सेवा श्री रघुनाथको गरि तहाँ ❀ घेरेर वस्थ्या अति ६८
लक्ष्मण्जी र विभीषणै दुइ तरफ् ❀ श्री रामजीका थिया
तारा मण्डलमा समान शशि झैं ❀ रामचन्द्रजी देखिया
देखी श्यामल गौर वर्ण गरन्न्या ❀ राम् लक्ष्मणै लाइ ती
दौडिन् त्यस्तिर मानु मुक्ति पदवी ❀ सायुज्य कै पाइ ली ६६
सामने गै ति सुलोचना प्रभुजिका ❀ पश्री चरण्मा परिन्
हात् जोडीकन भक्तिपूर्वक तहाँ ❀ यस्तो पुकारा गरिन्
हे नाथ् ! हात् पतिको खसेर घरमा ❀ लेखी सबै बात् कह्यो
सत्गत् गर्न निमित्त पाउँ मइँले ❀ ती स्वामीकोशिर् छ जो १००
जान्दैनन् महिमा जउन् हजुरको ❀ ब्रह्मा महेश्वर्हरू
भार्या राक्षसको भएर मइँले ❀ वर्णन् कसोरी गरूँ
भन्छन् दीनदयाल् हजुर्कन सबै ❀ त्यै कारणैले गरी
आयाँ पर्न शरण् महाँ हजुरको ❀ दुक्खित् भई यौ घरी १
गर्थिन् बिन्ति सुलोचना यहि प्रकार् ❀ रामचन्द्रका सङ्महाँ
गर्थ्या वर्णन रूपको ति सतिको ❀ बानर् थिया जो तहाँ
त्यो हाल् देखि बुहारिको मन महाँ ❀ दुःखित् विभीषण् भया
हात् जोडी रघुनाथका हजुरमा ❀ झट् भन्न लागी गया २
राजा रावणकी बधू र महिषी ❀ वीर् इन्द्रजित्की इ हुन्
छोरी वासुकि नागकी हुन गई ❀ इन्का समान् स्त्रीछ कुन्
आइन् पर्न शरणमहाँ हजुरका ❀ चाँडो हजुर्ले पनि
योग्यै हो करुणा यहाँ गरिदिनू ❀ ऐल्हे सती हुन् भनी ३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बिन्ति त्यसूरितको तहाँ ति दुइको ❀ सुन्नू भएथ्यो जसै
आज्ञा भो ति सुलोचनाकन तहाँ ❀ रामचन्द्रजीले तसै
हे देवी ! तिमिलाइ मन् यदि भय ❀ मेरो बोलले गरी
पैल्हे माफिक बाँचि इन्द्रजित यो ❀ उठन्या छ एसै घरी ४
राजा भै रहला अनेक् दिन तलक् ❀ यो इन्द्रजित् वीर् यहाँ
पाऊली सुख भोग् ठुलो तिमी पनी ❀ यसका रही सङ्गमहाँ
आज्ञा त्यस् रितको तहाँ प्रभुजिको ❀ सुन्दा भयाथ्या जसै
क्या गर्छन् प्रभुले यहाँ अब भनी ❀ सब् खल्बलाया तसै ५
लड्ला निश्चय वीर इन्द्रजित यो ❀ जीवित् भया फेर् यहाँ
राजा एहि भया विभीषण हुनन् ❀ राजा कउन् रीत् महाँ
यस्तै तर्क बितर्क बानरहरू ❀ गर्दै थिया त्यो घरी
लागिन् भन्न ति नागराज - तनया ❀ रामका चरण्मा परी ६
सब् सामर्थ्य छ हे प्रभो ! हजुरमा ❀ आश्चर्य मान्दीन क्यै
गर्दैनन् अरू क्वै हजुर् सरि दया ❀ जानीलिया देखि यै
लक्ष्मणलाइ सुपात्रजानि जिउदान् ❀ मेरा पतीले दिया
क्या भन्नन् पति तो मलाइ अहिदान् ❀ मले फिराई लिया ७
उसमाथी पनि युद्धमा मरण यो ❀ सामने हजुर्को भई
मिल्न्या भो शुभलोक तिन्कन सहज् ❀ सब् पाप छुट्नै गई
तिन्को भाग्य ठुलो थियो र अहिले ❀ संयोग् पऱ्यो यो यहाँ
पाया जो पतिले अलभ्यपद यो ❀ नाश् गर्छु मैले कहाँ ८
तस्मात् हेभगवान् ! जहाँ यस बखत् ❀ मेरा इ स्वामी गया
ताहीं जान भनी हुकुम् दिनुहवस् ❀ राखी ममाथी दया
यस्तो बिन्ति सुलोचना गरि तहाँ ❀ नौनै भईथिन् जसै
आज्ञा गर्नुभयो बहुत खुशि भई ❀ रामचन्द्रजीले तसै ९

CC-0. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे देवी ! पतिको असल् बुझि सबै ❀ बिन्ती गऱ्यौ यो भनी
मैले आज पतिव्रता तिमि समान् ❀ मान्दीन कोही पनि
सोही कारणले म दिन्छु बरदान् ❀ इन्द्राणि तुल्यै भई
भोग् गर्नु शुभलोक् गएर तिमिले ❀ सङ्गमा पतिका रही १०
पैल्हे एति भनी मगाइ लिनुभै ❀ शिर् इन्द्रजीत्को तहाँ
लौ लेऊ भनि रामले दिनुभयो ❀ तिन्लाइ त्यै बिचमहाँ
पाई त्यो शिर स्वामिको खुश भई ❀ तो जान लागिन् जसै
लाग्या बानरहेरु गर्न इ कुरा ❀ आपसहरूमा तसै ११
काट्याको गइ हात इन्द्रजित्को ❀ लेख्यो कुरा त्यो कहाँ
गर्छन् राक्षसहरु यै तरहले ❀ छल्छाम धेरै यहाँ
साँचै हो यदि त्यो भन्या त अहिले ❀ शिर् इन्द्रजित्को पनि
बोल्थ्यो केहि कुरा अवश्य तिमिले ❀ यो काम गर्नु भनी १२
त्यस रितले ति सुलोचनाकन तहाँ ❀ झूटी गराई लिई
लाग्या बानरहेरु गर्न जब बात् ❀ दृष्टान्त धेरै दिई
त्यो चोट् लागि सुलोचनाकन बहुत् ❀ सामने ति सबका तहाँ
स्वामीको शिरलाइ भन्न इ कुरा ❀ लागिन् उसै बिचमहाँ १३
हे नाथ् ! बानरले अनादर यहाँ ❀ गर्छन् मलाई अती
एकबार् हाँसि लिनूहवस् अब हजुर् ❀ साँचैम छू ता सती
त्यस्तो अर्ज गरिन् तहाँ ति सतिले ❀ सबका अगाडी जसै
हाँस्यो त्यो शिर वीर इन्द्रजितको ❀ भारी स्वरैले तसै १४
बज्रै पात समानको स्वर गरी ❀ त्यो हाँसनाले तहाँ
यो कुन् शब्द भयो भनी गरिरहया ❀ चर्चा तिनै लोक् महाँ
त्यो बात् देखि लियार बानरहरू ❀ आश्चर्य साह्रै भया
सुग्रिव्ले रघुनाथलाइ इ कुरा ❀ फेर् सोध्न लागी गया १५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे नाथ् ! यो शिर वीर इन्द्रजितको ❀ हाँस्यो कउन् बात्महाँ
आज्ञा गर्नुहवस् मलाइ अहिले ❀ खोलेर त्यो सब् यहाँ
बिन्ती त्यस्रितको ति सुग्रिवजीको ❀ सुन्नू भयाथ्यो जसै
आज्ञा गर्नु भयो बहुत् खुश भई ❀ रामचन्द्रजीले तसै १६
हे सुग्रिब्जि ! यहाँ ठुलो तप अघी ❀ वीर् इन्द्रजित्ले गऱ्यो
तेस् भन्दा सतिको महत्व हुनु यो ❀ यस्का मनैमा पऱ्यो
तेस्तै जानकिको मदेखि बढता ❀ मानी महत्व यहाँ
हाँस्यो हेरि मलाइ यस् असुरले ❀ भन्न्या बुझ्या मन् महाँ १७
नारीहेरु पतिव्रता जति हुनन् ❀ तेस्ता इ नारी सरी
साँच मान्दिन लौ पुरुष्हरु कुनै ❀ मैले पनि यो घरी
तेस्तै इ सति हुन भनिन् र इनले ❀ हाँस्यो शिरै यो यहाँ
जो भन्छन् सतिहेरु पुग्छ सब त्यो ❀ जान्याछ निष्फल् कहाँ १८
रामले सुग्रीवलाइ त्यस् तरहले ❀ सम्झाउनू भो जसै
साह्रै मान् ति सुलोचनाकन गऱ्या ❀ बानर्हेरुले तसै
हात्मा ली शिर वीर इन्द्रजितको ❀ रामलाई ढोगी तहाँ
पाल्कीमा चढि ती मसान् तिर गईन् ❀ फेरी उसै बिन्महाँ १९
रावण्ले ति कुरा जसै सुनिलियो ❀ सुर्ता मनैमा गरी
रानीहेरु लिइ मसान् तरफमा ❀ जाँदोभयो त्यै घरी
सेवक्ले बढिया चिता रचि तहाँ ❀ हाल्या सुगन्धै अति
स्वामीको शिर ली चिता उपर गै ❀ चढ्दी भइन् ती सती २०
आगो लाया चितामा जब गइ सबले बल्न लाग्यो चिता त्यो
ज्वाला निस्लेर तेस्को लपक उठी ठुलो स्वर्ग लोक्मा पुगीगो
गर्ज्या बानरहरू धेर् उहि बखत महाँ सिंहनाद् सोही सूनी
लाग्यो क्रोध गर्न रावण अतिशय मनमा हँसि गर्ज्या ति सूनी २१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जित्नू कुन् रितले लडेर मइँले ❀ रामचन्द्रलाई भनी
गर्दा रावणले विचार मनमा ❀ सम्झ्यो कुरा यो पनि
मैरावण् भनि पुत्र जो छ बलवान् ❀ मेरो रसातल् महाँ
डाक्छू रामसित लड्न लाइ अबलौ ❀ त्यस्लाइ मैले यहाँ २२
मन्मा त्यस्रितको बिचार् गरिलियो ❀ त्यो रावणले जसै
प्रत्यक्षै हुनगो बुझेर ति कुरा ❀ मैरावणै त्यो तसै
रावण्ले जब आफ्नु पुत्रकन त्यो ❀ प्रत्यक्ष देख्तो भयो
राक्षस्हेरू जती मऱ्या समरमा ❀ विस्तार् ति सब्कोकह्यो २३
रावण्देखि सुनेर त्यो सकल हाल् ❀ मैरावणैले तहाँ
लाग्यो रावणलाइ भन्न इ कुरा ❀ फेरी उसै बिच् महाँ
राम् लक्ष्मण् दुइ भाईलाइ अधिराज् ❀ मैले छलैले हरी
मन्दिर्मा लगि देविको त वलिदान् ❀ गर्न्याछु एसै घरी २४
रावण्लाइ भनेर एति पहिले ❀ मैरावणै त्यो तहाँ
मायाले लिइ रूप् विभीषणजीको ❀ गो रामका फौज् महाँ
त्यस् बेला भई रात्रि राघव तहाँ ❀ सुत्थ्या दुवै भाइ ती
आँखा सब् अरुको छलेर चलिगो ❀ साथ्मा दुवैलाइ ली २५
पत्तै केहि पनी भएन उसको ❀ रामका फउजमा तहाँ
आकाश्मार्ग गरी उडी असुर त्यो ❀ पौंच्यो रसातल् महाँ
प्रातःकाल भया पछी खबर त्यो ❀ बानर्हरूमा भयो
देख्यानन् दुइ भाइलाइ र तहाँ ❀ सुर्ता ठुला भै गयो २६
लङ्कामा पनि चर् विभीषणजीका ❀ धेरै बस्याका थिया
तिन्ले आइ विभीषणै कन तहाँ ❀ सूचन् सबैले त्यो दिया
डाकी वायु-कुमार् विभीषणजिले ❀ भन्दा भया यो पनि
राम् लक्ष्मण दुइ भाईलाई लिई गो ❀ मैरावणैले भनी २७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यो वीर बस्तछ गै रसातल महाँ ❀ जाऊ तिमी झट् तहीं
कस्तै केहि परोस् तथापि तिमिले ❀ ढीलो नगर्नू कहीं
त्यस्तो बात सुनी विभीषणजीका ❀ खुश् वायु-पुत्रै भया
चाँडो ल्याऊँछु ती दुवै प्रभु भनी ❀ उफ्रेर बेगले गया २८
सर्वात्मा पूर्ण ब्रह्म रघुपति कन क्या सक्तथ्या बाँधनै को
किर्ती होस् मारुतीको भनिकन खुशले बाँधिया झैं हुनू भो
साँचै ती बाँधियाका बुझिकन बलिदान् गर्न मन्ले बिचारी
मैरावण् होम गर्थ्यो खुश भइ बहुतै त्यस् घरी मौनधारी २९
पौंच्या श्री हनुमान गैं उहि बखत् ❀ होम् गर्दथ्यो त्यो जहाँ
द्वार्पाले भइ बस्तथ्यो अति बलो ❀ वानर् मयध्वज् तहाँ
रोकी श्री हनुमानलाइ उसले ❀ भन्दो भयो या पनि
खोज्छस् लौ किन पस्न मन्दिर महाँ ❀ आएर ऐल्हे भनि ३०
पुत्रै हूँ हनुमानको तँ बुझिले ❀ ऐल्हे तँलाई यहाँ
मार्न्याछु मइले तलाइ सहजे ❀ जोर् पुग्छ तेरो कहाँ
त्यस्तो बात् हनुमानले सुनिलिया ❀ त्यो बानरैको जसै
लाग्या क्रोध गरेर भन्न इ कुरा ❀ तेस्का सँगैमा तसै ३१
हे बानर् ! हनुमान मैं हुँ बुझिले ❀ स्वप्ना भयामा पनि
संगम् गर्दिन नारिको म कसरी ❀ मानूँ तँ पुत्रै भनी
बोल्छस् व्यर्थ झुटो यसोरि तँ यहाँ ❀ कुन् कारणैले गरी
खोली त्यो सब बात् मलाई तइँले ❀ बिस्तार भन् यो घरी ३२
यस्तो बात् हनुमानको सुनिलियो ❀ त्यो बानरैले जसै
आफ्नू जन्म भयो जसोरि पहिले ❀ सब् भन्न लाग्यो तसै
हे नाथ ! तर्नु भयो समुद्र जब ग ❀ सित जि खजुदा महाँ
छुट्तो भो पसिना बहुत हजुरको ❀ तेसको भयाँ मैं यहाँ ३३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सोही कारणले हजुरकन यहाँ ❀ मान्छू पिता यो घरी
जीवन् धर्न भनेर यस् असुरको ❀ गर्दो भयाँ चाकरी
राजपुत्र दुई ल्याइ गर्छु बलिदान् ❀ भन्या विचार्ले यहाँ
मैंरावण् गरदोछ होम् अति ठुलो ❀ यै देवि मन्दिर् महाँ ३४
द्वार्पाल हूँ मँ मलाइ यस् असुरको ❀ आज्ञा भई यो घरी
छोड्नू हुन्न यहाँ कसैकन पनी ❀ आफ्ना खुशिले गरी
तस्मात् रोक्छु हजूरलाइ मइँले ❀ जानें भया मन् यहाँ
पाल्नहोस बलले मलाई अहिले ❀ जीतेर युद्धै महाँ ३५
यस्तो बात् हनुमान्ले सुनिलिया ❀ त्यो बानरैको जसै
बेही पुच्छरले घुमाइकन खुप् ❀ तेस्लाइ फ्याँका तसै
आफ्न सानु स्वरूप् गराइकन फेर् ❀ तेस् मन्दिरैमा पसी
पिठ् तर्फै गइ देविको उहि बखत् ❀ हेऱ्या तमाशा बसी ३६
होम्को सिद्ध गरेर पूजन तहाँ ❀ मैंरावणैले गऱ्यो
नवेद्यहरु सामु ल्याईकन धेर् ❀ श्री देविजीको धऱ्यो
खाया श्री हनुमानले सकल त्यो ❀ गुप्तै हिसाब्ले गरी
प्रत्यक्षै हुनु देविले बुझि तहाँ ❀ खुश् भो असुर् त्योघरी ३७
राम् लक्ष्मण् दुइ भाइलाइ पनिफेर् ❀ सामने मगाइ लियो
सेवक् गणकन देउ लौ बलि भनी ❀ आज्ञा असुर्ले दियो
आज्ञा पाइ ति सेवकैहरु तहाँ ❀ आया अगाडी जसै
देवीको तरवार् लिएर हनुमान् ❀ गर्ज्या तहाँ खुब् तसै ३८
सेवक्हरु पनी थिया उस बखत् ❀ मैंरावणैका जती
दौडी श्री हनुमानलाइ सबले ❀ घेऱ्या रिसाई अती
हातमा त्यै तरवार् लिए हनुमान् ❀ खुब् घुन्न लागी गया
सक्छ्या टिक्नति कुन् सहज् सित तहाँ ❀ सबलाइ कट्ना भया ३९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

देखी सेवकको विनाश बहुतै ❀ क्रोधित् भइ मन् महाँ
भन्दो भो हनुमानलाइ इ कुरा ❀ मैरावणैले तहाँ
हे मूढ् बानर ! के तँलाइ मनमा ❀ लाग्दैन डर् क्यै पनि
चिन्दैनस् कि मलाइ क्या तँ अहिले ❀ मैरावणै हो भनि ४०
जम्बूमाल् म नहूँ न अक्षय म हूँ ❀ मैरावणै वीर् म हूँ
आफ्नू काल् तईले मलाई बुझिले ❀ धेरै कुरा क्या कहूँ
यो बात् श्री हनुमानलाई मुखले ❀ बोलेर तेस्ले तहाँ
हात्मा खड्ग लिई घुमाईकन खुब् ❀ छोड्यो उसै बिच्महाँ ४१
त्यो खड्ग हनुमानले बिच महाँ ❀ पक्रेर हात्मा लिया
त्यो मैरावणको सहज् शिर तहाँ ❀ काटी खसाली दिया
त्यो कर्मै पहिले गरेर हनुमान् ❀ रामका चरण्मा पऱ्या
फर्कौं हे प्रभु ! लौ भनेर तहिं फेर् ❀ हात् जोरिविन्तीगऱ्या ४२
त्यो विन्ती हनुमानले गरिलिया ❀ आफ्ना सँगैमा जसै
तिन्का काँध महाँ चढ्या खुश भई ❀ भाई दुवै ती तसै
उफ्र्या श्री हनुमान् फिरेर तहिं फेर् ❀ लङ्का तरफ् त्यौ घरी
आफ्नू फौज जहाँ थियो पुगिगया ❀ हावा समान् बेग् गरी ४३
राम् लक्ष्मण् दुई भाईलई लिई ती ❀ पौंच्या फउज्मा जसै
सारा फौज उठी गऱ्या जय पुकार् ❀ रामचन्द्रजीको तसै
गर्दा त्यौ जयघोष् तहाँ ति सबले ❀ त्रैलोक्य पूर्णै गऱ्यो
रावण्का मनमा सुनेर उहि स्वर् ❀ अत्यन्त सन्ताप् गऱ्यो ४४

नरान्तक वध

रावण्लाई भन्यो उसै घरि कुनै ❀ मन्त्री गई यो पनि
पुत्रै छन् अधिराज ! जो हजुरका ❀ ऐल्हे नारान्तक् भनि
ब्रह्माको शिवको मिलेर वरदान् ❀ रिनलाई ऐल्हे यहाँ
तिन्का साथ लडेर जित्न अहिने ❀ सक्तैन क्वै लोक् महाँ ४५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मार्नन् ती सव शत्रुलाई सहजै ❀ आएर युद्धैं गरी
डाकी बक्सनुहोस् प्रभो ! हजुरले ❀ तिन्लाई एसै घरी
मन्त्री एति भनेर चुप् जब भयो ❀ फेर् रावणैले पनि
लेख्यो पत्र नरान्तकै कन तहाँ ❀ चाँडो तँ आयास् भनि ४६
धूम्रैकेतु भनेर राक्षस थियो ❀ तेस्लाई डाकी लिई
झट् त्यो रावणले भन्यो यहि कुरा ❀ त्यो पत्र हात्मा दिई
हे वीर् ! गैकन वैहवालपुरमा ❀ मैले दियाको भनि
यो पत्रै तँ नरान्तकै कन दियास् ❀ ढीलो नहोस् क्यै पनि ४७
आज्ञा रावणको जसै सुनिलयो ❀ त्यो राक्षसैले तहाँ
त्यो पत्रै लिइ वैहवालपुर तरफ् ❀ दौड्यो उसै बिचमहाँ
धूम्रैकेतु गएर त्यो पुर महाँ ❀ जैल्हे पुग्याको थियो
हात्मा सोहि नारान्तकै कन गई ❀ त्यो पत्र तेस्ले दियो ४८
बाबूको जब पत्र त्यो पढि लियो ❀ खुश्भै नरान्तक् अति
जम्बा पारिलियो उसै बखतमा ❀ आफ्ना फउज हुन्जति
त्यो वीर् जान तयार् भो फउज ती ❀ लङ्कापुरीमा जसै
रानी त्यसकि पनी चढिन् रथ उपर् ❀ सङ्गमा खसम्का तसै ४९
घोडा रथ् गज पालिक माथि चढन्या ❀ तिन् कोटि राक्षस् थिया
पैदल् फौज् दश कोटि भैकन तहाँ ❀ तिन्लाई गै साथ् दिया
दश्लाख् फौज चल्योअगाडि सबका ❀ बाजा बजाई अति
यस् रित्ले गरि वैहवालपुरको ❀ हिंड्दोभयो त्यो पति ५०
श्री रामचद्रजीका फउज् नजिकमा ❀ त्यो फौज् पुग्याथ्यो जसै
आयो फौज् लिई को भनेर हनुमान् ❀ त्यस्तर्फ दौड्या तसै
देखी राक्षसको ठुलो फउज त्यो ❀ ती वीर गर्ज्या अति
दौड्या फेर् तहिं अङ्गदादिक पनी ❀ वानर् थिया वीर् जति ५१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
देखेथ्यो जब वैहवालपतिले ❀ ती वायु-पुत्रै तहाँ
मार्छू यस्कन लौ भनेर धनुबाण् ❀ झट्पट्लियो हात् महाँ
बाण् छोड्नै उसले नपाई हनुमान् ❀ दौडेर साम्ने गया
तेस्को त्यो धनुलाई भाँचि रिसले ❀ एक्मुड्कि हान्दाभया ५२
लागेथ्यो हनुमानको मुठि जसै ❀ मूर्छा नरान्तक् पर्‍यो
चेत्भो केहि पछी र शक्ति लिई बेस् ❀ त्यस्ले तहाँ त्याग्गर्‍यो
लाग्दो भो हनुमानका हृदयमा ❀ त्यो शक्ति बेग्ले गरी
साम्ने सब्विरका गिर्‍या ति हनुमान् ❀ मूर्छा तुरुन्तै परी ५३
लोट्या मूर्छित भै जसै ति हनुमान् ❀ अत्यन्त क्रोधित् भई
घेर्‍या तेस्कन अङ्गदादिक ठुला ❀ बानर्हरूले गई
मूर्छा एक् छिन भै उठेर हनुमान् ❀ फेरी उसै बिच्महाँ
राक्षस्को सब सैन्य मार्दछु भनी ❀ दौड्यो रिसाई तहाँ ५४
साम्ने तेस् घरि पर्दथ्या असुर जो ❀ बेन्ही पुछर्ले कति
फ्याँक्या सागरमा घुमाई बहुतै ❀ क्रोधित् भई ती अति
लात्तीले मुठिले कसैकन तहाँ ❀ ठोकी सहज् मार्दथ्या
यस् रित्ले हनुमान त्यो असुरदल् ❀ धेरै सखाप् पार्दथ्या ५५
अङ्गद्ले पनि एक् पहाड अति ठुलो ❀ ल्याएर त्यै बिच्महाँ
छाडी बेग सित वैहवाल-पतिको ❀ रथ् चूर्ण पार्‍या तहाँ
रथ्देखी पहिल्यै कुदी असुर त्यो ❀ मुग्दर करैमा धर्‍यो
अंगद्का शिरमा घुमाईकन खुब् ❀ जोर्ले प्रहारै गर्‍यो ५६
लागी मुग्दर त्यो ति अङ्गद गिर्‍या ❀ मूर्छा तुरुन्तै परी
फौजमा बानर् को नरान्तक छुट्यो ❀ क्रोधित् भई त्यै घरी
ठोकी मुग्दरले ति सब्कन तहाँ ❀ पैल्ह हटाई लियो
फेर् तेस्ले हनुमानलाई पनि गै ❀ क्रोधित् भई हाँकदियो ५७
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

हे बानर् ! अब हेर् तँलाई मईले ❀ एक् मुड्कि हानी यहाँ
तेरो शिरकन चूर्ण गर्छु सहजै ❀ उमकेर जालास् कहाँ
पैल्हे एति भनेर तेस् असुरले ❀ खुप्मुड्कि बाँधीलियो
ताकी श्री हनुमानका शिर महाँ ❀ जोरले चलाई दियो ५८
त्यो मुड्की सहजै सहेर हनुमान् ❀ भन्दा भया यो पनि
हे राक्षस् ! अब हेर् तँ यै घरिमहाँ ❀ शिर्फुट्छ कस्को भनि
पैल्हे एति भनेर फेर् पुछरले ❀ बेन्हरे तानी तहाँ
तेस्लाई हनुमानले उहि बखत् ❀ एक्लात्दिया शीर्महाँ ५९
लाग्यो लात् हनुमानको शिर उपर् ❀ त्यो राक्षसैको जसै
छाँद्दै धेर रगत् अचेत् हुनगई ❀ पस्र्यो जमीन्मा तसै
छाडी तेस्कन ताहिं फेरि हनुमान् ❀ अन्यत्र दौडी गया
साम्नेमा जति पर्दथे असुरदल् ❀ सब्लाइ मार्दा भया ६०
मूर्छा एक घडी परेर जब चेत् ❀ आयो नरान्तक् महाँ
माया राक्षसको म गर्छु अब लौ ❀ भन्न्या बिचार्‍यो तहाँ
मायाले गरि अन्धकार बहुतै ❀ पारेर सोही घरी
ढाक्तो भो रणभूमि त्यो सहजमा ❀ वर्षा शरैको गरी ६१
आफ्नु हात समेत् ति बानरहरू ❀ देख्दैनथ्या क्वै तहाँ
बारम्बार् गइ अस्त्रशस्त्रहरु धेर् ❀ लाग्थ्या शरीरै महाँ
हाहाकार् परिगो सबै फउज भर् ❀ बानर् बिनाश् धेर्भया
अङ्गद् बीर् हनुमान् समेत् उस घरी ❀ मूर्छा तहाँ भै गया ६२
त्योहाल् लक्ष्मणले जसै सुनिलिया ❀ क्रोधित् भई मन् महाँ
जान्छू लड्न म लौ भनी चलिगया ❀ त्यो युद्ध हुन्थ्यो जहाँ
अग्न्यास्त्रैहरुको प्रयोग् गरि तहाँ ❀ लक्ष्मण्जिले त्यै घरी
पार्‍या त्यो रणभूमि भर् अति प्रकाश ❀ सूर्यै उदाए सरी ६३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

माया आफ्नु तिनष्ट भो भनि तहाँ ❀ क्रोधित् नरान्तक् भई
हान्यो शक्ति ठुलो कुदेर नगिच ❀ श्री लक्ष्मणैका गई
लाग्यो शक्ति ठुलो जसै असुरको ❀ लक्ष्मणजि मूर्छा पऱ्या
राक्षस्हेरु जती थिया ति सबले ❀ खुब् सिंहनादै गऱ्या ६४

त्यो राक्षस्कन दौडी गै उहि बखत् ❀ बीर् जाम्बवान्ले तहाँ
कम्मर् पक्रिलिई उठाइ बलले ❀ फाल्या समुद्रै महाँ
जोर्ले गिर्न गई नरान्तक तहाँ ❀ बुड्दै बराबर् गयो
पाताल् तक् पुगिलात् दिई जमीनमा ❀ उफ्रेर फिर्दो भयो ६५

फर्की आइ न पुग्दई असुर त्यो ❀ पर्दो भयो रात् पनि
चैतन्यै भइ लक्ष्मणैहरु फिऱ्या ❀ भोली लडौंला भनी
सागर्देखि फिरी नरान्तक पनी ❀ अत्यन्त लज्जित् भयो
बाँच्याका जति फौज् लिएर सँगमा ❀ लङ्कापुरीमा गयो ६६

साम्ने रावणको नरान्तक गई ❀ पाऊ परेथ्यो जसै
राख्यो रावणले बहुत् खुश भई ❀ आफ्ना नगिच्मा तसै
सीतालाई हरण् गऱ्यापछि तहाँ ❀ आफ्नो हवाल् जो भयो
दुःखित् भैकन पुत्रलाइ सब त्यो ❀ तेस् रावणैले कह्यो ६७

रावण्देखि सुनेर त्यो सकल हाल् ❀ फेरी नरान्तक् पान
लाग्यो भन्न हजूरले अब सबै ❀ छोड्नूहवस् ताप् भनी
भोली मार्दछु राम लक्ष्मण समेत् ❀ बानर्हरु सब् यहाँ
बाँच्याको म छँदैछु शत्रुहरुको ❀ डर् मान्नुपर्ला कहाँ ६८

पुत्रैको सुनि बिन्ति यस् तरहको ❀ त्यो रावणै खुश् भयो
नाच् गान् बाद्य गराइ तेसकन तहाँ ❀ खुश् गर्न लागीगयो
रानी विन्दुमती नरान्तक कि जो ❀ सङ्मा गयाकी थिइन्
तिनूले गैकन सासुका सँगमहाँ ❀ फेर ताहिं भेटी लिइन् ६९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आयाकी ति बुहारिलाइ घरमा ❀ देखी लिईथिन् जसै
राखी प्रेमसित बातचित् गरिलिइन् ❀ मन्दोदरीले तसै
पुत्रैलाइ बुहारिलाइ पहिले ❀ खुश् यै प्रकार्ले गरी
आफ्ना खोपि महाँ ति सासु ससुरा ❀ जाँदा भया त्यै घरी ७०
मौका बेस् रितको बुझ्रेर मनले ❀ मन्दोदरीले तहाँ
लागिन् रावणलाइ भन्न इ कुरा ❀ फेरी उसै बिच् महाँ
हेनाथ्! आधहि होस् बचोस् छ बढिया ❀ सर्वस्वको नाश् न होस्
दासी हूँ म हजूरकी हजुरले ❀ यो बिन्ति मान्नुहवस् ७१
इन्द्रैजित् मरिगो मऱ्या समरमा ❀ साह्रै ठुला बीर् अरू
यो युद्धै अब क्या लडेर अहिले ❀ जित्लान् नरान्तक्हरू
सीता सौंपिदिएर मेल् गरिलिई ❀ रामचन्द्रका सङ्महाँ
बाँकी छन् अरू जो बचाउनु हवस् ❀ चाँडो हजूर्ले यहाँ ७२
बिन्ती त्यस् रितको तहाँ गरिलिइन् ❀ मन्दोदरीले जसै
त्यो बात् रावणले नमानिकन क्यै ❀ गर्दोभयो क्रोध् तसै
छोड़ी तिन्कन ताहिं त्यै बखतमा ❀ ऊठेर अन्तै गयो
भोली के अब हुन्छ यो फिकिरमा ❀ त्यो रात जागा रह्यो ७३
युद्धै त्यो दिनको कह्या सकल गै ❀ लक्ष्मणहरुले जसै
रामले सोध्नुभयो बिभीषणजिका ❀ सङ्मा कुरा यो तसै
को हो राक्षस त्यो कसोरि हुनगो ❀ तेस्ता प्रकार्को यहाँ
सब् बिस्तार गरी बताउ तिमिले ❀ मेरा अगाडी महाँ ७४
सोध्नुभो रघुनाथले जब तहाँ ❀ यस्ता प्रकार्ले गरी
हात् जोरीकन फेर् बिभीषणजिले ❀ बिन्ती गऱ्या त्यै घरी
त्यो हो रावणपुत्र तेस्कन सबै ❀ भन्छन् नरान्तक् भनी
तेस्को हाल छ जो म भन्दछु सबै ❀ सुन्नुहवस् त्यो पनी ७५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मूल् नक्षत्रमहाँ परी जनम भो ❀ तेस्को जउन् दिन्महाँ
त्यै दिन्मा अरू राक्षसेहरू पनी ❀ पैदा भया जो यहाँ
गर्छन् धन् जनको बिनाश् ति सबले ❀ भन्न्या गूणीले कही
सागर्का तिरमा ति बालक लगी ❀ फ्याँक्या सबैले गई ७६

यौटा क्वै बरको ठूलो रूख थियो ❀ सागर् किनारा महाँ
बाँच्या तेस् घरिमा ति बालक सबै ❀ तेस्कै पिई दुध् तहाँ
क्यै दिन्मा ति सबै बढेर बहुतै ❀ खुब् घुम्न लाग्दा भया
शुक्राचार्यजिको थियो कुटि जहाँ ❀ एकदिन् ति ताहिं गया ७७

त्यस्तो हाल् तिनिहेरुको जसरि भो ❀ श्री शुक्रजीले पनि
सब् बिस्तार गरीदिया उहि बखत् ❀ यस्ता सबै हौ भनि
आफ्नो हाल सुनेर बालक ति सब् ❀ अत्यन्त दुक्खित् भया
ब्रह्माको तप गर्दछौं अब भनी ❀ सब् ताहिं लागीगया ७८

खान् पीन् छाड़ि दिएर ती सकलले ❀ एकाग्र मन्मा धरी
एकै ठाउ महाँ रही तप गऱ्या ❀ हज्जार वर्षै भरी
यस् रितको तप देखनु भै ति सबको ❀ साह्रै प्रसन्नै भई
आज्ञागर्नु भयो सबैकन तहाँ ❀ ब्रह्माजी साम्ने गई ७९

हे राक्षस्हरु हो ! म दिन्छु बरदान् ❀ राजी हुनाले यहाँ
जो इच्छा मनमा छ त्यो भन सबै ❀ मेरा अगाडी महाँ
आज्ञा गर्नु भयो ति सब् कम तहाँ ❀ ब्रह्माजिले त्यो जसै
एक्मत् भै बरदान मागिजिन पो ❀ लाग्या ति सब्ले तसै ८०

हे नाथ् ! जित्न इ हामिलाइ नसकुन् ❀ घ्यौता र दानव् कुनै
बर्दान् बक्सनुहोस् अजेय रणमा ❀ सब् हामिलाई हुनै
बिन्ती त्यस् रितको तहाँ ति सबको ❀ सुन्नूभएथ्यो जसै
आज्ञा ती सबलाई बक्सनु भयो ❀ ब्रह्माजिले यो तसै ८१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे राक्षसहरु हो ! सुरासुरहरू ❀ सब्लाइ गै रण् महाँ
जित्नेछौ तिमिहेरु निश्चय पनी ❀ मेरा बरैले यहाँ
यौटा काल अवश्य हुन्छ सबको ❀ भन्न्या मनैमा धरी
भालू बानरका न लड्नु सँगमा ❀ कैल्हे अगाडी सरी ८२
बर्दान् ती सब राक्षसैकन दिई ❀ त्यस्ता प्रकार्को तहाँ
अन्तर्ध्यान् भइ पाल्नुभो उहिबखत् ❀ ब्रह्माजि धामै महाँ
बर्दान् त्यस् रितको मिलेर ति सबै ❀ सान्है खुशीभै गया
मालिक् मानि नरान्तकैकन तहाँ ❀ एक् टापुमा गै रह्या ८३
सन्तोष् केहि नभै नरान्तक तहाँ ❀ सोही बरैले गरी
लाग्यो फेर् तप गर्न शंकरजिको ❀ पैल्हे गरेका सरी
तेस्का तेस् तपले प्रसन्न हुनुभै ❀ आई सदाशिव् पनि
आज्ञा त्यस्कन ताहिं बक्सनुभयो ❀ बर् माँगिले लौ भनि ८४
त्यो आज्ञा शिवको नरान्तक तहाँ ❀ सुन्दोभयाथ्यो जसै
हात् जोरीकन भक्तिपूर्वक इ बात् ❀ बिन्ती चढायो तसै
हे नाथ् ! सब् धन धान्य पूर्ण नगरी ❀ बक्सिसहबस् यै घरी
पाउन् सब् चिज रैतिहेरू सबले ❀ कष्टै नगर्नू परी ८५
बर्दान् त्यस् रित्को नरान्तक तहाँ ❀ माग्दो भयाथ्यो जसै
तेस्लाई बर त्यै दिएर शिवजी ❀ गुप्तै हुनूभो तसै
आज्ञाले भगवान् सदाशिवजिको ❀ फेरी उसै बिच्महाँ
बर्दान् माफिकको शहर् रचिदिया ❀ आई मयैले तहाँ ८६
भन्छन् तेस्कन बैहवालपुर सबै ❀ ताहीं नरान्तक् रही
राज्यै त्यै दिनदेखि गर्छ अझ तक् ❀ इन्द्रै समान्को भई
यै रित्ले गरी बैहवालपतिको ❀ वृत्तान्त जो हो तहाँ
सब् बिस्तार गर्या बिभीषणजिले ❀ रामका हजूरै महाँ ८७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आए नारदजी उसै बखतमा ❀ आकाश मार्ग गरी
तिन्लाई पनि सोधिबक्सनु भयो ❀ रामचन्द्रले त्यो घरी
हे देवर्षिजि ! वैहवालपति यो ❀ मर्ला कसोरी यहाँ
आज्ञागर्नुहवस् उपाय सब त्यो ❀ मेरा अगाडी महाँ ८८
प्रश्नै श्री रघुनाथको सुनि लिया ❀ यस्ता प्रकार्को जसै
लाग्या भन्न खुशी भएर इ कुरा ❀ नारद्जि यो बात् तसै
नाथ्ले के छ नजान्नु तैं पनि यहाँ ❀ सोध्नु हुनाले गरी
बिन्ती गर्दछु जुन् उपाय गरदा ❀ जाला नरान्तक् मरी ८९
पत्नी सुग्रिवकी हरण् जब गरया ❀ बीर् बालिजीले यहाँ
गर्भै सुग्रीवको पतन् गरिदिइन् ❀ तिन्ले गई बन्महाँ
त्यो गर्भै तहिं छोडि ती चलीगइन् ❀ जुन् ठाउँ बाली थिया
शुक्राचार्यजिले लगेर कुटिमा ❀ त्यस्लाइ पाली लिया ९०
शिष्यै शुक्रजिका तहाँ उस बखत् ❀ पढ्थ्या जतीले गई
सुन्थ्यो बानर त्यो पनी सकल त्यो ❀ सङ्मा ति सब्का रही
पढ्थ्यो शुक्रजिका गएर सँगमा ❀ क्वै दिन् नरान्तक् पनि
लाग्यो तेस्कन त्यो गिजाउन बहुत् ❀ हो तुच्छ बानर् भनि ९१
त्यो देख्ता गुरुजी नरान्तक उपर् ❀ क्रोधित् बहुत् भै गया
मार्ला बानर यै तँलाइ भनि श्राप् ❀ तेस्लाइ गर्दा भया
सोही कारण डाकिबक्सनुहवस् ❀ तेस्लाइ यै बिच्महाँ
मार्ला निश्चय त्यो नरान्तक असुर् ❀ हात् देखि तेस्कै यहाँ ९२
तेस्को नाम् दधिवल् छ बस्छ गइ त्यो ❀ धौलागिरीमा पनि
आज्ञाहोस् हनुमानलाइ तिमिले ❀ डाकेर ल्याऊ भनि
बिन्ती त्यस्रितको गरेर ऋषि ति ❀ बीदा भयाथ्या जसै
त्यै आज्ञा हनुमानलाइ दिनुभो ❀ रामचन्द्रजीले तसै ९३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आज्ञाले रघुनाथको ति हनुमान् ❀ उफ्रेर वेग्ले गया
बस्थ्या ती दधिवल् जहाँ उहि बखत् ❀ पौंचेर सब हाल् कह्या
साथ् लागी हनुमानका ति दधिबल् ❀ फेरी उसै बिच्महाँ
दौडी आइपुग्या तुरुन्त रघुनाथ् ❀ राज् गर्नुहुन्थ्यो जहाँ ९४
आई पाउ महाँ पर्‍या ति दधिवल ❀ रामचन्द्रजीले पनि
राख्नूभो नजिकै पियार् गरि बहुत् ❀ छोरो मितैको भनी
सुग्रिव् अङ्गदहेरु सब् सित मिली ❀ फेरी उसै विच्महाँ
लाग्या गर्न टहल् ति खुब् खुशभई ❀ रामचन्द्रजीको तहाँ ९५
भोलीपल्ट उठेर बानरहरु ❀ अत्यन्त क्रोधित् भई
लाग्या गर्न उपद्र धेर् तरहको ❀ लङ्कापुरीमा गई
देख्थ्या राक्षस क्वै अगाड़ि जब ती ❀ बानर्हरुले तहाँ
लाखौं गैकन टोकी लूछि बहुतै ❀ मार्थ्या उसै विच्महाँ ९६
टिक्नैलाइ कठिन् भएर बहुतै ❀ राक्षस्हरू छन् जति
रास्ता जुन्तिर मिल्दथ्यो उहि तरफ् ❀ भाग्थ्या डराई अति
राक्षस्लाइ भगाइ यस् तरहले ❀ फेरी उसै विच्महाँ
राक्षस्नीहरुलाइ दुख् दिउँ भनी ❀ लाग्या ति बानर् तहाँ ९७
दौडी दश्तिरबाट गै त कतिको ❀ चिज्बिज्निकाल्थ्याअनि
काट्थ्या गैकन नाक कान कतिको ❀ टोकेर दांत्ले पनि
चोली सारी चदर् खिंचेर कतिको ❀ फाल्थ्याति च्याती दिई
तान्थ्या खुब् बलले गएर कतिको ❀ चुल्ठो समाती लिई ९८
घर् घर्मा पसि दुःख यै रित दिया ❀ बानर्हरूले जसै
गाली रावणलाइ खुब् दिइ दिई ❀ सब् रून लाग्या तसै
त्यो हाल् देखिलिई नरान्तक तहाँ ❀ अत्यन्त क्रोधित् भयो
आफ्नो फौजलिई ति सब्सित तहाँ ❀ खुब् लड्न लागीगयो ९९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बर्षाया जब शस्त्रअस्त्रहरु धेर् ❀ राक्षसहरूले तहाँ
दौडया फर्कि सबै ति वानरहरू ❀ युद्धस्थलै हो जहाँ
क्रोधित् भैकन फेर् नरान्तक पनि ❀ आफ्नो सबै फौज् लिई
आयो त्यै रण-भूमिमा उहि बखत् ❀ साम्ने मुहूडा दिई १००

यस्रितले जब युद्धको शुरु भयो ❀ त्यो युद्धका स्थल्महाँ
झट्पट् पौंचिगया कुदेर दधिबल् ❀ बस्थ्यो नरान्तक् जहाँ
भेट्घाट् आपुसमा जसै गरि सक्या ❀ प्रेम् धेर् मनैमा धरी
लाग्या भन्न नरान्तकैकन तहाँ ❀ सुग्रीब्कुमार् त्यैघरी १

हे भाई ! अति दुष्ट रावण तरफ् ❀ लागेर ऐल्हे यहाँ
आयौ लड्न तिमी यसोरि किनलौ ❀ रामचन्द्रका सङ्महाँ
कल्याण् हुन्न विरोध रामसित गरी ❀ लोक्मा कसैको पनि
जानी ल्यौ तिमिले तिनै-भुवनका ❀ मालिक् इनैहुन् भनि २

खुब् बीर् रावण हो विरोध् गरिलिई ❀ रामचन्द्रका सङ्महाँ
कस्तो हालतको भयो बुझ तिमी ❀ मन्ले विचारी यहाँ
हीजै खुब् तिमिले पनि लडिलियौ ❀ तिम्रो चल्यो जोर कुन्
कस्ले शक्तछ जित्न रामकन यहाँ ❀ जान्या अजेयै इ हुन् ३

सोही कारण रामका पर शरण् ❀ बच्न्या इरादा भया
आयो पर्न शरण् भनेर रघुनाथ ❀ राख्नन् अवश्यै दया
त्यस्तो बात् गुरुभाइको जब सुन्यो ❀ फेरी उसै बिच् महाँ
लाग्यो क्रोध गरेर भन्न इ कुरा ❀ त्यो राक्षसैले त्यहाँ ४

हे वानर् ! किन रामको तँ अहिले ❀ गर्छस् बयान् यो अति
बीर् हूँ फुर्ति सुर्ति सुनेर कोहि अरुको ❀ राख्छु म के डर् रति
वानर् भैं डरछेरुआ जगतमा ❀ हुन्नन् अरु क्वै पनि
मान्छस् के तँ मलाई आज मनले ❀ आफैं समानको भनी ५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बालीलाई लुकेर छाडिकन बाण् ❀ जुन् राम मार्दो भयो
क्या आश्चर्य छ हेर अङ्गद यहाँ ❀ उस्कै टहल्मा रह्यो
वानर्को रित पो छ यस् तरहको ❀ भन्न्या मनैमा धरी
पर्दैनौ गइ शत्रुका शरणमा ❀ हामीहरू यो घरी ६
मार्छू रामकन गै तँ हेर् अब भनी ❀ फेरी उसै बिच् महाँ
राज् हुन्थ्यो रघुनाथ् जहाँ उहितरफ् ❀ दौड्यो असुर् त्यो तहाँ
त्यो हाल् देखिलिएर सुग्रीवकुमार् ❀ अत्यन्त क्रोधित् भया
पख् पख् लौ भनि वेहबाल-पतिका ❀ उफ्रेर सामने गया ७
वेही पुच्छरले घुमाइ कन खुब् ❀ फाली दियाथ्या जसै
लङ्काका गइ द्वारमा गिरि गयो ❀ वेग्ले असुर् त्यो तसै
झट्पट् राक्षस त्यो उठेर तहिं फेर् ❀ सामने ति वीर्का गयो
मार्छू हेर् म तँलाइ लौ अब भनी ❀ एक्मुड्कि हान्दो भयो ८
तेस्को चोट् सहजै सहेर रिसले ❀ सुग्रिव्-कुमार्ले तहाँ
वज्रै तुल्य मुठी बटारि उसका ❀ हान्दा भया शिर्महाँ
लाग्यो त्यो जब मुड्कि वज्रसरिको ❀ धूलो शिरैको भई
काटेको रुख झैं नरान्तक तहाँ ❀ लोट्यो जमीन्मा गई ९
राक्षस्का जति फौज थिया उसबखत् ❀ त्यो युद्धका स्थल्महाँ
मार्‍या ती सबलाइ गै सहजमा ❀ वानर् अरूले तहाँ
यस्रितले जब त्यो नरान्तक मोर्‍यो ❀ वानर्हरू छन् जति
लाग्या गर्जन सिंहनाद् गरी गरी ❀ हर्षे हुनाले अति १०
रानी बिन्दुमतिजिले खबर त्यो ❀ सुन्दी भईथिन् जसै
लागिन् जान सुलोचना सरि भई ❀ रामका हजुर्मा तसै
होली यो पनि ता कुनै सति भनि ❀ वानर्हरूले तहाँ
रोक्यानन् र पुगिन् सरासर तिनै ❀ रामका हजूर महाँ ११

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पाऊमा परि रामका ति सतिले ❀ बिन्ती गरिन् यो पनि
पाऊँ देह यहाँ नरान्तकजको ❀ सत्गत् गराऊँ भनि
त्यस्तो बिन्त तहाँ ति बिन्दुमतिको ❀ सुन्नू भएथ्यो जसै
तेस्को देह मगाइ बक्सनु भयो ❀ तिन्लाई रामले तसै १२

रामकै सामु महाँ चिता अतिअसल् ❀ तिन्ले तयारी गरिन्
स्वामिको लिइ शव् कुदेर उसमा ❀ भस्मै भई ती मरिन्
आई दिव्य विमान् चढेर ति दुवै ❀ स्वर्गैपुरीमा गया
त्यो हाल् देखि लिया र वानरहरू ❀ आश्चर्य मान्दा भया १३

रावण ताप र मंत्रणा

आफ्नू नाश् बुझि बुद्धिहीन् हुनगई ❀ फेर् रावणै बीर् पनि
दौड्यो एक् तरवार् लिएर रिसले ❀ काट्छु म सीतामनी
सङ्मामंत्रि सुपार्श्व तेस्घरि थियो ❀ त्यो बीर् अगाडी सर्‍यो
स्त्रीघात् गर्नु उचित् छैन अधिराज्! ❀ यो जाल्दि बिन्ती गर्‍यो १५

सूपार्श्वको बिन्ति सुन्यो र ताहाँ
फर्की फरक्कै दरबार माहा
शोकले बहुत् मूर्खसमान भै गो
फेरी सभा गर्छु भनेर गै गो १६

सब् मन्त्रिले सँग बसेर बिचार गर्दा
हीतै हुनै ठहरियो र अगाडि सर्दा
जो बाँकि राक्षस थिया सब साथ लीयो
खुब् लड्नलाइ रघुनाथ् तिर चित्त दीयो १७

त्यो अग्निमा सलह झैं जब पर्न आयो
सक्थ्यो कहाँ अडिन ठक्कर फेरि पायो
धेर् बीर् मर्‍या हृदयमा पनि बाण लाग्यो
टिक्नै नहाँ नसकि जल्दि फिरेर भाग्यो १७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




१ हनुमानले द्रोणाचल ल्याई लक्ष्मणलाई सचेत गराएको ।

२ राम-रावण युद्ध, रावणको मरण ।

३ लंकामा रावणका रानीहरूको विलाप ।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations




१ लङ्कामा विभीषणको राज्याभिषेक।

२ सीताजीको अग्नि परीक्षा।

३ हनुमानको हृदयमा श्रीराम-पंचायतनको दर्शन



४ श्रीरामको अयोध्या प्रत्यागमन।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सम्भयो गुरूकन विपत्ति पर्‌यो र ताहाँ
चाँडै गुरूसित गई शिर पाउ माहाँ
राखी गर्‌यो बिनति दुःख बहूत पायाँ
यो दुःखको बिनातिगर्न म आज आयाँ १८
हे नाथ् ! हजुर् गुरु भई पनि दुःख पर्‍याँ
क्या भो मलाइ कसरी अब चित्त धर्‍याँ
यस् रामले सकल बन्धु र पुत्र मार्‌यो
सूरा अनेक् बिरहरू पनि हुहि पार्‌यो १९

रावणको होम भंगहुनू र मन्दोदरीको रावणलाई उपदेश ।

रावणको बिनती सुनेर गुरुले ❀ पायाछ आपत् भनी
गर्‍यासम्म गरोस् भनेर उपदेश् ❀ दीया गुरुले पनि
हे रावण् ! सुन मन्त्र दिन्छु अब गै❀होम्‌गर्नु खुप्‌ध्यानधरी
होम्‌सम्पूर्णगर्‌यौभन्यातहातियार्❀मिल्नन्‌तिनैलेगरी २०
जित्न्याछौ सब बीरलाइ भनि यो ❀ आज्ञा गुरुको जसै
पायाथ्यो खुशि भै उठी घर गई ❀ होम् गर्न आँट्यो तसै
पातालतुल्यगुफाखनी तहिंबस्यो❀ होम् गर्नलाई पनि
ढोका बन्द गर्‌यो सबै शहरको ❀ कोहीनआउन्‌भनी २१
लूक्यो रावण एहि रितिसित र खुप्❀ होम् गर्न लाग्यो तहाँ
लूक्यो रावण् ता पनी तर धुवाँ❀ लूकी रहन्थ्यो कहाँ
देख्या तेहि धुवाँ बिभीषणजिले ❀होम् गर्न लाग्यो भनी
पायाँ भेद् भीन रामका हजुरमा ❀ गैबिन्तिपारयापनी२२
लाग्यो रावण होम गर्न रघुनाथ् !❀होमसिद्धपार्‌योभन्या
साँचो बिन्ति म गर्दछू हजुरमा ❀ ड सब् आजेयै बन्या
हूकुम् बानरलाई बक्सनुहवस् ❀ बीर् बीर् अगाडी सरी
जल्दी गैकन यज्ञनाश् गरि दिउन् ❀ हूकुम् शिरोपर् धरी २३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बिन्ती एति गऱ्या बिभीषणजीले ❀ हूकुम् प्रभूको भयो
अङ्गद् बीर् हनुमान् दुवै त खटिया ❀ दश् कोटिको फौज् गयो
पर्खाल् नाघि गयो र तेस् शहरमा ❀ दर्बार् पुग्याथ्या जसै
चौकी रावणका थिया जति तहाँ ❀ तिन्लाइ मार्‍यात तसै २४
रानी हुन् सरमा बिभीषणजिकी ❀ लङ्का शहर्मा थिइन्
रावण् लूकिरह्याछ ताहिं छ भनी ❀ तिन्ले इशारा दिइन्
गूफाका मुखमा त पत्थर ठुलो ❀ लाएर पक्का गरी
होम् गर्थ्यो ताहिं भित्र रावण उहीं ❀ पौंच्या ठुलो बेग्गरी २५
त्यो पत्थर्कन लात्ति अङ्गदजिले ❀ दीया धुलो भै खस्यो
होमको बिध्न गराउनाकन तहाँ ❀ बयै फौज भित्रै पस्यो
रावण् एति हुदाँ पनी दृढ भई ❀ ध्यान् गर्न लाग्यो जसै
बीर् बीर् बानरले अनेक् तरहले ❀ त्यो यज्ञ नाश्या तसै २६
रावणले ताहिं होम गर्न भनि एक् ❀ सूरो लियाको पनि
खोस्या श्री हनुमानले र रिसले ❀ हान्या उठोस् यो भनी
ध्यानैमा दृढ मन् गरी अचल भै ❀ रावण् नउठ्यो जसै
ल्याया अङ्गदले त खैंचि नजिकै ❀ मन्दोदरी पो तसै २७
ती मन्दोदरिलाइ रावण नजिक् ❀ ल्याएर हुर्मत् लिया
चोलीखोलि अफालि फेरि कटिको ❀ सारी खसाली दिया
लायाका गहना समेत् शरिरको ❀ बस्त्रै अफाल्या जसै
रूँदै रावणका नजीक रहँदी ❀ बिन्ती गरिन् यो तसै २८
हे नाथ्! आज कता गयो हजुरको ❀ लज्जा अनाथ् बया गरूँ
पत्नीको डिनलाए सुनी जिउनु धिक् ❀ मर्नू निको हो बरू
एती बिन्ति गरिन् र पुत्रकन खुप् ❀ सम्भेर लागिन् रुनै
आर्को कोहि थिएन ताहिं बिनको ❀ सहाय हुन्या कुनै २९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

स्वामीले पनि बाँचुला भनि यहाँ ❀ लाजै समेत् त्याग गऱ्या
तेरो ज्यान् अघि गै गयो गरुँ कसो ❀ ऐल्हे विपत्ती पऱ्या
ती मन्दोदरि रानिको अति विलाप् ❀ साम्ने सुनेथ्यो जसै
उठ्यो खड्ग लिएर अङ्गदजिका ❀ हान्यो कटीमा तसै ३०
होम्को नाश गराइ अङ्गदहरू ❀ दौडेर राम्थैं गया
ती मन्दोदरि रानि रावण दुवै ❀ को बात् तहाँ खुप् भया
लाग्यो रावण भन्न रानि ! अहिले ❀ बाँच्नू असल् हो भनि
बाँच्नै खातिरमा म चुप् भइ रह्याँ ❀ एती हुँदामा पनि ३१
बाँच्या देखि त देखिइन्छ सब थोक् ❀ यस्तो बुझी ज्ञानले
यो शोक् दूर गरि हाल हुन्छ अबके ❀ यस्तो असत् ध्यानले
अज्ञानै छ भुलाउन्या शरिरमा ❀ यो देह मैं हूँ भनी
त्यै अज्ञान् बलवान् भयो पनि भन्या ❀ फैलिन्छ संसार् पनि ३२
आत्मै ज्ञान स्वरुप् बुझेर मनले ❀ अज्ञानको नाश् गरी
स्वस्थै भैर हु शोक् न मान तिमिले ❀ के हुन्छ यो शोक् गरी
हे मन्दोदरि ! मार्छु रामकन सहज् ❀ संग्राम ठूलो गरी
रामैले यदि मार्दछन् त पनि बेस् ❀ जान्याछु संसार् तरी ३३
संग्राम्मा मरिगै गयाँ पनि भन्या ❀ मार्नू र सीता यहाँ
अग्नीमा तिमिले प्रवेश् तब गरी ❀ आया म जान्छू जहाँ
रावणका इ वचन् सुनेर अति ताप् ❀ मान्दी ति मन्दोदरी
साँचो विन्ति म गर्छु आज अधिराज् ! ❀ भन्दै अगाडी सरी ३४
विन्ती रावणथैं गरिन् पनि तहाँ ❀ राम् हुन् जगन्नाथ् हरी
जीती सक्नु कदापि छैन अरुले ❀ कस्तै लडाई गरी
वैवस्वत् मनुलाइ मत्स्य रुपले ❀ जस्ले त रक्षा गऱ्या
फेरी कूर्म भएर मन्दर पनी ❀ जस्ले पिठैमा धऱ्या ३५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

प्राण खैंचेर लिया बराह रुपले ❀ जस्ले हिरण्याक्षको
बाँची कोहि फिरेन लड्दछु भनी ❀ साम्ने भयाको छ जो
ठूलो दैत्य थियो हिरण्यकशिपू ❀ मार्या नृसिंहै भई
राज्यै खोंचि लिया छलेर बलिको ❀ बामन् स्वरुप्ले गई ३६
थीया क्षत्रिय पृथ्विमा परशुराम् ❀ भै नाश् सबैको गर्या
तिम्रो प्राण् लिनलाइ आज अधिनाथ्! ❀ राम् भै अगाडी सर्या
सीता हर्नु थियान हेलन गरी ❀ सीताजि हर्नु भयो
यैकाम्ले इ बिपत् पर्या हजुरमा ❀ ज्यान् इन्द्रजित्को गयो ३७
सीता सुम्पनु पर्छ आज अधिराज्! ❀ रामचन्द्रजीथैं गई
लङ्कामा पनि राज् बिभीषण गरुन् ❀ राम्कै पियारो भई
सब् छाडीकन आज जाउँ बनमा ❀ एती भनीथिन् जसै
रावण्ले पनि यो बचन् सुनिजबाब् ❀ खप्दीन लाग्यो तसै ३८
हे मन्दोदरि! इन्द्रजित् पनि मर्यो ❀ ठूलाठूला बीर् मर्या
कुम्भकर्ण मर्यो अनेक् अरु पनी ❀ संग्राममा बीर् पर्या
एती सम्म भया पछी कसरी फेर् ❀ लत्रेर पाऊ परूँ
शत्रुथैं गई लत्रि बाँच्नु बनिको ❀ प्राण् आज जान स्वरूँ ३९
बिष्णू हुन् रघुनाथ् सिता पनि इनै ❀ लक्ष्मी भनी जान्दछू
जानी जानी सिता हर्याँ त म उसै ❀ बया आज डर् मान्दछू
राम्का हात परी मरूँ भनि तहाँ ❀ सीताजिलाई हर्याँ
राम्का हात परी मर्याँ पनि भन्या ❀ संसार् सहज् मा तर्याँ ४०
फेरी तुरुन्त रघुनाथ् सित लड्न जान्छु
मार्नन् मलाइ रघुनाथ् तब खूशि मान्छू
संसार्का सकल ताप्हरुलाइ तोडी
जान्याछू पछि तिमिलाइ त सारि छोडी ४१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

राग् द्वेष्का मेल चल्छन् मँवारि सारि इ युग् घुम्दछन् बीचमाहाँ
पुत्रादी मत्स्य मैं छन् रिस पनि बडवानल् सरीको छ ताहाँ
कामैको जल्छ ठूलो तर पनि बलिया तेहि जाल्लाइ फारी
संसार्सागर्सहज्मातरिकन हीरथ्यैंबर नजान्याछु पारी ४२
मन्दोदरिसित यती भनि लडनलाई
कम्मर् कसेर बलियो रथ एक् मगाई
रथ्मा चढेर रघुनाथ्सित जान आयो
रामचन्द्रको सकल बानर फौज् डरायो ४३

रावणवध लक्ष्मणले रावण सँग अर्ति लिनू र विभीषणसान्त्वना

त्यो रावण् रणभूमिमा जब पुग्यो ❀ सामने हनूमान् गया
मूर्छा पारि गिराउँ यस्कन भनी ❀ एक् मुड्कि हान्दा भया
छातीमा जब मुड्कि बज्रन गयो ❀ खुप् बज्र तुल्यै गरी
घूँडा टेकि गिर्यो तहाँ दुइ घड़ी ❀ मूर्छा तुरुन्तै परी ४४
मूर्छादेखि उठ्यो र रावण तहाँ ❀ रयावाश् तँ होस् बीर्भनि
ठूलो बीर् हनुमान्लाइ बुझि खुप् ❀ साह्रै सराहायो पनि
रावणले हनुमानको सह्रानि खुप् ❀ ताहाँ गरेथ्यो जसै
रावणकोसबशेखितोड्न हनुमान् ❀ बीर्बोल्नलाग्यातसै ४५
हे रावण! किन गर्दछस् सह्रानि खुब् ❀ धिक्कार् म मान्छु बरू
मेरोमुड्की परयापछि पनिबाचिस् ❀ बोल्छस् यहाँ क्या गरू
एक्चोट्हान्तँपनीमलाइमपनी ❀ फेर् हान्छु छाती महाँ
एक् मुड्की अब हानुलाँ तँ न मरी ❀ उम्केरजालास्कहाँ ४६
ई बात् श्रीहनुमानले जब गर्या ❀ बेसै भन्यौ यो भनि
एक्चोट् श्रीहनुमानका हृदयमा ❀ ताकेर हान्यो पनि
फेरी श्रीहनुमान् सर्या आघि तहाँ ❀ मुड्की उठाई जसै
रावणटिक्न सकेन एक्क्षणपनी ❀ अन्यत्र भाग्यो तसै ४७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रावणका सँग चारजना थिया ❀ मन्त्री लडाका पनि
ई चारवीरकन चारजना आघिसरी ❀ पैल्हे निभाऊँ भनि
अङ्गद् श्रीहनुमान नील नल ई ❀ चार् वीर् कूदी गया
रावणकासँगकातिचारवीरसहज् ❀ मारेर फिर्दाभया ४८

ती चार जना जब मऱ्या तब मन् रिसायो
रामका उपर् आघि सरीकन वाण खसायो
वाक्लो हुँदै सरि ति शर् जब खस्न आया
सुग्रीव वानरादि विरले पनि दुःख पाया ४९

यो चाल् वानरको बुझी रघुपति ❀ साम्ने अगाडी सरी
लाग्या लड्न तहाँ अनेक् तरहले ❀ त्रैलोक्यका नाथ् हरी
त्यो रावण् रथमा थियो रघुपती ❀ खाली जमिन्मा थिया
रामका खातिर इन्द्रले अति असल् ❀ एक् रथ् पठाई दिया ५०
जल्दी मातलि सारथी रथ लिई ❀ रामका हजुरमा गया
हात् जोरिकन रामका हजुरमा ❀ यसै बिन्ति गर्दा भया
हे नाथ् ! रथ्लिइ इन्द्रका हुकुमले ❀ आयाँ खडा छू पनि
यो रथ्माचढिवक्सियोस्हजुरले ❀ बिन्तिपाऱ्योमानि ५१
यो बिन्ती गरिमातलीआघिसऱ्या ❀ रुनामितासितानाथ्पनि
तेस् रथ्लाइ परिक्रमा गरि चढ्या ❀ चढ्नू उचित् हो भनि
ताहाँदेखि त मच्चियो अधिक मन् ❀ संग्राम् निरन्तर् गरी
जुन्वाणरावणलेतहाँछाड्छउहिवाण् ❀ काट्छन्जगन्नाथ्हरी ५२
यस्तारीतसितअस्त्रशस्त्रसवथोक् ❀ काट्या। प्रभूले जसै
रावणले पनि राक्षशास्त्र लिइ खुप् ❀ फेर् हान्न लाग्यो तसै
रावण् हान्दछ वाण जतीजति तहाँ ❀ सब् सर्परुप् भै खस्या
हान्या वाण् रघुनाथले पनि जती ❀ वाण्तीगरुडैभैपऱ्या ५३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

काटया सर्प पनी सबै गरुडले ❀ पक्रेर टुक् टूक् गरी
तेसबिच्माशरवृष्टिखुप्रीसितगर्‌यो❀राम्का अगाडी सरी
धक्का केहि दियो प्रभूकन तहाँ ❀ बैरी गिराऊँ भनी
हान्योमातलिलाइबारण् र पछिफेर❀केतू खसाल्यो पनी ६४
घोडालाइ पनी अनेक शरले ❀ खुप् हान्न लाग्यो जसै
आश्चर्यै भइ देव पितृ ऋषिगरण् ❀ खेद् मान्न लाग्या तसै
लीलाले रघुनाथ् पनी जब तहाँ ❀ दुःखी सरीका भया
बानर्कोसबफौज्बिभीषणसमेत❀साह्रै डराई गया ६५
बिश् बाहू दश शिर् भयङ्कर स्वरुप्❀ मैनाक सरीको भई
लइथ्यो रावण रामका हजुरमा ❀ साम्ने नजीकै गई
ऊठ्यो रिस् प्रभुको र ताहिं बिचमा❀कालाग्निजस्तावनी
रावण्को दश शिर् गिराउन लिया❀जल्दीधनुबाण्पनि ६६
कालाग्नी सरिको भयङ्कर स्वरुप्❀राम्को बनेथ्यो जसै
काँपिन्पृथ्वि पनी भयङ्कर स्वरुप्❀ देखिन् र राम्को तसै
रावण्को पनि चित्तमा भय पर्‌यो❀ उल्का बहूतै भयो
क्या गर्छन् प्रभुले यहाँ भनि तहाँ ❀ सब्लोक्डराईगयो ६७
आकाश्मा बसि हेर्दथ्या जतिथिया❀ सब् देवतागण् पनि
कस्ता रितसित मर्छ रावण यहाँ❀ हेरौं · तमाशा भनी
राम्को रावणको परस्पर तहाँ ❀ खुब् युद्ध ठुलो भयो
रात्रीकोदिनको प्रकाश् नभ डक्यै❀काल् बित्न धेरैगयो६८
रावण्कोशिरकाट्नलाइजबबाण्❀ फँक्या प्रभूले तहाँ
तालैकोफल झैं गिरयात पनिशिर् ❀ गर्‌यान पृथ्वी महाँ
एकोत्तरशयाशिर्गिरयाजतिगिरुन्❀सब् बन्न लाग्या जसै
क्या भो आज भनी प्रभूकन पनी ❀ आश्चर्यलाग्यो तसै६९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ठूला दैत्य बडा बडा बिर पनी ❀ जुन्बाणले मारिया
सोही बाणपनिआज रावण उपर् ❀ ताकेर खुप् छाडिया
काट्छन् सब् शिर बाणले दश शिरै ❀ मैंमासखसाल्छन् पनी
फेर्ज्यौंकातिउँ शिर् हुन्यागरुँकसो ❀ क्याहोयहाँको जनी ६०
यो चिन्तारघुनाथको जब पर्‌यो ❀ साम्ने बिभीषणागया
यो हेतु छ भनेर हेतु जति हो ❀ सब् बिन्ति गर्दा भया
ब्रह्माको वरदान् छ शिर् खसिगया ❀ फेर्उम्रनन् शिर्भनी
फेर्अमृत्पनि नाभिमा छ तब यो ❀ मर्दैन काट्या पनि ६१
त्योअमृत्सब शोषिबक्सनुहवस् ❀ सुक्न्या छ अमृत् जसै
चाँडै त्यो मरिजान्छ तेस् बखतमा ❀ उठ्तैन फेरी कसै
हात् जोरेर जसै बिभीषणजिले ❀ यो गुह्य खोलीदिया
ठाकुर्ले पनि अग्निबाण झटपट् ❀ हानेर शोषीलिया ६२
त्यो अमृत्जब शोषिबक्सनु भयो ❀ यो दिन्छ आर्ती भनी
रिस्ले शक्ति लिई बिभीषणउपर् ❀ ताकेर हान्यो पनि
राम्ले शक्ति र शिर् दशै छिनादियाँ ❀ फेर् एक शिर्को भई
नानाशस्त्रलिएर खुब्सित लड्यो ❀ राम्का अगाडी गई ६३
तेस्बिच्मापनि मातली अघि सरी ❀ हात्जोरिबिन्ती गर्‌यो
हे नाथ्! रावण लड्छ योअझ भन्या ❀ फेर् शस्त्र हान्नै पर्‌यो
ब्रह्मास्त्रैकन छोडि बक्सनुहवस् ❀ चाँडो मरोस् यो भनी
मान्यो युक्ति त एक यै छ नाहिता ❀ मर्दैन काट्या पनि ६४
बिन्ती मातलिको सुनी प्रभुजिले ❀ एक् बाण हात्मालिया
जस्मा अग्नि रवा यु सूर्य ड समेत् ❀ लोक्पाल्बस्याकाथिया
मन्त्री वेद विधानसाथ धनुमा ❀ त्यो बाणलगाया जसै
प्राणलाइ पनी बहुत भय भयो ❀ [illegible] ६५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रावणकोतीहिद्यौतताकिकनबाण् ❀ छोड्यामरोस्योभनी
तेस्बाणले त तहाँ सहज्मरिगयो ❀ घुमेर लोट्यो पनि
बाँकी राक्षस जो थिया तिपनीसब् ❀ दौडेर भागी गया
जीत् भो श्री रघुनाथको भनि तहाँ ❀ सम्पूर्ण खुशी भया ६६

रावण्को जब अन्तको समय भो ❀ आज्ञा भयो रामको
हे सौमित्र ! भएन कवै जगतमा ❀ रावण् सरीको ठुलो
अष्टै सिद्धिहरू र फेर् नवनिधि ❀ उसका अधीन्मा थिया
शास्त्रैहरू र शस्त्रका सकलगुण् ❀ यस्का वंशैमा भया ६७
योगी भोगि तपस्विका सँग सँग ❀ थीयो यशस्वी पनि
बुद्धी औ बल शौर्यमा पनि ता ❀ मान्थ्याँ महान् होभनी
कर्माधीन भएर नष्ट मतिले ❀ दुर्बुद्धि प्रेरित् भई
यो मर्दोछ तुरन्त अर्ति तिमि ल्यौ ❀ श्रद्धेय मानी गई ६८
लक्ष्मण्ले सुनि रामका सब कुरा ❀ रावण् समीप्मा गया
देखी तिन्कन भन्छ रावण पनि ❀ राखेर मन्मा दया
हे लक्ष्मण् ! किन पाल्नु भो प्रभु यहाँ ❀ मेरा मरण्का घरी
मन्मा क्यै छ भन्या सुध्याउनुहवस् ❀ भन्न्याछु बुद्धो सरी ६९
झूटो बोल्दिन मर्नका बखतमा ❀ रामका शरण्मा पऱ्याँ
तऱ्या मन्सुबले गरीकन फगत् ❀ माता जगत्की हऱ्याँ
रावण्को सुनी त्यो वचन् गहभरी ❀ आँसू गराईकन
आज्ञा लक्ष्मणको भयो त्यसघरी ❀ यो बात रावण् सँग ७०
हे रावण् ! तिमि विज्ञ छौ चतुर छौ ❀ छौ शौर्यशाली भनी
रामको मर्जी भएर अर्ति लिनन ❀ आई रह्याछू पनि
लक्ष्मण्को सुनि त्यो वचन् त्यसघरी ❀ लंकेशका मन्महाँ
रामको देखि विशालता सदयता ❀ भक्ती बढ्यो खुब् तहाँ ७१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

गाँठो पारि मुट्ठीविषे नयनमा ❀ हर्षाश्रुमोचन् गरी
लाग्यो रावण भन्न लक्ष्मण तरफ ❀ हेरेर सोही घरी
राम् नारायण हुन् म जान्दछु सबै ❀ यत्रो दया लीकन
मेरो गर्न महत्व लक्ष्मण कर्के ❀ भेज्नूभयो ज्ञान् लिन ७२
ज्ञानी नै म छु कौन तैपनि कृपा ❀ श्री राम् प्रभूको भई
भन्छू एक कुरा छ मुख्य जगमा ❀ त्यै गर्नु तत्पर् रही
भोली गर्नु छ काम जुन् सकलत्यो ❀ आजै गरून् सर्वथा
आजै गर्नुछ काम् भन्या गरिलिउन् ❀ तत्कलिनै त्यो सदा ७३
गर्न्या काम म भोलि गर्दछु भनी ❀ जो संचिता गर्दछन्
भोलीक्या हुन जान्छ जान्दछ कउन् ❀ हुन्छन्विनाश् सोहिजन्
आमा बाबु जिवित् रह्यातकतहाँ ❀ सन्तान् न कल्यै मरून्
मेघैहेरू किसानका अधिन भै ❀ पर्याप्त वर्षा गरून् ७४
फेरी सार्वजनिक् सिंढीविच चढी ❀ जाउन् सबै स्वर्गमा
सुन्मा फेरि सुगन्ध होस् यही सत्रै ❀ निश्चित् गर्न्याको थियाँ
भोलो गर्छु भनेर औसर सबै ❀ मैले गुमाई दियाँ
ईच्छा त्यो मनको मनै रहिगयो ❀ मर्ने वखत्मा पुग्याँ ७५
तत्सात् अर्ति म क्या दिऊँ अब यहाँ ❀ यै मुख्य जानी लिया
भन्दै रावण स्वर्ग भो उहिवखत् ❀ लक्ष्मणजि फर्कीगया
त्यो निचमा नगराजज्योप्रभु उपर् ❀ स्वर्गै पुष्पवृष्टि भयो
नाच्थ्याअप्सरगण्त्रऋषीखुशिभया ❀ सम्पूर्णाकोताप् गयो ७६
रावणको पनि देहदेखि ताहिं तेज् ❀ निस्कयो र सूर्यै सरी
श्री रामचन्द्रजिमामिलीपनी गयो ❀ संसार सागर् तरी
विष्णुद्वेषि परस्त्रिमा रत हुन्या ❀ यो ब्रह्मघाती पनि
श्री रामचन्द्रजिमामिल्योकसरिलौ ❀ आश्चर्य लाग्योभनी ७७
गर्थ्या बात् ताहिं देवतागणहरू ❀ नारदजि ताहीं गया
जेले रावण राममा मिलि गयो ❀ त्यो [illegible] भया

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
साँचो भन्छु म आज देनगरण हो ! ❀ यस्तैले हुतद्ध्यान्गरयो,
सीतानाथ्प्रभुको र यो तन सहज् ❀ संसारसागर् तऱ्यो ७८
भक्तीले भयले अवर् तरहले ❀ कोनै प्रकार्ले गरी
ध्यान्सीतापतिकोगरयोपनिभन्या ❀ जाइन्छ संसार् तरी
यै रितले गरि देव पितृ ऋषिगण् ❀ गर्थ्या अनेक् बात तहाँ
रावण् मारि धनू उतारि प्रभुले ❀ रारुनू भयोरथ्महाँ ७९
कोटी सूर्यसमान तेज्छ जसको ❀ यस्ता जगन्नाथ् हरि
राज्भोएकछिनफेर्तहाँ जगतको ❀ सम्पूर्ण दुख्नाश् गरी
रावण्मारि उतारि भार भूमिको ❀ सुग्रीव् बिभीषण्हरू
लक्ष्मण्अङ्गदजाम्बवान्रहनुमान् ❀ जो जोथियाबीर्अरू ८०
ती सब्लाई हुकुम् भयो प्रभुजिको ❀ तिम्रा कृपाले गरी
माऱ्याँ रावणलाइ किर्ति रहला ❀ तिम्रैतिनै लोक्भरी
रावण्कासबरानि आयर बिलाप् ❀ खुब् गर्न लाग्या तहाँ
पृथ्वीमा लडिखुब् बिभीषण पनी ❀ रोया रहन्थ्या कहाँ ८१
बीत्यादाज्यूभनी बिभीषणपनी ❀ खुब् रून लाग्या जसै
लक्ष्मण्लाइहुकुम्भयोप्रभुजिको ❀ सम्झाउ भन्या तसै
दाज्यूको किरिया गरुन्सबहरुन् ❀ तीरानिको शोक्पनि
हूकूम्एति मिल्योर लक्ष्मणगया ❀ जल्दी बुझाऊँ भनी ८२
लाग्या भन्न अहो! बिभीषण! तिमी ❀ के योनजान्न्या सरी
लाग्यौ गर्न बिलाप् अनेक् तरहले ❀ खाली जमीन्मा परी
तिम्रो यो अघि जन्ममा कउन हो ❀ ऐल्हे त दाज्यू भयो
फेरी के हुनलाइ रावण यहाँ ❀ छोडेर काहाँ गयो ८३
जम्मा भैकन बालुवा जसरि फेर् ❀ फिर्दैन् ति गङ्गा महाँ
उस्तै रितसित फिर्दैछिनइ दुनियाँ ❀ बच्दैन आफ्नू यहाँ
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अज्ञान्को मति यो नलेउ तिमिले ❀ झूटो जगत हो भनी
जानी श्री रघुनाथका चरणमा ❀ खुब् ध्यान् लगाऊ पनि ८४
प्रारब्धै बलवान् बुझेर सब यो ❀ राज्यादि गर्दै रहू
जो पर्छन् परि आउन्या सब कुरा ❀ नीको नमीको सहू
दाज्यूको गरि हाल आज तिमिले ❀ संस्कार् बिधान्ले गरी
रुन्छन् रानिहरू बुझाउ अहिले ❀ चाँड़ो अगाड़ी सरी ८५
यस्तो ठाकुरको हुकुम् छ भनि जेस् ❀ रीत्ले बुझाया जसै
बिस्तार् लक्ष्मणको सुनेर झटपट् ❀ ऊठ्या बिभीषण् तसै
बिन्ती गर्न भनी जहाँ प्रभु थिया ❀ ताहीं तुरुन्तै गया
हात् जोरीकन रामका हजुरमा ❀ यसै बिन्ति गर्दा भया ८६
हे नाथ्! मर्जि भयो कबुल् गरिलियाँ ❀ आज्ञा शिरोपर् धरी
बिन्ती गर्छु तथापि सत्य भगवान्! ❀ एक् भारि शङ्कापरी ८७
यो क्रूर हो प्रभु ! परस्त्रि पनी त हर्न्या
यस्को क्रिया कसरि योग्य भनेर गर्न्या
बिन्ती गर्या यति बिभीषणले र ताहाँ
खुशी भइ हुकुम भो उहि बीच माहाँ ८८
बाँचुन्ज्याल् रिस हुन्छ शत्रुसितको ❀ ऐल्हे मरी यो गयो
यस्को रिस् अब गर्नुछैन अब ता ❀ मेरो त रिस् दूर भयो
रुन्छन् रानि बुझाउ झट्ट गर लौ ❀ संस्कार् बिधान्ले गरी
ऐल्हे यै न गरी हुँदैन तिमिले ❀ योहो क्रियाको घरी ८९
हूकुम् एति सुन्या जसै प्रभुजिको ❀ योग्यै हुकुम् भो भनी
रानीलाइ बुझाउनाकन गया ❀ चाँडै बिभीषण् पनि
रानीलाइ बुझाइ सब् गरि सक्या ❀ क्रीया बिधान्ले गरी
रानी सब् घरमा पठाइ ति गया ❀ जाहाँ थिया राम हरि ९०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

खूशी खुब् रघुनाथ् पनी हुनुभयो ❀ सम्पूर्ण खूशी भया
बीदा भैकन मातली पनि तहाँ ❀ फेर् इन्द्रका पास् गया
लक्ष्मणलाइ हुकुम् दिया प्रभुजिले ❀ मेरा तरफ्को भई
गादीमा बिभिषणजिलाईअभिषेक् ❀ गर्नू तिमीले गई ९१
आज्ञा यस्रितको तहाँ प्रभुजिको ❀ सूनी लियाथ्या जसै
लक्ष्मणलेलगिगादिमाथि धरिफेर् ❀ दीया अभीषेश् तसै
गादीमाथि बसाइ साथ लिइ फेर् ❀ रामचन्द्रजीथ्यैं गया
लक्ष्मणले रघुनाथका हजुरमा ❀ सब् बिन्ति गर्दाभया ९२
तेस्बिचमारघुनाथ्प्रसन्नहुनुभो ❀ पूग्यो प्रतिज्ञा पनि
सुग्रिव्लाइ पनी सह्याउनु भयो ❀ तिम्रो कृपा हो भनी
ऐरहे हे हनुमान्! बिभीषणजिका ❀ मतले सिताथ्यैं गई
सब् समचार बताउ जाउ अहिले ❀ सूनुन्ब हुन्खश्भई ९३
जो भन्छिन् ति कुरा बताउन यहाँ ❀ फेर् जल्दि आऊ भनी
हूकुम् पाइ गया बिभीषणजिका ❀ मतले हनूमान् पनि
सीताथ्यैं हनुमान् पुग्याउरुख भनी ❀ सीता बस्याकी थिइन्
पाऊमा हनुमान् पर्या जननिले ❀ चुप्भैनजर्खब्दिइन् ९४
चीन्हिन्ईहनुमानहुन्भनिरखब् ❀ खुशी भईथिन् जसै
बिस्तारबिन्तिगर्यासबैजननिथ्यैं ❀ श्री रामजीको तसै
झन् खुशी जननी भइन् खुशि हूँदै ❀ वचैबोल्नलागिन् तहाँ
वयादी नूर्तिमिलाइचीजहनुमान्! ❀ खुशी गरायौ यहाँ ९५
तिम्रो यो प्रियवाक्यतुल्य त अनेक् ❀ रत्नादिका हार पनि
लाग्दैनन् अरु चीज देख्दिन ठूलो ❀ यो चिज् दिन्याहो भनी
झट्बिन्ती हनुमानले पनि गर्या ❀ श्री राम् जगत्का पति
खूशी खुब् हुनुहुन्छ ता खुशि म छु ❀ चाहिन्न दौलत् रति ९६

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यो बिन्ती सुनि खुशि भैकन तहाँ ❀ फेरी अह्राइन् पनि
रामको दर्शन गर्छु बिन्ति गर गैं ❀ भेट्गर्नखोज्छिन्भनी
सीताका इ बचन् सुनेर हनुमान् ❀ रामका हजुरमा गया
दर्शन्को मतलब् थियो जननिको ❀ सो बिन्ति गर्दाभया ९७
त्यो बिन्ती हनुमानले हजुरमा ❀ ताहाँ गर्याथ्या जसै
मर्जी भो प्रभुको बिभीषणजिका ❀ सङ्गमा तुरुन्तै तसै
जाऊ ल्याउ सिताजिलाइ तिमिले ❀ सब् देह निर्मल् गरी
आउन्भेट्नासिताअनेकतरहका ❀ भूषण् शरीर्मा धरी ९८
हूकुम्ले हनुमानलाइ सँगमा ❀ लीई बिभीषण गया
जल्दी स्नान गराउनाकन तहाँ ❀ खुब् यत्न गर्दा भया
पैल्हे स्नान गराइ शुद्ध कपड़ा ❀ पैह्राइ भूषण् पनी
दीया सुन्दर जुन् थिया खुसि हुँदै ❀ पैह्रन्सिताजीभनी ९९
पाल्की माथि सिता चढाइ खुशि भै ❀ हींड्या बिभीषण् जसै
दर्शन् गर्न भनेर बानरहरू ❀ आया र घेर्‍या तसै
चौकी गर्न भनेर डोलि निजकै ❀ जो ता रह्याका थिया
सब् बानरहरुलाइ तेस् बखतमा ❀ तिन्ले हटाई दिया१००
कोलाहल् अधिकै भयो प्रभुजिले ❀ सूनी नजर् भो पनी
हूकुम् भो रघुनाथको किन तहाँ ❀ बानर् हटायौ भनी
आमा जानि ति हेर्दछन् सजनना ❀ हेरुन् ति बानर्हरू
पाल्कीमाकिनचढ्दछिन्अब सिता ❀ पैदल् ति आउन् बरू १
सूनिन्रूनामितको हुकुम्जननिले ❀ जल्दीजमिन्माझरिन्
पाऊ पर्छु भनेर खुब् खुशि हुँदै ❀ साम्ने अगाडी सरिन्
काम्को सिद्ध गराऊनाकन सिता ❀ माया रबरूपी थिइन्
काम्होरानरामानर्नकोकुलसमेत ❀ त्यो सिद्धगरिदिइन् २

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
अग्नीमाअघि राखियाकिकनफर् ❀ लान्या तहाँ सूर गरी
दोष् दीया रघुनाथले किन यहाँ ❀ आयौ अगाडी सरी
अकीको घरमा बस्याकि मानि यो ❀ दोषै दिनूभो जसै
लक्ष्मणलाइ हुकुम्दिइन् जनीनले ❀ विश्वाश खातिर् तसै ३
हे लक्ष्मण् तिमिअग्निज्वाल अघिले ❀ ताहीं प्रवेश् गर्दछू
साँपै छू त म बाँचुला झुटि भया ❀ ऐले यहीं मर्दछु
हूकुम् लक्ष्मणले तहाँ जनीनको ❀ सूनेर रामको पनी
मत् पाईकन अग्नि खुब्गरि ठुलो ❀ बालीदिया बेस् भनी ४
सीताजी पनि खुब् प्रदक्षिण गरिन् ❀ रामको र भक्ती गरी
अग्नीका नजिकै खडापनिभइन् ❀ साम्ने अगाडी सरी
धौताब्राह्मणसम्झि रामचरणको ❀ ध्यान्मित्रमन्माधरिन्
सब्कासाक्षिभनेरअग्निसितहात् ❀ जोरी पुकारा गरिन् ५
जस्ता रितिसित रामकै चरणको ❀ ध्यान्मा रह्याकी म छू
तेस्तारितिसितअग्निशीतलहउन् ❀ तापै नलागोस् कछू
बोलिन्एतिर अग्निमा पसिगइन् ❀ ताहाँ सिताजी जसै
सब्को ताप् मनमा भयो बिरहरू ❀ बात् गर्न लाग्या तसै ६
सीता अग्नि बिषे जसै तपसिथिन् ❀ इन्द्रादि दिक्पालहरू
ब्रह्मा रुद्र समेत् सबै तहिं गया ❀ जो देवता छन् अरू
जम्मा भै रघुनाथको स्तुतिगर्‍या ❀ सब् देवगण्ले पनी
ब्रह्माले पनि खुब् गर्‍यारस्तुतितहाँ ❀ मालिकइनै हुन् भनी ७
भूषण वस्त्र अनेक् धर्‍याकि जननी ❀ सीता अगाड़ी धरी
अग्नीलेपनिविन्तिखुब्सित गर्‍या ❀ रामका चरण्मा परी
सीताजीकन आज सम्म त यहाँ ❀ राखी दियाको थियाँ
कामको सिद्धभयो लिनुस्हजुरहरू ❀ सीता हजुरमा दियाँ ८
CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ब्रह्मीले पनि बिन्ति बात्‌ गरि तहाँ ❀ सीता जसै ता दिया
खूशी मन्‌ रघुनाथको हुन गयो ❀ सीताजिलाई लिया
सीताजीकन काखमा लिइ तहाँ ❀ ठाकुर्‌ बस्याथ्या जसै
भक्तीले स्तुति इन्द्रले पनि गर्‍या ❀ खूशी भया खुब्‌ तसै ९
फेर्‌ बिन्ती शिवले खुशी भइगर्‍या ❀ रामका हजुर्‌मा तहाँ
सीतानाथ्‌! मत आउन्याछु पछि फेर्‌ ❀ बाहीं अयोध्यामहाँ
ऐल्हे ई दशरथ्‌ पिता हजुरका ❀ मिल्ला कि दर्शन्‌ भनी
आया दर्शन आज बक्सनुहनस्‌ ❀ रुनामत्‌! प्रभुले पनि १०

यो बिन्ती शिवको सुनेर दशरथ्‌ ❀ जीका हजुर्‌मा गई
पाऊमा शिर राखिबक्सनु भया ❀ श्री रामले खुश्‌ भई
आलिंगन्‌ दशरथ्‌जिले पनि गर्‍या ❀ आफ्ना ति छोराकन
डाकी लक्ष्मणलाइ फेरि नृपले ❀ शिक्षादिया यो पुनः ११
आफ्नो श्रेय निमित्त लक्ष्मण! तिमी ❀ रामको गर्‍या सेवन
मानव्‌ रूपमहाँ विशाल हरिको ❀ औतार संभीकन
सिद्धै चारण औ मुनीश्वर तथा ❀ इन्द्रादि घौताहरू
गर्छन्‌ ध्यान र पूजनादि इनको ❀ मानेर आफ्ना गुरू १२
गुप्तैतत्त्व र वेदको हृदय फेर्‌ ❀ अव्यक्त ब्रह्मैकन
वेद्‌ले मान्दछ जुन्‌ इनगुरुपको ❀ आधार पाईकन
यस्तो अर्ति दिएर लक्ष्मणकनै ❀ रामका ति पार्षद्‌ जति
सारालाइ दिएर आशिष तहाँ ❀ लुप्तै भया भूपति १३

बानर्‌का जति फौज्‌ मर्‍या रणमा हुँदा ❀ ती सब्‌ बचाऊ भनी
अमृत्‌ वृष्टि गराउनाकन हुकुम्‌ ❀ भो इन्द्रलाई पनी
हुकुम्‌ पाइ ति इन्द्रले पनि तहाँ ❀ अमृत्‌ गिराया जसै
बानर्‌को सब फौज्‌ खडा पनि भयो ❀ रामका कृपाले तसै १४

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
बिन्ती ताहिं गऱ्या बिभीषराजिले ❀ रामका चरणमा परी
मङ्गल स्नान् गरि बक्सियोस् हजुरले ❀ योर स्नानको हो घडी
मङ्गल् स्नान् गरि वस्त्रभूषराधरी ❀ राज् आज याहीं हवोस्
सेवक् हूँ करुणानिधान् हजुरको ❀ प्रीती ममाथी रहोस् ९५
बिन्ती सूनि हुकुम् भयो हुनत हो ❀ जान्या तहाँ स्नान् गरी
वस्यारु आज घरै छ भाइ त भरत ❀ मैं मैं जटाजुट् धरी
त्यो भाइ पर राखि आज म यहाँ ❀ कुन् रीतले स्नान् गरूँ
सुग्रिव् बिर्हरु छन् ड देउ तिमिले ❀ इनलाइ खिल्लत् हरु ९६
हूकुम् एति हुँदा बिभीषराजिले ❀ रत्नादि वृष्टी गऱ्या
जस्ले जून् चिज खोज्छ सो चिज दिई ❀ सब् फौजको ताप् हऱ्या
सब् फौज्लाइ बिदा पनी दिनु भयो ❀ रामले कृपा खुब् गरी
फौज् वानरहरुको पनी तरिगयो ❀ आनन्दमा खुब् परी ९७
पार्षदगणसहित श्रीराम अयोध्या फर्कनू
काम् सब् सिद्ध भयो यहाँ कि न बसूँ ❀ जान्छू अयोध्या भनि
सीतालक्ष्मण् साथमा लिइ चढ्या ❀ श्रीराम् बिमान्मा पनी
सुग्रिव् अङ्गदजी बिभीषण समेत् ❀ रामका हजुर्मा थिया
तिन्लाई पनि जाउ राज् गर भनी ❀ बीदा प्रभूले दिया ९८
तीसब्ले तहिं बिन्ति खुब् सित गऱ्या ❀ जान्छौं अयोध्या भनी
सब्को आग्रह देखि खूशि हुनुभो ❀ ताहाँ रमानाथ् पनी
पुष्पक्मा चढि आज जाउँ सब लौ ❀ भन्न्या हुकुम् भो जसै
सुग्रिव् श्री हनुमान अङ्गद चढ्या ❀ पुष्पक् बिमान्मा तसै ९९
आफ्ना मन्त्रिलिई बिभीषरा पनी ❀ तेसै बिमान्मा बस्या
सेना सुग्रिवका पनी हुकुमले ❀ सम्पूर्ण ताहीं पस्या
सीतानाथहरू सबै बसिसक्या ❀ पुष्पक् बिमान्माजसै
साह्रै खुशि भई ति वानरहरू ❀ सब् कुद्न लाग्या तसै१००
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सेना समेत् सब विमान उपर् चढाई
हुकुम् दिया प्रभुजिले ताहिं जानलाई
आकाश मार्ग गरि जान विमान लाग्यो
शोभा अपूर्व रघुनाथ चढ्या र पायो २१

दौडयो पुष्प विमान् जसै हुकुमले ❀ आकाश बीच्मा पसी
पृथ्वीको पनि याद् सबै हुनगयो ❀ तेसै विमान्मा बसी
जुन्जुन् काम जहाँजहाँ अघिभयो ❀ जान्नन् सबै त्यो भनी
सीतालाइ नजर् गराउनु भयो ❀ खूश्भै प्रभुले पनी २२

यो लङ्कापुरि हो अगम् छ बलले ❀ को जान सक्छन् अरू
त्योभूमीरणभूमिहो तिहिंमऱ्या ❀ ठूला ठुला वीर्हरू
ताहीं रावण् कुम्भकर्ण तमऱ्या ❀ भारी लडाईं गरी
लक्ष्मणलेतहिंइन्द्रजित्कनजित्या❀आम्नेअगीड़ासरी २३

सेतू सागरमा बनाइ बलियो ❀ मैले समुद्रै तऱ्याँ
रामेश्वर्भनिनामराखिशिवको❀स्थापन्किनार्मागऱ्याँ
चार मन्त्री सँग ली विभीषण तहाँ ❀ आई शरणमा पऱ्या
किष्किन्धा यहि हो यसै नगरिमा ❀सुग्रीवलेराज् गऱ्या२४

जो आश्रम् यमुनाजिका छ तिरमा ❀ ताहीं भरद्वाज छन्
गङ्गा हुन् इ अगाडिकी नजरले ❀ देख्तै खुशी हुन्छ मन्
जो देख्छयौ अभ्रमन्पैरे सरयू हुन् ❀ त्यै हो अयोध्या पुरी
पूरीलाइ प्रणाम लौ गर तिमी ❀ भक्ती गरी नीहुँरी २५

श्रीरामको भारद्वाजाश्रममा विश्राम

सीताजीकन एहि रितसित सबै ❀ खोलेर बिस्तार् गरी
भारद्वाज्कन गै प्रणाम् पनिगऱ्या❀जल्दी जमिन्मा झरी
हात् जोरीकन सोद्नु भो जबतहाँ❀सब्जनकुशल्छन्भनी
वृद्धै हुन् महतारिको छ गति क्या ❀ ज्यूँदैतिछन्की पनी २६

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

वयानात् भाइ भरत्‌ अभिमरत्‌ भया ❀ सब्का उपर् काम् गरी
चौधै वर्ष रह्या व्रती भइ ति ता ❀ चिन्तन् ममाथी धरी
भारद्वाज् ऋषिले पनी सब कुशल् ❀ थीयो बताई दिया
हे नाथ्! छन् कुशले सबै भरतका ❀ मात्रै विपत्ती थिया २७

हजुर पर हुनाले रोज् फलै मात्र खान्छन्
हजुर सरि खराऊँ गादिमा राखि मान्छन्
शिर भरि छ जटाजूट् वल्कलै छन् धरयाका
फगत हजुरमा छन् प्राण अर्पण् गरयाका २८

राम् जान्दछु हजुरले पनि काम् गरयाको
राक्षस् विनाश गरि भार् भुमिको हरयाको
त्यो सब् प्रसाद् हजुरको सब तत्व जान्याँ
जो ब्रह्म हो उ त हजुर्कन आज मान्याँ २९

लीला गरी हजुरले अवतार् लियाको
ब्रह्मादि देवगणको पनि ताप् हरयाको
जो इ चरित्रकन खुश् भइ गान गर्छन्
संसार् समुद्र सहजै पनि आज तर्छन् ३०

ब्रह्माजिका वचनले यहि रूप धारी
भार् हर्नु भो सकल राक्षसलाइ मारी
सब् लोकको हित हुन्या अरु काम् गरीनन्
चौधै भुवन् हजुरका यशले भरीनन् ३१

मेरो आज पवित्र घर् पनि हवस् ❀ एक्‌रात् यहाँ राज्‌गरी
भोली जानु असल् हुन्याछ पुरमा ❀ बिन्ती छ पाऊ परी
भारद्वाज् ऋषिले यती हजुरमा ❀ बिन्तीगर्‌याराज्‌भयो
सन्मान् सैन्य समेत् गरेर तिनले ❀ सम्पूर्णकोताप्‌गयो ३२

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हुकुम् भो हनुमानलाइ हनुमान्! ❀ लौ शृङ्गवेर्मा गई
मेरा खुब् प्रिय छन् सखा गुह तहाँ ❀ तिन्थ्यैं समाचार् कही
नन्दीग्राम् गइ भाइलाइ गरि भेट् ❀ श्री राम आया भनी
मेरो लक्ष्मणको सिताजिहरुको ❀ सम्चार् बताऊ पनी ३३
मैले काम जती गर्‍याँ भरतथ्यैं ❀ सम्पूर्ण बिस्तार् गरी
ताहाँको समचार् लिईकन फर्‍या ❀ सन्ताप सब्को हरी
हुकुम् यो हनुमानले जब सुन्या ❀ मानिस् सरीका बनी
जल्दी गै गुहलाइ सब् कहिदीया ❀ आया सिताराम् भनी ३४
फेर् जल्दी सरयू तिरै तिर गया ❀ देख्या अयोध्या पनी
नन्दीग्राम् जब देखियो ताहिं गया ❀ जान्या यहीं हो भनी
बैलाई रहँदा जउन् तरहले ❀ फुल् सुक्छ फोश्रो भई
तेस्तै रैयतको दशा उस बखत् ❀ देख्या हनूमान् गई ३५
देख्या तहाँ भरतलाइ जटा धर्‍याका
श्री रामको चरण चिन्तन खुब् गर्‍याका
रामको खराउकन मालिक जानि मानी
दिन्थ्या हुकुम् पनि त सेवक आफु जानी ३६
सब् गेरुवा पहिरि मन्त्र पनी बर्‍याका
रामको भजन्तिर त कम्मर खुब् कस्याका
देख्या भरत्कन र खुश् भई हात जोड़ी
बिन्ती गर्‍या भरतको सब ताप तोड़ी ३७

अयोध्यामा उत्सव भरतमिलाप र श्रीराम राज्याभिषेक

जस्को चिन्तन गर्नु हुन्छ महराज्! ❀ सो नाथ् सिताराम् पनी
आई पुग्नू भयो भलाइ अधिराज्! ❀ भेट भाइलाई भनी
हूकुम् भो रघुनाथको र म यहाँ ❀ आयाँ हुकुम्ले गरी
सीता लक्ष्मणले सहित् कुशल छन् ❀ त्रैलोक्यका नाथ हरि ३८

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

एतीनीहरू साथछन् भनि कुशल्❀ बिस्तार सुनाया जसै
खुशी भैकन अङ्कमाल् पनि गरथ्या❀ ताहीं भरतले तसै
राम् श्रौ सुग्रिवको कहाँ हुनगयो❀ भेट्सन्बताऊ भनी
सोद्‌या ताहिं भरत्जिलेर हनुमान्❀ जीले बताया पनी ३९
सुग्रिव् साथमित्यारि गर्नु पनि भो❀ साहाय सुग्रिव् भया
लङ्कामा रहिछन् सिता र रघुनाथ्❀ ज्यूका सँगैमा गया
सीता रावणले हरेर बहुतै❀ दुःखी सरीका भई
सीताजीकन खोजि खोजी रघुनाथ्❀ फेर् ऋष्यमूकमा गई ४०
लंकामा गइ युद्ध गर्नु पनि भो❀ राक्षस् र रावण् गिरथ्या
लंकाका अधिराज् विभीषण बन्या❀ श्रीराम् अयोध्या फिरथ्या
यो बिस्तार हनुमान देखि रघुनाथ्❀ ज्यूको सुन्याथ्या जसै
भाईलाइ हुकुम् दिया नगरको❀ संस्कार खातिर् तसै ४१
हे शत्रुघ्न ! गराउ सब् नगरको❀ संस्कार् अजाडी सरी
सब् देवालयमा पुजा अब गरुन्❀ नाना बिधान्ले गरी
सुत बैतालिक बन्दिजन्हरु समेत्❀ निस्कुन् तिकर्बीहरु
सब् जाउन् रघुनाथका हजुरमा❀ जो जो यहाँ छन् अरु ४२
भारी फौज लिएर मन्त्रिहरुले❀ सब् राजपत्नी लिई
ब्राह्मण्लाइ अगाडिलाइ हिंडनू❀ सब्लाइ उर्दी दिई
हूकुम् एति दिया तहाँ भरतले❀ हूकुम् बमोजिम् गरी
हात्मा भेटि लिएर लश्कर चल्यो❀ खुब् हर्षमो तेस् घरी ४३
श्री राम्चन्द्रजिको खराउँ शिरमा❀ राखी तयारी भया
भाई साथ लिई भरत् प्रभुजिमा❀ हिंड्दै ति पैदल् गया
आयो श्री रघुनाथको पनि विमान्❀ चन्द्रै सरीको बनी
देखाया हनुमानले प्रभुजिको❀ तहीं विमान् हो भनी ४४

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

देख्या श्री रघुनाथको जब विमान् ❀ कीर्तन् सबैले गर्‍या
घोडामा रथमा जती थिर थिया ❀ ती सब् जमिन्मा झर्‍या
पृथ्वीमा न झरी तहाँ प्रभुजिको ❀ दर्शन् मिलेथ्यो जसै
टाढैबाट गर्‍या प्रणाम् भरतले ❀ खुब् हर्ष मान्या तसै ४५
भाईलाई विमानमा लिनु भयो ❀ तहीं जमिन्मा झरी
फेरी जल्दि पर्‍या भरत् चरणमा ❀ साष्टाङ्ग सेवा गरी
काखैमा पनि राखिबक्सनु भयो ❀ रामले भरत् खुश्भया
सीताजीकन दण्डवत् गरूँ भनी ❀ साम्ने अगाडी गया ४६
रुन्नामित्! हूँ म भरत्पर्‍या चरणमा ❀ यस्तो पुकारा गरी
सीताका पनि पाउमा परि गया ❀ आनन्द सागर् परी
लक्ष्मण्लाइपनी प्रणाम् तहिंगर्‍या ❀ काम्लेबडा हुन् भनी
आलिङ्गन् गरि सुग्रिवादि थिरको ❀ मन्खुश्गरायापनि ४७
सुग्रीवादि जती त वानर थिया ❀ ती मानिसै झैं भई
सोद्ध्या प्रश्न कुशल्सबै भरतको ❀ आफ्नोकुशल्सब्कही
मर्जी सुग्रिवलाइ तेस् बखतमा ❀ यस्तो भरत्को भयो
याहाँबाट दया भई प्रभुजिका ❀ सब्शत्रुकोज्यान्गयो ४८
चारै भाई थियौं अगाडि अहिले ❀ पाचौं हुनूभो यहाँ
भाईका झईँ यो सहाय नभया ❀ राक्षस् जितिन्थ्या कहाँ
यस्तो प्रेम्सित् बात् गर्‍या भरतले ❀ सुग्रीवजीथ्यैं गई
श्री रामचन्द्रजिका पर्‍याचरणमा ❀ शत्रूघ्न खूशीभई ४९
लक्ष्मणजीकन दण्डवत् गरिसिता ❀ जीका चरण्मा परे
सेवक् हूँ करुणानिधान्! हजुरको ❀ यो तहिँ बिन्ती गरे
श्री रामचन्द्रजिको खराउँ शिरमा ❀ राखी गएका थिए
बेला भो भनि पाउमा भरतले ❀ ताहीं लगाई दिए ५०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हात् जोरि बिन्ती गरे पनि तहाँ ❀ नासो लिएको थिएँ
यो गादी लिइबक्सियोस् हजुरले ❀ यै हो हजुरमा दिएँ
सब् थोक्मा पनि अन्नको र धनको ❀ दश् खराड बढ्तै गरी
राखेको छु दयानिधान् ! हजूरको ❀ सेवा बिषे मन् धरी ५१
यो बिन्ती खुशिले तहाँ भरतले ❀ साम्ने गर्‍या थ्या जसै
देखा भक्ति भरत्जिको खुशी भई ❀ सम्पूर्ण रोया तसै
नन्दीग्राम् पुगी उत्रिबक्सनु भयो ❀ ठाकुर् जमिन्मा पनि
पुष्पक्लाइ बिदा पनी दिनु भयो ❀ लैजा कुबेर्‌थैं भनी ५२
फेरी श्री रघुनाथ् बसिष्ठ गुरुका ❀ पाऊ बिषे झट् परी
याहाँ राज् गरि बक्सियोस् भनि असल् ❀ आसन् आगाडी धरी
आसन्मा गुरुलाइ राखि नजिकै ❀ आसन् बिषे राज् भयो
पाया दर्शन रामको र सबको ❀ सम्पूर्ण सन्ताप गयो
कैकेई र भरत् मिलेर रघुनाथ् ❀ जीका चरण्मा पर्‍या
हात् जोरीकन राज्य अर्पण गरी ❀ बिन्ती बहुतै गर्‍या
जस्ले एक कटाक्षले सहज यो ❀ ब्रह्माण्ड सब् हर्दछन्
जो ऐश्वर्य छ इन्द्रको उ पनि एक् ❀ क्षणमा तयार् गर्दछन् ५४
यस्ता शुद्ध अनन्त पूर्ण सुखरूप् ❀ ब्रह्मै स्वरुपले पनि
के राज् गर्नु थियो तथापि लिनुभो ❀ खूशी हउन् ई भनी
पैल्हे स्नान् भरतादिले जब गर्‍या ❀ क्षौर्ले जटा साफ् गरी
स्नान् सीतापतिको पछी तहिं भयो ❀ तेस्तै प्रकार्ले गरी ५५
माला चन्दन बस्त्र आदि पहिरी ❀ आसन् बिषे राज् भयो
राम्को स्नान् र सिताजिको तहिं सँगै ❀ हूँदा सबै ताप् गयो
सीताराम् रथमा सवार् हुनु भयो ❀ सुग्रीव् बिभीषणाहरू
हात्तीमा रथमा सवार हुन गया ❀ घोडै महाँ कै अरू ५६

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रामको सारथि ता भरत् हुन गया ❀ सेना म गर्हू भनी
सेतो छत्र लिया बहुत् खुशी हुँदै ❀ शत्रुघ्नजीले पनी
पंखा लक्ष्मणले लिया प्रभुजिको ❀ सुग्रिवले ता चमर्
लीया चामर एक् बिभीषणजिले ❀ खूशीभया सब्सुनर् ५७
मानिस्लेतबखान्कहाँतकगरुन् ❀ सब् देवताले पनि
रामकोकीर्तनखुब्गरयारसुनियो ❀ मीठोमधुर्सब्ध्वनी
भेरी शङ्ख मृदङ्ग आदि नगड़ा ❀ खुब्बज्नलाग्यापनि
श्रीरामको पनि कूच भयो रथचढी ❀ जाऊँअयोध्यामनी ५८
श्री रामको पुरिमा प्रवेश् जब भयो ❀ सब् पौरवासी पनि
निस्कया बालक बृद्ध दर्शन गरी ❀ हेरौं तमाशा भनी
देख्या श्री रघुनाथलाइ रथमा ❀ धारण् पिताम्बर् गरी
श्याम्सुन्दर्घनशरीर्किरीटशिरमा ❀ भूषण्शरीर्माधरी ५९
लाल्छन्नेत्रबिशालखुब्हृदयबिच् ❀ बेस् मोतिका हार छन्
शोभा चन्दन पुष्पको छ पनि बेस् ❀ देख्तै भयो खूशि मन्
सून्या स्त्रीहरूले पनी शहरमा ❀ आया सिताराम् भनी
सब्को चञ्चल चित्त भो र बहुतै ❀ हेरौं सिताराम् भनी ६०
छोड्या काम्घरको चढ्यागृहउपर् ❀ सब् स्त्री अटाली गई
लावा पुष्प चढाउँदै प्रभुजिको ❀ दर्शन् गर्या खुश् भई
रामको मोहनि मूर्तिमा जब नजर् ❀ सब् स्त्रीहरूका पर्या
खूशी भैकन अङ्गमाल मनले ❀ सब् स्त्रीहरूले गर्या ६१
मन्दैहास्य गरी प्रजाकन नजर् ❀ दींदै रमानाथ् तहाँ
दर्बार् पौंचनु भो अगाडि दशरथ् ❀ बस्थ्या खुशी भै जहाँ
कौशल्याहरूलाइ योग्य रितले ❀ ताहाँ नमस्कार् गरी
सुग्रिवको पनि बास् खटाउनु भयो ❀ साह्रै पियारो गरी ६२

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुग्रिव्जीकन राख भाइ! तिमिले ❀ पैल्हे म बस्थ्या जहाँ
सब्लाई तिमिले खटाउ बढिया ❀ घर् बस्नलाई यहाँ
हूकुम् एति हुँदा तहाँ भरतले ❀ सोही बमोजिम् गर्‌या
सब्को बास खटन् भयो सब तहाँ ❀ आनन्द सागर् पर्‌या ६३
आफैं श्री रघुनाथ् हुकुम् अब गरुन् ❀ यो मन् भरत्ले गरी
सुग्रिव्लाइ अह्राउनु पनि भयो ❀ खुश् भै अगाड़ी सरी
हे सुग्रिव ! खटाउनु अब पर्‌यो ❀ बीर्‌बीर् बिचार्‌खुब्‌गरी
चारै तर्फ गई समुद्र पुगी जल् ❀ ल्याउन् कलश्‌माभरी ६४
श्रीराम्‌चन्द्रजिलाइराज्यअभिषेक् ❀ गर्छू म ऐल्हे भनी
मर्जीभो र भरत्‌जिकोउहि बखत् ❀ ल्याई दिया जल् पनी
जल्‌लीनाकन जाम्बवान्‌रहनुमान् ❀ अङ्गद् सुषेणाचार्‌गया
पौंच्या जल्दी समुद्रमा असल जल् ❀ लीएर दाखिल् भया ६५
त्यो जल् साथ लिई बशिष्ठ गुरुका ❀ साम्ने भरत्‌जी गया
यो हो चार समुद्रको जल भनी ❀ यो बिन्ती गर्दा भया
फेर्‌बिन्तीकरजोरिखुब्‌बासितगर्‌या ❀ यै जल् हजुर्‌ले छरी
श्री राम्‌चन्द्रजिलाइराज्यअभिषेश् ❀ दीनूहवस् यस्‌घरी ६६
यस्तो बिन्ति सुनी बसिष्ठ गुरुले ❀ बेस्‌बिन्ति गर्छौ भनी
श्री राम्‌चन्द्रजिलाइराख्नुपनि भो ❀ सिंहासनैमा पनि
गौतम् बाल्मिकि बामदेवइसमेत् ❀ जाबालि ताहीं थिया
ती सब्‌ले सँग भै बशिष्ठ गुरुले ❀ जल्दी अभीषेक्‌दिया ६७
कन्या ब्राह्मणले पनी तुलसिदल् ❀ हालेर कुश्‌ले असल्
मन्त्रैपूर्वक खूशि भैकन छर्‌या ❀ राम्‌का उपर् शुद्धजल्
सेतो छत्र लिया तहाँ प्रभुजिको ❀ शत्रुघ्नजीले गई
सुग्रिव्‌ले र तहाँ बिभीषणजिले ❀ हाँवयाचथ्यमर्‌खुशभई ६८

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
माला काञ्चन वायुले पनि दिया ❀ हार इन्द्रजीले पनि
माला रत्न खचित गराइ त दिया ❀ पैर्हुन् सितारामभनि
गाउँछन् तहिं देवतागणहरू ❀ सब् अप्सरा नाच्तछन्
वरयौंसुन्‌सित पुष्प वृष्टि नगरा ❀ सुन्दाभयो खुशिमन् ६९
गम्भीरश्यामशरीरकिरिटछशिरमा ❀ माला पिताम्बर् धरी
कोटी काम समान सुन्दर स्वरूप् ❀ वाम् तर्फ सीता धरी
सिंहासन् वसिसब्‌प्रजातिर नजर् ❀ दीनूभएथ्यो जसै
दर्शन् गर्न भनेर पार्वति समेत् ❀ आया सदाशिव्‌तसै ७०
डिम् डिम् शब्द भयोतहाँडमरुको ❀ नन्दी र भृङ्गी पनी
ताल्‌बेताल्‌हरुनाच्नलागितिगया ❀ आया सदाशिव् भनी
शम्भूका पछि देवगण् सब तहाँ ❀ आएर हाजिर् भया
श्रीराम्‌को स्तुति खुब्‌गरेर खुशिभै ❀ सब्‌जल्दिफर्कीगया ७१
बाजाखुब् शब्द गर्छन् स्तुतिगरि ऋषिगण् देवगण् पाठ गर्छन्
वर्षन्छन् पुष्पवृष्टी प्रभुउपर अनेक् प्राणिले सौख्य गर्छन्
सिंहासन्‌मानिराज्‌मान्‌सकलगुणनिधान्‌राम्‌हुनूभोजसैता
सीता लक्ष्मण् सँगै छन्‌प्रभुकन हुनगो पूर्ण शोभा तसैता ७२
राजा श्री रघुनाथ् हुँदा पृथिविमा ❀ सस्यादि सूब्बै बढ्यो
थीयानन् अघि गन्ध जौन फुलमा ❀ तिन्‌मा सुगन्धी चढ्यो
धेनू दान् वृषदान्‌गर्‍या प्रभुजिले ❀ तिन्‌कोटिसुन्‌दान्‌गरी
वस्त्र भूषण रत्न दान् पनिगर्‍या ❀ दारिद्र सब्‌को हरी ७३
दान्‌लेब्राह्मण खुश्‌गराइ रघुनाथ् ❀ सुग्रीवलाई पनी
माला सूर्य समानको दिनुभयो ❀ दीनू उचित् हो भनी
मर्यादा गरि बाजुबन्द दिनु भो ❀ अङ्गदजिलाई पनी
ताहीं एक अमूल्य हार दिनु भो ❀ सिताजिलाई पनी ७४
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
सीताले हनुमानलाई दिन सूर् ❀ बोधेर हात्मा लिइन्
कर्तो हुन्छ हुकुम् भनीकन नजर् ❀ रुनामित्तरफ् खून्दिइन्
जस्लाई दिन मन् छ देउ भनि यो ❀ हूकुम् भयाथ्यो जसै
त्याराश्रीहनुमान् थिया तहिं दिइन् ❀ त्योहार्सिताले तसै ७५

श्रद्धापूर्वक हार त्यो जब लिया ❀ वायूकुमार्ले तहाँ
हेऱ्या वल्टि र पल्टि नाम प्रभुको ❀ सोहीजुहारै महाँ
देख्यानन् प्रिय नाम राम प्रभुको ❀ त्यस्मा रह्याको जब
एक् एक् रत्न चुँडाइ हेर्न अनिता ❀ लाग्या हनूमान् तब ७६
छिन्दामा पनि देखियान त्यसमा ❀ राम् नाम काहीं पनि
दाना ती सब दाँतले गरि तहाँ ❀ फोरेर हेर्थ्या उनी
सारा रत्न फुटाउँदा पनि कहीं ❀ रामनाम् न देखीकन
माटोकै सरि मानि रत्नहरू ती ❀ फ्याँक्या कपीले पुनः ७७
त्यो चाल् श्रीहनुमानको नजरभै ❀ सीताजीले राम् महाँ
साहै मूर्ख रह्याछ वानर भनी ❀ विन्ती चढाइन् तहाँ
जुन् हार् हेर्न नपाइ व्यग्र अतिछन् ❀ ठूला ठुला भूपति
धौता दानवहेरू सम्मकन हो ❀ दुष्प्राप्य यो हार अति ७८
सोही हार् इनि भक्त हुन् भनि दियाँ ❀ इन्ले त माटो सरी
फ्याँक्या क्यान भनिन् र फेरी प्रभुले ❀ शोच्नूभयो त्यस्घरी
सीताको अभिमान तोड्दछु भनी ❀ डाकेर सन्मुख् महाँ
भन्नूभो हनुमान लाई, किनयो ❀ माला टुटायौ यहाँ ७९
आज्ञा राघवको सुनेर मनमा ❀ अत्यन्त दुःखित् भई
भन्छन् वायुकुमार व्यग्र स्वरले ❀ रामका समीप्मा गई
हे नाथ् ! बक्सिस हार पाइ खुशिभै ❀ मैले लियाँ त्यस्घरी
हेऱ्याँ नाम् प्रभुको हुन्याछ यसमा ❀ भन्न्या विचार्ले गरी ८०

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फेरी भन्नु भयो प्रसन्न मुखले ❀ श्याबासि दी तिन्कन
तिम्रो मन्सुब पूर्ण निश्चय पनि ❀ गर्न्याछु मैले सुन
भूको भार उतार्छु कृष्ण रूपले ❀ द्वा.र् युगैमा जब
स्वर्गारोहणका बखत् म मरूँला ❀ हात्देखि तिम्रै तव ९३
इच्छित् वर् प्रभुबाट पाइकन यो ❀ अत्यन्त खूशी भया
रामको होस् जय सर्वदा भनि उनी ❀ आफ्ना नगर्मा गया
फेर् ठाकुर् गुहका अगाड़ि गइ यो ❀ हूकुम् कृपाले गर्‍या
जाऊ लौ घर मै बसीरहु फगत् ❀ मन्मात्रमैमा धर्‍या ९४
यो प्रारब्ध ठुलो छ भोग नगरी ❀ टर्दैन कस्तै गरी
हून्याछौ तिमि मुक्तदेह पछि ता ❀ संसार् सहज्मा तरी
हूकुम् यो गरि मुख्य भक्त गुहका ❀ साम्ने अगाडी सरी
आलिङ्गन् गरि भूषणादि दिनुभो ❀ राज्यै समेत् त्यै धरी ९५
तत्वै ज्ञान् पनि बक्सनू तहिंभयो ❀ आनन्दसागर् परी
बीदा भै गुहजी गया घर महाँ ❀ मन् राम्चरण्मा धरी
यस्ता रित्सित सब्बिदा तहिं हुँदै ❀ सुग्रिव् बिभीषण् गया
लक्ष्मण् सेवक छन् सदा हजुरमा ❀ राम् राज्य गर्दा भया ९६
आत्मा रूप् सब कर्मका अधिपती ❀ निर्मल् अकर्ता पनी
कर्ता भैकन लोकलाइ उपदेश् ❀ गर्नू उचित् हो भनी
गर्ना लायक अश्वमेधहरु जो ❀ ठूला ठुला यज्ञ हुन्
ती सब् यज्ञ पनी गर्‍या प्रभुजिले ❀ बाँकीरहन्थ्या कउन् ९७
राजा राम् भइ बक्सनू जब भयो ❀ प्राणी प्रजा खुश् भया
जो पथ्यादि ताप् अनेक् तरहका ❀ ती सब् प्रजाका गया
गर्दैनन् बिधवा बिलाप् मुलुकमा ❀ लाग्दैनरोग्व्याधिपनी
सब् डाँकू दगिया परेन कहिं ताप् ❀ यो चीज् हरायोभनी ९८

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बूढा बाँचि मरेन बालख कहीं ❀ यस्तो मुलुकमा भयो
छोरा झैं गरि पालिबक्सनु हुँदा ❀ तापसब् जनैकोगयो
गर्छन् राघवको भजन् जनहरू ❀ वर्षन्छ मेघ् कालमा
वर्णाश्रम्सब गर्दछन् दिन बित्यो ❀सब्कासुखीचालमा९९

अयुत वर्ष त राज् प्रभुको भयो
सकल ताप् दुनियाँहरूको गयो
शिवजिले यति पार्वतिथ्यैं कह्या
सकल ताप् छुटि जान्छ सुनी रह्या १००

श्रीरामको यति कथाकन जो कहन्छन्
सब् थोकले ति परिपूर्ण भई रहन्छन्
धन् पुत्र राज्यहरु कम्ति हुँदैन केही
पाप् हर्नलाइ पनि मुख्य छ धर्म एही १

जन्मन्छन् तर मर्दछन् पनि सबै ❀ जस्का त छोराहरू
त्यस्ता स्त्रीहरुले भन्या यदि सुन्या❀ बाँच्छन् ति छोरा अरू
बन्ध्यास्त्रीपनिपाउँछन् सुत असल्❀ गर्छन् कृपा राम् धनी
आधि व्याधि अनेक दुःख भय ताप् ❀ पर्दैन कैल्हे पनी २

श्री रामको यति कथा जतिले त सुन्छन्
सब् देवता ति सँग खुब्सित खूशि हुन्छन्
जो विघ्न हुन् ति पनि नष्ट भएर जान्छन्
सम्पूर्ण जन् पनि तिनैकन आइ मान्छन् ३

आधि व्याधि पनी छुटी उस उपर् ❀ धन्धान्य सन्तान्पनी
बढ्छन् इष्ट कुटुम्ब मित्रहरुका ❀ मान्यै ति हुन्छन् भनी
यस्ताको म बखान् कहाँ तकगरूँ❀ जो मन् प्रभूमा धरी
गर्छन् राम भजन त मुक्त पनि भै ❀ जान्छन्ति संसारतरी४

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

शम्भूले सब वेद मन्थन गर्‍या ❀ श्रीरामको नाम् सरी
एकौ तत्व मिल्यान केहि र लिया❀ साह्रै पियारो गरी
सोही तत्व त पार्वती कन दिया ❀ अध्यात्म रुप्ले गरी
जस्ले प्रेम् गरी सुन्छ यो सहज त्यो ❀ उत्रन्छ संसार् तरी ६

इति सुब्बा होमनाथात्मज पं० केदारनाथ र पं० रामजी उपाध्यायकृत क्षेपक समेतको नेपाली कवि भानुभक्ताचार्यकृत रामायण युद्धकाण्ड समाप्त ।



नेपाली साहित्यगगनमा सूर्य झैं प्रसिद्ध सुब्बा होमनाथ केदारनाथजीका ग्रन्थरत्न

अष्टारहपर्व महाभारत चमड़ा ढकनीको दाम २५।
श्री कृष्णचरित्र चमड़ा ढकनीको दाम १०।
आठै काण्ड रामायण चमड़ा ढकनीको दाम १०।
ठूलो श्रीमद् देवीभागवत चमड़ा ढकनीको दाम ९।
सचित्र नेपाल दिग्दर्शन इतिहास १ के दाम ८।

यो समग्र पुस्तकको सेट एकै पटक रु० १०) पेशगी पठाइ मगाए खर्च पनि माफ हुन्छ ।

पुस्तक पाइने ठेगाना—

सुब्बा होमनाथ केदारनाथ,

हितैषी कम्पनी

वाराणसी १ ( बनारस सिटी । )

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations












CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

उत्तर का.२



१ लव-कुशले रामायण पढेको ।



२ श्रीरामले लव-कुशको रामायण सुनेको ।



३ रामचन्द्रले अश्वमेधको घोड़ा छोडेको ।



४ रामचन्द्रको अश्वमेधको घोडालाइ लवकुशले समातेको ।

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुब्बा होमनाथात्मज केदारनाथजी र पं० रामजी उपाध्यायकृत क्षेपक समेतको

❋ महाकवि पं० भानुभक्ताचार्यकृत ❋




पुलस्त्यका नाती कुबेर रावणादि सबै भाई भाई को उत्पत्ती वर्णनं

शम्भूका मुखदेखि राज्य अभिषेक् ❋ राम्को सुनिथीन् जस
सोधिन् पार्वतिले सदाशिवाजिथ्यैं ❋ लीला पछीका तसै
पृथ्वीमा कति वर्ष राज् हुनगयो ❋ लीला तहाँ कुन् भया
कस्ता रित्सित राज्य छोडि रघुनाथ् ❋ वैकुण्ठ धाम्मा गया १
शम्भो ! श्रीरघुनाथका त जति छन् ❋ लीला कृपाले गरी
आज्ञा आज हवस् म सुन्हु भगवन् ! ❋ बिन्ती छ पाऊ परी
यो बिन्ती जब शम्भुका चरणमा ❋ श्री पार्वतिले गरिन्
सब् लीला प्रभुको कह्या शिवाजिले ❋ खुब् हर्षमा ती परिन् २
रावण् मारि उतारि भार भूमिको ❋ राज्यै ति गर्छन् भनी
जानी एक्दिन ता गया ऋषि अनेक् ❋ भेटौं सीताराम् भनी
दुर्वाशा भृगु अङ्गिरा इ पनि छन् ❋ कश्यप् र वामदेव् भया
विश्वामित्र असित् र कण्इव सहितै ❋ सप्तर्षि अत्री गया ३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सब् शिष्यै सहितै अगारि तजि गया❀द्वार्मा पुग्याथ्या जसै
हाजिर् जल्दि पठाइ मर्जि भइ ती❀ पौंच्या हजुर्मा तसै
पूजा सब् ऋषिको गर्‍या प्रभुजिले❀सब्लाइ आसन् दिया
खूशी सब् ऋषिगण् भया हजुरमा❀जो जो गयाका थिया ४
पैल्हे प्रश्न गर्‍या तहाँ कुशलको ❀ रामले र आदर् गरी
सोध्या सब् ऋषिले पनी कुशलको❀बिस्तार् बडो प्रेम् धरी
बिन्तीसब् ऋषिलेगर्‍याहजुरमा❀रुनामित!ठुलोकाम्भयो
पृथ्वीको अति भार इन्द्रजित हो ❀भार् तेहि जाँदा गयो ५
बीर् हुन् रावण कुम्भकर्ण त पनी❀यो इन्द्रजित् झन् जबर्
बीर्हो त्योपनिमारिबक्सनुभयो❀कोजित्नसक्थ्योअबर्
लङ्कामा इनि दुष्टको मरण भो ❀ साँचा बिभीषण् थिया
पाया राज्य कनक् झइ र खुशिले❀ चाकर्सदाका भया ६
जो दक्षिण अभयको अघि हो दियाको
सो पूर्ण गर्नकन दुष्ट हरी लियाको
देख्यौं कृतार्थ हुनुभो रघुनाथ ! पैल्हे
मर्थ्या ति राक्षसहरु अरुदेखि कैल्हे ७
यो बिन्ती ऋषिको सुन्या प्रभुजिले❀आश्चर्य मान्या पनी
क्याले रावण देखि झन् अति ठुलो❀भो इन्द्रजित् बार् भनी
सोध्या सब् ऋषिका अगाडि र तहाँ❀साम्ने अगस्ती थिया
यस्तो त्यो बिरहो भनी सब कुरो ❀बिस्तार् बताई दिया ८
ब्रह्माका सुत हुन् पुलस्त्य तपका❀ खातिर् सुमेरु गया
राजर्षी तृणबिन्दुका नजिचमा ❀आश्रम् ति गर्दाभया
तप् गर्थ्या तहिं देवपुत्रीहरु सब् ❀आएर खुब् गान् गरी
नाच्थ्या हास्यकुरा अनेक्तरहका❀ गर्दै नजरमा परी ९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

तप्को विघ्न हुन्या पुलस्त्य ऋषिले ❀ नूभयानडाधीरथिया
जुन् स्त्री देखुँ म गर्भिणी ऊहि हवस् ❀ भन्न्या शराप् पो दिया
भाग्या सब् तृणाबिन्दु पुत्री त सुनी ❀ साम्नेनाग्चिमागइन्
देख्या ताहिं पुलस्त्यले र ति तहाँ ❀ झट्गर्भिणीभैगइन् १०
काँपिन् खुब् डरले पितासित गइन् ❀ जान्या पिताले पनि
छोरी गर्भिणी भैछ आज ऋषिका ❀ साँचो वचन्ले भनी
जानी छोरि पुलस्त्यजीकन दिया ❀ जल्दी नाग्चिमा गई
ती कन्या ति पुलस्त्यले पनि लिया ❀ अत्यन्त खूशी भई ११
तिन्का पुत्र त विश्रवा हुन गया ❀ खुब् ब्रह्म जान्या भनी
भारद्वाज् ऋषिले त तिन्कन दिया ❀ छोरी बडो गुण् सुनी
तिन्का पुत्र कुबेर भया गुणनिधी ❀ तिन्ले तपस्या गरी
ब्रह्मालाइ रिझाउँदा ति धनका ❀ मालिक् भयातेस्घरी १२

एक् आँखा, तिन पाउ, बाहुपनि आठ् ❀ इन्का शरीर्मा थियो
तस्मात् देह विकार् भए, इनको ❀ नाऊँ कुबेरै रह्यो
फेरी ई अलकापुरी नगरिका ❀ लोक्पाल् थिया विश्रुत
यक्षैगण्हरूका अधीश्वर भई ❀ उत्तर् दिशामा स्थित १३

मालिक् दौलथको गराइ ति गरुन् ❀ यस्मा सयल् खुप् भनी
ब्रह्माले ताहिं फेरि पुष्पक विमान् ❀ तिन्लाइ दीया पनी
तेसैमाथि चढी पितासित गई ❀ तप्को सबै फल् कह्या
सब् पायाँ तर बास् त पाइन कता ❀ जाऊँ म भन्दा भया १४
सून्या बिन्ती कुबेरको र खुशी भै ❀ ती विश्रवाले पनी
लङ्का खालि थियो र ताहिं दिनुभो ❀ लौ राज्य गर्जा भनी
लङ्कामा अघि राज्य राक्षसहरू ❀ गर्थ्या बडा वीर् थिया
तिन्कै खातिर विश्वकर्म खुशि भै ❀ लङ्का बनाई दिया १५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आज्‌काल्‌राक्षसबिष्णुलेजातीलिदा ❀ भागेर पातालमा
लुक्ना खातिर गै गया र शहरै ❀ खाली छ यस्‌ कालमा
आज्ञा एति दिया कुबेर्‌कन तहाँ ❀ ती बिश्रवाले जसै
लङ्कामा ति कुबेर्‌ गईकन बस्या ❀ राज्‌गर्न लाग्या तसै १६
एक्‌दिन्‌कैकसिछोरिलीकन ठुलो ❀ राक्षस्‌ सुमाली पनी
डुल्थ्यो यस्‌ पृथिबिबिषे सब घुमी ❀ हेरूँ तमाशा भनी
पाताल्‌बाट सयल्‌ गरूँ भनि तहाँ ❀ आएर डुल्दा महाँ
पुष्पक्‌ माथि चढेर खुब्‌सित सयल्‌ ❀ गर्थ्या कुबेर्‌जी तहाँ १७
लाग्यो दृष्टि सुमालिको र मनले ❀ मान्यो बडा हुन्‌ भनी
यस्‌तो बीर्‌ कुलमा कसो गरि हुनन्‌ ❀ यस्‌तो चिताय्‌यो पनी
लाग्यो कैकसीलाइ भन्न त्यसले ❀ पुत्री! बहुत्‌काल्‌ भयो
कोई बर्‌ पनि पाउँदीन गरूँ क्या ❀ यौबन्‌ त तिम्रो गयो १८
तस्मात्‌आजतबिश्रवाऋषिजिथ्यैं ❀ जाऊ र साम्ने गई
हात्‌ जोरी ऋतुदान माँग तिमिले ❀ दासी चरण्‌को भई
जस्‌ले पुत्र हुनन्‌ अवश्य उनका ❀ पुत्रै हुनन्‌ बीर्‌ भनी
छोरीलाइ त बिश्रवासित तहाँ ❀ त्यस्‌ले पठायो पनी १९
जल्दी कैकसी बिश्रवासित गई ❀ साम्ने खडा भै रहिन्‌
पृथ्बी तर्फ नजर्‌ दिई चरणले ❀ लेख्‌ती जमिन्‌मा भईन्‌
चेष्टा कैकसिको नजर्‌ गरी तहाँ ❀ ती बिश्रवाले पनि
कन्याकस्‌कि तँ होस्‌ बताकि न यहाँ ❀ आइस्‌ अगाडी भनी २०
सोद्‌ध्या कैकसिलाइ लाज्‌ हुन गई ❀ ती धेर सकस्‌मा परिन्‌
ध्यानैले सब जानिबक्सनु हवस्‌ ❀ यस्‌तो त बिन्ती गरिन्‌
सून्याबिन्तीरऋषिबिचार्‌पनिगर्‍या ❀ मालुम्‌ भयो सब्‌ जसै
छोरा पाउन आइछस्‌ भनि तहाँ ❀ बोल्या ऋषिले तसै २१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बेला दारुण पारि आज ऋतुदान् ❀ मागिस् म दिन्छू पनी
दोटा पुत्र हुनन् भयङ्कर स्वरूप् ❀ बेला सरीका भनी
यस्ता बात् गरिदान् दिया र ऋतुको ❀ ती बात् जसैता सुनिन्
कुन् रितले अब पुत्र पाउँ बढिया ❀ यस्तो म नै मागुनिन् २२
बिन्ती कैकसिले गरिन् उहि बखत् ❀ स्वामित्! पती मैं पनि
त्यस्ता पुत्र हुँदा त बुझ्छ कसरी ❀ यो मन् कठिन्भो भनि
सुन्याबिन्ति रखुब्दयापनि उठ्यो ❀ ती विश्रवाको पनी
तेश्रो पुत्र हुन्याछ रामचरणको ❀ दास बुद्धिमान् खुब् भनी २३

यस्ता रीतिसित कैकसी तरफमा ❀ तीन् पुत्र तिन्काथिया
जेठो रावण् कुम्भकर्ण पछि फेर् ❀ विभीषणैजी भया
राखा नामकि पत्निमा पनि तहाँ ❀ श्री विश्रवाजी कन
त्यस्तै शूर्पखा त्रिदूषण खर् ❀ सन्तान् भया फेर् तिन २४
हेमा नामकि अप्सरा र मयकी ❀ मन्दोदरी पुत्रिको
रावण्का सँगमा विवाह हुनगो ❀ कन्या र वर् योग्यको
पौत्री दानवराज् बलीजिकि वृष ❀ ज्वाला थिइन् तिन्सँग
कुंभैकर्णजिको बिवाह हुनगो ❀ शास्त्रै विधान्ले पुनः २५
गन्धर्वै पति सैलुवै कि दुहिता ❀ थिन कोहि सर्भा भनी
तिन्कै साथ भयो विभीषणजिको ❀ फेरी विवाहै पनि
यस्या रीत्सित भाइ हेरू सबको ❀ सम्बन्ध ठूला सँग
जोड़ी फेर् तपले अजेय हुनगो ❀ संसारमा रावण २६

भरतजीससेत रामको पुनः लङ्का यात्रा

एक् दिन् रामकन संझना हुन गयो ❀ राजा विभीषण्जिको
शोच्नूभो प्रभुले विभीषण तहाँ ❀ सारा प्रजावर्गको
कस्ता रीत्सित गर्दछन् ति प्रतिदिन् ❀ शासन् र पालन् पनि
नाशको कारण देवविरोधि व्यवहार ❀ हो भूपतिको अनि २७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लंकाको दिइ राज्य तिन्कन यहाँ ❀ पैले म आयाँ अब
अैले गैकन हेर्दछू नृपतिको ❀ राज्मा छ क्या हालत
राज्यैको मदले ति भूपति कहिं ❀ गर्छन् कि पापै भनि
शोच्तैथ्या प्रभुजि उसे वखतमा ❀ आए भरत्जी पनि २८
देखी रामकन शोचमा भरतले ❀ प्रश्नै गर्‍याथ्या जसै
तेस्को कारण भन्नुभो प्रभुजिले ❀ सङ्मा भरत्का तसै
हे बाबू ! तिमी लक्ष्मणै सरहह्यौत ❀ अत्यन्त मेरो प्रिय
तसमात् सबूतिमिलाइ भन्छुसुनिल्यौ ❀ मन्को कुरा यो अब २९
मेरो यै मनमा छ एक्पटक फेर् ❀ लंका महाँ गैकन
राज्पाठ् कुन् रितकोछ हेरूँ अहिले ❀ भेटी विभीषण् सँग
फेरी तिन्कन क्यै गरेर उपदेश् ❀ फर्कन्छु चाँडै यहाँ
यस्ता बात् सुनि रामको खुशि भई ❀ भन्छन् भरतजी तहाँ ३०
हे नाथ् ! सत्यछ जुन् कुरा हजुरले ❀ मर्जी भयो हो यहाँ
जानपर्छ, सवारि होस्, हजुरका ❀ जान्छू म फेर् साथमा
इच्छा त्यस् रितको बुझी भरतको ❀ श्रीराम खुशी भैकन
राज्कोसब् अभिभार सुम्पनुभयो फेर् ❀ भाइ लक्ष्मण् कन ३१
लंका तर्फ सवारिभो दुइजना ❀ पुष्पक् विमान्मा चढी
बाटोमा दुइ पुत्र श्री भरतका ❀ राज्धानि माहाँ पुगी
तिन्का कार्य सबै निरीक्षण गरी ❀ ताहीं बसी क्ये क्षण
फेरी लक्ष्मणका सुपुत्रहरूका ❀ राज्मा बसी दुइ दिन ३२
भारद्वाज र अत्रिका कुटिमहाँ ❀ पाल्नूभयो त्यसपछी
फेरी बढ्नु भयो अगाडि प्रभुजि ❀ पुष्पक् विमान्मा बसी
सीताको हरणै जटायु मरणै ❀ औ वालिवध्का स्थल
फेरीं मृत्यु कवन्धको पनि भयो ❀ जुन् स्थानमा त्योसब ३३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भाई लाइ विभिन्न स्थानहरू सब् ❀ देखाउनू भो तहाँ
आफूमा घटना भयो जुन अघी ❀ त्यो दण्डकारण्यमा
किष्किन्धा विच पुग्नुभो अनिपछी ❀ श्रीराम् भरत्का सँग
ओर्लही पुष्पकबाट भेट्नु पनि भो ❀ तत्काल सुग्रीव् सँग ३४
सुग्रीब्लाइ समेत् लिएर सँगमा ❀ फेरी बिमान्मा चढ़ी
लंकामा पनि पुग्नुभो सबजना ❀ आकाशबाटो गरी
दूत द्वारा सुनि यो खबर् खुशिभइ ❀ राजा बिभीषण् पनि
स्वागत् गर्न भनेर आउनू भयो ❀ अत्यन्त नम्रित् बनी ३५
उत्सव् खूव भयो सबै नगरमा ❀ बाजा वज्या हर्षका
सारा सैन्य 'र मन्त्रिगणहरु समेत् ❀ आया नजीक् रामका
श्रीराम् लाइ प्रणाम् गरी नृपेतिले ❀ भन्नू भयो यो कुरा
मेरो जन्म सफल् भयो हजुरको ❀ पाएर दर्शन् पुरा ३६
यस्ता बात भनी विभीषणजिले ❀ राम्लाइ एक् उत्तम
सिंहासन् बिच राखि शास्त्र विधिले ❀ गर्नू भयो पूजन
राम्को दर्शन गर्न उत्सुक थिया ❀ लंकाधिवासी सब
जानी यो प्रभुले सबैकन तहाँ ❀ दर्शन् दिनूभो तब ३७
यस्ता रीत्बसित चारदिन् बितिगयो ❀ यस्ता तहाँ हर्षले
रामको दर्शन गर्न कैकसिजिले ❀ इच्छा गरिन् स्नेहले
इच्छा यो बुझि रामले पनि तहाँ ❀ राजा विभीषण् सँग
भन्नूभो जननीजि मान्छु म पनि ❀ तिम्री ति माताकन ३८
यस्ता वात भनी विभीषणजिका ❀ साथैमहा राम् पनि
पाल्नू भो जननी ति कैकसि कहाँ ❀ भेट्गर्नलाई भनी
भेटी उन्कन नम्रभै प्रभुजिले ❀ साष्टांग पैले गरी
माता मान्छु हजूर लाई म समेत् ❀ भन्नू भयो त्यस् घरी ३९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ठूलो पुण्य न भै मनुष्यकन फेर् ❀ भक्तै विभीषण्जिकी
माताको शुभ दर्श नै पनि कहाँ ❀ मिल्थ्यो सदा सात्वकी
पाई दर्शन आज यो हजुरको ❀ अत्यन्त हर्षित् म छू
कौशल्या जननी र कैकसि हजुर् ❀ एकै समान् मान्दछू ४०
यस्ता बात सुनेर कैकसी तहाँ ❀ खूब् हर्षगद्गद् भइन्
आशिर्वाद अनेक रामकन तहाँ ❀ फेर् मातृभाव्ले दिइन्
त्यस्का क्यै पछि फेरि ताहिं सरमा ❀ पत्नी विभिषण्जिकी
आई राम् प्रभुको अनेक् स्तुति गरिन् ❀ तल्लाई उनैमा भक्छू ४१
आफ्ना भाइ भरत्जिले परिचयै ❀ सोध्यार तिन्को अनी
रामले भन्नु भयो विभीषणजिको ❀ हुन्पत्नि सरमा भनी
तत् पश्चात् दुइदिन् अरू पनि तहाँ ❀ आनन्दले बस्नु भो
फेरी सबकन सान्त्वना दिनु भई ❀ श्रीराम फिर्नू भयो ४२
फिर्दा सोहि बखत् विभीषण कनै ❀ डाकेर रामले तहाँ
शिक्षा औ उपदेश् अनेक् दिनु भयो ❀ राखी प्रजा साथमा
हे निष्पाप ! दयालु ! देवहरूको ❀ गर्नू सदा काम् प्रिय
तिन्को क्यै अपराध् न गर्नू र हुनू ❀ धर्मैं महाँ खूब स्थिर ४३
लंका राज्यमहाँ मनुष्य हरूको ❀ कैल्यै न होस् बध् भनी
उर्दी आज गराइदेउ तिमीले ❀ सारा प्रजामा पनि
शिक्षा यो सुनि श्री विभीषणजिले ❀ आज्ञा शिरोपर् गर्‍या
तत्पश्चात् प्रभुजि सबै सँगमहा ❀ आफ्ना विमान्मा चढ्या ४४
यौटा विन्ति गरे विभीषणजिले ❀ सोही बखतमा तहाँ
जैले सम्म हुन्याछ पुल् हजुरको ❀ यो राज्य लंकामहाँ
भारत्बाट मनुष्य आइ प्रति दिन् ❀ गर्लान्भिंजो खूब्यहाँ
बन्दोवस्त गराइ बक्सनुहवस ❀ यस् निमित्त बेलैं महाँ ४५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तो बिन्ति सुनी विभीषणजिको ❀ श्रीराम प्रभूले तहाँ
त्यो सेतूकन तोड़ी बक्सनु भयो ❀ पैले त माझ महाँ
टुक्रा त्यसकन फेरि तीन् तिन् ❀ गरी चूर्णै गराईकन
लंका-भारत-मार्ग बन्द हुनगो ❀ श्रीराम द्वारा पुनः ४६

रावणादिको तप वरदान प्राप्ती

मन्छन् ती फेर्अगर-तीह्लदयनिचमहाँ आत्मरूपले रह्याका
निर्मल् सर्वज्ञ पूरौं प्रभु पनि नरको रूप ऐल्हे भयाका
साइनू भो आज लीला गरिकन त सबै रावणादीहरूको
निस्तारचिन्तामगर्दूअरूपनीभगवान् तेजूहर्याकोअरूको ४७
एक्दिन्पुष्पकमा चढीकनकुबेर्❀ आया पिताथ्यैं जसै
देखिन् कैकसिले र पुत्रसित गै ❀ वयै मन्न लागिन् तसै
देख्यौ पुत्र ! कुबेरलाइ तिमिले ❀ सब द्रव्यका छन् धनी
गर्छन् पुष्पकमा सयल् खुशि हुँदै ❀तेजाग्नि देख्नैपनी ४८
जस्तो यत्न गरेर हुन्छ तिमिले ❀ सो यत्न ऐल्हे गरी
सब्कामालिकभैसयल्गरअनेक् ❀ यस्तै इनैले सरी
रावणले इ बचन् सुनी जननीको❀सामने प्रतिज्ञा गर्यो
हे मातर् ! म बडो भएर रहुँला❀क्याआजाचिन्तापर्यो४९
यस्तो बात् तहिं कैकसीसित गरी ❀ तप् गर्न रावण् गयो
गोकर्णेश्वरमा गई दृढ भई ❀ तप् गर्न लाग्दोभयो
रावण्कासँगकुम्भकर्णबिभीषण्❀भाइ दुबै ती गया
ईश्वर्लाइ गरूँ प्रसन्न भनी खुब् ❀तिनूलेपनीमनूदिया ५०
तप् गर्दा हुँदि कुम्भकर्णबिरको❀ ताहाँ अयुत् वर्ष गो
टेकी एक चरण् बिभीषणजिको❀ पाँचै हजार् मात्र भो
रावण्को त बखान् कहाँतकगरौं ❀ ठूलो तपस्या गर्यो
खुब्एकाग्रभएररोज्प्रभुजिको ❀ध्यान्मान् हुतमन्धर्यो ५१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

दश् हज्जार् जब दिव्य वर्ष बितिगो❀एक्शिर् तसै होम्गरी
यस्तैरितसित नौ ता शिर् पनि हुम्यो❀ भक्ती प्रभूमा धरी
नौशिर् होम्गरिशिर्दशौंप नी तहाँ❀ दीनै तयार् भो जसै
ब्रह्मा आइ हटाइ वर् दिन तयार्❀ हूनू भयो पो तसै ५२
हे रावण् ! वर माँग दिन्छु अहिले❀इच्छा बमोजिम् भनि
ब्रह्माबाट दया भयो र खुशि भै ❀ माग्यो तहाँ वर्पनि
हे नाथ् !वर्तअमर् म पाउँ नमरूँ ❀ क्वै वीर देखी कसै
मानिस्को त डरै म मान्दिन रती❀मेरा सँधै छन् बशै ५३
ब्रह्माले पनि लौ भनेर वरदान् ❀माग्या बमोजिम् दिया
काटयाका पनि शिर् तयार् गरिदिया❀ जस्ता अगाडी थिया
ब्रह्माजी तहिं वीर् बिभीषणजिका❀ साम्ने नजिक् मागया
इच्छा के मनमा छ माग उहि वर् ❀ दिन्छू म भन्दा भया ५४
माग्या वर् खुशि भै बिभीषणजिले❀ हे नाथ्! निरन्तर्मति
धर्मै तर्फ रहोस् अधर्म तिर ता ❀ कैल्हे नलागोस् रति
ब्रह्माले अधिकै दया गरि दिया ❀ होला तँलाई भनि
माग्यानन् त पनी तहाँ गरिदिया❀ कल्पान्त आयूपनि ५५
फेर् कुम्भकर्ण बिरका अघि जाल्दि आई
आज्ञाभयो अब त दिन्छु म वर् तँलाई
क्या माग्दछस् भनि दया हुनगो जसैता
जिह्वा विषे गइ ति वाणि बासिन् तसैता ५६
वाणीले जब मोह खुप्सित भयो❀ घतको बिघतको पनि
थाहा केहि भएन तेस्कन तहाँ ❀ यस्तो म मागूँ भनि
माग्यो मूढ भएर एहि वरदान् ❀ निद्रा छ मैन्हा परोस्
एक्दिन्मात्र मलाइखानपिनको❀खातीर निद्रा खोस् ५७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तो वाक्य सुनेर तेहि वरदान् ❀ दीया प्रभुले जसै
सुन्या त्यो वरदान् र देवगणले ❀ खूशी भया सब् तसै
जिह्वा देखि सरस्वती जब गइन् ❀ खेद्तेस्वखत्मापर्‍यो
इच्छा ईश्वरकै रहेछ बलवान् ❀ मन्याविचार्‍यो गर्‍यो ८८

रावणको लङ्का समेत त्रैलोक्य विजय

बाबू कैकसिको सुमालि खुशिमै ❀ पायो र यो सब् खबर्
आयो जल्दि तहाँ प्रहस्तहरु पेर् ❀ सङ्गमा थियावीर्जबर्
रावणका सँग गै भन्यो खुशि हुँदै ❀ हे पुत्र ! खुब्काम्गर्‍यौ
विष्णूको अघि डर् थियो अब गयो ❀ सन्ताप्तिमिलेहर्‍यौ ८९
लङ्कामा अघि राज्य राक्षसहरू ❀ गर्थ्या बड़ा खुशथिया
विष्णू ले गइ छिन्नभिन्न गरि सब् ❀ राक्षस् धपाइ दिया
वयारौंजोर्नपुगेर भागिकन सब् ❀ पाताल्गयाका थियौं
तिम्रो आज सहाय पाइकन पो ❀ आई बताई दियौं ९०
आज्काल्राज्यकुबेरकोछ तिमिले ❀ मागी बलात्कार् गरी
जुन् पाऊले गरि हुन्छ लेउ अहिले ❀ स्थान छैन लङ्का सरी
राजाको त हुँदैन बन्धुसितको ❀ बन्धुत्व धर्मै पनी
यो सन्देह नमान कत्ति कसरी ❀ लङ्का म लीऊँ भनी ९१
यस्तोबिन्तिसुमालिकोसुनिभन्यो ❀ लङ्का कसोरी हरूँ
दाज्यू हुन्पित्रितुल्य छन् तहिंबसुन् ❀ अन्तै बसूँला बरू
यस्तो रावणको वचन् सुनि तहाँ ❀ साम्ने प्रहस्तै सर्‍यो
रावण्कोमतिफेर्फिराउनबहुत ❀ सिप्लाइबिन्तीगर्‍यो ९२
हे नाथ् ! कश्यपपुत्र हुन् इ जीतछन् ❀ धौता र राक्षस्हरू
लड्थ्यातीपनिभन्न्भन्यातअरुको ❀ बिन्ती कहाँ तक् गरूँ
तस्मात् आज कुबेर छन् त पनि सो ❀ लङ्का लिन्या हो भनी
हात्जोरीबिनतीगर्‍योरसुनित्यो ❀ बिन्ती त मान्योपनी ९३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बेस्बिन्तीतगरिस्भन्नीउहिबखत् ❀ दौडी त्रिकूट्मा गयो
छोडयो दूत प्रहस्तलाइ र कुबेर् ❀ लाई निकाल्दो भयो
बाबूको मतलब् बुझीकन कुबेर् ❀ छोडेर कैलाश् गया
तप् गर्दा शिब खुश् भई शिबजीथैं ❀ त्यो बिन्तिगर्दाभया ६४
इच्छा माफिकको बनाउन कुशल् ❀ जो बिश्वकर्मा थिया
तिन्लेबेस् अलकापुरी पनि कुबेर् ❀ लाई बनाई दिया
दिक्दार् भै ति कुबेर् रह्या शिबजिले ❀ तिन्मा दयाखुबगर्या
शम्भूको करुणा हुँदा त अरु भन् ❀ आनन्दसागर्पर्या ६५
राबण् राक्षस सब् लिएर खुशिभै ❀ लङ्का शहर्मा बस्यो
तप्को जोर भई जित्यो सब जगत् ❀ सन्ताप् सबैमा पर्यो
बिद्युज्जिह्व ठुलो निशाचर थियो ❀ तेस्लाई बैन्ही दियो
ती मन्दोदरीलाइ आइ मयले ❀ दीयोरतेस्ले लियो ६६
ती मन्दोदरिलाइ दीकन दियो ❀ शक्ती अमोघ् खुश्भई
बीहा भो पछि कुंभकर्ण बिरको ❀ प्रह्लादकुल्मा गई
शैलुष् नाम हुन्या बहूत बलबान् ❀ गन्धर्वराज् बनै थिया
तिन्की छोरि थिइन् बिभीषण बडा ❀ जानेर छोरी दिया ६७
जन्म्यो राबणलाइ पुत्र बलबान् ❀ जो जन्मँदैका घरी
लाग्यो रून त शब्द भो अति ठुलो ❀ खुब् गर्जन्या मेघ् सरी
मेघ् झैं शब्द गर्‍योभनेरताहिंनाम् ❀ तेस्को रह्यो मेघनाद्
तेस्कोबल्यातिसम्मकोछभनियो ❀ लाग्थ्यनतेस्कोतसाँध् ६८
निद्राले पनिकुम्भकर्णकिनसुन् ❀ पक्र्योसकस्मापर्‍यो
हेनाथ्!सुत्छुम ठाउँ पाऊँ भनि यो ❀ हातजोरि बिन्ती गर्‍यो
तेस्बिच्मा तब सुत्नलाइबादिया ❀ गूफा तयारी गर्‍यो
ताहीं गैकन कुम्भकर्ण बिरको ❀ खुब्भरतानिद्रापर्‍यो ६९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ब्रह्माको सब देव दैत्यहरुको ❀ जो श्री थियो सब्नू हरी
लाग्योरावणलानाश् गराउन अनेक् ❀ रङ्का उपद्रव् गरी
पाया थाह कुबेरले र किन यो ❀ गर्दछस् उपद्रव् नगर्
भन्नाखातिर दूत् पठाउनुभयो ❀ बोलाक्चतुरोजनर् ७०
दूतगैविन्तिगर्योरभन् विखुशिभै ❀ ऊठ्योतुल्यारीस् गरी
जाल्दि गै तिकुबेरको जिति लग्यो ❀ पुष्पक् विमानै हरी
कूबेर्लाइ जीति यमै पनि जित्यो ❀ जीत्यो वरुणौ पनि
पौंच्यो स्वर्ग विषे पनी खुशि हुँदै ❀ फेर् इन्द्र जित्छू भनि ७१
एक् ठक्कर् लाइ इन्द्रले सहजनै ❀ पक्रेर पाता कऱ्या
हुर्मत् रावणको गयो खुशि भई ❀ सम्पूर्ण देवूगण बऱ्या
यो थाहा भइ मेघनाद रिसले ❀ आयो अगाड़ी सरी
जीत्यो इन्द्रजिलाइ तेस् बखतमा ❀ भारी लडाई गरी ७२
रावणलाइ फुकाइ इन्द्रकन ली ❀ फर्केर लङ्का गयो
जीत्यो इन्द्र र इन्द्रजित् भनि ठुलो ❀ नाम् ताहिं देखी भयो
ब्रह्मालाइ खबर् भयो र उ बखत् ❀ लङ्कापुरीमा गई
इन्द्रैलाइ फुकाइबक्सनु भयो ❀ तेस्लाइ वर्दान् दिई ७३

रावण लाई मानीस र वादरका हात मर्ने श्राप तथा तीन पराजय

ब्रह्मा इन्द्रजिलाइ स्वर्ग लगि फेर ❀ जानू भयो धाममा
लाग्यो रावण फेर् जगत् जितुँ भनी ❀ संग्रामका काममा
कैलाश् पर्वत यो ठुलोछ गरहूँ ❀ होला कहाँ तक् भनी
कैलाश् हात महाँ लिएर सहजै ❀ एक्दिन्ततौल्योपनी ७४
नन्दीश्वर्कन रीस् उठ्यो र रिसले ❀ दीया शरापै पनी
मानिस् बानर शत्रु भैकन सहज् ❀ मारुन् तँलाई भनी
ताहाँ देखि त कार्तवीर्यसित गो ❀ संग्राम खातिर् जसै
पुग्योतिन्सितजोर्कहाँसहजमा ❀ पाता कऱ्या पो तसै ७५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मेरो नाति भनी पुलस्त्य ऋषिले ❀ आएर बिन्ती गरी
बन्धन् देखि फुकाइबक्सनु हुँदा ❀ लाजमै फिर्‌योतस् घरी
प्रह्लाद् पौत्र वली भनी अधि भया त्रैलोक्य जीती लिया
वामन् रूप् गरि विष्णुले छल गरी पाताल् पठाईदिया ७६
तिन्का साथ् रण गर्न गार शिशुले बाँधी तबेला महाँ
राख्याथ्या अनि श्री पुलस्त्य ऋषि नै जाई छुटाया तहाँ
फेरी रावरा बालि जित्छु भनि गो ❀ साथ्‌मा अनेक्‌वीर् गया
बालीले पनि पक्रि तेस्‌कन तहाँ ❀ सुन्‌का खिच्यामा भया ७७
काखी च्यापि समुद्र चार घुमि फेर् ❀ छाड़ी दियाथ्या जसै
मैत्री गर्छु भनी मित्यारि गरि खुब् ❀ लाज्‌मानि फर्क्योतसै
ई बाहेक् अरु वीर् सबै वश गर्‌यो ❀ तिन्‌लोक् बिषेछन् जति
कस्‌ता बिर्‌हरु मारिबक्सनु भयो ❀ बिन्ती गरुँ यो कति ७८
नारायण् हुनुहुन्छ बिष्णु भगवान् ❀ सब् यो चराचर् पनी
जो देखिन्छ कहिन्छ शास्त्रहरुले ❀ नारायरौ हो भनी
स्वामित्‌का अघि नाभिमा कमल भो ❀ ब्रह्माजी ताहीं भया
बाणीले सड आगिन ती हजुरका ❀ ब्रह्माजी ताहीं गया ७९
बाहू देखि त लोकपाल् हुन गया ❀ ई इन्द्र सूर्यै पनी
आँखादेखि भया दिशाहरु यहाँ ❀ कान्‌देखि शब्दै अनी
सब्‌को प्राण तयार् भयो हजुरका ❀ प्राण्‌देखि मुख्यै भई
नासादेखि त वैद्य अश्विनिकुमार् ❀ वेदाङ्गमा पार् गई ८०
जंघा जानु उरू जघन् यति शरीर् ❀ देखी भुवर् लोक्‌हरू
कोखादेखि इ चार् समुद्र त भया ❀ वर्णान् कहाँतक् गरूँ
निस्वया स्तन् दुइ देखि इन्द्र वरुरौ ❀ जो दश् दिशाका पति
रेतैदेखि त बालखिल्यहरु सब् ❀ निस्वयातपस्वीअति ८१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

धर्माधर्म विवेकका ति यमराज् ❀फेर् लिङ्ग देखि भया
मृत्यू ता गुददेखि रुद्र त हजुर ❀ का क्रोधदेखी भया
हाड्देखी जति पर्वतादिहरु छन् ❀केश्देखिसब्मेघभनि
जोछन्औषधि रोमदेखि त भया ❀नङदेखिसब्रूजर्पनि८२
विश्वात्मा हुनुहुन्छ नाथ्!पुरुषरुप्❀माया त शक्ती लिन्या
खुशी भैकन देवताकन सदा ❀ अमृत् पिलाई दिन्या
स्वामित्कै छ त सृष्टिसब् जतिछयो❀ संसार् चराचर् भरी
बाँच्याको पनि देखिइन्छ भगवान्! ❀आधार हजुर्कोगरी८३
जसतै दूध विषे रहन्छ भरिपूर ❀घीऊ उही रीत् गरी
सब् चीज्मा हजुरै पसी रहनु भो❀ सर्वान्तरात्मा हरि
हुन्छन् सूर्य प्रकाशमान् हजुरका❀तेज्ले हजुर् सब् धनी
स्वामितलाइत नाथ्!प्रकाशगरिने❀छैनन् अरु क्वैपनि८४
ज्ञानी जन्हरु देख्तछन् सकलरूप्❀ अज्ञानी अन्धा सरी
देख्तैनन् प्रभुलाइ मूढ हुन गै ❀ घुम्छन् विपत्मा परी
योगी भैकन वेद शीर्षरुले ❀खोज्छन् त देख्छन्पनी
यस्ता रितिसित पो चराचर विषे❀श्रीराम् रह्याछन्भनी८५

बक्बात् गऱ्याँ प्रभु ! हजुरसित रीस् नमानी
रक्षा हवस् प्रभु अनुग्रह पात्र जानी
चीन्ह्याँ त अद्वितिय नित्य हजुरलाई
भज्छू निरन्तर टहल् गरि हर्ष पाई ८६

वाली सुग्रीव जन्मकथा र किष्किन्धा पुरीको रजाइँ पाउनु

यो बात् अगस्ति ऋषिको सुनि राम फेरी
भन्छन् तहाँ ति ऋषिका मुखतर्फ हेरी
वाली र सुग्रिव इ वानर दूइ भाई
पैदा भन्या कसरि भन्नुहवस् मलाई ८७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बाली सुग्रिव सूर्य इन्द्र सुत हुन् ❀ भन्न्या सुन्याको त छू
कसूता रितसित जन्म भो इदुइको ❀ निस्तार् समेत्खोज्दछू
निस्तारसुन्नमपाउँसब्भनि हुकुम् ❀ रामको भयाथ्यो जसै
निस्तारखूशिभई अगस्तिऋषिले ❀ बिन्तीगर्याসन्तसै ८८
ब्रह्मा चारशय कोशको गरि सभा ❀ सूमेरु माथी थिया
इश्वरलाइ रिझाउनाकन तहाँ ❀ सुन् योगमा मन् दिया
योगमा चित्त बढ्यो र भक्ति रसले ❀ आँशू खसाया जसै
आँशूको तहिं नीर बानर बन्यो ❀ आश्चर्य मान्या तसै ८९
ब्रह्माका इ बचन् सुन्या र खुशि भै ❀ बोल्या बचन्ले पनी
मेरो नित्य नजीकमा रहु यहाँ ❀ कल्याण होला भनी
ब्रह्माका इ बचन् सुनेर खुशि भै ❀ बाहीं नजिक्मै रह्यो
फल् फुल् खाइ त तेही पर्वत बिषे ❀ त्यो नित्य डुल्दोभयो ९०
लाग्योपानिपियासरकूपनजिकमा ❀ देख्यो र पौंच्यो तहाँ
छायाँ आफ्नु पनी नजर् पर्िगयो ❀ त्यो कूप हेर्दा महाँ
अर्कों नीर् सरि मानि तेहि कुपमा ❀ कूदी परेथ्यो जसै
अर्कों कोइ न देखि फेरि झटपट् ❀ उफ्रेर निस्क्यो तसै ९१
निस्क्यो बाहिर कूपदेखितअसल् ❀ स्त्रीकोस्वरुपको बनी
लीयो खेद् मनमा कसोरि म भयाँ ❀ स्त्रीकोस्वरुप्कोभनी
देख्या इन्द्रजिले र तेहि बिचमा ❀ तिन्मा बहुतमन्भयो
पक्र्या इन्द्रजिले र बीर्य त गिरी ❀ सब्बालदेशमागयो ९२
तेही बीर्य त एक् कुमार् हुनगयो ❀ बाल्मागिर्याकोपनी
बाल्देखी त भयो भनीकन कह्या ❀ नाम्बालिबीर्भोभनी
माला काञ्चनिपुत्र जानि बढिया ❀ एक् इन्द्रजीले दिया
बाबूको करुणा बुझेर खुशि भै ❀ त्योबालिबीरलेलिया ९४

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

तेस् बिच्मातहिंसूर्य आइतनजर् ❀ दीया उसै स्त्री महाँ
सूर्यैको पनि वीर्य पात् हुनगयो ❀ ग्रीवाविषे पो तहाँ
तेहीवीज्पनिवेस्कुमारजन्मभयो ❀ ग्रीवा विषे एक् जसै
ग्रीवादेखि भयो भनेर तिनको ❀सुग्रीव नाम्भो तसै९४
सूर्यैले पनि पुत्रलाइ बलवान् ❀ साहाय दिन्छू भनी
वीरमद्येबलवान्थियारहनुमान् ❀ ज्यूलाइ दीया पनी
सुग्रिव्कासँगमारह्या तिहनुमान् ❀श्री सूर्य धाम्मा गया
बाली सुग्रीव दुइ पुत्र यसरी ❀ती वानरीका भया९५
बाली सुग्रीव दुइ पुत्र सँगमा ❀ली सुत्न खातिर् गइन्
प्रातःकाल विषे त फेरि आधि मैं ❀ती स्त्री पुरुष् नै भइन्
स्त्री रूप् भैकन बालि सुग्रीव दुवै ❀ जन्माइ पूरुष् भया
ब्रह्मालाइ गरुँ प्रणाम् भनि दुवै ❀छोरा सँगै ली गया ९६
ब्रह्मालाइ खबर् भयो र खुशि मन् ❀ तिन्को गराया पनी
किष्किन्धापुरिदीन मन्सुब भयो ❀आश्रित्अनाथ्हो भनी
थीयो एक् तहिं बेस दूत् बलवान् ❀ हाजिर् र मर्जी पनी
ब्रह्माको हुन गो लगेर गरिदे ❀यस्लाइ राज्यै भनी९७
किष्किन्धापुरिमा लगीतिलक दे ❀खुब्राज्यशोखमापरोस्
सातद्वीप्मा जातिवानरादिहरुछन् ❀तिन्मा हुकुम्योगरोस्
श्री नारायण भार हर्न भूमिका ❀ रामचन्द्र हूनन् जसै
तीनैलाइ सहाय दीनकन ता ❀ तत्पर्हनस्यो तसै९८
किष्किन्धापुरिमा लगी तिलक दे ❀ भन्न्या हुकुम्भोभनी
तेस् ऋक्षाधिपलाइ साथ लिइ गै ❀ राजा बनाया पनी
त्यै ऋक्षाधिपका ति पुत्र दुइ हुन् ❀ बाली र सुग्रीव्भनी
सब् निस्तार गरी सबयाँ हजुरमा ❀मालूमथियोतापनी ९९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

किष्किन्धा तहिंदेखि बानरकि मै ❀ सुग्रीवहरू छन् तहाँ
सर्वेश्वर् हुनुहुन्छ ता हजुरमा ❀ क्या धेर् बताऊँ यहाँ
नित्यानन्दाचिदात्मनाथ् ! हजुरले ❀ लीला स्वरूप् यो धरी
ब्रह्माजीकन खुश् गराउनु भयो ❀ सम्पूर्ण भूभार् हरी१००

बाली र सुग्रिव दुवैकन धर्म जानी
कीर्तन् गरोस् त गुण जन्म सबै बखानी
सम्बन्ध कोहि रघुनाथ्सित पर्न जाई
पाप् छुट्छ धर्म पनि बढ्द छ तेसलाई १

१ ता सीताजी लाइ रावण ले हर्न्या कारण

बर्णन् ता यति कर्मले हजुरको ❀ हुँदैनथ्यो ता पनी
बर्णन्गर्दछजगत् यहाँ किरघुनाथ् !❀सब् ताप् हरौंला भनी
अर्कोआज कथा कहन्छु रघुनाथ् ! ❀ सीताजिलाई पनी
रावणले हरि ली गयो त यहि हो ❀ तेस्को इरादा भनी २
रावण्को र सनतकुमार ऋषिको❀एकादिन्भयो भेट्कहीं
सोद्ध्यो रावणले परी चरणमा ❀ क्यैबात् ऋषीथ्यैं तहीं
ब्रह्मन् ! को बलवान् छ देवहरुमा ❀ आधार कस्को गरी
जित्छन् सब् रिपुलाइ देवगणले ❀ साम्ने अगाड़ी सरी ३
कस्को पूजन गर्दछन् द्विजहरू ❀ जो योगि हुन्सो पनी
कस्कोध्यान्कनगर्दछन्सहजमा❀ संसार् तरौंला भनी
यस्को निश्चय कत्ति पाइन यहाँ❀ कस्तै विचार्दा पनी
ठूलो कुन् छ बताइ बक्सनुहवस्❀ एही छ ठूलो भनी ४
सून्या प्रश्न सनत्कुमार ऋषिले❀ यस्ता प्रकार्को जसै
जान्या रावणको र आशय उसै ❀ माफिक् बताया तसै
सून्यौ रावण! एक् हरी सरि ठूलो❀ मिल्दैन अर्को कबै
चौताका सब दानवादिहरुका ❀ आधार् इनै हुन् सबै ५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जस्लेनाभिकमल् बिषेत भगवान् ❀ ब्रह्माजि पैदा गरी
तिन्द्वारा जगतै बनाउनु भयो ❀ ठूला तिनै हुन् हरि
इन्द्रादीहरु जित्तछन् रिपु सबै ❀ आधार् हरीकै गरी
ध्यान्ले योगिहरू तिनैकन भजी ❀ जान्छन्सहज्पार् तरी ६
रावण्ले इवचन् सुन्यो र ऋषिको ❀ बिन्तीगर्यो फेर्तहाँ
विष्णूले जाति मार्दछन् रसा महाँ ❀ तीबस न जान्छन् कहाँ
दोश्रो प्रश्न सुन्या तहाँ ति ऋषिले ❀ यस्ता प्रकार्को जसै
उत्तर् फेरि दिया कृपा गरि तहाँ ❀ तेस्लाइ तिन्लेतसै ७
छोराले जाति मार्दछन् ति त अनेक् ❀ स्वर्गादिको भोग् गरी
कालान्तर्पछि जन्म हुन्छ तिनको ❀ पृथ्वी तलैमा झरी
जस्लाई हरि मार्दछन् ति त तसै ❀ जान्छन् तुरुन्तै अनि
मुक्तै भैकन बस्छ जन्म उसको ❀ हूँदैन कैल्हे पनि ८
यस्तोसत्यवचन्सुनीमनबुभयो ❀ रावण् भयो खुश् पनी
संग्राम् श्री हरिथ्यैं गरी तहिं मरी ❀ मुक्तै म हुन्छू भनी
यस्तो सुर् मनमा जसै दृढ गर्यो ❀ जान्या ऋषिले पनी
खूशी भै ति सनतकुमार ऋषिले ❀ आशिष् दियाफेर्पनि ९
हे रावण्! सुन बात जो छ मनमा ❀ स्वाभीष्ट सिद्धी सबै
तिम्रो त्यो परिपूर्ण हुन्छ मनमा ❀ शङ्का नमान्या कबै
रूप् कस्तो हरिको छ भन्छु अहिले ❀ यस्ता हरी छन् भनि
स्थावर् जङ्गम सूर्य चन्द्र पृथिवी ❀ शेष् दैत्य दानव् पनि १०
यै रूप् हुन् हरिका अनेक् तरहका ❀ यो रूप् विराट् रूप हो
पीताम्बर् घनश्याम सूक्ष्म् रुप हो ❀ देखून् कृपाले छ यो
योरूप्देखून त मन्सुबाछ त हुनन् ❀ इक्ष्वाकु कुल्मा हरी
छोरा हुन् दशरथ्जिका भनि जगत् ❀ भन्नन्तिराम् नाम् गरी ११

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सीता लक्ष्मरा साथमा लिइ पिता ❀ जीका हुकुम्ले गरी
जानन् दण्डकबन् महाँ भजिलिया ❀ चीन्ह्या तिनै हुन् हरि
यो बिस्तार सनतकुमार ऋषिका ❀ मुख्देखि जस्तै सुन्यो
चीन्ही रूवामितलाइ तेस्न्नखतमा ❀ तेस्ले त यस्तो गुन्यो १२
श्री रामजीसँगमा बिरोध्गरितिनै ❀ का हात देखी मरी
संसार् सागर पार् तरेर सहजै ❀ जान्छू जहाँ छन् हरि
यस्तो आशयलेसिताकनहर्यो ❀ रावरा त हो बुद्धिमान्
लक्ष्मीहुन्इसितामनीकनाचिन्ह्यो ❀ हुन्थ्योकहाँत्योअजान् १३

जो यो कथा कन खुशी भइ पाठ गर्छन्
सुन्छन् कहीं कहिं सुनायर पाप हर्छन्
खुब् आयु बढ्छ तिनको अति सौख्य हुन्छन्
धन्लाभ हुन्छ बहुतै जब नित्य सुन्छन् १४

रावण श्वेतद्वीपका स्त्रीहरू द्वारा लांछित हुन

एक्दिन् नारदजीघुमीसकललोक् ❀ आया नजिक्मा जसै
देख्यो रावणले र पाउ परि झट् ❀ बिन्ती गर्यो यो तसै
हे सर्वज्ञ मुने ! लडाकि बलिया ❀ बीर् छन् कहाँ सो कही
पाऊलाग्नुहवस्गर्योबिनातियो ❀ खुब् लड्न् इच्छा भई १५
रावण्का इ कुरा सुनेर ऋषिले ❀ मन्ले बिचार् खुब्गरी
भन्छन् को भनुँ छैन बीर अरु ता ❀ याहाँ तिमीले सरी
तिम्रो मन्सुब पूर्ण गर्न सकन्याँ ❀ बीर् श्वेतद्वीप्मा गया
मिल्छन्जाऊतहाँनजाउकहिंलौ ❀ खुब्लड्नमन्सुब्भया १६

जो बिष्णुको पूजन नित्य गर्छन्
जो बिष्णुका बाहुलिदेखि मर्छन्
त्यस्ता महात्मा तिहिं बस्न जान्छन्
त्रैलोक्यका बीर् कन तुच्छ मान्छन् १७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

नारद्का इ बचन् सुनीकन त झट ❀ पुष्पक बिमान्मा चढी
श्वेतद्वीप्मापनि पुग्दछू भनि चल्यो ❀ रावण् त तेसै घरी
श्वेतद्वीप्का नजिकै पुग्यापछि बिमान् ❀ पुष्पक् नचल्न् याभयो
ओर्ल्हीं पुष्पकदेखि हिवमति थियो ❀ पैदल् दगुर्दै गयो १८
श्वेतद्वीप्मा त पुगी प्रवेश् गरुँ भनी ❀ मन्सुबू गर्याथ्यो जसै
आया सुन्दरि नारि घेरि चहुँ ओर् ❀ आश्चर्य मान्यो तसै
चौटीले गइ शीघ्र पक्रिकन सब् ❀ बृत्तान्त सोध्दी भई
अर्कीले अम्म अर्किले धरि लिंदा ❀ चेत्मो तहाँ त्यो गई १९
उम्वयो स्त्रीहरुदेखि बल्ल र बहुत् ❀ आश्चर्य मान्यो पनि
मर्छु मै पनि बिष्णुदेखि र यहाँ ❀ आएर बस्छू भनि
जल्दी मर्न निमित्त खूब् छल गरी ❀ सीताजिलाई हर्यो
लङ्कामा गई मातृवत् जननिको ❀ सेवापनि खूब् गर्यो २०
रामनाम्ले परमेश्वरै हुनु भयो ❀ मालु म छ सब्को गति
के बिन्ती गरुँ धेर् हजुर् त सबका ❀ साक्षी जगत्का पति
मेरो एहि चरित्र गायर रहोस् ❀ यो लोक संसार्मनि
गर्नु हुन्छ यही अनेक् तरहका ❀ संसारि लीला पनि २१
एही रितिसित रामको स्तुति गरी ❀ खुश्मै अगस्ती गया
संसारी सरि मैअनेक् बिषय भोग् ❀ श्री राम गर्दा भया
फर्क्यो पुष्पबिमान् कुबेरसित गई ❀ राम्कै हजुर्मा गयो
फर्क्यो नाथ् ! म कुबेरको हुकुमले ❀ यो बिन्तिगर्दो भयो २२
पैल्हे रावणले जितीकन लियो ❀ सेवा उसैका गरिस्
एल्हे श्री रघुनाथले जितिलिंदा ❀ उनकै अधीन्मा परिस्
खूब् यो योग्य भयो अभै पनि तँ जा ❀ सेवा प्रभूको गरी
आऊँनू पछि फेर् यहाँ जब त राम् ❀ बैकुण्ठ जान्छन् फिरी २३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हुकुम् एति कुबेरलेपनि गरया❀ रुनामित! पुग्याथ्याँ जसै
मञ्जुरसोहिहुकुम्गरीकनाफिर्याँ❀ खुशमै हजुरमा तसै
पुष्पक्को बिनती सुनेर रघुनाथ्❀ जीको हुकुम्भो पनि
ऐल्हे जा तँ म सम्झुँला उस बखत् ❀चाँडै तँ आया स् भनी२४

श्रीरामचन्द्रजीको राज्यशासन विधान

पुष्पकलाइ बिदा दिएर रघुनाथ्ले❀ राज्यको भोग् गर्या
जस्का राजमहाँ बुढा पछि रही❀बालक् न कैल्हेमर्या
यस्तो राज् प्रभुले गर्या सकलको ❀आनन्द मै काल् गयो
श्री रामकोतहिं राजमापनिठुलो ❀आश्चर्यएक्दिन्भयो २५
ब्राह्मण्कोलाड़िकामर्याछरतिखुब्❀ रूँदा रह्याछन् वहीं
देख्या श्री रघुनाथले तब बिचार् ❀ राख्या प्रभूले तहीं
बयालेयोबिधिभोभनीकनाबिचार्❀ गर्दा भयो याद् जसै
तप् गर्थ्यो तहिं शूद्र जङ्गल बिषे ❀ उस्लाइमार्यातसै२६
तप् गर्न्या जब शुद्र मारिदिनु भो ❀ ऊठ्यो लडीका स्रनी
ब्राह्मण् खूशि भया गयापरमधाम्❀ त्यो शूद्र चाहीं पनी
यस्तै रितिसित पालना गरिलिंदा ❀ दुःखी भयानन् कहीं
कोटी लिङ्गपनी स्थलैस्थल बिषे ❀ थाप्या प्रभूले तहीं२७

श्रीरामको स्वर्गारोहण आयोजन

संसार्को सुखभोग् गराउनु भयो❀ सीताजिलाई पनि
एही गायर लोक् तरुन् भनि भयो❀ स्थापन् कथाको पनि
सीता मात्र थिइन् प्रिया प्रभुजिकी❀ राजर्षिको चाल् धरी
शिक्षाखातिरगादिमाबसिअनेक्❀रस्काअनेक्नातगरी२८
दशहज्जार् जबबर्ष ता बिति गयो ❀ कालतायसै बिच् महाँ
सीताले रघुनाथका चरणमा ❀बिन्ति गरिन् एक्तहाँ
रुनामित!नित्यहजूरकाचरणकी❀ दासी म हूँ ता पनी
पर्छन् आयर पाउमा मसित खुब् ❀ ब्रह्मादिदेवता पनि २९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

गर्छन् बिन्ति हजूर् अघी गइदिया ❀ आफै प्रभू राम् पनि
पाऊ लाग्नु हुन्याछ युक्ति यहि हो ❀ बैकुण्ठ जान्या मानि
मन्छन् बिन्तिगरयाँहजुरसित सबै ❀ ब्रह्मादिको ता पनि
जस्तो गर्नु उचीतहो उहिहवस् ❀ स्वामित्!जनायाँमनि ३०
सीताले बिनती गरिन् र रघुनाथ् ❀ ज्यूको हुकुम्भो तहाँ
बेस् मन्छन् यति गर्नुपर्दछ यसो ❀ बैकुण्ठ जाँदा महाँ
लोक्कोएक्अपवादलगायरतिमी ❀ लाई बडा बन् महाँ
छोडीत्यागपनिगर्दछुजानु तिमिले ❀ बाल्मीकिआश्रम्जहाँ ३१
ऐल्हे गर्भ छ जन्मनन् दुइ कुमार् ❀ बीर्बीर् तिमीले पनि
लोक्को यो अपवादमेट्दछु अब ता ❀ पस्हु म नीयाँ भनि
याहीं आयर लोकका बिच महाँ ❀ न्यायै पसौली जसै
फाट्निन् धर्तिर ताहिंबाट तिमिले ❀ बैकुण्ठ जानू तसै ३२
यस्रितले तिमि जाउली जब अघी ❀ वयै काल् बसी मै पनी
आऊँला किन बस्तछू कहिसवयाँ ❀ यै सुर् छ मेरो मनी
जानाको यहि सूर निश्चय गरी ❀ श्री राम् सभामा गया
हाम्रो यश् अपयश् कसो छ दुनियाँ ❀ हो एहि सोद्धा भया ३३

सीताजीको पुनः वनागमन र वाल्मिकीको आश्रम प्राप्त

सब्ले बिन्ति पनी गरया हजुरका ❀ बोल्छन् यशै यश्पनी
यौटाले पछिवया भन्योकि रघुराज्! ❀ एक्सुन्छुअपयश् भनी
रावण्ले बनमा हरी घर लगी ❀ वबै दिन् त राख्यो पनी
यस्ती हुन् इ सिता उनैकन घरै ❀ ल्यायाछ चोखी भनि ३४
यस्तीस्त्रीपनिचोखीहो भनियहाँ ❀ राजा त राख्छन् भन्या
चोखी कुन् रहली यहाँ अब उपर् ❀ सम्पूर्ण बेश्या बन्या
मन्छन् अप्यश एहि मात्र भनि यो ❀ बिन्ती गरयाथ्या जसै
लक्ष्मणजीकन डाकिल्याउन हुकुम् ❀ दीया प्रभूले तसै ३६

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हूकूम्ले रघुनाथका हजुरमा ❀ लक्ष्मण् पुग्याथ्या जसै
सुन्नैलाइ कठिन् हुन्या अति कठोर्❀ हूकुम् भयो यो तसै
हे भाई ! इ सिताजिलाइ अहिले ❀ त्याग्नू त मैले पर्‌यो
चोखी जानिलिंदा त दुर्यश बहुत ❀ लोक्‌लेमलाई गर्‌यो ३६
सीतालाइ चढ़ाइ जल्दि रथमा ❀ बाल्मीकि आश्रम् महाँ
जो ताहीं छ नजिक् गएर बनमा ❀ छाड़ेर आऊ यहाँ
उत्तर् केहि गर्‌यौ भन्यात तिमिले ❀ मार्‌यौ म ऐल्हे मर्‌याँ
भाई ! भोलि बिहान लानु बनमा ❀ हूकूम् त यैहो गर्‌याँ ३७
लक्ष्मण्लेजब यो हुकुम्‌कन सुन्या ❀ ठूलो सकस्‌मा परी
प्रातःकाल महाँ उठेर बढ़िया ❀ एक् रथ् तयारी गरी
सीतालाइ चढ़ाइ ली बन महाँ ❀ छोड़ेर आया पनी
लागिन् गर्न बिलाप् सिताजि बनमा ❀ छोड्या मलाई भनी ३८
रुन्थिन् ताहिं सिताजि शिष्यहरुले ❀ बाल्मीकिजी थ्यैं गई
सारा हाल कहेर बाल्मीकिजिले ❀ सीताजिको याद् भई
ल्याया आश्रममा र लोक जननी ❀ सीता इनै हुन् भनी
स्त्रीजन्‌लाइ लगाइ खुब् सित गर्‌या ❀ सेवा सिताको पनी ३९
ती बिप्रपत्निहरुले पनि लक्ष्मि जानी
पूजा सिताकन गर्‌या अति भाग्य मानी
सीतापती पनि बिरक्त भएर सुख्‌भोग्
छोड़ी मुनी सरि भइ मनले लिइन् योग् ४०

श्री राम गीता प्रारम्भ

लीला गाइ भनी सुनीकन तरुन् ❀ ई लोक संसार् भनी
लोकैकाहितका निमित्त भगवान् ❀ मानिस्‌स्वरुप्‌का बनी
लीला गर्नुभयो र बृद्धहरुले ❀ जो गर्दथ्या सो गरी
सत्‌कर्मैं गरि दिन् बिताउनु भयो ❀ बाधा सबैको हरी ४१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

साथमालक्ष्मणजीथियाप्रभुजिथ्यैं * कुन् हो ठुलो विषभनि
सोद्यालक्ष्मणले र सन्कहनुभो * विस्तार प्रभुले पनि
ब्रह्मस्वै विष हो भनी नृगजिको * विस्तार सुनाया जसै
बूभयो चित्त र फेरि लक्ष्मणजिले * योसोदनलाग्यातसै ४२
हे नाथ! ज्ञान स्वरुप देहहरुको * आत्मा आधीन् भै पनि
भूमार् हर्नुभयो अनेक् तरहको * यस् आकृतीका बनी
लीला होइन आत्मरूपिभगवान्! * भक्कै फगत् जान्दछन्
यो लीला त दया निमित्त हुनगो * यस्तो पनी मान्दछन् ४३
यस्ता मालिकजानि पाउतलमा * स्वामित्! परयाको म छू
संसार् रूपि गभीर् समुद्र सहजै * कुन् पाठले तर्दछू
सोही युक्ति सिकाइबक्सनुहवस् * जुन् पाठले यो तरी
पुग्न्याछू पनि धाममा सहजमा * आनन्दको भोग् गरी ४४
लक्ष्मणका इ बचन् सुनेर रघुनाथ् * मुख् खुब् हँसीलो गरी
आफ्नाभक्ततिभाइलक्ष्मणजिको * सम्पूर्ण सन्ताप् हरी
तत्वै ज्ञान पनी तहाँ दिनुभयो * जस्लाइ वेद्ले पनी
भन्छन् लोकहरुलाइ तर्न सजिलो * साँधू छ एही भनी ४५
ई वर्णाश्रमका क्रिया जति त छन् * तिन्लाइ पैल्हे गरी
दश् इन्द्रीय र मन् जितेर गुरुका * साम्ने अगाड़ी सरी
आत्मै ज्ञान मिलोस् भनेर गुरुको * सेवा निरन्तर् गर्या
आत्मैज्ञान् पनिमिल्छ एहिरितले * संसार्कतीलेतर्या ४६
फल् इच्छा गरि कर्म गर्छ यदि ता * फेर् देह यस्तै लिई
त्यो फल् भोग् पनि गर्छगर्छ अरुफेर् * कर्मैं बहुत् मन् दिई
तेस्को फेर् पनि बन्द छ देह करले * एसै जगतमा परी
यसै रितसित घुम्छ त्योभवनमा * अत्यन्त चक्कै गरी ४७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अज्ञानै छ घुमाउन्या सकलको ❀ शत्रू सरीको यहाँ
ज्ञानैले गरि नष्ट हुन्छ पनि सो ❀ लीनू यही मन् महाँ
अज्ञान्को र इ कर्मका छ कति फेर्❀तस्मात् क्रियाले गरी
अज्ञान् नष्ट हुँदैन छैन अरु थोक्❀ऊपाय ज्ञानै सरी ४८
अज्ञान् नष्ट हनस् न राग् न त छुटोस्❀अज्ञानका कर्मले
कर्मै गर्छ त घुम्छ यै जगतमा❀ त्यो कर्मका धर्मले
तस्मात् ज्ञान विचार गर्नु जनले❀ज्ञान्ले कती पार् भया
ज्ञान् छोड़ीकन कर्मले जनहरू ❀ संसार पार्को गया४९
विद्यालाइ सहाय कर्म छ ठुलो❀ भन्छन् इ वेद्ले पनी
तस्मात् कर्म अवश्य गर्नु जनले❀ साहाय होला भनी
वबै एसो पनि भन्दछन् त ति मनुन्❀ साहाय केही रीत
विद्यालाइ त चाँहिदैन बुझ यो ❀विस्तार् बताऊँ कति ५०
हुन्छन् कर्म जती त देहहरुमा ❀ पूरा अभीमान् भई
विद्या हुन्छ त जो छ तीह अभिमान् ❀ देहादिमाको गई
विद्याको र इ कर्मको छ त विरोध्❀ साहाय हुन्थ्यो कहाँ
विद्यै एक् छ समर्थ मुक्ति दिनमा ❀यै जान सब्ले यहाँ ५१
वाजीका श्रुति तैत्तिरीय कहिन्या❀ श्रुतीहरूले पनी
भन्छन् ईह कुरा सहाय अरुको❀ खोज्दैन विद्या भनी
तस्मात् कर्म विरोध जानि जनले❀ सब् कर्म छोड़ी दीनू
विद्या मात्र ठुलो बुझेर यसमा❀यो मन् लगाई लिनु ५२
जो यो तत्वमसीछ वाक्य यसको❀वाक्यार्थ जानी लिनू
यस्मा तिन् पदछन् ति तीनपदको❀ तात्पर्यमा मन् दिनू
तत्को अर्थ परात्म हुन् ति पदमा❀ त्वं भन्नु जीवात्म हो
इन्कोऐक्यजनु भाउन्याछ असिपद्❀रातदिन्विचार्गर्नुयो५३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मायाले त बन्यो शरीर सब यो❀आखिर् छ मर्न्या पनी
देरुनू पञ्च-महाभुतै छ सबमा ❀यस्तो प्रकार्को भनी
संसार्मासुख दुःख साधन स्वरुप्❀ देखिन्छ जो देह यो
स्थूलोपाधि भनी कहिन्छ सबले❀ योनामययैको तहो५४
दश् इन्द्रीय र मन् प्रपञ्चिकृत भूत❀यो सोह्र जम्मा छ जो
स्थूलोपाधि भनी कहिन्छ सबको❀मूल् भोग साधन् छ यो
एसै स्थूल उपाधिभिन्न छ सदा ❀इन्को वियोग् भो जसै
स्थूलोपाधि गलेर जान्छ सबको ❀टिक्नैत एक्क्षराकसै५५
जीव्ता मुक्त छ शुद्ध निर्मल फटिक्❀ जस्तो उपाधी गरी
सो निर्मल् पनि हुन्छ सङ्ग गुणले❀ उस्तै उपाधी सरी
ईनै दूइ उपाधि देखि बुझि खुब् ❀होला फरक् जीव् जसै
तेस्तै मुक्त हुन्याछ छैन नहिं ता❀ अर्को उपायै कसै ५६
राताका सँगमारह्यार फटिक ठीक्❀ देखिन्छ रातै सरी
तेस्तै आत्म पनी उपाधि सँग भै ❀ हुन्छन् उपाधी सरी
आत्मामा छ उपाधिकेहि न फटिक्❀ मा क्यै छ रातो कतै
झुटैमात्र छ त्यो झलक् यहि बिचार्❀खुब्राखनुजत्नातनै५७
जाग्रतस्वप्नसुषुप्तिबृत्ति तिन छन्❀ यस् बुद्धिका ई पनी
झुटै देखि लिइन्छ नित्य सुख रूप्❀ यस्ब्रह्मरूप्मा भनी
मानी वृत्ति निरोध् गरेर जनले ❀यो आत्म जानीलिनू
आत्माभिन्न उपाधिलाइ त झुटो ❀ जानेर छाडी दिनू ५८
आत्मा हो सुख रूप दुःख रुपको❀ संसार्छ उस्मा कहाँ
अज्ञान्ले गरि मात्र सत्य रुपले ❀ झल्कन्छ आत्मा महाँ
ज्ञान्लेलीन्पानि हुन्छ डोरिकनसाँप्❀बुझनूछ जस्तो फगत्
त्यस्तै ईश्वरको अनेक तरहको ❀देखिन्छ यस्तो जगत्५९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
अध्यास् हुन्छ चिदात्ममाइ सबको ❀ जो छन् अहङ्कारका
इच्छादी पनि बुद्धि धर्म बुझनु ❀ छैनन् कुनै सारका
आत्मा साक्षिछ येपृथक् इ सबको ❀ सब्मा धुस्याको पनि
जस्तै घुस्तछ अग्नि लौहहरुमा ❀ त्यस्तैप्रकार्कोजनी ६०
यै आत्माकन चिन्नु पर्छ गुरुका ❀ वेद्का बचन्ले गरी
आत्मालाईचिन्योभन्यात्नुझिलिनु ❀ त्यो मुक्त भो तेस् घरी
तस्मात् आत्म बिचार गर्नु जनले ❀ यस् रुपका हुन् भनि
अज्ञान् नष्ट गराउनाकन अवर् ❀ छैनन् उपाये पनि ६१
आत्मा यस् रितले चिन्हिन्छ पहिले ❀ एकान्तमा गै बसोस्
दश् इन्द्रीय जितेर मन् पनि जिती ❀ आत्मैबिचार्मापसोस्
जानोस्जोछजजत्प्रकाश्सकलमा ❀ यै आत्म सत्ता भनि
एही तत्व बुझी त पूर्ण रुपको ❀ होइन्छ आफू पनि ६२
ॐकार्वाचक हो सबै जगतको ❀ अज्ञान् अवस्था महाँ
ज्ञानोत्तर् हुन सबछ वाचक कहाँ ❀ लीन् हुन्छ आत्मै महाँ
आत्मामा जब लीन्भयो अ उ म तीन् ❀ विश्वादि साक्षी सहित्
आत्मै मात्र रहन्छ तेस बखतमा ❀ निर्मल्उपाधीरहित६३
सोही आत्म म हूँ भनीदृढ्भयो ❀ ज्ञान्का बिचार्ले जसै
जीवन् मुक्तभनीकाहिन्छ जन त्यो ❀ पर्दैन ताप्मा कसै
सब् इन्द्रीय शमन् गरेर बलवान् ❀ कामादिको नाश्गरी
अभ्यास् गर्छ समाधिमा त सहजै ❀ देखिन्छ साम्ने हरि ६४
एही पूर्ण अनन्त आत्मरुपको ❀ ध्यान्नित्यगर्दैरहोस्
जो प्रारब्ध छ सो बुझेर बलियो ❀ ई दुःखसुख् सब्सहोस्
एही रितासित दिन्बिताउँछ भन्या ❀ यो देह छुट्ला जसै
संसार्कासब दुःखछोडिकन त्यो ❀ लीन् हुन्छ मैमा तसै६५
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आदीमा न त अन्त्यमा नाबिचमा ❀ यो देहधारी बनी
पूर्णानन्द हुँदैन जान्नु त्यसले ❀ योसत्य बात् हो भनी
तस्मात्त्यो विधिछोड़ि गर्नु जनले ❀ आत्मै विचार् खुब्गरी
त्योमैमामिलिजान्छ जल्जलधिमा ❀ पौंचेर मील्या सरी ६६
आत्मै मात्र छ नित्य यो सब जगत् ❀ झूटैछ झूटो पनि
डोरी सर्प बुझ्या सरी अबुझमा ❀ देखिन्छ साँचो भनि
जानु जानिइएन यो भनि भन्या ❀ मेरा चरण्मा परी
सेवा गर्नु र जान्छ जन् नतर ता ❀ टर्दैन कस्तै गरी ६७
वेद्कोसारस्हर्यसब्कहिसवयाँ ❀ जो यो विचार् गर्दछन्
कोटी जन्म सहस्त्रका सकल पाप् ❀ तिन्का सहज् टर्दछन्
तस्मात् भाइ! विचार यो सब जगत् ❀ झूटो चटक् मैं भनी
मैमा भक्ति सदा लगायर रहू ❀ आनन्दरूपी बनी ६८
मेरोएहिसगुणस्वरूप्कनखुशी ❀ मानीभजन्ध्यान्गरुन्
वा निर्गुण परिपूर्ण आत्म रुपमा ❀ लागेर ई मन् धरुन्
ती दूबै भइ तुल्यहुन् ति भइँहूँ ❀ ती मै सरीका बनी
गर्छन् सर्व भुवन् पवित्र तिनले ❀ कुल्चीदिंदामापनी। ६९
श्रद्धा भक्ति रहोस् गुरु चरणमा ❀ मेरा बचन्मा पनी
यस्लाईश्रुतिसार्बुझीकनपढोस् ❀ मूल् तत्व यै हो भनी
यस्तैरितसितयोपढ्योपनिभन्या ❀ अज्ञानको नाश् गरी
यस्तै रूप् बनि जान्छ जान्छ सहजै ❀ संसार सागर् तरी ७०

शत्रुघ्नजी द्वारा लवण सुरवध र मथुरा को राज्य प्राप्ती

एक्दिन् श्री यमुनाजिका तिरमहाँ ❀ बस्थ्या मुनीश्वरहरू
भार्गव् फेर् च्यवन् थियो इ सँगमा ❀ बस्या थिया जो अरू
आया श्री रघुनाथका हजुरमा ❀ आपत्ति छ्दन् भनी
आदर् खूब् रघुनाथबाट हुनगै ❀ आज्ञा भयो यो पनी ७१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सेवक् ब्राह्मणको म हूँ अति कृपा ❀ गर्नू भयो धन्य हो
सेवक्लाइ अह्राइ बक्सनुहवस् ❀ कुन् कामछ इच्छा छ जो
सेवक् हूँ सब सिद्ध गर्छु भनि यो ❀ रामको हुकुम् भो जसै
आपत् बिंती गऱ्या तहाँ च्यवनले ❀ रामका हजुरमा तसै ७२
हे नाथ्! वनैमधुनामदैत्यशिवको ❀ प्यारो महात्मा थियो
त्यस्लाईशिवलेत्रिशूल्अतिअमोघ् ❀ दीया खुशीमै लियो
रावण्की बहिनी खिसम्भन थिई ❀ बीहा गऱ्या को थियो
जन्म्यो पुत्र र लोक कण्टक सबै ❀ चालराक्षसैकोलियो ७३
तेस्कोनाम लवण् छ राक्षस छ चाल् ❀ तेस्ले त्रिशूल् त्यो लिई
आपद् सब् ऋषिलाइ गर्छ रघुनाथ्! ❀ बाधा अनेकौं दिई
यो आपत्ति छुटोस् भनी हजुरमा ❀ आयौं भन्याथ्या जसै
तेस्को ताप नमान मार्छु अहिले ❀ यस्तो हुकुम्को तसै ७४
त्यै बिचमा सब भाइलाइ रघुनाथ् ❀ ले सोद्नुभो को गई
मार्छौ कण्टक तेस् लवण्कन ऋषि ❀ को प्रासादाता भई
हात् जोरी बिनती गऱ्या भरतले ❀ रुवामित्! म जान्छू भनी
ताहींफेरबिनतीगऱ्याअतिउचित् ❀ शत्रुघ्नजीले पनि ७५
लक्ष्मण्लेपनिकामगऱ्याअतिबडो ❀ साथै हजुरका गई
दुःखै भोग भरतजिले पनि गऱ्या ❀ योगी सरीका भई
रुवामित्!आजहुकुम्भयातखुशिमै ❀ जान्छू म एल्हे तहाँ
राम ठाकुर बहुतै खुशी हुनु भयो ❀ त्यो बिन्तीमुन्दामहाँ ७६
यस्तो हूकुम भो बहुत खुशि भई ❀ शत्रुघ्नलाई तहाँ
गादी आज म दिन्छु राज् पछि गऱ्या ❀ पूरी बनाई तहाँ
पैल्हे जल्दि त मारि हाल लवणै ❀ लै जाउ यो बाण् भनी
बाणमामुरुयजउन्थियोउहिभिकी ❀ दीनूभयोभट्पनी ७७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
स्तींवयादिनुभोकमाइ! शिनको ❀ त्रिशूल् छ तेस्को घर
पूजा नित्य गरेर जान्छ बनमा ❀ स्राहार खातिर् पर
तेस्लेत्योशिनकोत्रिशूल्लिनमनी ❀ जानै न पावस् घर
फिर्दामातिहि लड्नुहान्नु यहिसर् ❀ मर्ला र गिर्ला पर७८
पायो त्यो शिनको त्रिशूल् लिनमन्या ❀ तेसै त्रिशूल्ले गरी
सब्को नष्ट गराउन्या छ यहि सब् ❀ राखनू बिचार्खुब्गरी
त्यो मारया पछितेस् मधूबन महाँ ❀ एक् बेस् बनाऊ शहर
जस्मानस्नमिलोसूमनीसकलले ❀ खुब्नरनमानुनूरहर्॥
तेस्को नाम् मथुरा हुनेछ नगरी ❀ त्यै राजधानी गरी
राज् गर्नु तिमिले स्रनेक् तरहले ❀ सब्को बिपत्ति हरी
एक्लै गै स्राघि मार राक्षस पछी ❀ स्राऊँछ सेना पनि
सब्लाई खुशि राखि राज् गर तहाँ ❀ रामले दियाराज्मनि८०
स्राशीर्वाद् दिइ साथ जाउ ऋषिका ❀ मन्या हुकुम् मो जसै
हूकुम् माफिक काम्गरया सँगगई ❀ शत्रुघ्नजीले तस
राक्षस् मारिलिया तुरन्त र तहाँ ❀ पूरी मथूरा बनी
हूकुम्माफिकराज्गर्याति हिंबसी ❀ शत्रूघ्नजीले पनी ८१

संक्षिप्त लवकुश चरित्र

सीताका पनि दूइ पुत्र सुकुमार् ❀ जन्म्याह पैदा भया
बाल्मीकी ऋषिले ति पुत्रदुइको ❀ नाम् कर्म गर्दा भया
जेठाको कुश नाम् धर्या लवमनी ❀ जुन् चाहिं कान्छा थिया
तिन्को नाम धरया क्रमैसित स्रनेक् ❀ शास्त्रै पढाई दिया८२
कालैमा ब्रतबन्धकर्म पनि भो ❀ वेदार्थ जानुन् मनी
लाया वेद् पनि पढ्न शास्त्रहरुको ❀ तात्पर्य जान्या पनी
उत्तम् निर्मल सूर्यवंश बिचमा ❀ पैदा भयाका थिया
सोही माफिक शस्त्र स्रस्त्रहरुको ❀ शिक्षा गुरुले दिया ८३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बाल्मीकिले सकल रामचरित्र लाई
गान् गर्न काव्य रितल कविता बनाई
गान् गर्दथ्या खुशि भएर पढाइदिया
त्यो गाउँदा त्रिभुवनै वश पारिलीया ८४
जम्ल्याहा दुइ भाइ सुन्दर कुमार्❀हात्मा सितार् एक्लिई
पूरा सुरसित गाउँथ्या दुइ जना❀ ताल् सुर् मिलाई दिई
खुश हुथ्थ्याऋषिगण्सबैतातिनका❀ सूनेर तेस् गानले
प्यारो खून्सित गर्दथ्या ति दुइको❀ ठूला भनी मानले ८५
यै रीतले राम चरित्र गाई
सम्पूर्णको मन् पनि खुश् गराई
बाल्मीकि कै आश्रममा रहन्थ्या
गर्थ्या सँधै बाल्मिकि जो त भन्थ्या ८६
त्यै बीच्मा सब अश्वमेध्हरु गरी❀रामले अनेक् दान्दिया
सीताजी बनमा थिइन् र सुनकी❀ सीता बनाई लिया
ब्रह्मर्षी र बड़ा बड़ा पृथिविका❀ राजाहरू घेर् अनी
ब्राह्मण्क्षात्रियवैश्यसब्तहिं पुग्या❀ हेरौं तमाशा भनी ८७

लवकुशलाइ वाल्मिकि द्वारा तत्वज्ञान दिनु र रामायण गान

बाल्मीकी ऋषिका सँग ति कुशलव्❀हिंडथ्यातिजान्थ्याजहाँ
पाया फुर्सत सोद्दनको र कुशले❀सोद्या कुरा क्यै तहाँ
हे सर्वज्ञ गुरो ! कउन् तरहले ❀ बन्धन् विषे पर्दछन्
कुन् पाठले सब बन्धनै पनिसहज्❀तोड़ेर पार् तर्दछन् ८८
बाँधिन्छन् यहि रीतले यति गर्या❀ संसार तर्छन् भनी
यस्को तत्व बताइबक्सनुहवस्❀ जानूं म मूढ्ले पनी
मन्त्रीका वशमा परी शरिरकै ❀ मै हूँ अहँकार् भनी
यस्तो प्रश्नसुनी भन्या ति ऋषिले❀बाँधिन्छयस्लेभनी ८९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस् जीव्ले बिहकै बिचार नगरी❀ मन्त्री अहंकार लिंदा
मन्त्रीले जति आफूमा गुरा थिया❀ जीव्मा मिलाई दिंदा
मन्त्रीका वशमा परेर यहि जीव्❀ मै हू अहंकार भनी
लाग्यो भन्न भन्या पर्‍यो विषयमा❀बाँधिन्छयोजीव्पनी१०
जो छन् सत्व-रजस्-तमै त्रिगुरा इ❀ रूप् हुन् अहंकारका
इ तीनै मनले बिचार् गरि लिंदा❀ छैनन् कुनै सारका
इच्छा सत्व विषे धर्‍यो पनि भन्या❀ऐश्वर्य भोग् जुन् पनी
संसारकै व्यवहार बद्छ रजले ❀स्त्री पुत्र मेरो भनी ११
जोताछन् तमगुरामहाँखुशिहुन्या❀ तेस्ता ति कीरा भई
फिर्न्याछन् ति विपत्तिमासुखसयल्❀ मिल्दैन कोही गई
जोतातीन् गुरालाइ तुच्छबुभिरखुन्❀ आत्मै बिचार् गर्दछन्
सब् बन्धन्हरुलाइ तोडि सहजै ❀संसार् तिनै तर्दछन्१२
तस्मात् अहंकार्कन तुच्छ मानी
आत्मा म हूँ पूर्ण भनेर जानी
आत्मै बिचार्मा तिमि चित्त देऊ
साँचो भन्या यो तिमि जानिलेऊ १३
बाल्मीकिदेखी यति तत्व पाई
ज्ञान् भै गयो ती कुशचन्द्रलाई
मुक्तै थियो नित्य तथापि ताहाँ
गर्दैरह्या कार्य त लोक माहाँ १४
एकदिन्बाल्मिकिलेतआर्तिदिनुभो❀ हे पुत्र हो ! गाउँछौ
तिम्रा गान्सुनिखुशिहुन्छदुनियाँ ❀ अत्यन्त यश् पाउँछौ
श्री राम्कोपनि गान सुन्नकनमन्❀ आयो र गाऊ भनि
लाया गाउन पो भन्या दुइ जना ❀ मीलेर गाया पनि१५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

गान्लेखुश्भइजो तबविस्मयो ❀ बविस्मय् भयाकोजाति
चीज्को सब् तृरा मैं गरेर तिमिले ❀ केही नलीया रति
श्रतीं वाल्मिकि देखि पाइ कुशलन् ❀ अत्यन्त खुशी भई
लाग्या गाउन दूइ भाइ ऋषिका ❀ साम्ने अगाड़ी गई ९६
सुन्या ताहिं अपूर्व गान् र रघुनाथ् ❀ ज्यूको पनी मन् गयो
मेरो मन् पनि गानले हरिलिया ❀ को हुन् ड भन्न्या भयो
साम्नेडाकिम सुन्छुफेरियहिगान् ❀ भन्न्या इरादा धरी
राजा पण्डित बृद्ध जन्हरु बहुत् ❀ ऋषी सभा खुब्गरी ९७
गान्सुन्छुसब डाकयाहिं ति कुमार ❀ आउन् सभामा भनि
हूकुम् भो र दुवै कुमार् हुकुमले ❀ आया सभामा पनि
देख्या मूर्ति कुमारको र सबले ❀ आश्चर्य मान्या पनि
कस्का हुन्डकुमार्कसोगीरभया ❀ रामै सरीका भनि ९८
रामैका सरि वस्त्र भूषण भया ❀ राम्चन्द्रकुन् हुन्भनि
चिन्हैलाइ कठिन् हुन्याछ यहिबात ❀ सब् भन्न लाग्या पनि
लाग्या गाउनलाइ ती जन तहाँ ❀ गान्धार स्वर्ले गरी
गान् सुन्दा बहुतै खुशी हुनुभयो ❀ त्रैलोक्यकानाथ्हरि ९९
हूकुम् ताहिं भरतजिलाइ दिनु भो ❀ लौदेउ खिल्लत् भनि
दश् हज्जार् रुपियाँ लगीकन दिया ❀ जल्दी भरत्ले पनि
दशहज्जार्रुपियाँ दियातपनित्यो ❀ सब्तृरण् सरीका गरी
जाहाँ वाल्मिकिजी थिया उहिं गया ❀ धन् छोडि तेसै धरी २००
जान्या श्री रघुनाथले इ त सिता ❀ जीकाकुमार्हुन्भनि
त्यौ बिचमा प्रभुले हुकुम् दिनु भयो ❀ शत्रुघ्नलाइ पनि
हे भाइ! तिमि जाउ जल्दि अहिले ❀ वाल्मीकिजी छन्जहाँ
सीताजी र ति वाल्मिकी कन लिइ ❀ दौड़ेर आऊ यहाँ १

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सीतालाइ नियाँ म दिन्छु आछिले ❀ सीताजी नीयाँ परसुन्
आफ्नू दोष अफालि निर्मल भई ❀ खुशू भै सिताजी बसुन्
हूकुम् श्री रघुनाथको यति हुदाँ ❀ शत्रुघ्न फर्की भया
बाल्मीकी ऋषिका परी चरणमा ❀ सब् बिन्ती गर्दा गया २
सून्या बिन्ति र जुन् त आशयथियो ❀ रामूको उ जानी लिया
परसुनिन्भोलिनियाँसिताभनितहाँ ❀ उत्तर् तुरन्तै दिया
उत्तर् बालिमिकिदेखि पाइकन ता ❀ शत्रुघ्न फर्की गया
श्री रामचन्द्रजिका पुगी हजुरमा ❀ त्यो बिन्ति गर्दा भया ३
सुन्नू भो जब उत्तरै ति ऋषिको ❀ ताहीं प्रभुले पनि
परिछन्भोलिसितानियाँभनि हुकुम् ❀ भोलोकजानुन्भनि
हूकुम् एति सुनेर लोक् पनि सबै ❀ हेरौं तमाशा भनि
ब्राह्मण् क्षत्रिय बैश्य शूद्र जति छन् ❀ आया ति हेर्नै पनि ४
आया बालिमकी ताहिं देखि बिचमा ❀ सीताजिलाई लिई
सीताजी पनि यज्ञमा पुगिगइन् ❀ श्री राममा मन् दिई
सीताजीकन देखि लोकहरु सब् ❀ बेस्भोन हुत्बेस्भनी
लाग्या बोलन तहाँ त्यसै बखतमा ❀ ती बालिमकीजी पनि ५
श्री रामजीसित बिन्ति गर्दछु भनी ❀ रामूका अगाड़ी सर्या
सीताजी अति शुद्ध छन् भनि बहुत ❀ बिन्ती हजुर्मा गर्या
छोरै हुन् कुश लब् पनी हजुरका ❀ बिन्ती कहाँ तक् गरूँ
क्यै शङ्का मनमा रह्या हजुरमा ❀ गर्छू शपथ् मै बरू ६
बोल्याँ केहि झूठो भन्या हजुरमा ❀ बोल्या झुठो बातमनि
निष्फल् आजगरुन् प्रभू जति थियो ❀ मेरो तपस्या पनि
सून्याबालिमिकिकोशपथ्रघुनाथ् ❀ ज्यूको हुकुम् यो भयो
मेरो शंसय छैन कत्ति मनमा ❀ साँचो शपथ् हुन्छयो ७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लङ्कामापनिएक्लै रहिन् (?) साँघ लिंदा ❀ जाँचेर सीता लिया
ऐल्हे यो अपवाद गर्‍या भनि उसै ❀ सो मेट्न छोड़ी दियाँ
अर्काले अपवाद गर्‍या भनि उसै ❀ साँचै सिता त्यागगर्‍याँ
एसै मो तपनी रिसानिन हनस् ❀ साहै सकस्मापर्‍याँ ८
मेरा पुत्र त हुन् दुवै इ कुश लव् ❀ जम्ल्याह पैदा भया
सिताजी पनि शुद्धछन् सब बुझयाँ ❀ सन्देह मेरा गया
हूकुम् यो रघुनाथको हुनगयो ❀ हूकूम् भयो ता पनि
सिताजी त तयार् भइन् उसबखत ❀ परछू म नीयाँभनि ९
ब्रह्माजी अरु लोकपालहरु सब् ❀ आया सिता छन् जहाँ
ब्रह्माजीहरुका अगाड़ि ति सिता ❀ वयै बोल्नलागिन्नहाँ
जसतो भक्ती छ रामका चरणमा ❀ मेरा उ जानी लीउन्
साँची हू त मलाई जानी अहिले ❀ बाटो धरित्री दिउन् १०
यस्तोबाणिसिताजीकोपृथिविले ❀ सूनी सकीथिन् जसै
बेस्सिंहासनएकतयार्गरिसिता ❀ जीलाइ राखिन् तसै
त्यो सिंहासनमा बसी जननिले ❀ औदार्य मनमा लिइन्
सिताजीकन जानलाइ बाटिया ❀ बाटो भुमीले दिइन् ११
यस्रितले जननी सिता जब गइन् ❀ खुब्मोहमालोक्परया
इन्द्रादीहरुले त सुब् खुशि हुँदै ❀ घेर् पुष्प बृष्टी गरया
सिताकोतहिंशोक्गरयाप्रभुजिले ❀ संसारि जस्ता भई
ब्रह्मादीहरुले बुझाउनु भयो ❀ सामने अगाड़ी गई १२
बूझी बक्सनुभो र शोक् पर गरी ❀ बाँकी जउन्काम् थिया
सब् सम्पूर्ण गराइ दान् दिनु भयो ❀ ब्राह्मण् तहींसब् थिया
जो ता यज्ञमहाँ थिया जन अरु ❀ धन्ले ति पूर्ण भया
बीदा बक्सनुभो र दुःख भई दूर् ❀ बीदा हुँदै ती गया १३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सिताजीसितको वियोग् जब भयो❀ श्री राम् विरक्त भया
यज्ञ स्थान्कन छोडी पुत्र सँग ली ❀ जल्दी अयोध्या गया
कौशल्या जननी पनि खुशि भइन् ❀ श्री राम आया भनि
लक्षण् अन्त्यनिहारिज्ञानकिकथा❀चर्चा गरिन् तेस् पनि२४
कौशल्यारामलाईत्रिभुवनभरिका❀ नाथका नाथ जानी
कुन्पाठलेबन्धछुट्दलाभनिकन मनमाखुब्ठुलो दुःखमानी
आइन् पाऊपरिन् फेरविनती पनिगरिन् रामजीकाचरणमा
कुन्पाठलेबन्धछुट्ननयतिभकनकहूआजआयाशरणमा२५
यस्तोविन्तीसुनी खुब्खुशि पनि हुनुभो बन्धछुट्न्याउपाई
सब् भन्दा एहिठुलो भनि कहनु भयो भक्ति योग् माइलाई
भक्तीयोगमाजतीछन् त्रिगुणरहितकोभक्तिछन्सोहिगर्नु
गङ्गाजीका प्रवाहा सरि गरि यस मन्लाइ मै माथि धर्नु २६
मैमाथी चित्त धर्न्या जनहरु सहजै भक्तिमन् होइजान्छन्
चार्छन्मुक्तीतचौरकनपनितरूकातृणसरीकाति मान्छन्
मैमाथी चित्त धर्न्या भनिकन बुझिल्यौ साधनै गर्न माहाँ
तेस्कोवर्णन्मगर्छूअबसबबुझिल्यौसब्खुलासाछयाहाँ २७
इच्छा काहिं नराख्नू यो विषयमा❀ सब् धर्म थाम्नै पनि
सत्कामगर्नविचारराख्नुमनमा❀ हिंसा घटीया भनि
मेरो दर्शन गर्नु खुब् स्तुति पुजा❀गर्नू स्मरण् सब्गरी
पाऊमा परि दण्डवत् गरिलिनु ❀ जाइन्छ यस्ले तरी २८
सब् प्राणीहरुमा म छू यति विचार्❀ राख्नू प्रसङ्गी भई
साँचो बोल्नू बडो मिल्या चरणमा❀ पर्नू तुरुन्तै गई
गर्नु दुःखि उपर् दया समयमा❀ तिन्मा त मैत्री पनी
सेवा गर्नू यमादिको पनि असल्❀नाटो इनै हुन् भनि२९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

वेदान्तैकन सुन्नु गर्नु खुशि मैं ❀ कीर्तन् सदा नामको
सज्जन्को सहवास गर्नु दिन दिन् ❀ सोझो हुनु कामको
मेरो देह मनाउने ग्रति ठूलो ❀ छोड्नू ग्रहङ्कार् ग्रनि
यो मन् शुद्ध गराइ बुझ्नु जति छन् ❀ सम्बन्ध मेरो पनि २०
जस्तै गन्ध रहन्छ फूलहरुमा ❀ फुल्मा रह्याको पनि
वायूका वशमा परीकन उडी ❀ ग्राउँछ नाक्मा पनि
तेस्तै योग विषे दिया मन यहाँ ❀ त्यो योग वायू पनि
गन्धै मैं गरि मन् उडेर सहजै ❀ ग्राउँछ मैमा पनि २१
सर्वात्मा म हु जो त एति नबुझी ❀ पूजा सदा गर्दछन्
ती देखी खुशि हुन्न कत्ति ति गरुन् ❀ व्यर्थै शरीर् हर्दछन्
पूजा गर्नु त तेहि हो न गरि सो ❀ तिन्ले पुजा कुन् गर्‍या
मृत्यूको भय हुन्छ तिन्कन सदा ❀ संसारमा ती पर्‍या२२
सर्वात्मा म हु एतिजानि सबजीव् ❀ लाइ नमस्कार् गरुन्
जीवात्मा र परात्मएक्बुझिसदा ❀ ग्रन्तःस्करणमाधरुन्
मातर् ! मार्ग त तर्नलाइ सजिलो ❀ एही छ यस्तै गरी
संसार्का कति पार् गया सहजमा ❀ संसार सागर् तरी२३
याहाँलाइ त झन् सहज् छ म तहुँ ❀ पुत्रै छ पुत्रै भनि
सम्झी मात्र दिनुहवस् यति गर्‍या ❀ छुट्नन्नइबन्धन् पनि
कौशल्या रघुनाथको यति हुकुम् ❀ सुनिन् र मुक्तै भइन्
कैकेई पनि देह छोडि दशरथ् ❀ जीकाहजुरमागइन्२४
त्यस्तै सुमित्रा दशरथ्कि रानी
संसारको सुख् सब तुच्छ जानी
प्रारब्धका बन्धनलाइ तोडी
पौंचिन् पतीथ्यैं तहिं देह छोडी २५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पापात्मा अति दुष्ट शत्रु सबका ❀ तीन् कोटि गन्धर्व छन्
ई सब्लाई मराउनै अब पर्‍यो ❀ बढ्नन्नमार्‍यातभन्
यस् सुर्ले रघुनाथका हजुरमा ❀ एक्दिन्युधाजित गया
पार्‍या बिन्ति भरत् गई हुकुमले ❀ गन्धर्व मार्दा भया २६
पूरी एक् तहिं पुष्करावति बनी ❀ पुष्कल् त राजा भया
अर्को तक्षशिला पुरी बनि तहाँ ❀ राज् तक्ष गर्दा भया
छोरा पुष्कल तक्षलाइ तिमि राज् ❀ गर्नू त याहीं भनि
फर्का श्री रघुनाथका हजुरमा ❀ पौंच्याभरत्जीपनि २७
लक्ष्मण्लाइपनिहुकुम्तहिंभयो ❀ भाई ! तिमीले पनि
छोरालाइ लगेर पश्चिम मुलुक् ❀ मा राज्य देऊ भनि
पश्चिम्मा अति दुष्ट मल्लहरु छन् ❀ तिन्लाइ संहार् गरी
दूई पूरि बनाउनू पनि तहाँ ❀ रत्नादिदौलत्भरी २८
राजा अङ्गद चित्रकेतु इ दुवै ❀ लाई बनाया तहाँ
छोरालाइ रजाइँ दीकन तिमी ❀ आया तुरुन्तै यहाँ
हूकुम् श्री रघुनाथको यति हुँदा ❀ लक्ष्मण् तुरुन्तै गया
जो जो हुन् अति दुष्ट मल्लहरु सब् ❀ तिन्लाई मार्दा भया २९
पूरी दूइ बनाइ लक्ष्मणजिले ❀ ताहीं रजाइं दिया
छोरा छोड़ि दियार लक्ष्मण गया ❀ जाहाँ रघूनाथ् थिया

कालको श्रीराम सँग भेट र स्वर्गारोहण लाई बिन्ति गर्नू

एक्दिन्काल्ऋषिभैंमण्रघुनाथ् ❀ ज्यूलाइ भेट्छू भनि
आया श्री रघुनाथ्जिका पुरिमहाँ ❀ चिन्दैन कोही पनि ३०
पौंच्या द्वार तलक् जसै प्रभुजिका ❀ चौकीत लक्ष्मण् थिया
द्वार्मा एक् ऋषिछन् खड़ाभनिगई ❀ हाजिर् पुर्‍याई दिया
हाजिर्सूनि हुकुम्भयो प्रभुजिको ❀ ल्याऊ तुरुन्तै भनि
लक्ष्मणले पनि जाल्दि गै हजुरमा ❀ ल्यायाइनै हनूमनि ३१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पौंच्या श्री रघुनाथका हजुरमा ❀काल् विप्र रुप्ले जसै
'त्वं वर्द्धस्व' भनेर आशिष दिया❀ श्री रामलाई तसै
सत्कार् श्रीरघुनाथले पनि गर्‍या❀पैल्हे कुशल क्षेम् गरी
तिन्को आशय बुझ्नलाइ हरिले❀सोद्‌या अगाडी सरी ३२

कुन् काम गर्नू छ र जल्दि आई
भेट् गर्नु भो आज यहाँ मलाई
हूकुम् प्रभूको जब एति पाया
ती काल् पुरुष्ले पनि बिन्ति लाया ३३
हे नाथ् ! चरणमा अहिले म पर्छू
एकान्त बक्स्याहुँदी बिन्ति गर्छू
मेरो कुरा कोहि नसुन्न पाउन्
सुन्नन् त मारीदिनु दूर जाउन् ३४
ती काल् पुरुष्को यति बिन्ति सूनी
बेसै छ भन्छन् भनि भित्र गूनी
हूकुम् भयो लक्ष्मणलाइ ताहाँ
कोही नआउन् अब भित्र याहाँ ३५
क्वै आउनन् भित्र त मर्न जानन्
अत्यन्त गोता बिहकै ति खानन्
एकान्त तक् कोहि यहाँ नआउन्
यो उर्दि सब्ले तिमिदेखि पाउन् ३६
सून्या हुकुम् एति र काल बोल्या
आफ्नू सबै आशय ताहिं खोल्या
हे नाथ् ! म हूँ काल् सबलाइ हन्याँ
मालुम् छ यो सब् किन बिन्ति गर्‍याँ ३७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ब्रह्माजिको बिन्ति लिएर आयाँ
खुब् भाग्यले दर्शन आज पायाँ
ब्रह्माजिको बिन्ति म आज गर्छू
होला हुकुम् जो उँहि शीर धर्छू ३८
सृष्टीदेखि अगाड़ि पूर्णरुपले ❀आत्मास्वरुपएक् थियौ
नारायण् जलशायि रूप त पछी❀यै सृष्टि खातिर् लियौ
स्वामित्कोतहिंनाभिकाकमलमा❀एक्लै म पैदा भयाँ
सृष्टी गर्न हुकुम् हुँदा हुकुमले ❀लोक् सृष्टि गर्दै गयाँ३९
जस्ले दुःख दिया प्रजाकन तिनै❀ लाई त मारूँ भनि
युग्युग्माअवतार्समेतलिनुभयो❀यस्तै अगाड़ी पनि
ऐल्हे यो अवतार् पनि पृथिविको❀भार् हर्न खातिर् धरी
भूको भार् पनिटारि बक्सनुभयो❀सब् दुष्ट संहार् गरि ४०
एघारै म हजार वर्ष रहुँला ❀ जाँदा हुकुम् जो भयो
सोही वर्ष गणीतले गनि लिंदा ❀ एघार हज्जार् गयो
बस्नैको अरुमन् छ पो त भगवान् ❀ इच्छा हजुर्को हवस्
जानाको यदि मन् भयो बखत भो ❀ लौजल्दिपालनुहवस्४१
ब्रह्माको बिनती सुनेर रघुनाथ् ❀ हाँसी तिनै कालका
साम्नेबातचितगर्नुभोपनिबहुत्❀ सब् जान कै चालका
दुर्वाशा यहि बीचमा तहिं गया ❀ रामलाइ भेटछु भनि
लक्ष्मण् द्वार महाँ थिया र ऋषिले ❀तिन्लाइ भेट्या पनि४२

लक्ष्मण को स्वर्गारोहण

लक्ष्मण्लाइ तहाँ भन्या ति ऋषिले❀ हाजिर् पुऱ्याऊ भनि
लक्ष्मण्लाइ कठिन् भयो कठिनले❀ बिन्ती लगाया पनि
भित्रै जान हुँदैन जाऊँ कसरी ❀निस्तार् कहाँ तक् गरूँ
जुनकाम् खातिर आज आउनु भयो❀ सो पूर्ण गर्छु वरू ४३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लक्ष्मणले यति ती मुनीकन तहाँ ❀ बिन्ती गऱ्याथ्या जसै
दुर्वाशा ऋषि हुन् बड़ा त पनि खुब् ❀ रीसाइ बोल्या तसै
लैजाऊ अम रामका चरणमा ❀ नाहीं शरण् पर्दछू
लैजान्नौ त मलाइ मित्र म कुलै ❀ को भस्म फेर् गर्दछू ४४
सून्या एति बचन् र लक्ष्मणजिले ❀ मन्मा बिचार् योगऱ्या
कुल्को नाश् नहवस् कुशल् सब रहुन् ❀ बयाछु न्छ एक् मै मऱ्या
ऐल्हे भित्र त जान निश्चय परयो ❀ यस्तो बिचार् खुब् गरी
लक्ष्मण् भित्र गया जहाँ प्रभु थिया ❀ त्रैलोक्यका नाथ् हरी४५
द्वार्मा हाजिर छन् ऋषि भनि तहाँ ❀ बिन्ती गऱ्याथ्या जसै
ती काल्लाइ बिदा गरेर रघुनाथ् ❀ बाहीर आया तसै
दुर्वाशासित भेट भयो जब तहाँ ❀ रामले नमस्कार् गरी
सोद्नू भो ऋषिलाइ आउनु भयो ❀ कस्तो इरादा धरी ४६
इच्छा भोजनमा थियो ति ऋषिको ❀ सो बिन्ति गर्दा भया
भोजन् बक्सनु भो र भोजन गरी ❀ ऋषी खुशी भै गया
त्यै बिच्मा तहिं सम्झ बक्सनु भयो ❀ रामले प्रतिज्ञा पनि
लक्ष्मणलाइ कसोरि मारूँ अहिले ❀ यै हो बिपत्ति भनी४७
सन्ताप् श्री रघुनाथको जब परयो ❀ लक्ष्मण चरणमा पऱ्या
मारीदीनुहवस् मलाइ भगवान्! ❀ भन्न्या त बिन्ती गऱ्या
ठूलो भन्नु छ धर्म हो उहिं रहोस् ❀ बिन्ती गऱ्या यो जसै
यस्को निश्चय गर्नलाइ हुन गो ❀ ठूलो सभा एक् तसै४८
सब्ले बिन्ती गऱ्या बुझी हजुरमा ❀ त्याग् मात्र गर्नू हवस्
मारीहाल्नु त योग्य छैन भगवान्! ❀ ज्यान् आजइन् को रहोस
ज्यान् हर्नू र बियोग गर्नु सम छन् ❀ यै होस् भन्याथ्या जसै
लक्ष्मणलाइ पनी बिदा दिन भयो ❀ श्री रामजीले तसै ४९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लक्ष्मणजी सरयू गया उस बखत् ❀ रामका चरणमा परी
प्राणायाम् तिरमा गरीकन गया ❀ जाहाँ रहन्थ्या हरि
यस् रितले नरलोक छोड़िकन ता ❀ लक्ष्मण् जसै ता गया
भेट्ना खातिर शेषका हजुरमा ❀ ब्रह्मादि जम्मा भया ५०
लक्ष्मणजीसितकोवियोग्जबभयो ❀ दुःखी सरीको बनी
साह्रै दिक्क भएर मंत्रिहरु थ्यैं ❀ यस्तो हुकुम् भो पनि
जान्छू लक्ष्मण छन् जता म त उतै ❀ यो राज् भरतले गरुन्
राजा भैकन जो प्रजाहरु त छन् ❀ इन्कोसबैतापहरुन ५१
जसै एति हुकुम् सुन्या भरतले ❀ मूर्छित् सरीका भई
यस्तो बिन्ती गरया तहाँ भरतले ❀ रामका हजुरमा गई
बरुथ्याउँबामितलाइछोड़िमकहाँ ❀ तिन्लोक बक्स्या पनि
छोरै छन् अधिराज प्रभो ! हजुरका ❀ राज्का डनै हुन् भनी ५२
जेठा पुत्र हजूरका इ कुश बीर् ❀ राज्कोशलैमा गरुन्
उत्तर्मा बसि राज् गरी इ लवले ❀ सम्पूर्णको ताप् हरुन्
दूई भाइ चलाउँछन् इ जति छन् ❀ सबराज्यकोकाम्यहाँ
दूत् जाउन् मथुराविषे किन उसै ❀ शत्रुघ्न बस्छन् तहाँ ५३
सुन्नन् लक्ष्मणको पनीत समचार् ❀ पौंच्या परम्धाम् भनि
साथै जान हजूरका चरणमा ❀ दौडेर आउन् पनि
यस्तै बिन्ति हजूरमा भरतले ❀ गर्थ्या प्रजाले पनि
पाया थाह र ताप् भयो मनमहाँ ❀ जानन्किछोड़ीभनी ५४
बिन्ती एक बसिष्ठले तहिं गरया ❀ लान्छन्किछोडछन्भनी
रुन्छन् सब् दुनियाँ यहाँ हजुरको ❀ पाउन् प्रसादू इ पनि
सुन्नूभो तहिं यो बशिष्ट ऋषिले ❀ बिन्ती गरयाको जसै
ठाकुर्को पनि खुब्दया हुन गयो ❀ ती सब् प्रजामा तसै ५५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

इच्छा बयाछ बताउ पूरा गरुला ❀ भन्न्या हुकुम्‌ भो पनि
सब्‌ले बिन्ति गऱ्या प्रभू सित तहाँ ❀ सब्‌ साथ जान्छौं भनि
इच्छा पूरा हनस्‌ भनी हुकुम भो ❀ सब्‌ ती प्रजा खुश्‌ भया
उत्तर्‌ कोशलमा दुबै ति कुश लब्‌ ❀ राज्‌ गर्न खातिर्‌ गया ५६
कोही दूत्‌ मथुरा तरफ्‌ प्रभुजिले ❀ जल्दी पठाई दिया
दूत्‌ पौंच्यो रघुनाथका हुकुमले ❀ शत्रुघ्न जाहाँ थिया
दूतदेखी समचार्‌ सुन्या प्रभुजिको ❀ शत्रुघ्नजीले जसै
छोरालाइ रजाइँ दी प्रभुजि थ्यै ❀ ती जान आया तसै ५७
जेठा पुत्र सुबाहुलाइ मथुरा ❀ फेर्‌ राजधानी दिया
यूप्‌लाई बिदिशा दिया र ति गया ❀ जाहाँ रघुनाथ्‌ थिया
जल्दी गैकन पाउमा परि तहाँ ❀ यो बिन्ति लाया पनि
साथै जान भनेर आज रघुनाथ्‌ ! ❀ आयाँ हजुर्‌मा भनि ५८
लौ मद्‌याम्ह हुँदा तयार्‌ भइ रह्या ❀ यस्तो हुकुम्‌ भो तहाँ
आया राक्षस ऋक्ष बानरहरू ❀ सब्‌ले त सुन्दा महाँ
जान्छौं आज सँगै प्रभो ! हजुरका ❀ यै बिन्ति सब्‌ले गऱ्या
सुग्रीव्‌जी पनि बिन्ति गर्न रघुनाथ्‌ ❀ जीका अगाडी सऱ्या ५९
अङ्गद्‌लाइ रजाइँ दीकन यहाँ ❀ जालाँ म साथै भनि
आयाको छु दयानिधान्‌ ! हजुरमा ❀ यो बिन्ति लायाँ पनि
सुग्रीव्‌को र अरू ति ऋक्षहरुको ❀ बिन्ती सुन्याथ्या जसै
प्यारा भक्त जहाँ बिभीषण थिया ❀ ताहाँ गया राम्‌ तसै ६०
ताहीं गैकन यो हुकुम्‌ पनि भयो ❀ बस्‌नू तिमीले यहाँ
आरन्धै बलवान्‌ छ जान ड सबै ❀ छुट्छन्‌ न भोगी कहाँ
जाहाँ सम्म रहन्छ भूमी ताहिं तक्‌ ❀ राज्‌ गर्नु याहीं बसी
रक्षा गर्नु खुबै प्रजाकन बहुत ❀ अन्यायलाई कसी ६१

Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्को उत्तर छैन चुप् रहु भनी ❀ हूकुम् भयाथ्य जसै
तेसै ठाऊँ महाँ तुरुन्त हनुमान् ❀ जीलाइ देख्या तसै
हूकुम्भो हनुमानलाइ हनुमान्! ❀ चिरञ्जिवी भै रह्या
मेरो जुन्छ हूकुम गर्न सब दिन् ❀ अत्यन्त तत्पर् भया६२
बुद्धीमान्ताहिंजाम्बवान्पनिथिया❀ठान्थ्या म जाँला भनि
तिन्लाई पनि यो हुकुम हुन गयो❀ बस्नू तिमीले पनि
द्वापर्मा कछु युद्ध गर्नु तिमिथैं ❀ पर्न्याछ सोही गरी
स्वर्गैमा तिमि जाउला पछि भन्या ❀ ऐल्हे त यस्तै परी६३
यस्तो रित्सितजो अह्राउनुथियो ❀ सो सब् अह्राइ वरी
सब् प्राणीहरु साथमा हिंड भनी ❀हुकुम् भयोत्यस् घरी६४

आफ्ना पुरोहित् ति वशिष्ठलाई
हूकुम् भयो मङ्गल गर्नलाई
मङ्गल् अनेक् ती ऋषिले गराया
राम् स्वर्गजानाकन निस्क आया ६५
सीताजिले रूप् आधिको छिपाइन्
लक्ष्मीभई वामृतिर बस्न आईन्
दाहिना तरफ् भूमि बसिन् हरीका
सब् ताहिं आया भुवनै भरीका ६६
शस्त्रास्त्र सब् ती पनि रूप धर्दै
हिंड्या तहाँ मङ्गल शब्द गर्दै
गायत्रि चार्वेद् सब ताहिं आया
रूप्धारी मङ्गल् यश शब्द गाया ६७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जो ता अयोद्या पुरवासि थीया
तिनूले सँगै सब् परिवार लीया
बालक् बुढो कोही रहेन ताहाँ
सब्को गयो मन् उहि राम माहाँ ६८
सुग्रिव्हरू बानर मुख्य आया
सब् ताप छूट्यो भनि हर्षपाया
जो लोक्थिया रामूसित जानगैगो
गुल्जार् अयोद्या पनि शून्यभैगो ६९
छोड़ी शहर् वयै गइ भूमि माहाँ
देख्या प्रभूले सरयू र ताहाँ
आफ्नू विराट् रुप्कन सम्झलीया
आफैं ति सब्कापनि नाथ थीया ७०
ब्रह्मा ऋषि देव र सिद्ध आया
आकाश् बिमान्ले भरि छाड्दि छाया
श्री राम् उपर खुब्सित पुष्पवृष्टी
सब् गर्नलाग्या उहिलाइ दृष्टी ७१

सबै प्रजा र सपार्षद श्री रामचन्द्रको स्वर्गारोहण

गाउँछन् कहिं नाच्दछन् प्रभुजिकै❀ यश्मात्र किर्तन् गरी
त्यै बिच्मा रघुनाथ्पर्यासरयूमा❀ सब्का अगाडी सरी
ब्रह्माको पनि ताहिं औसर पर्‌यो❀हातजोरिबिन्ती गर्‌या
सब्कोताप्अबगैगयोसकललोक्❀आनन्दसागर्पर्‌या७२
रूवामितूलेअबविष्णुकोरुपलिन्या❀बेला भयाथ्यो भनि
पार्‌याबिन्ति र होइबवसनु भयो❀ श्रीराम् चतुर्भुज पनि

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जो शत्रुघ्न भरत् थिया दुइ जना❀ ती शंख चक्रै बनी
स्वामितकोतहिंना हुमानसिगया❀बस्न्या यहींहो भनि७३
ब्रह्माण्डै सब देवगण् खुशि भया❀ त्यो रूप देख्या जसै
ब्रह्मालाई हुकुम् गऱ्या प्रभुजिले❀सब् प्राणि खातिर् तसै
हे ब्रह्मन्!जति जन् थिया शहरमा❀सब् साथ जान्छौं भनि
आया सब् परिवार् लिएर सँगमा❀लाग्या पछाडी पनि ७४
इन्लाई शुभलोक देउ तिमिले ❀सत्लोकमा बास्गरुन्
आफ्ना सब् परिवारले सँग रही❀ आनन्दमा ई परुन्
ब्रह्माले प्रभुको हुकुम् यति सुनी❀हूकुम् शिरोपर् लिया
सब्लाई खुश गर्नलाई पनि एक्❀ लोकै खटाई दिया ७५
ती लोक्ले पनि खुश् भएर सरयू❀कोस्नानसब्लेगऱ्या
जुन् शान्तानिक लोकहो उहिंपुगी❀आनन्दमा सब् पऱ्या
सुग्रीव् सूर्य विषे गई मिलि गया❀ अंशै हुनाले गरी
भूभार् यै रितले हरेर रघुनाथ् ❀वैकुण्ठ पौंच्या हरि७६
एति मात्र कह्या सदाशिवजिले ❀ ती पार्वतीथ्यैं पनि
जस्ले यस्कन पाठ गर्छ मनले❀ अत्यन्त ठूलो भनि
तिन्को जन्मसहस्रका जतितछन् ❀पाप्भस्म हुन्छन् भनि
सब् षट्शास्त्र बताउँछन् पढिलिया❀तर्छन दुनियाँ पनी७७
शम्भूले पार्वती थ्यैं खुशि भई बहुतै प्रेमपूर्वक् कह्याको
संसार् पार् तर्नलाइ सबकन सजिलो साँघु मैं भै रह्याको

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जानी यसलाइ जो जो जनहरु बहुतै प्रेमले पाठ गर्छन्
संसार्कोसौख्यसब्भोग्गरिकनदुनियाँसब्सहज्पारतर्छन्।

इति सुब्बा होमनाथात्मज पं० केदारनाथ र पं० रामजी उपाध्यायकृत क्षेपक समेतको नेपाली कवि भानुभक्ताचार्यकृत रामायण उत्तरकाण्ड समाप्त ।




नेपाली साहित्यगगनमा सूर्यझैं प्रसिद्ध सुब्बा होमनाथ केदारनाथजीका ग्रन्थरत्न

अट्ठारहपर्व महाभारत चमड़ा ढकनीको दाम २५।

श्री कृष्णचरित्र चमड़ा ढकनीको दाम १०।

आठै काण्ड रामायण चमड़ा ढकनीको दाम १०।

ठूलो श्रीमद् देवीभागवत चमड़ा ढकनीको दाम ९।

सचित्र नेपाल दिग्दर्शन इतिहास १ के दाम ८।

यो समग्र पुस्तकको सेट एकै पटक रु० १०) पेशगी पठाइ मगाए खर्च पनि माफ हुन्छ ।

पुस्तक पाइने ठेगाना—

सुब्बा होमनाथ केदारनाथ,

हितैषी कम्पनी

बाराणसी १ ( बनारस सिटी । )


CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सैकड़ौं वर्ष देखि चलि आएको पुरानू असली—

## स्वर्गवासी सुब्बा होमनाथ उपाध्यायकृत




# रामाश्वमेध काण्ड

शेष वात्स्यायन सम्वाद, शेष द्वारा श्रीरामको उत्तरार्ध जीवनको वर्णन।

वात्स्यायन् ऋषिलेकुनै दिनमहाँ ❀ शेष्का चरण्मा परी
श्री सीतापतिको चरित्रकन खुब् ❀ सुन्न्या इरादा गरी
हातजोरी बिनती गर्‍या जगतको ❀ सृष्टी भयाको पनि
आज्ञा भो पछि फेर् जगत् लय भई ❀ जाला यसोरी भनी १
राजाहेरु पनी अघी पृथिविमा ❀ जो जो प्रतापी भया
आज्ञा भो सबको चरित्र पहिले ❀ राखी म माथी दया
मंङ्गल्दायक रामको पनि सबै ❀ अद्भूत् चरित्रै यहाँ
पुर्नाधैकन भन्नु भो हजुरले ❀ मेरा अगाडी महाँ २
रावण् मारिसक्या पछी रघुपती ❀ फेरी अयोध्या गई
क्यै काल् राज गरेर फेरि आपनाइ ❀ सूनेर दिक्दार् भई
सीताजीकन त्याग् गरेर पछि फेर् ❀ एक् अश्वमेधै यहाँ
गर्नू भो मनि भन्नु भो हजुरले ❀ मेरा अगाडी महाँ ३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

संक्षेप्ले त सुन्या तथापि रघुनाथ् ❀ ज्यूको चरित्रै जती
बिस्तार् पूर्वक सुन्लाइ आहिले ❀ मन् भो मलाई अती
बात्स्यायन् ऋषिकोकुरा सकलयो ❀ सुन्नू भएथ्यो जसै
शेष्ले खूशि भएर लौ सुन भनी ❀ आज्ञाभयोफेर्तसै ४
ब्रह्मर्षे ! सुन रामचरित्र जति हो ❀ सम्पूर्ण भन्छू भनी
भन्नै सक्छु कहाँ म भन्छु तर लौ ❀ जो जान्दछू त्यो पनि
एती बात सुनाइ नेत्र दुइ झट् ❀ चिम्लेर शेष्ले तहाँ
बयैकालदयानूरघुनाथको गरिलिया ❀ एकाग्रभै मन्महाँ ५
खोली फेरि नयन् उसै बखतमा ❀ भक्ती मनैमा धरी
भन्नूभो ऋषिका अगाडि खुशि भै ❀ गद्गद् बचन्ले गरी
हेबात्स्यायनजी ! जसोरि हुनगो ❀ रामाश्वमेधै यहाँ
बिस्तार् पूर्वकले म भन्छु सुनिल्यौ ❀ धैर्यै गरी मन्महाँ ६
सीता त्यागि सक्या पछी रघुपती ❀ मानू मनुष्यै सरी
राज्हुन्थ्योसबकाम छोडिकनाठिक् ❀ सुर्ता पर्या झैं गरी
सोही औसरमा ऋषीश्वरहरू ❀ आई हजारौं तहाँ
बस्थ्यासब्इतिहास्सुनाइरघुनाथ् ❀ ज्यूका हजूरै महाँ ७
धेरै थोक् इतिहास् सुनेर खुशि भै ❀ रामचन्द्रजी ले पनि
सन्तान् रावण हो कउन् पुरुषको ❀ आज्ञाहवस्त्योभनी
सोधी बक्सनुभो र तेस् बखतमा ❀ साम्नेअगस्तीथिया
सन्तान्रावणहो पुलस्त्य ऋषिको ❀ भन्न्या सुनाइदिया ८

अगस्ति ऋषि द्वारा रावणको जीवन वर्णन ।

हे राम ! त्यो ऋषिपुत्र हो तर पनी ❀ मत् राक्षसैको सरी
लाग्यो रावण गर्न राक्षसि तरफ् ❀ पैदा हुनाले गरी
ब्रह्माको बर पाइ फेरि अरुले ❀ जीती न सक्नू भई
सब प्राणीहरुलाई दुख् आतिदियो ❀ चौधै भुवनमा गई ९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रावणले अति दुख दिंदा अमरगण ❀ साह्रै सकस्मा पर्‍या
त्यस्को नाश हवस् भनेर भगवान् ❀ ब्रह्माजिको स्तव गर्‍या
ब्रह्माले स्तुति देवता सकलको ❀ सुन्नु भएथ्यो जसै
साह्रै खुशि भई प्रकट हुनुभयो ❀ सबका अगाडी तसै १०
साह्रै दुःख दियो भनेर सब बात् ❀ सूनी दयाले तहाँ
रावण्को कसरी विनाश् गरुँ भनी ❀ चिन्ता गरी मन्महाँ
इन्द्रादी सब देवता कन लिई ❀ कैलाश्पुरीमा पनि
पाल्नूभो शरणौ सदाशिवाजिको ❀ पनैंपर्‍योलौ भनी ११
पुग्या कैलाशैमा सकल अमरैगण्हरु जसै
ति सब्ले शंकर्का चरणयुगको ध्यान् गरि तसै
खुशि भै भक्तीले गरि शिर महाँ अञ्जलि धरी
स्तुति गर्नै लाग्या जगतगुरुको फेर् उहि घरी १२
नयन् छन् तीन् जस्का रवि शशि हुताशन् ति खुलन्या
अनेक् सर्पै भूषण् शिर भरि शरिर्मा ति झुलन्या
जटादेखी गङ्गा झरि पृथिविमा जाइ परन्या
शरण् बक्स्या जावस् हर! त्रिपुर संहार गरन्या १३
सदा बायाँ कास्का उपर जगदम्बा कन लिन्या
हलाहल् आफूले पिइ जगत रक्षा गरिदिन्या
हजुर्को हे शम्भो! अधिक दुख पर्दा चरणमा
सबै हामी पर्‍यौं अब लिनुहवस् लौ शरणमा १४
नजर्होस् लौ हामीहरु शिर जमिन्मा धरि धरी
नमस्कार् गर्छौं हे शिव! हर! त्रिलोचन्! धरि धरी
भनी सारा देवताहरू मिलि जसै स्तव् गरिलिया
खुशी भै कैलाश्नाथ् पनि प्रकट भै दर्शन दिया १५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

दरशन जब बक्स्यो पार्वतीनाथ आई
अमरगण सहित् मै सामु ब्रह्माजि जाई
बिनति गरिदिया, नाथ् ! देवगण् दुःख पाई
हजुर सँग इ आया सब् शरण् पर्न लाई १६
कुमति अति भयाको दुष्ट यो रावणौले
हरण गरिदियो भाग् देवताको बलैले
यस बखत कृपानाथ् ! त्यो अधम्लाइ याहाँ
बध गरन उपायै भन्नुहोस् हामि माहाँ १७
धुमि धुमि अति विद्युत् रावणौले गऱ्याको
त्रिभुवन भरिका सब् प्राण दुख्मा पऱ्याको
सुनिकन शिवजीले देवतालाइ ताहाँ
सँग लिइ हरिका फेर् जानु भो धाम माहाँ १८
पौंची धाम महाँ जनार्दनजिका ❀ पाऊ विषे मन् धरी
लाग्या योस्तुतिगर्न देवमुनिगण् ❀ जम्मा भई त्यो घरी
हे माधव् ! जय हे हरी ! हजुरका ❀ चाकर्हरूको यहाँ
यो सब् दुःख छुटाइ बक्सनुहवस् ❀ जाऊँशरण्माकहाँ१९
रूप्गुण नाम्हरु छैनक्यै हजुरको ❀ लीला गरी तै पनि
मेरो एहि सगुण्स्वरुप् कन भजी ❀ भक्तैतरुन् सब् भनी
बरौंश्याम्भुजचार् कमल्नयनको ❀ सुन्दर् स्वरूपै धरी
पालन्गर्नु हुन्याजगत उहि स्वरूप् ❀ ध्यान्गर्दछौंयोघरी२०
बन्माला र किरीट कौस्तुभमणी ❀ शोभाशरिर्कोदिन्या
शंखै चक्र गदा र पद्म अनि फेर् ❀ चार्वाहुलीमालिन्या
बायाँ काख महाँ जगत् कि जननी ❀ लक्ष्मीजिलाई लिई
पालन्गर्नुहुन्या जगत् उहिस्वरूप ❀ ध्यान्गर्दछौंमन्दिई२१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

प्रह्लादूलाइ गजेन्द्रलाइ पहिले ❀ दुःखमापरयाछन्भनी
उद्धार गर्नुभयो जउन् तरहले ❀ हामीहरूको पनि
उद्धार गर्नुपर्‍यो यहाँ दश-बदन् ❀ रूप् कालसाँपूलेधरी
आँटयोनिल्न नहीं मन्यासहजमा ❀ चौधैभुवन् योधरी २२
यस्तैरितसितलेअनेकस्तुतिगर्‍या ❀ धौताहरूले जसै
सन्तोष् भैकन गर्नुभो प्रभुजिले ❀ आकाशबाणी तसै
हे धौताहरु हो! अवश्य बुझिल्यौ ❀ रामभैअयोध्यामहाँ
बध् गर्नैं अवतार् लिन्याछु मइँले ❀ तस्रावणैकोयहाँ२३
ऐल्हे जल्दि यहाँ सबै तिमिहरू ❀ धौता जती छौ गई
अंशै लीकन जन्म ल्यौ पृथिविमा ❀ सब्रृक्ष बानर् भई
यो आज्ञा हरिको सुनेर ति सबै ❀ धौताहरूले पनि
जन्मे अंश लिई लिई पृथिविमा ❀ सब्रृक्षबानर्बनी२४
सोहीबात् तिमिले पुर्‍याउन भनी ❀ औतार ऐल्हे लियौ
मारी रावणलाइ सब् जगतको ❀ आपत् छुटाई दियौ
त्यो रावण्पनिहो पुलस्त्यऋषिको ❀ नाती भनीफेर्तहाँ
बिन्ती पारिलिया अगस्ति ऋषिले ❀ राम्काहजूरैमहाँ२५

श्रीरामको सन्ताप अगस्ति ऋषिको सान्त्वना र अश्वमेध यज्ञको वर्णन।

यो बात् सुनेर मनमा अति ताप् पर्‍याका
आँशू दुवै नयनमा बहुतै धर्‍याका
क्या काम् गरेछु भनी मोह भएर ताहाँ
गिर्दाभया रघुशिरोमणि पृथ्वि माहाँ २६
देखेर मूर्छित तहाँ रघुनाथलाई
फेरी अगस्ति ऋषि जल्दि नगीच जाई
आफ्ना दुवै करकमल् जलले भिजाया
प्रेमले मुसारि रघुनाथ् कन झट् जगाया २७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ताहाँ अगस्त ऋषिले पनि जल्दि फेरी
बिन्ती गऱ्या रघुपती तिर फर्कि हेरी
कुन् कारणे भइ यहाँ यति ताप् गऱ्याको
आज्ञाहनस् सकल ताप् मनमा पऱ्याको २८
बिन्ती एति सुनी अगस्तिऋषिको ❀ सन्ताप्गरी मन्महाँ
मुस्केरा मुखदेखि हालि रघुनाथ् ❀ भन्दाभए फेर् तहाँ
हे ब्रह्मर्षि ! कउन् अधम् छ मसरी ❀ ब्रह्मर्षिकुल् नाश्गरी
इक्ष्वाकु कुलमा कलङ्क भइले ❀ पार्दो भयाँ यो धरी२९
जुन् ब्राह्मण् कुललाइ धन्दिइ पुजा ❀ गर्छन् सबै जन्हरू
सोहीब्राह्मणकुल्विनाश् गरिदिन्या ❀ मेरोबयान् के गरूँ
ब्राह्मणलाइ अनाच्य बाणिगरिसले ❀ जो गर्छ दुर्जन् यहाँ
चौधै कुल् गइ गिर्छ तेस् अधमको ❀ सब्कुम्भिपाकैमहाँ३०
मूल् हुन् वेद् सबधर्मको जगतको ❀ ती वेदका मूल् पनि
भन्छन् सज्जनहेरु सब् जन यहाँ ❀ ब्राह्मण्हरू हुन्भनी
तेस्तोब्राह्मणकुल्विनाश्गरिदियाँ ❀ मैले कुलाङ्गार् भई
मेरो कुन् गति हुन्छ गिर्छु अबलौ ❀ कस्ता नरक्मागई३१
सारा तीर्थ र दान ब्रतहरु यहाँ ❀ देख्दीन मैले भनी
ब्रह्मघ्नेहरुलाइ निस्कृति हुने ❀ कस्तै गरून् ता पनि
यैरित्का असुधेर् अनेक् तरहका ❀ राम्चन्द्रजीले तहाँ
लाग्यागर्नविलाप्अगस्तिऋषिका ❀ साम्ने अगाडीमहाँ३२
माया मानिसको गरेर अति ताप् ❀ रामले गऱ्याको जसै
सून्या सब्गति अगस्तले र तहिंफेर् ❀ बिन्ती चढाया तसै
हे नाथ् ! दुष्ट विनाश्गरी हजुरमा ❀ त्यो ब्रह्महत्या कहाँ
लाग्थ्यो नाहक गर्नुहुन्छ किनयो ❀ सन्ताप्हजुरलेयहाँ३३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

साक्षात् ईश्वरपूर्ण सब् जगतका ❀ कर्ता र हर्ता भई
चैतन्यै तिमि गर्दछौ घटघटै ❀ प्राणीहरूका रही
हेनाथ् ! नाउँ फगत् सदा हजुरको ❀ जोजन्स्मरणगर्दछन्
कस्तै पापिहउन् तथापि ति पुरुष् ❀ संसारपार् तर्दछन् ३४
त्यो रावण् पनिहो कहाँ असुरलौ ❀ सेवा हजुरकै गरी
बस्थ्यो द्वार महाँ उसै बखतमा ❀ कारण् कुनै एक्परी
श्राप् पायो सनकादिको र अहिले ❀त्योजन्मत्यस्लेधर्यो
मारीबक्सनुभो कृपा गरि र पो ❀संसार्सहज्मातर्यो३५
बिन्तीएति मुनी अगस्ति ऋषिको ❀ राम्चन्द्रजीले तहाँ
आज्ञा गर्नुभयो अनेक् तरहको ❀ सन्ताप्गरी मन्महाँ
ज्ञानाज्ञान् दुइ पापगर्छ दुनियाँ ❀ अज्ञानको पाप् यहाँ
पश्चात्ताप गरिलियो यदि भन्या ❀नाश्हुन्छसंसार्महाँ३६
ज्ञानै पूर्वक पाप् जउन् जनहरू ❀ गर्छन् उनै जन् मरी
भोग्गर्छन् यमदण्ड खुब्सिततहाँ❀ ठूला नरक्मा परी
ज्ञानैपूर्वक ब्रह्मघात् गरिलिये ❀ योपाप् कुन् रीत गरी
निस्तार् हुन्छउपाय केहिछ भन्या❀ आज्ञाहवस् योघरी ३७
यस्तो प्रश्न तहाँ मनुष्य सरिभै ❀ रामले गर्याको सुनी
सम्बोधन् गरि रामलाइ तहिंफेर् ❀ भन्छन् अगस्ती मुनी
हेराजन्! सुनिबक्सियोस् हजुरले ❀ जो ब्रह्मघात् गर्दछन्
तेस्ताले पनि अश्वमेध् गरिलिया ❀ संसार पार् तर्दछन् ३८
अश्वैमेध् पहिले गरी हजुरका ❀ बाजे दिलीप्ले यहाँ
ठूलो कीर्ति चलाइ तिन् भुवनमा ❀ पौंच्या परम्पद् महाँ
फेरी एक् सय यज्ञ यै गरिलिया ❀ श्री इन्द्रजीले जसै
राजा स्वर्गपुरी विषे हुनगया ❀ धौताहरूको तसै ३९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यै यज्ञै मनुले र फेर् नहुषले ❀ राजा सगर्ले गर्‍या
आज्तक् कीर्ति छँदैछती सकलको ❀ चौधै पुरुष् पार्तर्‍या
नष्टै ब्रह्म बधादि पाप् गरिदिन्या ❀ यो यज्ञ ऐल्हे गरी
ठूलो कीर्ति चलाई बक्सनु हवस् ❀ सारातिनैलोक्भरी ४०
यस्तोबिंतिसुनी अगस्तिऋषिको ❀ राम्चन्द्रले फेर् तहाँ
सोधीबक्सनुभो कउन् बिधि गरी ❀ त्यो यज्ञ गर्नू यहाँ
फेरी अश्व पनी कउन् तरहको ❀ चाहिन्छ कुन्रीत्गरी
छोड्नूपर्दछ त्योबिधान् भकनसब् ❀ आज्ञाहवस् योधरी ४१
रामचन्द्रको याति बचन् जब सुन्न पाया
फेरी अगस्त ऋषिले पनि बिन्ति लाया
हे नाथ् ! मुनीलिनुहवस् मइँले भन्याको
चाहिन्छ अश्व् अति सुन्दर रूप् बन्याको ४२
जस्को छ लाल् मुख पुछर् पनि पीत बर्णौ
जो फेर् सफेद् सकल रङ् भई श्यामकर्णौ
जो चल्छ बेग् पवन झैं गरि पृथ्बि माहाँ
चाहिन्छ यज्ञ गरदा उहि अश्व याहाँ ४३
बैशाखी पूर्णिमाका दिन बिधि सित त्यो यज्ञ प्रारम्भ गर्नू
पत्रै सुन्को तयार् एक् गरिकन हयका शीरमा सोहि धर्नू
फेर्आफ्नू कीर्तिनाम्बल्हरू जतिसबत्यैपत्रमा लेखिलीनू
पूजा शास्त्रै बिधान्ले गरिकन पछिफेर् अश्वत्यों छोडिदीनू ४४
त्यो घोड़ा जान्छ जाहाँ पछि पछि उसका बीर्हरू धेर जाउन्
जुन्बिर्ले धर्छतेस्का सँगलडि जितित्यो अश्वलाई फुकाउँन्
यै रितले बर्ष दिन् तक् घुमिघुमि पृथ्बीभर् परिक्रम् गराई
ब्रतकोसंम्पूर्णपारीसकिकन पछित्योअश्वल्याउनाफिराई ४५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बर्षै दिन् तक् नियम् यै गरिकन यजमान्ले मृगचर्म माहाँ
सुत्नू फेर् ब्रह्मचर्यै धरिकन गइ त्यै यज्ञभूमी छ जाहाँ
दुःखी कङ्गाल् गरिब्ले चिजबिजहरु जो प्रार्थना गर्छ आई
धन् वस्त्रै भोजनादीहरु दिइकन खुश् गार्दैनू तेसलाई ४६
एहीहो अश्वमेध्को बिधि सकल कह्या जो पुरुष् एहि गर्ला
पाप्को सब्नष्टपारी त्रिभुवन बिचमा नाम् ठुलो तोहिधर्ला
हे राम् ! बिन्ती म गर्छू गरिकन अहिले अश्वमेध् यज्ञ यहाँ
मर्यादा कीर्ति थामी पछि हजुर पनी जानुहोस् धाम महाँ४७
यस्तो कुरा सुनि तहाँ ऋषिलाइ हेरी
रामको हुकुम् हुनगयो तहिं जल्दि फेरी
त्यो चालको म सँग अस्तबलै भरीमा
घोडा छ छैन गई हेरु यसै घरीमा ४८
आज्ञा एति सुनेर त्यै बखतमा ❀ अत्यन्त खूशी भई
घोडा हेर्न भनेर रामकन लिई ❀ फेर् अस्तबल्मा गई
जो जो अश्व थिया अगस्ति ऋषिले ❀ होरीलियाथ्या जसै
देखी चित्र बिचित्र अश्वहरु सब् ❀ आश्चर्य मान्या तसै४९
लाखौं एकतिरशोराका मुलुकका ❀ घोडाहरु छन् तहीं
लाखौं एकतिरफेर् बिचित्रचिनियाँ❀ टाँगन्हरु छन् कहीं
हज्जारौं तहिं श्यामकर्ण पनिछन् ❀ घोडाहरु ती जसै
सारा देखि लिई अगस्ति ऋषिले ❀ आश्चर्य मान्या तसै५०
फेरी श्री रघुनाथलाइ खुशि भै ❀ भन्छन् अगस्ती तहाँ
यज्ञै लायक अश्व हे रघुपते ! ❀ धेर् छन् तबेला महाँ
त्यो यज्ञै यदि गर्न मन्सुन भया ❀ खूब् धैर्य मन्मा धरी
चाँडै लौ गरिबक्सियोस् हजुरले ❀ सामग्रि जम्मागरी५१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
श्री रामचन्द्रको अश्वमेध यज्ञ प्रारम्भ ।

बिन्ती तहाँ यति सुनी रघुनाथ फेरी
सर्दाम् तयार गरि बक्से न गरेर देरी
सङ्गमा अगस्ति ऋषिलाइ लिएर ताहाँ
पाल्नुभयो सरयुका पनि तीर माहाँ ६२

पुग्नु भो रघुनाथ् जसै सरयुमा ❀ सुन्का हलोले गरी
चार्योजन् भुमिजोति शास्त्रविधिले ❀ शुद्धै गर्‍या त्यै घरी
अश्वैमेध् गरदा जउन् तरहको ❀ चाहिन्छ कुराडै तहाँ
पार्‍या जल्दि तयार् वशिष्ठ ऋषिले ❀ खूशी सई मन्महाँ ६३

नारद् कश्यप अङ्गिरादिहरु जो ❀ ठूला ऋषिश्वर् थिया
ती सब्लाइ पनि वशिष्ठ ऋषिले ❀ निम्ता पठाई दिया
निम्ता पाइ खुशी भई जगतका ❀ सारा ऋषीश्वर् तहाँ
आया शिष्यहरू लिएर सँगमा ❀ राम्का हजूरै महाँ ६४

श्रीराम्चन्द्रजिले पनी ति ऋषिका ❀ पाऊ विषे शिर् धर्‍या
हस्तार्घादि गरेर ती सकलको ❀ पूजा विधान्ले गर्‍या
सुन्दर् आसनमा बसाइकन फेर् ❀ गाई सुनरौं पनि
प्रत्येक ती ऋषिलाइ अर्पण गर्‍या ❀ खूशी गराऊँ भनी ६५

फेरी प्रश्न गरी तहाँ कुशलको ❀ सब्का अगाडी गर्ई
हात् जोरीकन केहि काल् रघुपती ❀ बस्ता भया खुश् भई
सोही औसरमा त धर्म कुन हो ❀ वर्णाश्रमैको भनी
प्रश्नै ती ऋषिहेरुका सँग गर्‍या ❀ राम्चन्द्रजीले पनि ६६

चारै आश्रमका धर्मको वर्णन ।

त्यो प्रश्नै रघुनाथको सुनिसक्या ❀ सारा ऋषिले जसै
जो हो धर्म गृहस्थको सकल त्यो ❀ बिन्ती चढाया तसै
वेदाध्यायन यज्ञयाग् अतिथिको ❀ सत्कारनियम्मा रही
गर्नूपर्दछ यत्नपूर्वक सदा ❀ ब्राह्मण गृहस्थी भई ६७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सेवा नीच्हरुको कदापि न गरुन् ❀ कस्तै ति ब्राह्मण्हरू
दुखमा पर्न गएर खान नामिले ❀ भिक्षा गरून् लौ बरू
आपद्मा पनि थाम्दछन् कुलधरम् ❀ जुन् ब्राह्मणौले यहाँ
तेस्ता ब्राह्मण मुख्य हुन् बुझिलिनू ❀ साराजगत्भर्महाँ ५८
कस्तै सुन्दरि देखिउन् तर पनी ❀ जो छन् पर स्त्री जाति
माता मैं ठहराइ वयै पनि विकल् ❀ गर्दै न गर्नू मति
आफ्नीस्त्री सहवास्पनी ऋतुमती ❀ हुन्छे बखत्ले जसै
पैल्होतिन्दिनत्यागिसोह्रदिनतक् ❀ भोग्गर्नु सङ्मातसै ५९
सोह्रैदिन्पछिभोग् कदापि नगरुन् ❀ त्योसोह्र दिन्मा पनि
श्राद्धे व्रत् अरु धर्मका परबमा ❀ कुत्सित् करम्होभनी
सम्भोग्स्त्रीसितगै कदापिनगरुन् ❀ जो दुष्टले गर्दछन्
साक्षात्तीपशु हुन्मर्यापछितिसब् ❀ नर्कै विषे पर्दछन् ६०
धार्मिक्दोषरहित् कुलिन्पुरुषकी ❀ कन्या विवाहै पनि
गर्नूपर्दछ पुत्र खातिर फगत् ❀ रक्षा हवस् कुल् भनी
सम्भोग्का बखतै ति दम्पति दुवै ❀ चिन्ताअसल्काम्गरी
प्रीतीपूर्वकभोग्विलास्गरिलिउन् ❀ सन्तानमा मन्धरी ६१
जस्ले एति नियम् गरेर रहला ❀ तेस्ता पुरुष्को यहाँ
सन्तान्धार्मिक खुब्प्रतापि बहुतै ❀ हुन्छन् जगत् भर् महाँ
यो शास्त्रै विधिलाइ छाडिकन जो ❀ काम्का वशैमा परी
स्त्रीको सङ्गत गर्छ पुत्र उसका ❀ हुन्छन् पशूकै सरी ६२
अन्नै जल्हरुले पनी अतिथि भै ❀ जो आउँछन् घर्महाँ
गर्नैपर्छ गृहस्थले खुशि भई ❀ खातिर्तिसब्को यहाँ
जस्का घर्गइ खालिफिर्छ अतिथी ❀ दुःखित् मनैले अती
पुण्यै नाशभइजान्छ सब्जनमभर ❀ तेस्ले गरेको जती ६३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जो चिज् बन्दछ देन पितृ ग्रातिथी ❀ सब्लाइ पैल्हे दिई
बाँकी बाँच्दछ जो उ चिज्कन जहान्❀ सब्ले बराबर् लिई
खानूपर्छ गृहस्थ भैकन सदा ❀ कोही गृहस्थी भई
खान्छन् कुक्कुरझैं मर्‍या नरकमा ❀गिर्छन्तिसब्जन्गई ६४
षष्ठी अष्टमिमा नलाउनू यहाँ ❀ तेल्क्वै पुरुष्ले पनि
पूर्णौमासि चतुर्दशी दुइ तिथी ❀ मासू निषेध् हो भनी
त्यागनूफेरपनि त्यागनुपर्छजनले ❀ एकादशीमा यहाँ
अन्ने भक्षरा गर्नलाइ विधि यै ❀ देखिन्छ शास्त्रै महाँ ६५
सन्ध्याकालमहाँनखानुकहिल्यै ❀ फेर् बिस्तरामा गई
खानू छैन कदापि कोहि जनले ❀ म्लेच्छै समान्को भई
ग्राफ्नू खुब्गुराको बयान्सकलले ❀ गर्छन् तथापी पनि
गर्नूछैन कदापि शेखि मनले ❀ ठूलो रहेछू भनी ६६
शेखी गर्दछ जो पुरुष् मनमहाँ ❀ ठूलो छु भन्न्या भई
त्योजन् भूपति नैहवस् पनि तिसद् ❀ गर्दै नगर्नू गई
जो अर्काकन मर्म पारि बहुतै ❀ छेड्का कुरा गर्दछन्
ती सब् दुर्जन हुन् मर्‍यापछि नरक्❀तेस्तैपुरुष् पर्दछन्६७
एही शास्त्र बिधि बिचार् गरि यसै❀माफिक् नियम्मा रही
बस्नू पर्दछ धर्म थामि कुलको ❀ सब्ले गृहस्थी भई
पुत्रोत्पादन भो जसै जतनले ❀ त्यो पुत्रलाई यहाँ
बिद्याभ्यास गराउनू दिन दिनै ❀ प्रीतीलिई मन्महाँ६८
होश्योस्लायक त्योजसै उहिनखत्❀ त्यो पुत्रलाई पनि
कन्या खोजि बिवाहगर्दिनु असल्❀ रक्षा हवस् कुल् भनी
फेरी त्यै सुतलाइ सौंपि घरको ❀ धन्दा खुशिले अती
जाउन् जङ्गलमा ति दम्पति दुवै ❀ राखी धरम्मा मति ६९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे राम् ! यै रितले जउन् जन यहाँ ❀ बस्छन् स्वधर्मै गरी
जान्छन् मुक्त भएर फेर् सकल ती ❀ संसार सागर् तरी
भन्न्या यै रितका अनेक् तरहका ❀ बार्ता धरम्का अरू
बिन्ती श्री रघुनाथका हजुरमा ❀ पार्थ्याऋषीश्वर्हरू ७०
सोही औसरमा बसिष्ठ ऋषि झट् ❀ रामका हजुर्मा गया
सम्बोधन् गरि रामलाइ तहिं फेर् ❀ यो बिन्ती गर्दाभया
हे राम् ? यज्ञशुरू हुन्या बखत भो ❀ ऐल्हे तयारी भई
छोड्नू पर्दछ अश्व पूजन गरी ❀ चाँडो हजुर्ले गई ७१
जोजोब्राह्मणछन् तिसब्कन पनी ❀ पूजा बिधान्ले गरी
प्रत्येक् कार्य महाँ लगाउँनु पर्‍यो ❀ पाल्नूहवस् यै घरी
दुक्खित अन्ध दरिद्रहेरू जतिछन् ❀ यो यज्ञभूमी महाँ
तिन्कोदिल्पनिखुश्गराउनुहवस्❀बक्सस्दिईधेर्यहाँ ७२
सुन्कोएक्प्रतिमूर्ति जानकिजिको❀ जल्दी तयारी गरी
फेरी एक् मृग-शृङ्गलाइ अहिले ❀ आफ्ना कटीमा धरी
हातमा दण्ड कमण्डलू लिईसदा ❀ धैर्यै गरी मन्महाँ
सुत्नू पर्दछ वर्षभर् हजुरले ❀ खालीजमिन्मायहाँ ७३
यज्ञको शुरू गर्नुपर्छ रघुनाथ् ! ❀ चाँडो हजुर्ले भनी
बिन्ती पारिलिंदा उठेर खुशिभै ❀ रामचन्द्रजीले पनि
आज्ञा लक्ष्मणलाइ बक्सनु भयो ❀ हे भाइ ! लौ यै घरी
घोड़ा शोभित पारि फौज्हरू गई ❀ ल्याउन् तयारी गरी ७४
लक्ष्मण्ले रघुनाथको यति हुकुम् ❀ सूनी लिएथ्या जसै
सेनानायक कालजित्कन तहाँ ❀ आज्ञा गर्‍या फेर् तसै
हे सेनापति ! लौ गएर तिमिले ❀ उर्दी तुरुन्तै दिई
साराफौज् अहिले तयार गरियहाँ ❀ आऊ सँगैमा लिई ७५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

उर्दी माफिक अश्वलाई पनि फेर् ❀ चाँडो तयारी गरी
ली आऊ भनि उर्दि यो ताहिं दिए ❀ लक्ष्मणजिले त्यै घरी
उर्दी लक्ष्मणदेखि पाइकन त्यो ❀ सेनापतीले तहाँ
ल्याया सैन्य समेत् गएर हयमद् ❀ त्यो यज्ञभूमि महाँ ७६

अश्वमेध यज्ञको घोडाको वर्णन ।

सुन्को तार समानको पुछरफेर् ❀ठिक्नील्मणीकासरी
कानैको रँग फेरि माणिक सरी ❀ रँङ्को मुखैले गरी
सोह्रसुन्दर अश्वफेर् मणिजडित् ❀ माला गलामा धरी
नाच्थ्योघेर् घुँगुँराबजाइ सुनका ❀ साह्रै शुसोभितगरी ७७

वरिपरि सब फेरी सैन्यले घेरियाको
बहुत गुनति जन्ले चाँवरै फेरियाको
उहि बखत महाँ त्यो अश्व ल्याएर तहाँ
फउज अधिक आया यज्ञ भुमी छ जहाँ ७८

हय रथ गज पैदल्ले सहित् तेज धारी
हुकुम शिर धर्याका रामका फौज भारी
पराान पटह भेरी शंखको शब्द गर्दै
उहि बखत ति आया हातमा शस्त्र धर्दै ७९

कस्तूरी लेपि छाती उस उपर महाँ रत्नका हार् झुल्याका
सुन्काकुण्डल्किरीट्फेर्धारिकनमुहूडादेखियाकाखुल्याका
यस्ता राजा हजारौं रथ उपर चढी यज्ञको अश्वलाई
रक्षा गर्नै निमित्तक् उहि बखत गए रामको उर्दि पाई ८०

ती सब् फौज्हरूले खाजित् हुनगयो❀ त्यो यज्ञभूमी जसै
काँप्यो थर्थरि पाउका दमकले ❀ साराजमीन् भर्तसै
शोभा धेर गरेर सब् नृपतिका ❀ छत्रहरूले गरी
ढाक्यो सूर्यकिरणपनी उहिबखत्❀ त्यो यज्ञभूमी भरी ८१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

देखी फौज्हरूले सबै चारिपरी ❀ घेरा गराई तहाँ
ल्यायाको हयलाइ शोभित गरी ❀ त्यो यज्ञभूमि महाँ
साह्रै खुशि भई बशिष्ठसित गै ❀ रामचन्द्रजीले पनि
आज्ञा गर्नुभयोगुरो ! जतिछ काम् ❀ गर्नुहवस् लौ भनी८२
यो आज्ञा सुनि रामलाइ सुनकी ❀ सीताजिका सङ्ग धरी
संकल्पैपनि ब्रह्मबध् जनितपाप् ❀ नष्टै हुने रित् गरी
शास्त्रैका बिधिले बशिष्ठ ऋषिले ❀ पैल्है गराई तहाँ
लाग्याफेर् ऋषि सब्लिई हवनको❀ काम्गर्न यज्ञैमहाँ ८३
यज्ञाचार्य बशिष्ठजी हुनगया ❀ त्यो यज्ञमा खुश् भई
गर्थ्याजोपरिआऊँथ्यो सकलकाम् ❀ ताहीं अगस्ती रही
द्वार् बन्धन् सब यज्ञको अघिगरी ❀ फेरी अगस्ती पनि
लागे गर्न हवन् गएर हय त्यो ❀ छोड्न्याबखत्मोभनी८४
सुन्दर अलङ्कार लगाइ अङ्गमा
आएर नारीहरू एक सङ्गमा
दह्यक्षताले गरि अश्वलाई
पूजन् गर्‍या मङ्गल गान गाई ८५
फेरी निराजन् गरि धुप् जलाया
खुस्ती सबै यज्ञ भरी चलाया
माला फुलैको लिइ अश्वलाई
लाई दिया ती सब नारि जाई ८६
पूजा यै रितले जसै गरिसके ❀ नारीहरूले तहाँ
सुन्को पत्र लिई अगस्ति ऋषिले ❀ फेरी उसै बिच्महाँ
रामको नाउँ र कुल् पराक्रम जउन्❀ रामले गर्‍याका थिया
सोही पत्र उपर् रचित् गरि असल् ❀ श्लोक्बब्द्धलेखीदिया८७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

श्लोक्‌को अर्थयही थियो रघुकुलै ❀ बिच्‌मा अयोध्या पति
राजा श्री दशरथ् भया त्रिभुवनै ❀ भर्‌का प्रतापी अति
कोशल् राजकुमारि मुख्यमहिषी ❀ तिन्‌कीथिइन्‌सब्‌महाँ
तिन्‌का रत्न समानका उदरमा ❀ राम्‌चन्द्रजन्म्यायहाँ ८८
धौता दानव यक्ष राक्षसहरू ❀ जस्‌का चरण्‌मा परी
आज्ञा माफिक गर्दछन् सब कुरा ❀ मन्‌मा ठुलो डर् धरी
यस्ता हुन् रघुनाथ् उनै प्रभुजिले ❀ यो अश्वलाई पनि
छोडया यज्ञ ठुलो म गर्छु अहिले ❀ एक् अश्वमेध भनी ८९
जस्‌ले बीर् हुँ भनेर ठान्छ मनले ❀ आएर त्यो बीर् यहाँ
पक्रोस् यो हय सक्‌भया नाहिंभन्या ❀ कौडी लिई सङ्ग महाँ
यज्ञै हुन्छ जहाँ उसै स्थल बिषे ❀ राम्‌का नाग्‌मा गई
जोडिन्छन्‌रघुनाथ् हुकुम्‌उहिगरोस्‌ ❀ चाकर्‌समान्‌कोभई ९०
रक्षा यो हयलाइ गर्न अहिले ❀ शस्त्रै लिई हातमा
भाई श्री रघुनाथका अति ठुला ❀ धेर् बीर् लिई साथमा
धर्ला यो हयलाइ जान जसले ❀ तेस्‌लाइ युद्धै गरी
जान्छन् शीर हुटाउनाकन भनी ❀ शत्रुघ्नजी यो धरी ९१
यै रितले प्रभुको प्रताप्‌हरु सबै ❀ लेखेर पत्रै महाँ
त्यो पत्रै हयका ललाट बिचमा ❀ बाँधेर फेरी तहाँ
वायूका सरि बेग्‌गरी कन सदा ❀ चल्ने त्रिलोकै भरी
त्यो घोड़ा रघुनाथको ति ऋषिले ❀ छोड्दा भया त्यै घरी ९२
आज्ञा भो रघुनाथको उहि बखत् ❀ शत्रुघ्नलाई पनि
हे भाई ! हयका गएर सँगमा ❀ रक्षा गरे खुब् भनी
रस्तामा तिमिलाइ मङ्गल हवस् ❀ शत्रुहरू छन् जउन्
तिम्रा सामु महाँ परया पछि सबै ❀ चाकर्‌समान्‌काहरुन् ९३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मूर्छित फेरि भिरथ् भएर डरले ❀ भाग्नेहरूको पनि
फेरि पर्दछ आइ जो शरणमा ❀ तिम्रो शरण्छू भनी
तेरता शत्रु हउन् तथापि ति उपर् ❀ वयैशस्त्रकोत्यागगरी
तिन्कोप्राणकहिल्यैनहर्नुतिमिले ❀ धर्मै तरफ् मन् धरी ९४
अर्काका धनमा र फेरि अरुका ❀ नारीहरूमा अति
हे भाई! सुन भन्छु वबै दिन पनी ❀ तिम्रो नजावस् मति
पूज्यै जन्हरुको नगर्नु अपमान् ❀ गौ विप्र वैष्णव् जाति
देखिन् छन् सबलाइ पूजन गर्‍या ❀ राखेर भक्ती अति ९५
हे भाई! इ सबै कुरा यस वखत् ❀ मैले भन्याको जाति
कत्तीकेहि न बिर्सिकाम्गरिलिया ❀ कल्याण मिल्ला अति
अर्ती एति दिएर भाइकन फेर् ❀ सङ्भाजउन्विरथिया
ती सब् तर्फ नजर गरेर रघुनाथ् ❀ जीलेहुकुम् योदिया ९६

भरतका पुत्र पुष्कलको साहश र धेरै देशका राजाहरूको आत्म समर्पण।

हे वीर् हो! तिमिहेरुका बिचमहाँ ❀ शत्रुघ्नका सङ्ग गई
सक्छौ रक्षण गर्न लौ मन कउन् ❀ वीर् चक्र-रक्षक् भई
यो आज्ञा रघुनाथको जब सुन्या ❀ उठेर सोही घरी
हात् जोरेर भरतजिका सुत तहाँ ❀ आया अगाडी सरी ९७
फेरी विन्ति गर्‍या परी चरणमा ❀ हे नाथ! मलाई यहाँ
आज्ञा गर्नुहवस् म जान्छु अहिले ❀ शत्रुघ्नका सङ् महाँ
छौता दानव आउनन् तर पनी ❀ एक्लै अगाडी सरी
जित्न्या छू रणमा सहज् हजुरका ❀ केवल् कृपाले गरी ९८
हामीहेरु निमित्त मात्र भइ सब् ❀ जान्छौ तथापी तहाँ
जित्ला खालि गई प्रताप् हजुरको ❀ शत्रूहरू रण् महाँ
पुष्कल्को विनतीसुनेर रघुनाथ् ❀ अत्यन्त खूशी भई
आज्ञा भो तिमि चक्र-रक्षक हुनू ❀ शत्रुघ्नजीको गई ९९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पुष्कल्लाइ आह्लाइ एति पाछि फेर् ❀ वानरहरू छन् जाति
सब्का तर्फ फिरी उसै बखतमा ❀ भन्छन् रमाका पति
हे वीर हो ! तिम्रिहेरुले पनि गई ❀ शत्रुघ्नका सङ्ग महाँ
रक्षा गर्नु पर्‍यो बहुत् जतनले ❀ यो अश्वलाई तहाँ १००
सब्बानर्कन यो अह्राइ हनुमान् ❀ जीलाइ फेरी पनि
आज्ञा भो सब फौजलाइ तिमिले ❀ रक्षा गर्‍या खुब् भनी
सीताजीकन खोज्नलाइ पहिले ❀ एक्लै समुद्रै तरी
लंङ्का दाह गर्‍यौ भने जगतमा ❀ कुन् वीर्छ तिम्रा सरी १
शत्रुघ्नैकन कष्ट क्यै समरमा ❀ पर्दा पनी झट् गई
रक्षा खुब् तिमिले गर्‍या जतनले ❀ सङ्गमा उनैका रही
यो आज्ञा हनुमानले जब सुन्या ❀ सब्का अगाडी महाँ
रक्षा गर्न कबोल् गर्‍या उहिबखत् ❀ सम्पूर्ण फौज्को तहाँ २
सुग्रीव् अङ्गद जाम्बवान् प्रभृति जो ❀ ठूला ठुला वीर् थिया
तिन्लाइ पनि एहिरितासित हुकुम् ❀ रामचन्द्रजीले दिया
फेरी डाकि सुमन्त्रलाइ बगिचै ❀ आज्ञा भयो झट् तहाँ
कुन्कुन् वीर् तिमिलेखटन् गरिलियौ ❀ विस्तार् बताऊ यहाँ ३
आज्ञा एति सुमन्त्रले सुनिलिया ❀ रामचन्द्रजीको जसै
नौवीर्ताहिं अगाडि सारिकन फेर् ❀ बिन्ती चढाया तसै
हे नाथ् ! ई नउ भूपती हजुरको ❀ आज्ञा शिरोपर् धरी
आया रक्षण गर्नलाइ हयको ❀ जान्छन् सबै यो घरी ४
प्रज्ञापात्र र नीलरत्न रिपुताप् ❀ आदी इ राजा यहाँ
नौ वीर्छन् सब शस्त्रधारिहरुमा ❀ प्रख्यात् जगत्भर्महाँ
प्रत्येक्का सँग चल्दछन् दश दशै ❀ अक्षौहिणी फौज् पनि
शस्त्रैअस्त्र लिएर वीर्हरु सबै ❀ जान्छन् लडौंला भनी५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस·तोविन्ती सुमन्त्रको सुनिलिई ❀ खूशी भई मन्महाँ
डाकी ती सब बीरलाइ नगिचै ❀ राम्चन्द्रजीले तहाँ
आज्ञा गर्नुभयो सबै तिमिहरू ❀ ऐल्हे एकट्ठा भई
रक्षा गर्नु जतन् गरेर हयको ❀ शत्रुघ्नका सङ्गई ६
यो आज्ञा रघुनाथको सुनि तहाँ ❀ राजाहरूले पनि
हात्मा शस्त्रलिया बहुत् खुशिभई ❀ जान्छौं समर्मा भनी
बीदा भै रथमा चढेर उ बखत् ❀ शत्रुघ्नजी फेर् तहाँ
आज्ञा माग्न भनेर झट् जननिको ❀ जाँदाभया घर् महाँ ७
सोही औसरमा ऋषीश्वरहरू ❀ जोजो बस्याका थिया
पूजा तिन्कन रामले गरि तहाँ ❀ दौलथ्हरू दान् दिया
श्रीरामको जयहोस् भनेर जयघोष् ❀ एकै बखत्मा गरी
आशिर्वाद दिया सबै ति ऋषिले ❀ राम्लाई फेर्त्योघरी ८
शत्रुघ्नजी पनि उसै घरि जल्दि जाई
आफ्नू हवाल् जननिलाइ सबै सुनाई
अश्वै लिइकन म जान्छु भनेर ताहाँ
माग्या बिदा शिर धरीकन पाउ माहाँ ९
आज्ञा दिइन् जननिले पनि पुत्र ! जाऊ
शत्रू जिती हय सँगै लिइ फर्कि आऊ
बालख् छ पुष्कल बहुत् तिमिले जतन्ले
रक्षा गर्‍या अधिक प्रीति गरेर मन्ले १०
आज्ञा एति सुनेर खुब् खुशि भई ❀ शत्रुघ्नजीले पनि
रक्षा पुष्कलको म खुब् जतनले ❀ गर्न्या छु एती भनी
बीदा भैकन भाइका सँगमहाँ ❀ फर्कैर जल्दी गया
फेर् यज्ञै बिच रामका हजुरमा ❀ पौंचेर हाजिर भया ११

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हाजिर् मै रघुनाथका हजुरमा ❋ शत्रूघ्नजीले पनि
फेरी बिन्ति गर्‍या बिदादिनुहवस् ❋ हे नाथ् ! मलाई भनी
यो बिन्ति सुनि रामलेपनि बिदा ❋ दीया र फेरी तहाँ
शिक्षाको सब बात् सुनाउनु भयो ❋ शत्रूघ्नका सङ्महाँ १२
हे भाई ! सुन कै जनाानिहरुमा ❋ बालखहरुमा अनी
फेरी शस्त्र बिहीन् भएर रणमा ❋भाग्न्या पुरुष्मा पनि
तिम्लेवयैहतिगार्नछोड्नुभनियो ❋ राम्चन्द्रजीले तहाँ
भाईलाइ सिकाइ बक्सनु भयो ❋ सब्का अगाडी महाँ१३
यो शिक्षा सुनि रामको अलीअली ❋ हाँसी अगाडी सरी
भन्छन् छेड्गारिभाई जानकिजिका ❋ लक्ष्मीनिधी त्यो घरी
हे नाथ् ! भन्नु भयो जती हजुरले ❋ शत्रुघ्नलाई यहाँ
गर्नन् के इनले पनी कुलधरम् ❋ छोडेर लौ रण् महाँ
नारी अवध्य सब हुन् भनि जानि जानि
त्यो ताडकाकन जसोगरि बाण हानी
मार्नूगयो हजुरले उहि ठिक् छ जाई
शत्रुघ्न बध् गरिलिनन् सब नारिलाई १५
लक्ष्मण्जिले पनि पराक्रम खुब् गर्‍याको
काटेर नाक् युवतिको अघि नाम् धर्‍याको
त्यो धर्म दाज्युहरुको सब सम्झि यहाँ
शत्रुघ्न काम् गरिलिनन् रणभूमि माहाँ १६
यस्तो लक्ष्मीनिधीको बचन सुनिसकी रामले फेरि ताहाँ
क्यै हाँसी मिष्टबाणी गरि सब ऋषिका भन्नुभो सामुमाहाँ
सूर्बीर्ले जान्दछन् त्योबुझतिमी कसरी युद्धमा गर्नुपर्‍या
योगीले धर्म बुझ्छन् बुझतिमि कसरीप्राणि संसारतर्‍या१७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

दुःख दिन्छन् अरुलाइ जौन जनले ❀ सारा जगत्मा यहाँ
तेस्तै दुर्जनलाइ मार्न कुलको ❀ धर्मै छ हाम्रो यहाँ
हे लक्ष्मीनिधि ! जो कुरा गरिलियौ ❀ साँचो सबै मान्दछू
शत्रुघ्नैपनिजाइ खल् विनिविनी ❀ मार्नन् भनी ठान्दछू १८
यस्तो श्री रघुनाथको सब कुरा ❀ सूनेर खुश् भै अति
हाँसे यज्ञमहाँ ऋषिश्वरहरू ❀ थीया बसेका जति
घोडा पूर्व तरफ् चल्यो उहि बखत् ❀ सब् फौज् पछाडी गयो
पृथ्वी त्यो सब फौजका दमकले ❀ डग्मग् बहुतै भयो १९
श्री शत्रुघ्न जसै चढ्या रथ उपर् ❀सब्दिक्उज्यालोभयो
साह्रै मन्द गती पवन् हुनभई ❀ फौज्का पछाडी बह्यो
लाग्यो दक्षिरा बाहु फुर्न बहुतै ❀ चल्न्या बखत्मा पनि
साह्रै खूशि भया भयो विजयको ❀ सूचन् मलाई भनी२०
पुष्कल्जी पनिसोहि औसर महाँ ❀ आफ्ना घरैमा गया
आफ्नीप्राणपियारिरानिकनफेर्❀ पौंचेर देख्दा भया
सुन्दर् चन्द्र समानका मुख विषे ❀ ताम्बूल् चपाई तहाँ
प्रीतीपूर्वक रानि पुष्कलजिकी ❀ आइन् समीपै महाँ २१
आफ्ना सामुमहाँ सबै शरिरमा ❀ सुन्दर् अलङ्कार् धरी
आयाको तिनिलाइ पुष्कलजिले ❀ देखेर प्रेम्ले गरी
बाहू पक्रि बसाइ काख् उपरमा ❀चुम्बन्मुहार्कोगर्या
आलिङ्गन्गरिफेर्पियारिकनखुब्❀सन्ताप्मनैकोहर्या२२
फेरी झट्ट चिउँडो समाति करले ❀ अत्यन्त खूशी भई
भन्छन् पुष्कलजी म ता सँगमहाँ ❀ शत्रुघ्नजीका गई
घोड़ा रक्षरा गर्नलाइ रघुनाथ् ❀ ज्यूका हुकुम्ले गरी
आँट्या जानप्रिये ! मलाइ तिमिले ❀ देऊ विदा यो घरी २३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

खूशी भै तिमिले पनी घर बिषे ❀ सासूहरूको यहाँ
प्रीतीपूर्वक खुब् टहल् गरिलिनू ❀ चिन्ता न ली मन् महाँ
स्वामीका ई कुरा सुनेर खुशि भै ❀ हाँसी मुखैले गरी
प्रीतीपूर्वक फेर् ति कान्तिमतिले ❀ बिन्तीगरिन्त्योधरी२४
हे नाथ्! शत्रु सबै पराजय हउन् ❀ सब्का अगाड़ी गई
लड्नू खुब् रणभूमिमा हजुरले ❀ शत्रुघ्नका सङ्ग रही
धौरानीहरुले मलाइ घरमा ❀ कातरकिपत्नी भनी
भन्नै लाइ न पाउँन्या गरि समर् ❀ गर्नू हजुरले पनि २५
टङ्कार् सुनी हजुरले धनुको गर्याको
सब् शत्रु बाहिनी ठुलो डरमा पर्याको
फैलोस् समरबिच महाँ अति बीर नाउँ
लोक्मा चलोस् हजुरको उहि सुन्न पाउँ २६
हे नाथ्! एहि धनू लिएर करमा ❀ रण्मा अगाडी सरी
सारा शत्रु जितीलिएर हय त्यो ❀ फर्केर जल्दी गरी
आई अर्पण गर्नुहोस् हजुरले ❀ रामचन्द्रजीको पनि
सन्तोष्खुब् मनमाहनस् अधिकबिर्❀छोरोछ मेरोभनी २७
यस्तोबिन्ती गरीकिरिट् कनचफेर्❀ अक्षय्य तूणी पनि
पैह्राइन् खूशि भै पतीकन तहाँ ❀ जाउन् समर्मा भनी
फेरी पाउ बिषे परीकन मानिन् ❀ दासी हजुरकी म हूँ
दिल्मा याद रहूँ सदा हजुरको ❀ धेरै कुरा के कहूँ २८
बिन्ती यस् रितको सुनेर खुशिभै ❀ पुष्कल्जिभन्छन्तहाँ
हे प्यारी! तिमिले भन्यौ जातकुरा ❀ मेरा अगाडी महाँ
सब्को पूर्ण गराउँन्या छु मइँले ❀ ठट्टा कसैले पनि
तिम्रो गर्न सक्तैन यस जगतमा ❀ काँतर्किपत्नी भनी २९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

नाताचित् यै रितको गरेर खुशि भै ❀ कुण्डल् किरीटले गरी
शोभितभैकनखुब्सुगन्धिफुलको ❀ माला गलामा धरी
आफनीप्राण पियारिकासँगमहाँ ❀ बीदा तुरुन्तै भया
फेरी पुष्कलजी बिदा हुन पिता ❀ माता भयामा गया ३०
पौची मातृ र पितृका नजिकमा ❀ पस्ती चरणमा पर्‍या
बीदा पाऊँ भनेर पुष्कलजिले ❀ हातजोरिबिन्तीगर्‍या
फेरीबिन्ती गर्‍या पिता तिरफिरी ❀ राम्चन्द्रजीको यहाँ
लक्ष्मणले र हजूरले भइ सबै ❀ काम्गर्नु पर्छ महाँ ३१
बिन्ती पुष्कलकोसुनी जननिले ❀ काखमा बसाई लिइन्
फेरी खूशि भएर आशिष दिई ❀ बीदा तुरुन्तै दिइन्
माताका र पिताजिका सँगमहाँ ❀ बीदा भई भट तहाँ
पुष्कल्जी रथमा चढी चलिगया ❀ शत्रुघ्नजी छन् जहाँ ३२
घोडा हाति सवारले र रथिले ❀ पैदल्हरूले गरी
बेष्टित भै रघुनाथको हय गयो ❀ पञ्चाल् तरफ् त्यैधरी
पाञ्चाल् मत्स्य कुरू र उत्तरकुरू ❀ फेरी दशार्णान् गई
लाग्योत्योहय घुम्नसब्मुलुकमा ❀ साह्रै सुशोभित भई ३३
राजा ती सब देशका जति थिया ❀ खूशी भई सब् तहाँ
सारा रामचरित्रको गरी बयान् ❀ शत्रुघ्नका सङ् महाँ
हामी दास भयौं भनेर पहिले ❀ आई शरणमा पर्‍या
फेरी राज्य र रत्न दौलथ पनी ❀ अर्पण तुरुन्तै गर्‍या ३४
साराशास्त्रमहाँ कुशल्सुमतिएक् ❀ मन्त्री थिया सङ्महाँ
सल्लाहै उनको लिइ सकलकाम् ❀ शत्रुघ्न गर्थ्या तहाँ
घुम्थ्यात्यै रितलेति सब्मुलुकमा ❀ क्वैबीर आगाडी सरी
धर्नैलाइ सकेन त्यो हय तहाँ ❀ राम्काप्रतापलेगरी ३५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ती सब्देश महाँ हुकुम् उहिनखत् ❀ आफ्नू चलाई दिया
फेरी ती नृपतीहरू जाति थिया ❀ सब्लाइ सङ्मा लिया
एही रितसित जान्छ त्यो हयजहाँ ❀ शत्रुघ्नजी फेर् तहाँ
जाँदामा अहिक्षत्रमा पुगि गया ❀ सब्फौज्लिईसङ्महाँ ३६
सुन्दर् त्यो अहिक्षत्रपुर् अतिथियो ❀ चार् वर्णको वास्भई
देख्या सुन्दर त्यो पुरी निकटमा ❀ शत्रुघ्नजीले गई
सुन्का सब्घरछन् मणी जडितका ❀ सारा शहर् भर् महाँ
स्तम्भैफटिकका भईकन अधिक् ❀ शोभितभयाकातहाँ ३७
ती सब् घर्घरका उपर् छत महाँ ❀ नारीहरू छन् जती
डुल्छन् सुन्दर अप्सरा सदृशको ❀ शोभा गराई अती
फेरी त्यो पुरिका सबै सडकमा ❀ हात्मा हतीयार् लिई
घुम्थ्या विर्हरु धेर्अनेक तरहले ❀ शोभा शहर्को दिई ३८
फेरीतेस्पुरिका नगिच् अतिअसल् ❀ वनै एक् बधैंचा थियो
घोडा त्यो रघुनाथको घुमि घुमी ❀ रस्ता उसैको लियो
शत्रुघ्नै पनि फौज्हरू लिई सबै ❀ त्यो अश्वका सङ्महाँ
जाँदा पौचिगया उसै बखतमा ❀ थीयो बधैंचा जहाँ ३९
देख्याआँप्कटहर् अशोक कदली ❀ जम्बू कदम् पाखरी
मन्दार् साल तमाल दाडिमहरू ❀ बृक्षै सुशोभित गरी
पङ्क्ती पारि ठुलो ति बृक्षहरू सब् ❀ प्रत्येक् रकम्ले तहाँ
लायाका अतिचित्र पारिकनत्यो ❀ सारा बधैंचा महाँ ४०
वारिपारि सब ताहाँ धेर् लताहरु भुल्न्या
ढकमक भई फेरी फुल्हरू धेर फुल्न्या
भ्रमरहरु लताका फूलमा नृत्य गर्दै
घनन् घनन् गर्थ्या प्राणिको चित्त हर्दै ४१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

उहि नगिच महाँ धेर् रत्नहेरु जड्याको
बहुत असल मन्दिर काञ्चनैले मढ्याको
नजर गरि चकित् भै जल्दि शत्रुघ्न फेरी
खुशि भइकन सोध्छन् मन्त्रिका तर्फ हेरी ४२

सुमन्त्रले शत्रुघ्नलाई सुमद राजाको जीवनी बताउनु ।

हे मन्त्री ! अहिले म देख्दछु असल् ❀ देवालयै एक् यहाँ
कस्ले मन्दिर यो तयार् गरिलियो ❀ पैल्हे बधैंचा महाँ
यस्मा स्थापित देवता कउन् छन् ❀ भन्या सुध्याया जसै
हातजोरीकन फेर् तहाँ सुमतिले ❀ बिन्ती चढाया तसै ४३
हेनाथ् ! कोहिहुला सुमद् अघियहाँ ❀ राजा भयाका थिया
तिन्ले सुन्दर यो जगतजननिको ❀ मन्दिर् बनाई दिया
भक्तीले अति खुश् भई नृपतिका ❀ आगार पासै महाँ
कामाक्षा भनिनामधरी भगवती ❀ बस्छिन्निरन्तर्यहाँ४४
यौता दानव आउ ईन्कन यहाँ ❀ भक्ती मनैमा धरी
ध्यान्गर्छन् सबलाईबर् पनिइनै ❀ दिन्छिन् खुशीले गरी
धर्मै अर्थ र काम मोक्षहरुको ❀ इच्छा छ जस्को जउन्
दिन्छिन् ई जगदम्बिका भगवती ❀ भक्तैहरूमा तउन् ४५
हेनाथ ! दर्शन ई जगतजननिको ❀ गर्नूहवस् लौ यहाँ
सब्काम्सिद्ध गराउनिन् हजुरको ❀ इच्छा छ जो मनमहाँ
बिन्ती यती सुनेर ती सुमतिको ❀ शत्रुघ्नजीले पनि
सोधे फेरिसुमद् कउन्नृपति हुन ❀ केतप्गरयाथ्याभनी ४६
आज्ञा यस्तरितको सुन्यासुमतिले ❀ शत्रुघ्नजीको जसै
जो बृत्तान्तथियो सुमद् नृपतिको ❀ बिन्ती चढाया तसै
हेनाथ् ! यो अहिक्षेत्रमा अघि इनै ❀ राजा सुमद्जी थिया
तिन्लाई अरु शत्रुले जय गरी ❀ लूटेर राज्यै लिया ४७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हारी दुश्मन देखि फेर् सुमदजी ❀ अत्यन्त दुःखित् भया
तिर्थै हो भनि हेमकूटगिरिका ❀ बन्‌मा तुरुन्तै गया
आसन्‌बाँधितहाँ जगत्‌जननिको ❀ पाऊनिषे मन् धर्‍या
एकाग्रै भइ तिन् बरष् तक तहाँ ❀ ठूलोतपस्यागर्‍या ४८
तिन् बर्षै यहि रीतले ब्रत गरी ❀ तिन् बर्ष फेरी तहाँ
सूखापातहरु खाइ तप् गरिलिया ❀ एकाग्र मै मन्‌महाँ
त्योब्रत् पूरा जसैसबै गरिसक्या ❀ राजा सुमद् फेर् पनि
लाग्या गर्न कठोर ब्रत् भगवती ❀ लाई रिझाऊँ भनी ४९
शीत्‌काल्‌भर्‌जलमा बसीतपगरी ❀ फेर् ग्रीष्म कालै भरी
पञ्चाग्नीकनतापि तप्‌गरिलिया ❀ एकाग्र चित्तै गरी
बर्षाकाल भयो जसै उहि बखत् ❀ खाली चउर्‌मा गई
एकै आसनमा बसी तप गर्‍या ❀ नाङ्गा शरिर्‌का भई ५०
तिन् बर्षै भरि यो ठुलो ब्रत गरी ❀ सिद्धै गराई तहाँ
निस्वास् बन्दगरेर बयै अरुकुरा ❀ चिन्ता न ली मन्‌महाँ
नासाग्रै पुटमा नयन् युगलले ❀ हेरी निरन्तर् मती
राखी श्रीजगदम्बिका चरणको ❀ ध्यान्‌गर्न लाग्याअती ५१
बाह्रै बर्ष तलक् यसै तरहले ❀ ठूलो तपस्या गर्‍या
तिन्‌कोत्यो तपदेखि इन्द्रजिपनी ❀ डर्‌मा बहूतै पर्‍या
तप्‌को भङ्ग गराइ आउ भनिफेर् ❀ कन्दर्पलाई तहाँ
भेज्या इन्द्रजिले उसै बखतमा ❀ राजासुमद्‌छन्‌जहाँ ५२
कन्दर्पै पनि हेमकूटगिरि गै ❀ जाहाँ सुमद्‌जी थिया
मायाले गरि झट् बसन्त ऋतु मैं ❀ सब् बन् गराई दिया
फल्‌फुल्‌सब्‌रसमासचित् हुनगया ❀ कोयल्‌हरू खुश्‌भई
लाग्या बोल्न कुह कुह स्वर गरी ❀ रसका उपरमा रही ५३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फुल्का अङ्कुरमा बसेर भ्रमरा ❀ नाचेर सब् बन् भरी
लाग्या घुम्न तहाँ सबै रुखमहाँ ❀ गुञ्जायमानै गरी
जातजात्काफुलको सुबासलिईफेर्❀ मन्दै गतीले तहाँ
लाग्यो चल्न पवन् पनी सुमदजी ❀ गर्थ्या तपस्याजहाँ ६४
तेस्तोबन्जबभै सबयोउहीबखत्❀सब् अप्सरागण् पनि
आज्ञा इन्द्रजीको हुँदा सुमदको ❀ तप् नष्ट गर्नै भनी
ताहीं आई मृदङ्ग आदि सब थोक् ❀ बाजा बजाई कती
गान्गर्थ्याकतिनाच्दथ्यासकलबन्❀शोभा गराई अती ६५
त्यो गान बाद्यहरुको स्वर कान माहाँ
पर्दोभयो नृपतिले पनि जल्दि ताहाँ
सब् ध्यान भङ्ग भइ पट्टल खोलिदीया
जो जो थियो सकल कौतुक देखिलीया ६६
कन्दर्पले पनि उसै घरि जल्दि जाई
राजा सुमद् उपर बाण दिया चलाई
फेर् अप्सरागणाहरू तहिं सामुमा गै
बस्ताभया सकल दासि समानका भै ६७
चेष्टा अनेक् तरहका गरि नृत्य गर्न्या
हाँसी कटाक्ष गरि फेर् मनलाइ हर्न्या
ती अप्सरागणाहरू र बसन्त भै बन्
देख्दा भयो सुमदको पनि चञ्चलै मन् ५८
धैर्यै गरी जब सबैतिर दृष्टि दीया
त्यो इन्द्रको छल भनेर बिचारि लीया
जो अप्सराहरु थिया सबलाइ हेरी
प्रश्नै गर्‍या सुमदले तहिं जल्दि फेरी ६९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे अप्सरागण ! तिमीहरुलाइ वन्मा
देखेर छक् परिगयाँ म बहूत मन्मा
क्या काम खातिर तिमीहरु आज आई
नाच्गान् गर्‍यौ सकल बात कहू मलाई ६०

आज्ञा एति सुनेर ती सुमद्को ❀ अत्यन्त खूशी भई
रम्भानामकि अप्सरा उहिबखत् ❀ साम्ने सुमद्का गई
लागिन् भन्न हजूरका तपसले ❀ हामीहरु छौं जति
आयौं बश्भइ बरन्लाइ सँगमा ❀ प्रेम्ले गराई पति ६१
चम्पा पुष्प सरी छ बर्ण जसको ❀ ई हुन् घृताची पनि
आइन्पान्हरु खाइमुख् हजुरको ❀ चुम्बन् गरूँला भनी
सुन्दर् पुष्ट उँचा कठोर् कुच दुबै ❀ आफ्ना करैले धरी
इन्को लाल मधुर् अधर् रस हजुर् ❀ पान्गर्नुहोस्योधरी ६२
रम्भा हूँ म अगाडि छू हजुरकै ❀ मन्दार फुल्को पनि
यो माला अहिले हजुर्कन यहाँ ❀ पैह्राइ दूँला भनी
ल्याएको छु खुशी भई सुरतमा ❀ गर्न्या कुरा छन् जती
सारा जान्दछु बाँकिसयोस् हजुरले ❀ ऐल्हे मलाई रती ६३

मेरा अधर् बिच छ अमृत जो अहीले
पान् गर्नुहोस् हजुर त्यो पनि लौ पहीले
फेरी बिमान् उपरमा बसि जल्दि जाई
गर्नूहनस् सयल साथ लिई मलाई ६४
सारा अमर्गणहरु पनि जाइ जाहाँ
गर्छन् बिहार रमणी लिइ साथ माहाँ
सोही सुमेरुगिरिमा गइ साथ मैरै
भोग्नुहस् हजुर दुर्लभ भोग मेरै ६५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुन्दर् नारि तिलोत्तमादिहरु धेर् ❀ जोछन् बरयाका यहाँ
ऐल्हे ती नबयौबना सकलले ❀ चाँमर् लिई कर् महाँ
हाँक्ता छन् सब देबताकन पनी ❀ दुर्लभ् छ सौख्यै जउन्
मेरा साथ महाँ बसी हजुरले ❀ गर्नूहबस्भोग्तउन् ६६
रम्भाका इ कुरा जसै सुनिलिया ❀ राजा सुमद्मा पनि
चिन्ता पर्नगयो सबै तपसको ❀ बिह्नै इ गर्छन् भनी
पैल्हे एति बिचार् गरेर पछि फेर् ❀ जो अप्सरागरा थिया
तीन्ले ती सबलाइ धैर्य गरि खुब् ❀ उत्तर् तुरुन्तै दिया ६७
स्वर्गैका सुखलाइ ता म अहिले ❀ तुच्छै भनी ठान्दछू
मेरीस्वामिनिआइ जोबरदिर्नान् ❀ त्यै खुब् ठुलो मान्दछू
ब्रह्माजीकनसत्यलोक्पनिदिन्या ❀ जो अम्बिका हुन् उनै
मेरोसुख्सब गर्दिंनेन् अरुमसुख् ❀ मान्दीनमन्लेकुनै ६८
तुच्छै मान्दछु त्यो सुमेरु सुनको ❀ पर्बत् मनैले यहाँ
नन्दन्का बनमा र अमृत महाँ ❀ मुल्थ्यौं म ऐल्हे कहाँ
यस्तै बात् सब गर्दथ्या सुमदजी ❀ कन्दर्पले त्यै घरी
आफ्ना शर्हरु सब्चटाइ धनुमा ❀ छोड्या बडोजोर्गरी ६९
फेरी ती जति अप्सराहरु थिया ❀ पारेर नक्कल् तहाँ
हाँसी हेरि कटाक्षको शर सुमद् ❀ राजाजिका अङ्गमहाँ
हान्थ्या बाहुलिका बजाईगहना ❀ नूपुर् पयर्को पनि
छम्छम् स्वर्गरि चल्दथ्या बरिपरी ❀ बश् गर्नलाई भनी ७०
तेस्माबयै मनमा बिकारनगरी ❀ राजा सुमद्जी रह्या
लाचारी भइ अप्सराहरु सबै ❀ फर्केर स्वर्गैं गया
फेरी इन्द्रजिका गई हजुरमा ❀ बिन्ती गर्या यो पनि
तपको भङ्ग हुँदैन केहि रितले ❀ राजासुमदको भनी ७१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आफ्ना पाउ चिताइ खुब् दृढ भई ❀ राजा सुमद्रजी तहाँ
लागेको तप गर्न देखिकन फेर् ❀ खूशी भई मनमहाँ
पाँच्मुख्कारुपले त्रिलोकजननी ❀ प्रत्यक्ष ताहीं भइन्
हात्मा अङ्कुश पाश्धनू लिइ सुमद्‌ ❀ राजामयामागइन् ७२
जसै देखे कोटी रवि सरि किरणकी भगवती
उठी झट्पट् मन्मा खुशि भइ सुमद्रले पनि अति
गर्‌या साष्टाङ्ग खुब् चरण युगलैमा शिर धरी
मुसारिन् माईले पनि शिर सुमद्रको उहि घरी ७३
अती हाँसी हाँसी जगत जननीले तहिं जसै
मुसारिन् आफ्नू शिर् खुशि भइ सुमद्रले पनि तसै
बहुत गद्गद् वाणी गरि शिर महाँ अञ्जलि धरी
स्तुती गर्नलाग्या अति मधुर गम्भीर् स्वर गरी ७४
हे मातर्! जगदम्बिके! हजुरको ❀ ब्रह्मा महेश्वर्हरू
दिन्दिन्खुब्स्तुति गर्दछन्खुशिभई ❀ जो देवता छन् अरू
पर्वत् दिग्गजले सहित्कि पृथिवी ❀ तिम्रै कृपाले गरी
बस्छिन् स्थीर भएर एकस्थल महाँ ❀ प्राणीहरू सब्धरी ७५
उत्तापित् गरि सूर्यका किरणले ❀ तिम्रै कृपाले यहाँ
सागर्को जलसब् खिंचेर उहिजल् ❀ छोड्छन् जमीनै महाँ
सृष्टी पालन यो सबै जगतको ❀ आफैं हजुर्ले गरी
लिन्छयौ सब्प्रलयै गरेर पछिफेर् ❀ आफ्नैशरिर्माधरी ७६
हे मातर्! जगदम्बिके! हजुरको ❀ भक्ती जउन् गर्दछन्
ती सज्जनहरुसिद्धि पाइकनफेर् ❀ संसार पार् तर्दछन्
चाकर् हूँ म हजूरका चरणमा ❀ ऐल्हे शरण् पर्दछू
मेरो कष्ट हुटाइ बक्सनुहवस् ❀ विन्ती म यो गर्दछू ७७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

खूशीमै स्तुतियो सुनी सुमदको ❀ माई जगत्की तहाँ
मन्छिन् लौनरमाग दिन्छुसबथोक् ❀ इच्छा बमोजिम् यहाँ
आज्ञा एति सुनेर खूब् खुशि भई ❀ राजा सुमद्ले पनि
पाऱ्या बिन्ति हजूरका चरणको ❀ भक्तीम माग्छू भनी ७८
अर्को वर् पनी माग्दछू म अहिले ❀ सब् शत्रुलाई यहाँ
जीति राज् पनि भोग्न पाउँ भइँले ❀ भन्या हजूरै महाँ
बिन्ती यस्रितको सुमद्नृपतिको ❀ सुन्नू भएथ्यो जसै
आज्ञा गर्नुभयो जगत् जननिले ❀ खूशी भई फेर् तसै ७९
हे राजन्! सब शत्रुको जय तिमी ❀ मेरा कृपाले गरी
भोग्ने छौ सब राज्य बन्धु सँगमा ❀ लीएर पैल्हे सरी
फेरी रावणलाइ मारि रघुनाथ् ❀ एक् अश्वमेध यहाँ
गर्न्याछन्तिमिलेपनी ताहिंतलक् ❀ भोग्गर्नुयोराज्महाँ ८०
भाई श्री रघुनाथका जब यहाँ ❀ शत्रुघ्न घोडा लिई
तिम्राराज्य महाँप्रवेशगरिलिनन् ❀ तिन्लाइ सब्राज्दिई
फेरी श्री रघुनाथको चरणको ❀ दर्शन् तुरुन्तै गरी
जानेछौ तिमि पार् भएर सहजै ❀ संसार सागर् तरी ८१
यस्रितलेमहाराज्सुमद्कनतहाँ ❀ बर्दान् अगाडी दिई
पाल्नू भो पछि धाममा भगवती ❀ फेर्अन्तरै ध्यान्लिई
सोही आज तलक् सुमद् नृपतिले ❀ गर्छन् यहाँ राज् पनि
हे शत्रुघ्न! ति आउनन् हजुरमा ❀ भेट्गर्नलाइ भनी ८२
मन्त्रीले सबत्यो सुमद्नृपतिको ❀ वृत्तान्त बिल्कुल् तहाँ
बिन्तीपारिलियार त्योसुनिबहुत् ❀ खूशी भई मन् महाँ
आज्ञा गर्नुभयो उसै बखतमा ❀ शत्रुघ्नजीले पनि
साह्रै खूशि भयाँ सुमद् अती ठुला ❀ राजा रह्याछन् भनी ८३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सोही औसरमा सुमद् नरपती ❀ आफ्ना सभामाथिया
राजदूतलेगई अश्वको सकलहाल् ❀ बिन्ती चढाई दिया
आयो अश्वभनी खबर् सुनिलिया ❀ रामाश्वमेधको जसै
सम्झ्यानातअधिकोजगत्जननिले ❀ बर्दान् दियाको तसै ८४
आफ्ना मन्त्रिहरू सबैकन तहाँ ❀ उर्दी दिया यो पनि
तोरण् आदि धरी सबै शहरमा ❀ मङ्गल् गराऊ भनी
फेरी सब् परिवारले सहित मै ❀ लश्कर् लिई सङ्महाँ
भेट्ना खातिर ती सुमद् चलिगया ❀ शत्रुघ्नजी छन् जहाँ ८५
भेट्ना खातिर फौज् लिएरनागिचै ❀ आया सुमद्जी जसै
देखीनवसनु भो र खुब् खुशिभई ❀ शत्रुघ्नजीले तसै
आफ्ना मन्त्रिहरू लिएर सँगमा ❀ वये दूर अगाडी गई
प्रीतीपूर्वकले मिली कुशलको ❀ वार्तागऱ्या खुश्भई ८६
भेटी रत्नहरू दिएर खुशि मै ❀ राजा सुमद्ले तहाँ
सोध्या श्रीरघुनाथको पनिकुशल् ❀ शत्रुघ्नका सङ् महाँ
फेरी बिन्तीगऱ्या मुलुक् हजुरमा ❀ अर्पण् सबै गर्दछू
ऐल्हे श्री रघुनाथका चरणमा ❀ जाई शरण् पर्दछू ८७
हे शत्रुघ्न ! म आज तक् हजुरकै ❀ आशा निरन्तर् गरी
बस्थ्याँदिन्दिनसङ्ग जगतजननिको ❀ शिक्षा शिरोपर् धरी
पाल्नू मै पुरिमा नजर् भइ सबै ❀ प्राणी कृतार्थै गरी
वयौंदिन्तक्यहिंराजहरुस् सकलदुख् ❀ मेरामनैकोहरी ८८
बिन्ती एतीसुनी सुमद् नृपतिका ❀ शत्रुघ्नजीले पनि
साथमा पुष्कलजी र मन्त्रिहरुली ❀ जान्छू म ऐल्हे भनी
हात्तीका पिठमा सवार भइ फेर् ❀ मानू महेन्द्रै सरी
मङ्गल् बाद्य बजाइ राजमहलमा ❀ जाँदा भया त्यै घरी ८९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

कन्याहेरु गएर राज् महलमा ❀ परन्या बखत्मापनि
जातजात्काफुलवृष्टिखुप्सितगऱ्या❀शत्रुघ्न आया भनी
हर्षतार्घादि गरी सुमद् नृपतिले ❀ खूशी भई मन्महाँ
आफ्नू राज्यसबै समर्पणगऱ्या ❀ शत्रुघ्नलाई तहाँ १०
तिन्दिन्तक्घरमासुमद्नृपतिका ❀ शत्रुघ्नजीले गई
सारा मन्त्रिहरु लिएर सँगमा ❀ अत्यन्त खूशी भई
बस्नू भो उहि बीचमा सुमदजी ❀ आएर दिन् दिन् तहाँ
गर्थ्या रामचरित्रकै सब कुरा ❀शत्रुघ्नका सङ्गमहाँ ११
कामाक्षाजगदम्बिका जननिको ❀ आज्ञा म ऐल्हे लिई
गर्न्यछू रघुनाथको सकल काम् ❀ चाकर्समान्को भई
भन्याबिन्तिसुनि सुमद्नृपतिको ❀ शत्रुघ्नजीले पनि
आज्ञागर्नुभयो मिलोस् अबबिदा ❀ जान्छू म चाँडैभनी १२
जान्छौं म भनी हुकुम् हुनगयो ❀ शत्रुघ्नजीको जसै
छोरालाइ गरेर राज्य अभिशेष् ❀ राजा सुमद्ले तसै
सारा फौज्हरु जो तहाँ सँगमहाँ ❀ शत्रुघ्नजीका थिया
सुन्दर् वस्त्र अमूल्य भूषणहरु ❀ सब्लाइतिन्लेदिया१३
फेरी फौज्हरु धेर्लिएर खुशिभै ❀ राजा सुमद्जी पनि
जान्छू रक्षरा गर्नलाइ हयको ❀ शत्रुघ्नका सङ्गभनी
सुन्दर् रथ् उपरै चढेर हतियार् ❀ लीएर भट् हातमा
रामकालश्करमा मिलीकनचल्या❀ शत्रुघ्नका साथमा १४
घोडालेपनिफेर् पयोष्णीनदीको ❀बाटोकिनार्कोलियो
पौंच्योजाल्दि घुमीघुमी कनजहाँ ❀आश्रम्च्यवन्कोथियो
शत्रुघ्नैपनि फौज्लिएर सँगमा ❀ त्योअश्वका सङ्गया
त्योआश्रम् ऋषिको अपूर्वरितको ❀ देखेरखुब् छक्भया१५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

तेस्बन्मा ऋषिकाथिया नारिपरी ❀ आश्रम्काहजारौं अरू
निस्की आश्रम्देखि अश्वकनसब् ❀ हेर्थ्या ऋषीश्वर्हरू
जम्नामै ति गुणानुवाद् रघुपती ❀ जीको सबै गर्दथ्या
त्योफौज् श्रीरघुनाथको अतिठुलो ❀ देखेर छक्पर्दथ्या ९६
शत्रुघ्नै पनि रामको अतिबयान् ❀ सब्ले गऱ्याको सुनी
चल्थ्या खुशि भइ सबै बनभरी ❀ हेर्दै हजारौं मुनी
फेरी ती मुनिले बसेर कुटिमा ❀ खुप् अग्निहोत्र गरी
उठ्याको चरूको धुवाँकन तहाँ ❀ देख्दाभया बन्भरी९७
वेदाध्यायन गर्दथ्या ऋषिहरू ❀ सारा कुटीमा बसी
सुन्थ्यासुन्दरत्यो अनाज्नारिपरी ❀ शत्रुघ्न बन्मा पसी
सर्पै न्याउरि फेर् मयूर्हरू पनी ❀ यौटै थलामा रही
गर्थ्या नृत्य मुसा बिडालहरु सब् ❀ बन्धू समान्का भई९८
हात्ती सिंह र गाइफेर् मृग पनी ❀ निर्वैर पूर्वक् तहाँ
डुल्थ्या आश्रमका सबै नारिपरी ❀ डर्भर् नलीमन्महाँ
त्योआश्रम्कनदेखि खुप्खुशिभई ❀ शत्रुघ्नजीले पनि
सोध्यामन्त्रितरफ् फिरेर कसको ❀ यो आश्रमैहो भनि९९

च्यवन ऋषिको जीवनीको वर्णन।

प्रश्नैएति सुनेर मन्त्रि सुमती ❀ साम्ने अगाडी सऱ्या
जस्को आश्रमहो बताउँछु भनी ❀ हातजोरि बिन्ती गऱ्या
हेनाथ्! यस्बनमाऋषीश्वरच्यवन् ❀ बस्छन् तपस्या गरी
प्रख्यात्आश्रमहोबुझीलिनुहवस् ❀ साराति नैलोक्भरी१००
पैल्हे इन्द्रजिको इनै च्यवनले ❀ शेखी टुटाइ लिया
यज्ञैमा पनिभाग अश्विनिकुमार् ❀ लाइ दिलाइ दिया
इन्कारखुपूतपको प्रभाव्भइयहाँ ❀ बन्मा रह्याका जाति
आपुस्मा इ पशू विरोध नगरी ❀ बस्छन्खुशीले अति १

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बिन्ती रुति सुनेर खुब्खुशी भई ❀ शत्रुघ्नले फेर पनि
सोद्या इन्द्रजिको कउन् तरहले ❀ शेखी टुटाया भनी
फेरी इ ऋषिले कउन् तपगर्‍या ❀ इन्को चरित्रै यहाँ
बिस्तारपूर्वक सब् बताउँतीमले ❀ मेरा अगाडी महाँ २
प्रश्नै रुति तहाँ सुन्या सुमातिले ❀ शत्रुघ्नजीको जसै
जो बृत्तान्त थियो सबै च्यवनको ❀ बिन्ती चढाया तसै
ब्रह्माका सुत जो भया भृगुऋषि ❀ तिन्ले तपस्या गरी
साह्रै मान्य भयासबै ऋषिमहाँ ❀ सारातिनै लोक्भरी ३
कोहीदिन् समीधालिनै भृगुऋषी ❀ बन्मा गयाथ्या जसै
आयो छिद्र मिलेर राक्षस् ठुलो ❀ नाम् दुर्मनाको तसै
सोद्योरुनै भृगुपत्निलौ कहुभनी ❀ साह्रै ठुलोस्वर् गरी
अग्नीले इनिहुन्भनी कहिदिया ❀ तेस्का डरैमा परी ४
देखी ती भृगुपत्निलाइ खुशिमै ❀ पक्रेर काँध्मा धर्‍यो
लै जान्छु घरमा भनेर उ बखत् ❀ त्यो राक्षसैले हर्‍यो
रुन्थिन्जोरसितखुबूतिगर्भिणिथिइन् ❀ छट्पट् बहूतै गरी
गर्भैपात् हुनगो उसै बखतमा ❀ पीडा शरिर्मा परी ५
बालख् सूर्य समानको हुनगई ❀ तेस् गर्भ देखी तहाँ
हेर्‍यो राक्षसलाइ तेस् बखतमा ❀ क्रोधित्भई मन्महाँ
हेर्दामा दुइ नेत्रदेखि शिशुका ❀ एक्तेज निक्लीगयो
तेस् तेज्ले गरि दग्ध राक्षसभई ❀ ताहीं खरानी भयो ६
राक्षस् दग्धभया पछी ति भृगुकी ❀ पत्नीआधिक्खुश्भइन्
आफ्नू पुत्र लिएर आश्रम महाँ ❀ फर्केर जल्दी गइन्
देख्याचाल् भृगुले फिरेर कुटिमा ❀ फेर् अग्निलाई पनि
क्रोध्ले श्रापदिया भएस्अब्उपर् ❀ लौ सर्वभक्षी भनी ७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अग्नीले जब यो सराप् सुनिलिया ❀ काँपेर. थर्थर् गरी
हातजोरीबिनतीगर्‍या भृगुजिका ❀ पाऊ विषे शिर् धरी
हेनाथ् ! राक्षसको ठुलो डरहुँदा ❀ मैले कह्या ता पनि
तेस्कोमाफ्गरिबक्सियोसहजुरले ❀ आयोशरण्मा भनी ८
बिन्ती अग्निजिको सुनेरभृगुजी ❀ खूशी भई मन् महाँ
भन्छन् शुद्ध हुनेछ लौ बुझतिमी ❀ जोखाउला चिज्यहाँ
बर्दान् योदिइ अग्निको जतिथियो ❀ सन्ताप्मनैकोहर्‍या
फेरी आफ्नू कुमारको पनितहाँ ❀ झट्जात कर्मैगर्‍या ९
गर्भैच्युत् भइ जन्मभो भनितहाँ ❀ त्यस्बालखैकोपनि
राख्यासब्न्ऋषिहेरूआइकननाम् ❀ यस्कोच्यवन्भोभनी
शुक्लैपक्ष भएर चन्द्र जसरी ❀ बढ्छन् उसै रित्गरी
बढ्दामा इ समर्थ भै तप गर्‍या ❀ साक्षात्पिताकैसरी १०
फेरी आश्रम् त्यागगेरर ति ऋषी ❀ रेवा किनार्मा गया
शिष्यैवर्ग लिई अयुत् बरष तक् ❀ तप्गर्न लाग्दा भया
एकै आसनमा बसी तप गर्‍या ❀ भयाऊजमेथ्यो जसै
गुरा लाया धमिराहरू गइ तहाँ ❀ तिन्काशरिर्मातसै ११
माटोखुप्जमि ढिस्किलोसरिजसै ❀ ताहाँ च्यवन्जीभया
ढिस्कोजानिचिलाइमार्न मृगगण् ❀ आइदल्न लागिगया
एकाचित्त तपमा आधिक् दृढथिया ❀ तेस्तो हुँदामा पनि
केही थाहथिएन तिन्कन शरीर् ❀ यस्तोछ मेरोभनी १२
सर्याती नृप तीर्थ गर्दछु भनी ❀ रेवा किनारै महाँ
आया सब् परिवारले सहित भै ❀ बस्थ्याच्यवन्जीजहाँ
स्नान्तर्पण्नादिभागर्‍यानृपतिले ❀ पुत्री सुकन्या पनि
आफ्नासब्नसँगिनीलिइचलिगइन् ❀ हेर्नू भनेबन् भनी १३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

घुम्दै तेस् वनमा ऋषीश्वर च्यवन् ❀ गर्थ्या तपस्या जहाँ
पौंच्याती ऋषिलाइ देखिकनखुन् ❀ आश्चर्य भै मनमहाँ
क्याहोयोभनीवयैनजानिकनएक्❀ वेस्कोकरैमालिइन्
घोची फेरि दुवै ऋषीश्वरजिको ❀ नेत्रै फुटाई दिइन् २४
लाग्यो वग्नरगत् जसै नृपसुता ❀ चिन्तित् बहूतै भइन्
त्योहाल्वनैसितवयैनखोलिकनती❀ फर्केर पाल्मागइन्
चिन्तित् धेरथिइन् तथापितिनिले❀ माता पितामा पनि
आफ्नोत्योअपराधप्रकाशगरिनन्❀ मैले गरें यो भनी २५
उल्काज्यारितभएर तेस्वखतमा❀ वायू बहूतै बह्यो
लागिन्डगमगगर्नफेर् जिमिपनी❀ सब्दिक्धूँवायारोभयो
आपुस्मा कलहै परयो पशुहरू ❀ रोग्ले बहूतै मरया
त्यो देखीकन खुब्ठुलो नृपतिले❀ सन्ताप्मनैमागरया २६
फेरी ती नृपती डराई बहुतै ❀ सोद्‌या कसैले यहाँ
ऐल्हेक्कैऋषिकोगरयोकिअपराध् ❀ भन्न्या फउज् भर्महाँ
सोही औसरमा डराइ नृपका ❀ साम्ने सुकन्या गइन्
आफ्नूत्योअपराध्पितासितसबै ❀ खोलेर भन्दी भइन् २७
पुत्रीको अपराध् बुझी च्यवनका ❀ पास्मा ति राजागया
माफ्पाऊँ अपराध् भनेर तहिं फेर्❀ स्तव्गर्न लाग्दाभया
स्तव्ले खूशिभएर तेस् वखतमा ❀ भन्छन् ऋषीश्वर् पनि
तिम्री पुत्रि मलाइ देउ र सबै ❀ कल्याणहोलाभनी२८
आज्ञा एति सुनेर त्यै वखतमा ❀ आफ्नी कुमारी तहाँ
सौंपी ती ऋषिलाई फेर् नरपती ❀ फिर्दा भया घर् महाँ
सर्यातीअधिराज् फिरया पछितहाँ ❀ खुशभै सुकन्या पनि
लागिन् गर्नटहल् पतीकनसदा ❀ ईश्वर्समान्हुन्भनी२९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फल्फुल्खाइसदा जउन्पातिहुकुम् ❀ गर्थ्या उसैमा रही
संसार्को सुख भोगलाइ मनले ❀ त्यागेर खूशी भई
इन्द्रैलाई शची जउन् तरहले ❀ गर्छिन् टहल् त्यै सरी
हज्जार्वर्षतलक्टहल्गरिलिइन् ❀ सन्तोष् मनैमाधरी२०
हज्जार्वर्ष बित्यापछी च्यवनका ❀ आश्रम् विषे फेर् तहाँ
स्वर्गैका पनिवैद्य अश्विनिकुमार् ❀ आया दुवै सङ्गमहाँ
आयाका अतिथि भई ति दुइका ❀ सामने सुकन्या गई
सत्कार्पूर्वक खुब्पुजागरिलिइन् ❀ अत्यन्त खूशी भई २१
देख्याथ्या नृपपुत्रिले अधिक त्यो ❀ सत्कार् गर्याकोजसै
सोह्रै खुशि भएर अश्विनिकुमार् ❀ भन्दा भया फेर् तसै
हे देवी ! वर मागिल्यौ मनमहाँ ❀ इच्छा छ तिम्रो जउन्
दिन्छौ हामिहरू पनि खुशि भई ❀ जोमाग्दछयौवर्तउन्२२
यस्तो बात सुनेर अश्विनिकुमार् ❀ लाइ सुकन्या पनि
भन्छिन् नेत्र दुवै खुलुन् इ पतिको ❀ यै वर् म पाऊँ भनी
मागिन् त्योवरदान्जसै उहिबखत् ❀ खुशीभई मन्महाँ
लाग्या भन्न इबात अश्विनीकुमार् ❀ राज्पुत्रीलाइतहाँ २३
हे देवी ! यदि यज्ञमा अब उपर् ❀ हाम्रो महेन्द्रै सरी
भाग्हाम्रोतिमिले दिलाउनसक्या ❀ हामी पनि यै घरी
खोल्नेछौं सहजै नयन् बुझतिमी ❀ तिम्रा पतिले पनि
हाम्रासाथमहाँ कबोल्गरिलिउन् ❀ गर्छुमत्योकाम्भनी२४
एती बात सुनेर फेर् च्यवनले ❀ खुशी भइ मन्महाँ
इन्द्रैकासरिभाग्दिलाउँन कबोल् ❀ गर्दा भया झट् तहाँ
सूर्यासत्यकबोल्अश्विनकुमार् ❀ अत्यन्त खूशी भयी
क्वैएक्पोखरिमाच्यवन्कनालिई ❀ सोहीबखत्मागयी२५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पौंची सोहि तलाउका जल बिषे ❀ जल्दीतिनै जनूपस्या
स्नान्‌खूब्‌अङ्गमलीमलीगरिलियी❀बयैकाल्‌जल्माबस्या
कञ्चन् देहभयो जसै उहि बखत् ❀ फेरी तिनै जन् तहाँ
एकै शक्कलका जनान्‌पुरूषमै❀निस्कयाकिनारामहाँ२६
तेज्‌मा दिवाकर सरी बदनै गरयाका
भूषरा् अनेक् रकमका अङमा धरयाका
आफ्ना पती कउन हुन् न चिन्हेर फेरी
सोध्छिन् ति राजदुहिता सबलाइ हेरी २७
आफ्ना पती न चिन्हि संशयमा परयाको
आएर आफु सँग प्रश्न समेत् गरयाको
देखेर अश्विनिकुमार अगाडि जाई
सर्याति पुत्रि कन स्वामि दिया चिन्हाई २८
फेरी ति अश्विनिकुमार्‌हरु जल्दि ताहाँ
बीदा भई च्यवनका पनि साथ माहाँ
आफ्ना विमान् उपरमा चढि स्वर्गमा गै
बस्ता भया अमरगरा् सँग खूशि मन्‌मै २९
सुन्दर् नयन् शरिर सुन्दर भै गयाका
फेरी च्यवन् ऋषि पनी अति खुश् भयाका
भन्छन् पियारिकन के मनमा छ ऐल्हे
दिन्छू पुरयाइ सबथोक् तिमिलाइ मैले ३०
बचन् यो स्वामीको सुनि जीत छ आफ्ना मन महाँ
अरज् गर्छिन् फेरी खुशि भइ सुकन्या पनि तहाँ
बहुत् दिन् मो बन्‌मा बसिकन रहेकी टहलमा
म बस्नै खोजहू नाथ् अब त रतनैका महलमा ३१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुकन्याको यस्तो बिनति सुनि खुब् खूशि मनले
बिमान् यक् रत्नैको रचित गरि झट् योगबलले
सरोवर् फेर् योटा रचित गरि फेर् त्यै सर महाँ
अह्नाया प्यारी ! स्नान् गर भनि सुकन्याकन तहाँ ३२
पतीका आज्ञाले गईकन सुकन्या उहि घरी
नुहाइन् त्यै सरमा पसि अधिक खूशी मन गरी
भयाको घेर् काल स्नान् न गरिकन खुब् पूर्ण मनले
शरिर् आफ्नू धोई निरमल गरिन् सोहि जलले ३३
उसै बिच्मा रत्नै जडित गहना सब् थरिथरि
लगायाका लाखौं युवतिहरु फेर् सिर्जन गरी
उसै सर् देखी झट् झिकि सकल दासी सँग महाँ
च्यवन्जीले सौंप्या खुशि भई सुकन्या कन तहाँ ३४
मणीका घेर् जेवर् असल कपडा लाइ अङ्गमा
ती सब् सुन्दर् दासीहरुकन लिई फेरि सँगमा
पतीका आज्ञाले गरिकन सुकन्या गई तहाँ
चढिन् त्यै रत्नैका खुशि भई बिमान्का बिच महाँ ३५
देखीसुन्दर्बिमान्त्योचारिपरि परखाल्सब्सुनैलेमढ्याको
उस्माथी चित्र घेरै गरिकन बहुतै रत्नहरु जड्याको
स्तम्भैछन्निल्मणीकाकहिंकहिं सुनकापानिलेलेखियाको
मूर्ती फेर् देवताका भइकन उसमा सुन्दरै देखियाको ३६
खिड्कीछन्नील्मणीका कुँधिकुँधिमुरतीहरुलेखुब्खुल्याको
झालर्मोती भयाका चारिपरि परदा फेरि उसमा झुल्याको
हीरा माणिक् जडेका पलँगहरु अनेक् ठाउँठाउँ छ ताहाँ
मेनामरपुर भऱ्याका सुन्दरि थलियादेख्दछन् फेरिताहाँ ३७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

चौतर्फीछन् अटाली बिचबिच गमलारत्नका धेर् खुल्याका
जात्जात्काफेरिउस्काउपरताहिंलताझुल्दछन्फूल्फुल्याका
सोह्नै सुन्दर् बधैंचा भइकन बिचमा एक् सरोवर् छ ताहाँ
नीला लालै कमल्का उपर गइ भ्रमर् घुम्दछन्धेर जाहाँ ३८
तारागणहरुले सहित् गगनमा ❀ श्री चन्द्रमाले सरी
सर्याती नृपकी कुमारि पनि सब्❀ दासीहरू सङ्ग धरी
शोभित्भैकन त्यैविमान्उपर्मा ❀ सारा जगत भर् गई
लागिन् गर्न सयल् पतीसँग रही ❀ अत्यन्त खूशी भई ३९
एक्सौ वर्ष तलक् गरेर सुखभोग्❀ सङ्गमा सुकन्या लिई
त्यागीसुरुख विमानकोसकलत्यो❀ फेर् योगमा मन्दिई
आश्रम् येहि बनाइ शिष्यहरू धेर् ❀ लीई च्यवनजी यहाँ
लाग्या गर्न अघोर तप् विषयसुख् ❀ तुच्छै बुझी मन्महाँ४०
सर्याती नृपले उसै बखतमा ❀ यज्ञै म गर्छू भनी
डाकयाथ्या र गया बहुत् खुशिभई❀ ताहाँ च्यवनजी पनि
सोही यज्ञ गराइ अश्विनिकुमार् ❀ लाई महेन्द्रै सरी
यज्ञको सबभाग् दिया च्यवनले ❀तप्का प्रभाव्ले गरी४१
यज्ञैमा अहिले मलाइ अपमान् ❀ यस्ले बहूतै गर्‍यो
मन्‍याभैमनमाच्यवन्ऋषिउपर् ❀ रीस्इन्द्रजीको पर्‍यो
सोह्नै क्रोधगरि बज्र बाहुलि महाँ ❀ लीएर इन्द्रै पनी
आया यज्ञ जहाँ थियो च्यवनको ❀ संहार् म गर्छू भनी४२
देखी इन्द्रजिलाइ फेर् च्यवनले ❀हुंकार् गर्‍याथ्या जसै
स्तम्भन् इन्द्रजिको भयो करतहाँ❀ बज्रै सहित्को तसै
मन्त्रैको वश पर्छ सर्प जसरी ❀ सोही बमोजिम् गरी
बश्मापर्नगई अनेकस्तुतिगर्‍या ❀ इन्कैशरणमापरी ४३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सन्तोष्भैरस्तुतित्योसुनीच्यवनले ❀ स्तम्भन् भयाको तहाँ
बाहू इन्द्रजिको छुटाइ दिनुभो ❀ फेर् यज्ञभूमी महाँ
यज्ञैकोपनिभाग्तिअश्विनीकुमार् ❀ जीको महेन्द्रै सरी
उस्दिन्देखि भयो इनै च्यवनको ❀ केवल् कृपाले गरी ४४

हे शत्रुघ्न ! उनै च्यवन् अझतलक् ❀ आश्रम् बनाई यहाँ
तप् गर्छन् अहिले गई हजुरले ❀ इन्का अगाडी महाँ
दर्शन् गर्नुहवस् परी चरणमा ❀ भक्ती मनैमा धरी
सब्काम्सिद्ध हुन्याछ लौहजुरको ❀ इन्कै कृपाले गरी ४५

बिन्ती येतिसुन्या जसै सुमतिको ❀ शत्रुघ्नजीले तहाँ
जान्छू दर्शन गर्न लाइ म भनी ❀ आँट्या उसै बिच्महाँ
घोडा श्री रघुनाथको पनि तहाँ ❀ घूमेर त्यो बन्भरी
पौंच्यो जल्दि गई उनै च्यवनका ❀ आश्रम् बिषे त्यैघरी ४६

शत्रुघ्न पनि फौज् लिई पछिपछी ❀ त्यो अश्वका सङ्महाँ
जाँदा पौंचिगया उसै बखतमा ❀ बस्थ्याच्यवन्जीजहाँ
देखि ती ऋषिलाइ खुब् खुशिभई ❀ पैल्हैनमस्कार् गर्‍या
फेर् सर्यातिकुमारिका पनितहाँ ❀ पस्री चरण्मा पर्‍या ४७

बिन्ती फेरिगर्‍या ऋषे ! रघुपती ❀ जीको हुकुम्ले गरी
यज्ञैको हयलाइ लीकन यहाँ ❀ आइपुग्याँ यो घरी
भाई हूँ रघुनाथको भकन सब् ❀ शत्रुघ्न भन्छन् पनि
आयाँ दर्शन गर्न पाप् शरिरको ❀ मेरोछुटोस्सब्भनी ४८

बिन्ती एति सुनेर खुब् खुशिभई ❀ भन्छन् च्यवन्जी तहाँ
हे शत्रुघ्न ! हुनेछ कीर्ति बहुतै ❀ तिम्रो जगत् भर् महाँ
यज्ञैको हय रक्षगौ गरुँ भनी ❀ जुन् देशमा जाउला
शत्रूका सँगमा लडेर जयलाभ् ❀ तिम्ले सदा पाउला ४९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आशिर्वाद् आधि यो तहाँ ति ऋषिले ❀ शत्रुघ्नलाई दिई
लाग्या मन्न ति फेर् उसै बखतमा ❀ अत्यन्त खूशी भई
जस्को नाउँ फगत् जपेर दुनियाँ ❀ संसार पार् तर्दछन्
आश्चर्यै सुन त्यो उनै प्रभु यहाँ ❀ यज्ञैहरू गर्दछन् ५०
जस्को पादकमल्बिषे पारि शिला ❀ रूप्की अहिल्या गई
बसिछन्योधरिस्वामिकासँगमहाँ ❀ सुन्दर् स्वरूप्की भई
ब्रह्मघ्न र परस्त्रिमा रत हुन्या ❀ पापी जती छन् यहाँ
जस्कोचिन्तनलेतिपापिपनिसब् ❀ पुग्छन् परम्पद्महाँ ५१
जस्कोचिन्तन हृद्कमल्बिचसदा ❀ योगीहरूले पनि
गर्छन् , चौध भुवन्बिषे सकलका ❀ आत्मा इनै हुन् भनी
हे शत्रुघ्न ! उनै प्रभूकन यहाँ ❀ खुब् याद् गराई दियौ
एसैले तिमिले मलाई अहिले ❀ उद्धार् गराई लियौ ५२
मेरो जन्म सबै सफल् हुनगयो ❀ आजै अयोध्या गई
गर्छू दर्शन रामका चरणको ❀ अत्यन्त खूशी भई
भक्तीका रसले अनेक् अरु पनी ❀ राम्को प्रशंसा गरी
शत्रुघ्न सँग बात् गर्‍या च्यवनले ❀ हर्षाश्रु मोचन् गरी ५३
यो आज्ञा ऋषिको सुनेर खुशिभै ❀ शत्रुघ्नजीले तहाँ
बिन्ती पारिलिया ऋषे ! हजुरले ❀ जाई अयोध्या महाँ
तिन्लोक् शुद्ध गराउन्या हजुरका ❀ पाऊ कमल् यो घरी
राम्को यज्ञ पवित्र सब् हजुरले ❀ गर्नूहवस् यै घरी ५४
बिन्तीयस्रितको सुन्या च्यवनले ❀ शत्रुघ्नजीको जसै
पत्नीलाई समेत् लिएर सँगमा ❀ उठेर फेरी उसै
पैदल्जान तयार्भया र हनुमान् ❀ शत्रुघ्नलाई तहाँ
भन्छन् ई ऋषिलाई बोकि पिठमा ❀ जान्छू अयोध्यामहाँ ५५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तोबात् हनुमानको सुनीतहाँ ❀ साँचो बतायौ भनी
साह्रै खुशी भई उसै बखतमा ❀ शत्रुघ्नजीले पनि
आज्ञा गर्नुभयो चढाइ पिठमा ❀ रामका हजूरै महाँ
पौंचाई ऋषिलाइ जल्दि तिमिफेर् ❀ फर्केर आऊ यहाँ ५६
आज्ञा एति सुनी च्यवनूकन तहाँ ❀ आफ्ना पिठमा धरी
कूद्या श्रीहनुमान् उसै बखतमा ❀ वायू समान् वेग्गरी
फेरी श्री रघुनाथका हजुरमा ❀ जल्दी पुऱ्याई तहाँ
फर्की हाजिर भैगया छिन महाँ ❀ शत्रुघ्नजी छन् जहाँ ५७
श्री रामचन्द्रजीले पनी ति ऋषिका ❀ पाऊ निषे शिर् धऱ्या
हस्तार्घादि गरेर खुब् खुशि भई ❀ खातिर् बहूतै गऱ्या
फेरी बिन्ती गऱ्या ऋषे ! हजुरले ❀ यो यज्ञभूमी महाँ
पाल्नू भैकन शुद्ध गर्दिनुभयो ❀ मेरो सबैकाम् यहाँ ५८
यो आज्ञा रघुनाथको सुनिसकी ❀ भन्छन् च्यवनूजी तहाँ
यज्ञै शुद्ध गराउन्या हजुरको ❀ देख्दीन मैले यहाँ
पाऊ स्पर्श गरेर जुन् पुरुषको ❀ गङ्गा पवित्रै भई
तार्छिन् प्राणिहरू सबैकन यहाँ ❀ पृथ्वीतलैमा बही ५९
तेस्ता ब्रह्म अनन्तपूर्ण रुपका ❀ आफैं हजुर् भै पनि
मर्यादा सब धर्मको जगतमा ❀ थाम्नू उचितृहो भनी
यो यज्ञै गरिबक्सियो हजुरले ❀ सब् जान्दछू लौ यहाँ
भक्तै हूँ म त यो हुकुम् हजुरले ❀ गर्नू उचित् हो कहाँ ६०
एती बिन्ति गरेर फेर् च्यवनले ❀ रामका हजुर्मा रही
यज्ञैको पनि काम् सबै गरिलिया ❀ अत्यन्त खूशी भई
घोड़ाले पनिफेर् पयोष्णिा नदिको ❀ बाटो किनारको धरी
छोडी त्योस्थललाइ तेसघरि गयो ❀ वायुसमान् वेग्गरी ६१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सारा फौज् पनि फेर् चल्यो पछिपछी ❀ त्यो अश्व जान्थ्यो जहाँ
पौंच्यो सो हि घरी निमल् नृपतिका ❀ सुन्दर् बँधेंचा महाँ
आयो श्री रघुनाथको हय भनी ❀ जान्या निमल्ले जसै
आया फौज्हरु सब्लिएर सँगमा ❀ भेट् गर्नलाइ तसै ६२

शत्रुघ्नसित गै निमल् नृपतिले ❀ पैल्हे चरणमा पऱ्या
फेरी राज्य र रत्न दौलत पनी ❀ अर्पण् तुरुन्तै गऱ्या
देखी ती नृपलाइ खुब् खुशि भई ❀ शत्रुघ्नजीले पनि
आलिङ्गन् गरि खातिरी गरिलिया ❀ गर्नू उचितहो भनी ६३

पुत्रैलाई दिएर राज्य खुशि भै ❀ फेरी निमल्जी तहाँ
आफ्नू फौजहरू सबै लिई गया ❀ शत्रुघ्नका सङ्ग महाँ
यै रितले हय पुग्छ जुन् मुलुकमा ❀ राजा उ देशको गई
शत्रुघ्न सँग हिंड्दथ्या पछिपछी ❀ सेवक् समान्का भई ६४

राजा रत्नग्रीवको जीवन चरित्र र नीलमणि पर्वतको वर्णन ।

एही रितसित सब् मुलुक्मुलुकमा ❀ त्यो अश्व जान्थ्यो जहाँ
शत्रुघ्न पनि चल्दथ्या पछिपछी ❀ सब् फौज्लिई सङ्ग महाँ
घुम्दै कयौं दिन फेरि निल्गिरिमहाँ ❀ त्यो अश्व पौंच्यो जसै
देख्या सुन्दर त्यो पहाड्कन तहाँ ❀ शत्रुघ्नजीले तसै ६५

झर्छन् धेर् छहरा सबै नरिपरी ❀ शोभा गराई अती
वायू चल्छ सुवास् लिएर फुलको ❀ खुब् मन्द मन्दै गती
झल्कन्छन् सुनका र चाँदिहरुका ❀ खानी हजारौं जहाँ
पत्थर् स्फटिकका र गेरुहरुका ❀ देखिन्छ सारा तहाँ ६६

भार्ले फल्फुलका नुहेर रुखका ❀ हाँगाहरु छन् जती
उस्मा वायु बहेर लागिकन खुब् ❀ शोभा गराई अती
गर्छन्की गिरिको ड रुख्हरु सदा ❀ पूजा भन्या मैं गरी
वर्षा फल्फुलको ति वृक्षहरुले ❀ गर्छन् सबै बन्भरी ६७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बोल्छन् हंस चकोर सारस मयूर ❀ नाचेर रुख्मा बसी
बज्छन् वेनूसरि वंशफेर् पवनगै ❀ छिद्रैहरूमा पसी
गन्धर्वै र महर्षि सिद्धगणले ❀ फेर् अप्सराले गर्ड
नाच्छन् शोभितघेरगराड गिरिको ❀ अत्यन्त खूशीभई ६८
देख्या सुन्दर त्योपहाड्कन तहाँ ❀ शत्रुघ्नजीले जसै
साह्रै खूशि भएर मन्त्रि सुमती ❀ लाई सुद्ध्याया तसै
हेमन्त्री! म अगाडि देख्दछुअधिक् ❀ सुन्दर् पहाड् यो यहाँ
ठान्छू योगिरिका समान्अरुकुनै ❀ छैननूजगतभर्महाँ ६९
देखी सुन्दरता सबै नजरले ❀ यस्मा भयाको जती
मेरो मन् अति चञ्चलै हुनगयो ❀ आश्चर्य मान्छू अती
नाउँयो गिरिको पनी कउनहो ❀ आश्रमछ कस्को यहाँ
विस्तारपूर्वक त्योबताउतिमिले ❀ मेरा अगाडी महाँ ७०
यस्तोप्रश्न सुन्या तहाँ सुमतिले ❀ शत्रुघ्नजीको जसै
विस्तार्योगिरिकोकहन्छुममनी ❀ बिन्ती चढाया तसै
हेनाथ्! निल्गिरिहोयसैगिरिमहाँ ❀ क्रीड़ा निरन्तर् गरी
बस्छन् पार्षद सब्लिएर सँगमा ❀ त्रैलोक्यकानाथ्हरि ७१
ठूलो पुण्य थियो र पो हजुरले ❀ आएर ऐल्हे यहाँ
देख्नूभो गिरिलाइ नाहिंगिरियो ❀ देख्छन् सबैले कहाँ
मिथ्यावादि परस्त्रिमा रत हुने ❀ दुर्जनहरू वयै गरी
आया याहिंभन्यासमेत गिरि यो ❀ लोप् हुन्छसोही घरी ७२
यो पुण्यै गिरिहो यहाँछ हरिको ❀ मन्दिर् उसैमा गई
भक्तीपूर्वक दर्शनै गरि जउन् ❀ खान्छन् प्रसाद्खुसभई
ती सज्जनहरुअष्टचतुर्भुजस्वरूप् ❀ हुन्छन् हरी कै सरी
यस्कोसब्इतिहास्सुनाउँछुयहाँ ❀ सुन्नूहवस् यो घरी ७३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हेशत्रुघ्न! अगाडि काञ्चिपुरिमा ❀ प्रख्याततिनैलोक्भरी
रत्नैग्रीनभनि एक्ठुलानृप थिया ❀ बरथ्या ति धर्मै गरी
धर्मपूर्वक सब् प्रजाकन सदा ❀ पाल्थ्या खुशीले तहाँ
बस्थ्या रैतिहरूपनी सकलती ❀ आफ्ना स्वधर्मैमहाँ ७४
कोहीएक्दिनमा सभानिचातिनै ❀ राजा बस्याका थिया
सज्जन्ब्राह्मणएक् उसैबखतमा ❀ आएर दर्शन् दिया
देखी ब्राह्मणलाइ खुब् खुशिभई ❀ पछी चरण्मा पर्‍या
हातजोरिकन फेर् तिनैनृपतिले ❀ योप्रश्नताहाँगर्‍या ७५
ब्रह्मर्षे! सब तीर्थका बिचमहाँ ❀ मुख्यै छ तीर्थै कउन्
धौतामापनि मुख्यकोछ सबमा ❀ आज्ञाहबस् लौ तउन्
यो प्रश्नै नृपको सुनेर खुशीभै ❀ भन्छन् ति ब्राह्मण् पनि
हे राजन्! बुझ रामका सरिठुलो ❀ कै छैन धौता भनी ७६
तीर्थैमापनि मुख्य छन् पृथिविमा ❀ जुन्जुन्सबै त्योयहाँ
बिस्तारपूर्वकले कहन्छुसुनिल्यौ ❀ तिम्रा अगाडी महाँ
गर्छू तीर्थ भनेर निस्कि म अघी ❀ पैल्हे अयोध्या गयाँ
देखी त्यो पुरिलाइ सुन्दर बहुत् ❀ अत्यन्त खूशीभयाँ ७७
फेर् वारासासिमा पनी चलिगयाँ ❀ फेरी प्रयाग्मा गयाँ
गङ्गासागरमा गई कपिलको ❀ दर्शन् म गर्दो भयाँ
एही रितिसित् यो सबै पृथिविमा ❀ प्रख्यात् भएकाजती
मैले तीर्थ गर्‍याँ घुमेर पहिले ❀ बाँकी नराखी रती ७८
हे राजन्! तर नीलपर्वत ठुलो ❀ एक्तीर्थ मैले गर्‍याँ
सोही पर्वतको प्रभाव् अतिठुलो ❀ देखेर खुप्छक्क पर्‍याँ
जस्मासब्बनवासिभिल्हरुपनी ❀ कीर्तन् हरीको गरी
घुम्छन् त्यो गिरिमा चतुर्भुज भई ❀ मानूहरीकै सरी ७९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

शंखचक्रलिन्या स्वरुप्कन त्यहाँ ※ ब्रह्मादिलाई पनि
दर्शन् मात्र छ दुर्लभै ड कसरी ※ यस्ता भया हुन् भनी
चिन्ता खुब् मनमा भयोर भपनी ※ तिन्का नागिच्मा गयाँ
यस्तो रुप् हुनगो कसोगरिभनी ※ सब्लाइसोद्दोभयाँ८०
मेरो प्रश्नसुनेर सब् ति भिलले ※ भन्दा भया फेर् तहाँ
हे ब्राह्मण्! सुन भन्दछौं जसारिभो ※ हाम्रा चतुर्भुज् यहाँ
एक्दिन् बालखपुत्र हामिहरुको ※ एही शिखर्मा गई
फर्क्यौं केहि घरी बिताइ घरमा ※ चार् बाहुलीको भई८१
आश्चर्यै भइ त्यो शिशूसँग सबै ※ हामीहरूले पनि
सोद्ध्यौंकुन्रितले भइस् तँआहिले ※ चार् बाहुलीको भनी
फेर्त्यो बालखले भन्यो मआहिले ※ एही शिखर्मा गयाँ
एक् देवालय रत्नको अतिअसल् ※ पौंचेर देख्दोभयाँ ८२
त्यो देवालयमा पसेर मइँले ※ केयूर् किरीट्ले गरी
साह्रै शोभित मूर्तिका उहि घरी ※ देख्याँ जगन्नाथ् हरि
ताहीं फेर् करमा लिई तुलसिदल् ※ नैवेद्य धेरै अरू
ल्याई पूजन गर्दथ्या प्रभुजिको ※ साराऋषीश्वर्हरू ८३
नाच्थ्याकोहिनजाउँथ्या ऋषिहरू ※ देवालयैमा तहाँ
कोही कीर्तन गर्दथ्या प्रभुजिको ※ खूशीभई मन्महाँ
यै रित्ले हरिको पुजा गरिसकी ※ फेरी प्रसादै पनि
खाई ती सबले मलाइपनि भाग् ※ दीया तँ खायो भनी८४
फेरीफर्कि ति सब् ऋषीश्वरहरु ※ घर्मा गयाथ्या जसै
त्योपर्साद् मइँलेपनि तहिं बसी ※ खायाँ खुशीले तसै
खाँदामा हरिकोप्रसाद् उहिबखत् ※ चार्बाहुलीको भयाँ
आश्चर्यै मनमा भएर म यहाँ ※ फर्केर आई गयाँ ८५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मन्यात्योशिशुको कुराजबसुन्यौं ❁ अत्यन्त खूशी भयौं
फेरी दर्शन गर्नलाइ हरिको ❁ हामी सबैजन् गयौं
दर्शन् श्री हरिको गरेर अहिले ❁ पूजाविधानले गर्‍यौं
पर्साद् खाइसक्या पछी हरिकृपा ❁ हूँदारूवरुपयोधर्‍यौं ८६
तिम्लाइ पनि चार् बाहुलि हुन्या ❁ मन्सुन् यदीक्यै भया
हून्याछौहरिकै समान् स्वरुपका ❁ सोही शिखर्मा गया
यस्तोबातभिलले मन्यारमपनी ❁ अत्यन्त खूशी भयाँ
फेरी दर्शन गर्नलाइ हरिको ❁ सोहीशिखर्मागयाँ८७
पैल्हे मन्दिरमा पसेर हरिको ❁ पूजा गरी फेर् तहाँ
खायाँ श्री हरिको प्रसाद् उहिबखत् ❁ खूशीभई मन् महाँ
सोही कारणले चतुर्भुज भयाँ ❁ राजन्! तिमीले तहीं
संसार् सागर तर्न मन्सुन भया ❁ जाऊ, नजाऊ कहीं ८८
ब्राह्मण्का इ कुरा सुनेर बहुतै ❁ खूशी भई मन्महाँ
रत्नैग्रीब् नरराजले उहि बखत् ❁ बिन्ती गर्‍या फेर् तहाँ
ब्रह्मर्षे! अहिले प्रभाव् प्रभुजिको ❁ त्योनिल्गिरीकोपनि
सुन्दा मन् हुनगो यसै बखतमा ❁ जाऊँ म ताहाँ भनी ८९
दर्शन् गर्न भनेर जान्छु हरिको ❁ ताहाँ म चाँडो गरी
जानू पर्दछ तीर्थ कौन बिधिले ❁ आज्ञाहवस् यो घरी
यस्तो प्रश्नसुन्या जसै नृपतिको ❁ ती ब्राह्मणौले पनि
लाग्या तीर्थ बिधि बताउन सबै ❁ यस्तोबिधीहोभनी९०
हे राजन्! जब तीर्थमा गमनको ❁ इच्छा भयो त्यै घरी
सारा धन्जनमाथि छोडि ममता ❁ एकाग्र चित्तै गरी
कीर्तन् श्रीहरिको गरीविषयसुख् ❁ तुच्छै बुझी मन्महाँ
चिन्ता त्यैनिशिदिन् सदागरिलिनू ❁ जानू छ तीर्थै जहाँ ९१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

तीर्थैमा गइ गर्छ दर्शन सदा ❀ साधूहरूको जउन्
संसार् सागर पार् भएर सहजै ❀ पुग्ला परम्धाम् तउन्
भक्ती श्री रघुनाथका चरणको ❀ गर्न्या ति साधूहरू
भेटिन्छन् सब तीर्थमा नाहिं भन्या ❀ भेटिन्न काँही अरू ९२
पैल्हे तीर्थ गरौं भनेर मनले ❀ निस्कन्छजुन्दिन्यहाँ
त्यैदिन्ब्राह्मणकोनिमन्त्रणगरी ❀ पूजा गरोस् घर् महाँ
आशिष् ब्राह्मणकोलिई प्रथमदिन् ❀ कोस्भरगई त्योरहोस्
दोश्रादीन महाँ त मुण्डन गरी ❀ स्नान्सबैनदीमागरोस्९३
तीर्थै गर्न भनेर हिंड्दछ जउन् ❀ उस्का सबै पाप्हरू
केशमा जाइ लुकी रहन्छ डरले ❀ छाडेर सब् अङ्ग अरू
तस्मात् कारण केश मुण्डन गरी ❀ हातमा कमण्डल् धरी
हिड्नू पर्दछ राम राम मुखले ❀ कीर्तन्निरन्तरगरी ९४
भक्तैवत्सल हे हरी ! शरण ल्यौ ❀ तीर्थै म जान्छू भनी
भक्ती राखि शरण् परेर घरको ❀ चिन्ता न ली क्यै पनि
पैदल् तीर्थ चलुन् सवारि गरि जो ❀ तीर्थैहरू गर्दछन्
आधा त्यो फल तीर्थको जउन जन् ❀ बोक्छन् उनै हर्दछन् ९५
भेटिन्छन् हरिभक्त जो पथ महाँ ❀ सेवा जतन्ले गरी
सन्तोष् ती सबकोगराउन सक्या ❀ मिल्छन् सहज्मा हरि
ब्राह्मण्का इ कुरा सुनेर खुशिभै ❀ फेरि नृपैको पनी
मन् भो दर्शन गर्न जाऊँ हरिको ❀ त्यै नील्गिरिमा भनी९६
फेर्मन्त्रीकन झट्हुकुम्तहिंदिया ❀ रैती नगर्मा यहाँ
जोजोछन् सँगमा चलुन् सकल जन् ❀ मेरा सवारी महाँ
आज्ञा यस्प्रितको सुनी नृपतिको ❀ जो जो नगर्मा थिया
मन्त्रीले ति सबै जनाकन तहाँ ❀ डाकेर उर्दी दिया ९७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यो उर्दी नृपको सुनी सकलले ❀ खुब् तीर्थमा मन् दिई
जान्छौं हामिहरू भनेर खुशि भै ❀ आफ्नाजहान्‌सब्लिई
फेरी श्री रघुनाथका चरणको ❀ चिन्ता बराबर् गरी
तीर्थै गर्न भनी प्रजाहरु पनी ❀ जाँदाभया त्यै घरी ९८
रत्नैग्रीव् पनि जो विधी ऋषि कह्या ❀ ती ब्राह्मणले तहाँ
त्यैमाफिक्‌सबकामकाज्‌गरिचल्या ❀ बन्धू लिई सङ्गमहाँ
अन्धा पँगु अनाथ्‌हरू नृपतिले ❀ देख्थ्या सड़क्‌मा जती
तिन्‌लाई पनि रत्न दौलथहरू ❀ दिन्थ्या दयाले अती ९९
रस्तामा दिनदिन् सदा हरि भजन् ❀ गर्दै खुशीले गया
कोही एक्‌दिन गण्डकी नदिविषे ❀ पौंचेर देख्दा भया
शीतल् निर्मल जल् बहन्छ जसमा ❀ चक्रै भयाका तहाँ
शालिग्राम शिला अनेक् नृपतिले ❀ देख्याकिनारामहाँ१००
देखिन्छन् ऋषिका कुटीहरु पनी ❀ सारा किनारा भरी
बोल्छन् हंस चकोर सारस अनेक् ❀ शोभा बहूतै गरी
त्यो पुण्यै नदिलाइ देखिकन खुब् ❀ खूशी भई मन्‌महाँ
सोही ब्राह्मणलाइ फेर् नृपतिले ❀ सोध्याभया झट् तहाँ १
ब्रह्मर्षे ! म अगाडी देख्दछु बहुत् ❀ आश्रम् ऋषीको पनि
सोही कारणले म ठान्छु नदि यो ❀ तीर्थै ठुलो हो भनी
कुन् हो यो नदि लौ बताउनुहवस् ❀ भन्न्या सुद्‌याया जसै
त्यो बिन्ती नृपको सुनेर खुशिभै ❀ भन्छन् ऋषीश्वर् तसै २
हे राजन् ! सुन गण्डकीनदि इ हुन् ❀ कृष्णा पनी भन्दछन्
शालिग्राम शिला इनै नदि महाँ ❀ चक्राङ्कितै बन्दछन्
मन्‌को पातकता फगत् इ नदिको ❀ स्पर्शै हुँदा टर्दछन्
सारा पातक दग्ध हुन्छ बुभिल्यौ ❀ जो स्नान् यहाँ गर्दछन् ३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पैल्हे ईश्वरले प्रजाहरु सबै ❀ पाप्मा डुब्याका पनि
देंरूदामा सबका उपर् धरि दया ❀ उद्धार् गराऊँ भनी
आपनू गण्ड टुटाइ इ नादि यहाँ ❀ सृष्टी गरयाथ्या जसै
गण्डै देखि भइन् भनी इ नादिको ❀नाम् गराइकी भो तसै४
कर·तै पापिहरुस् तथापि दिनदिन् ❀ भक्ती मनैमा धरी
शालिग्राम शिला पखालिकन जल्❀ शिर्मा महार्चन् गरी
फेरीत्यो जलपान् गर्यो यदिभन्या❀ तेस्ले अगाडी यहाँ
जोजो पाप गर्यो उ नष्ट भइ सब् ❀ पुग्ला परम्पद महाँ ५
शालिग्राम्कन कोहि नारिहरुले ❀ पूजा न गर्नू भनी
लेख्याको छ पुजागर्यो यदि भन्या❀ गिर्छन् नरक्मा पनि
तस्मात् कारण धर्म मानिरहन्या❀ जो छन् जनानाहरू
टाढैबाट प्रणाम् गरुन् नगिचमा ❀ जाँदै नजाउन् बरू ६
ठूला तीर्थ र यज्ञ याग् गरिलिंदा ❀ प्राणीहरूमा जउन्
पुरायैमिल्दछत्यो शिलापनिपुज्या❀मिल्न्या छ पुण्यै तउन्
शालिग्राम पुजा जउन् घर महाँ ❀ गर्छन् घरै त्यो पनि
कोटीतीर्थ समान हुन्छ बुझिल्यौ ❀ साँचो कुरा हो भनि ७
हेराजन्! इतिहास्मभन्छुसुनिल्यौ❀ पैल्हे भयाको यहाँ
ब्याधा एक थियो कुकर्मि बहुतै ❀ कीटक्नगर्बीच्महाँ
रस·तामानिशिदिन् बसेर शरत्याग्❀ यात्रू उपर् गर्दथ्यो
मारी ती सब यात्रुलाइ पछि फेर् ❀ दौलथ् सदा हर्दथ्यो ८
एही रितिसित बन् विषे घुमिघुमी ❀ प्राणी अनेक् बधगरी
जीवन्आपनुबितोइदवैदिनमर्यो❀कालका बशैमा परी
आई फेर् यमराजका दुतहरू ❀ जीव्लाइ तेस्को तहाँ
पक्री घेर फजियत दिईकन लग्या❀ छिर्याउँदै गइमहाँ ९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

कैल्हे दूत्हरु सर्पको रुप लिई ❀ तेस्लाइखुन्डर्‌थ्या
अर्ना भैंसि भएर आइ मुँडिमा ❀ कैल्हे ति सिङ् धर्‌थ्या
कैल्हे दूत्हरुले लगेर मुखमा ❀ झोर्‌थ्याअगुल्टोपनि
कैल्हे डङ्क चलाउँथ्या र्‌नरुपका ❀ बिच्छीसबै दूत्बनी १०
साह्रै क्रोध गरेर दूत्हरु सबै ❀ तेस्को अगाडी गई
भन्थ्याकुन्बाटियाकर्मगारिलिईस्❀ तैंले मनुष्यै भई
भन्दै एहि कुरा ति दूत्हरू सबै ❀ कोर्रा करैले धरी
लाग्याजोर्‌गारि हान्नतेस्कनतहाँ ❀ साह्रै ठुलो क्रोध् गरी ११
कोही बैष्णावले उसै बखतमा ❀ त्यो ब्याधको दुर्गति
देख्या आई जसै दया हुनगयो ❀ तेस्का उपर्‌मा अति
उद्धार् गर्छु म एसलाई भनि झट ❀ आँटेर फेरी तहाँ
शालिग्राम शिला लिएर उसका ❀ पौंच्या नगीचै महाँ १२
तिन्लेसोहिशिलापखालिजलत्यो ❀ छर्की शिरैमा दिया
कानैमा पनि फेर् उसै बखतमा ❀ राम्नाम् सुनाईलिया
शालिग्रामजिको पर्‌यो जल जसै ❀ तेस्ब्याधकाअङ्गमहाँ
तत्काल् श्रीहरिका अनेक् दुतहरू❀ आईपुग्या झट्तहाँ १३
आई बैष्णव दूत्हरू ति यमका ❀ दूत्लाई मार्‌पिट् गरी
पैल्हेतेस्कनझट फुकाइपछिफेर् ❀ सोध्नाभया त्यो घरी
हेदूत् हो ! हरिभक्तलाई किन यो ❀ आएर ऐल्हे यहाँ
दुख् दिन्छौ तिमिहेरुले भन सबै ❀ हाम्रा अगाड़ी महाँ १४
विष्णूका दुतको सुनेर ई कुरा ❀ यम्का दुतैले पनि
लाग्या भन्न जनम्भरी गारिलियो ❀ यस्ले कुकर्मै भनी
आज्ञा श्री यमराजले दिनुहुँदा ❀ यस्लाइ नर्कै महाँ
हाल्ना खातिर यो फजीयत दियौं ❀ हामीहरूले यहाँ १५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ई बात् सुनेर यमका दुतलाइ हेरी
मन्दामया ति हरिका दुतहेरु फेरी
यस्ले यहाँ गरिलियो जति पाप पैल्हे
छुट्यो उ पाप् सकल एकरति छैन ऐल्हे १६

शालिग्रामजिको जलै शरिरमा ❀ यस्कोपर्याकोपनि
देख्यौं हामिहरु कसोगरि भनौं ❀ पापी थियो यो भनी
फेरीनाम् रघुनाथको पनि सुन्यो ❀ कारण् दुवै यो भई
बैष्णव् भो अब भोगगर्छ सुखको ❀ वैकुण्ठधाम्मा गई १७
एती बात् हरिका ति दूत् सकलले ❀ पैल्हे सुनाई तहाँ
ब्याधालाइ लिएर सब् चलिगया ❀ वैकुण्ठधामै महाँ
हेराजन्! सुन त्यो अधम् भइपनी ❀ संसार सागर् तरी
वैकुण्ठैपुरिमा पुग्यो सहजमा ❀ ठूलो महात्मा सरी १८
शालिग्राम शिला पुजा गरिलिंदा ❀ फल्मिल्छ यस्तोभनी
निस्तार्गर्नकठिन्छत्योसबकुरा ❀ ब्रह्माजिलाई पनि
तस्मात् कारण गर्न सक्दछु सबै ❀ निस्तार मैले कहाँ
मेरो बुद्धि थियो जउन् ऊहि कह्याँ ❀ तिम्रा अगाडी महाँ १९
ब्राह्मण्कामुखदेखिगराइकिजिको ❀ सून्या महात्म्यै जसै
फेरी ती नृपलाई मन् हुनगयो ❀ स्नान् गर्नलाइ तसै
पैल्हे ती नदिमा नुहाइकन फेर् ❀ भक्ती मनैमा धरी
शालिग्राम शिला पुजा गरिलिया ❀ ठूलो विधान्ले गरी २०
धेरै दौलथ रत्न दान्गरि तहाँ ❀ दुक्खितहरू जो थिया
डाकी ती सबलाइ खातिर गरी ❀ धेर् अन्न वस्त्रै दिया
फेरी दर्शन गर्नलाइ हरिको ❀ इच्छा हुनाले गरी
जल्दीनीलगिरिकातरफ्चलिगया ❀ दिनदिन पुकारदैहरि २१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यैरितकाक्रमले अनेक्दिनतलक् ❀ जाँदा कुनै दिन् महाँ
गङ्गासागरमा पुग्या कपिलजी ❀ बस्छन् निरन्तर् जहाँ
फेरी ब्राह्मणलाइ ती नृपतिले ❀ सोध्दा भया यो पनि
पुग्छौं कुन्दिनमा बताउनुहवस् ❀ त्यो नील्गिरीमा भनी २२
राजाका इ कुरा सुनेर ऋषीले ❀ भन्दाभया फेर् तहाँ
थीयो नीलगिरि ता यहीं अनत लौ ❀ देरुदीन मैले यहाँ
गङ्गासागरमा नुहाइ गिरिको ❀ दर्शन् मिलोस्लौ भनी
ध्यान्सीतापतिको गरौंसबजना ❀ हामीहरुले पनि २३
यस्तोबात् ऋषिकोतहाँ नृपतिले ❀ सूनी सबयाथ्या जसै
गङ्गासागरमा गएर खुशि भै ❀ तिन्ले नुहाया तसै
दर्शन्नील्गिरिको नपाइकनफेर् ❀ दुक्खित भई मन्महाँ
ध्यान्राखी हरीकोबसेर अनशन् ❀ ब्रत्गर्न लाग्या तहाँ २४
भोजन्पान्सब त्यागगरेरकितयो ❀ दर्शन् गिरीको गरौं
दर्शन् गर्न मिलेन क्यैं गिरि भन्या ❀ एही थलामा मरौं
भन्न्या निश्चय शूर् गरेर हरिको ❀ पाऊ विषे मन् धरी
लाग्या फेर् स्तुति गर्नलाइ नृपती ❀ एकाग्र चित्तै गरी २५
हे नाथ् ! दीनदयाल!! हे रघुपते !!! ❀ जस्ले हजुर्को यहाँ
भक्तीराखि भजन्गर्‍यो उहि पुरुष् ❀ उद्धार् भयो छिन्महाँ
प्रह्लाद्लाइ विपद् हुँदा पनि अघी ❀ रूप्को नृसिंहै भई
उद्धार् गर्नुभयो उसै बखतमा ❀ तिन्को हजुरले गई २६
फेरी जुन्रितले गजेन्द्र बहुतै ❀ दुख्मा पर्‌यामा पनि
उद्धार गर्नुभयो गई हजुरले ❀ हो भक्त मेरो भनी
यस्तै रितसित भक्त जन् अरु पनि ❀ जोजो विपद्मा पर्‌या
सब् माथी करुणा गरी हजुरले ❀ तार्दा सबै जन् तर्‌या २७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे नाथ् ! दर्शन गर्दछू हजुरको ❀ मन्न्या इरादा धरी
आयाँ दर्शन गर्नलाइ न मिले ❀ मन्र्याछु हत्या गरी
पाँच्दिन्यैरितलेर मरणप्रभुजिको ❀ गर्दा निरन्तर् तहाँ
एकै आसनमा रह्या नरपती ❀ एकाग्रमै मन्महाँ २८
तिन्कोत्यो दृढता बुझेर भगवान् ❀ साह्रै प्रसन्नै भया
सन्न्यासीसरिरूप् धरी नृपतिका ❀ साम्ने खडा भै गया
सन्न्यासीकन देखिफेर् नृपतिले ❀ उठेर सत्कार् गर्‍या
हस्तार्घ्यै गरि भक्तिपूर्वक असल् ❀ आसन्उपर्माधर्‍या २९
फेरी बिन्ति गर्‍या तहाँ नृपतिले ❀ दर्शन् हजूरको भयो
मेरो जन्म पनी यहाँ यस बखत् ❀ साह्रै सुफल् भै गयो
हे नाथ्! कुन् रितले म गर्न सकुँला ❀ दर्शन् हरीको भनी
चिन्तित् धेर म छू बताउनुहवस् ❀ तेस्को उपायै पनि ३०
एती प्रश्न सुनेर खुब् खुशि भई ❀ सन्न्यासि भन्छन् तहाँ
दर्शन्निल्गिरिको हुन्याछबुझिल्यौ ❀ तिम्लाई भोली यहाँ
यो बात् ती नृपका गरेर सँगमा ❀ सोही बखत्मा तहाँ
सन्न्यासी पछिफेरि लोप् भइगया ❀ सब्का अगाडी महाँ ३१

सन्न्यासिको बचन एति सुन्या जसैता
खुश्भै अधिक् निंद पर्‍यो नृपको तसैता
देख्दा भया ति सपना गिरिमा गयाको
आफ्नू चतुर्भुज स्वरूप् हरि मैं भयाको ३२
देखेर एहि सपना बिउँझेर ताहाँ
खुश्भै ऋषीश्वरजिका गई साथ माहाँ
स्वप्ना जउन् नृपतिले तहिं देखिलीया
खोलेर त्यो सकल बात सुनाइ दीया ३३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुनेर त्यो नृपतिले सपना कह्याको
देखेर लक्षण सबै बाढिया भयाको
भन्छन् ऋषी अब त नीलगिरिलाइ याहाँ
मिल्ला कि देख्न भनि ठान्दछु चित्त माहाँ ३४
सन्न्यासिले पनि हिजो जाति हो कह्याको
फेरी तिमीकन त यो सपना भयाको
देख्दा भयो हरि कृपा भनी ठान्छु मैले
हूँन्यै छ नीलगिरी प्रकट भनि जान ऐल्हे ३५
यो आज्ञा ऋषिको सुनेर नृपती ❀ अत्यन्त खुशी भया
गङ्गासागरमा नुहाउन भनी ❀ उठेर जल्दी गया
जल्दी स्नान गरेर फर्किकन फेर् ❀ दुखिखतहरू जो थिया
प्रत्येक् जन्कन रत्न दौलत दिई ❀ राजी गराई लिया ३६
फेरी ती नृपले चरित्र हरिको ❀ गान् गर्नलाग्या जसै
आकाशमा पनि देवदुन्दुभिहरू ❀ खुब् बज्नथाल्या तसै
फूल्कोबृष्टि अधिक्गरया अमरले ❀ राजाजिका शिर् महाँ
दिन्भट्यान्ह हुँदातनिल्गिरिपनी ❀ प्रत्यक्ष भैगो तहाँ ३७
कोटीसूर्य समान कान्ति गिरिको ❀ देखीलियाथ्या जसै
के हो यो भनि तर्कना नृपतिले ❀ खुब् गर्नलाग्या तसै
यो हो विद्युतको कि पुञ्ज अथवा ❀ हो अग्निपुञ्जै यहाँ
देख्छू सामु महाँ भनेर ऋषिका ❀ सङ्मासुद्ध्यायातहाँ ३८
यस्तो प्रश्न सुनीसकेर नृपको ❀ फेरी ऋषीले पनि
आज्ञा जल्दिगरया बहुत् खुशि हुँदै ❀ यै नीलगिरी हो भनी
सुन्दामा ऋषिको कुरा नरपती ❀ खूशी हुँनाले गरी
साष्टाङ्ग गिरिको गरया प्रदक्षिणा ❀ पश्री जमीन्मा परी ३९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रानी मन्त्रि र जो थिया नृपतिका ❀ चाकर् पुराना तहाँ
ती सब्लाइ र फेर् ऋषीश्वर समेत्❀ लीएर साथै महाँ
दर्शन् नीलगिरिमा गएर हरिको ❀ गर्न्या इरादा लिई
रत्नैग्रीव्अधिराज् चढ्यागिरिउपर्❀ अत्यन्त खुशी भई ४०
पौंची त्यो गिरिका उपर् शिखरमा ❀ देवालयै एक् जसै
देख्या रत्न जडित् अपूर्व सुनको ❀ खुशी भया सब् तसै
ब्रह्माजी पनि देव दुन्दुभिहरू ❀ बाजा बजाई तहाँ
गर्थ्या नित्य पुजा गई प्रभुजिको ❀ खुशीभई मन्महाँ ४१
त्यै देवालयमा सरासरि गई ❀ राजा पस्याथ्या जसै
देख्या सुन्दर मूर्ति एक् प्रभुजिको❀ सिंहासनैमा तसै
फेरी नन्द सुनन्द आदि हरिका ❀ पार्षद्हरूको तहाँ
मूर्तीहरू पनी नजर् गरिलिया ❀ त्यै देवमन्दिर् महाँ ४२
देख्याथ्या नृपले तहाँ प्रभुजिको ❀ मूर्ती नजर्ले जसै
साह्रै खूशि भएर गैकन धर्या ❀ पाऊ विषे शिर् तसै
साष्टाङ्ग पहिले गरेर पछि फेर् ❀ शास्त्र विधान्ले तहाँ
भक्तीपूर्वक खुब् पुजा गरिलिया ❀ खूशी भई मन्महाँ ४३
एकाग्रैभइफेर्अनेकस्तुतिगर्या ❀ वेद्का ऋचाले जसै
सन्तोष् भै हरिले प्रकट् तहिं भई ❀ दर्शन् दिनूभो तसै
दर्शन् दीकन यो हुकुम् पनि भयो ❀ वैकुण्ठधामै महाँ
पुग्न्याछौ नृपराज् ! यसैबखतमा ❀ खाऊप्रसाद् योयहाँ ४४
यो आज्ञा हरिको सुनी नृपतिले ❀ लीई प्रसाद् त्यो घरी
भाग् पाँचै जनको लगाइकन फेर्❀ खाया सबैले मिलि
पर्साद् खाइसक्यापछी तहिं असल्❀ आयो विमानै पनि
आज्ञा भो हरिको चढी सब जना ❀ वैकुण्ठ जाऊ भनि ४५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रत्नैग्रीव् नृपराजले प्रभुजिको ❀ आज्ञा सुन्या यो जसै
ती पाँचै जनको स्वरुप् पनि भयो ❀ चार् बाहुलीको तसै
शोभित् शंख र चक्रले प्रभु सरी ❀ पाँचै जना भै तहाँ
जल्दी सोहि बिमान् उपर् चढि गया ❀ वैकुण्ठ धामैमहाँ ४६
हे शत्रुघ्न ! गएर नील्गिरि महाँ ❀ भक्ती मनैमा धरी
गर्छन् दर्शन जो यहाँ प्रभुजिको ❀ ती सब् जना त्यै घरी
संसार्सागर पार् भएर सहजै ❀ वैकुण्ठधाम्मा गई
भोग्गर्छन् सुखको सबै ति हरिका ❀ सङ्गमा निरन्तर् रही ४७
भन्या नील्गिरिको महात्म्य जति हो ❀ शत्रुघ्नका सङ्गमहाँ
बिस्तार्पूर्वक तेस् बखत सुमतिले ❀ बिन्ती चढाया तहाँ
हे बात्स्यायनजी ! तिमीकन सबै ❀ मैले सुनायाँ भनी
आज्ञा शेषजिले गरेर पछि फेर् ❀ आज्ञा गर्‍या यो पनि ४८
यो सब् नील्गिरिको महात्म्य आहिले ❀ मैले भनेको जती
भक्तीपूर्वक् पाठ् जउन् पुरुषले ❀ गर्ला खुशीले अति
त्यो जन्ले पनि फेर् कठोरभनको ❀ यो यन्त्रणा सब् सही
पर्न्या छैन कदापि बस्न सहजै ❀ जान्याछ मुक्तै भई ४९
बात्स्यायन् ऋषिलाई यो अघि कही ❀ शेष्ले तहाँ फेर् पनि
आज्ञा भो हयको कुरा सुन तिमी ❀ बिस्तार् कहन्छू भनी
शत्रुघ्नै सँगमा कथा सुमतिले ❀ भन्दैथिया त्यै घरी
श्रीराम्को हय निल्गिरी उपरमा ❀ पौंच्यो बडो बेग्गरी ५०
घुम्दै निल्गिरिका उपर् शिखरमा ❀ त्यो अश्व पौंच्यो जसै
फेरी बिन्ति गर्‍या तहाँ सुमतिले ❀ शत्रुघ्नका सङ्ग तसै
हे नाथ्! निल्गिरिका उपर् हय पुग्यो ❀ हामीहरू सब् गई
दर्शन् श्रीहरिको गरौं अब यहाँ ❀ के काम्छ धेर्काल् रही ५१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तो सुनेर बिन्ती सब फौजलाई
सङ्गमा लिई हय पछी पछि जल्दि जाई
शत्रुघ्न निल्गिरि ऊपर् हरिको छ जाहाँ
मन्दिर उसै घरि पुग्या उहि ठाउँ माहाँ ६२

पौंची मन्दिरमा जनार्दनाजिको ❀ पाऊ विषे शिर् धरी
भक्तीपूर्वक खुब् पुजा गरिलिया ❀ शास्त्र विधान्ले गरी
साह्रै मन्मनमा कृतार्थ हुनगै ❀ शत्रुघ्नहेरू तहाँ
फर्की मन्दिरदेखि फेर् चलिगया ❀ त्योअश्वकासङ्गमहाँ ६३

राजा दमन र पुष्कलको युद्ध ।

त्यो घोडा पछिफेर् सुबाहु नृपका ❀ चक्राङ्क देश्मा गई
लाग्यो घुम्न उसै बखत् बनमहाँ ❀ साह्रै सुशोभित् भई
सोही औसरमा सुबाहु नृपका ❀ छोरा दमन्जी पनि
आयात्यो बनमागईकन शिकार् ❀ खेल्छु म ऐल्हे भनी ६४

श्री रामको हयलाइ राजसुतले ❀ देख्या घुम्याको जसै
आफ्ना दूतहरुलाइ डाकिनजिकै ❀ आज्ञा गऱ्या यो तसै
हे दूत् हो ! सब हेर पत्र सुनको ❀ टाँसी निधारै महाँ
शोभित् भूषणाले गराइ हय यो ❀ छोडेछ कस्ले यहाँ ६५

कस्को अश्व रहेछ गै सकलले ❀ पक्रेर ल्याऊ भनी
आज्ञा ती नृपपुत्रले जब दिया ❀ दौड्या सबै दूत् पनि
घेरा दी रघुनाथको हय कनै ❀ पक्रेर जोर्ले तहाँ
ल्याई हाजिर गर्दियाउहि बखत् ❀ बस्थ्यादमन्जीजहाँ ६६

फेरी त्यो हयको ललाट बिचमा ❀ जो पत्र सुन्को थियो
बाँची एक् दुतले तहाँ दमनका ❀ साम्ने सुनाई दियो
लेखेको त्यस पत्रमा यहि थियो ❀ श्रीराम् अयोध्यापति
गर्छन् यज्ञ ठुलो यहाँ यस बखत् ❀ [illegible] प्रति ६७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सोही यज्ञ निमित्त यो हय पनी ❀ शास्त्रै विधान्‌ले गरी
छोडेको छ भनेर जान सबले ❀ घुम्न्याछ पृथ्वी भरी
जस्‌ले मान्दछ उर्दि आइकन त्यो ❀ यज्ञै निषे काम्‌ गरोस्‌
राम्‌ भन्दा म ठुलो छु भन्दछ जउन्‌ ❀ तेस्‌ले त घोडा धरोस्‌ ५८
पत्रैको यति बात सुनी दमनजी ❀ क्रोधित्‌ भयाका अति
भन्छन्‌ दूतकन फौज्‌तयार्‌गरसबै ❀ हाम्रा मुलुक्‌का जति
राम्‌ले ता ससरी जगत्‌ भरि महाँ ❀ बीर्‌ छैन दोश्रो भनी
ठान्याछन्‌ अब तोडिदिन्छु सहजै ❀शेखीम तिन्‌कोपनि ५९
शत्रुहनैहरु आउनन्‌ रण महाँ ❀ मेरा अगाडी जसै
बज्रैका सरि चोट खाइ शरको ❀ गिर्नन्‌ जमिन्‌मा तसै
यो घोडाकन बाँधि आउ अहिले ❀ मेरो तबेला महाँ
जो बीर्‌ आउँछ लड्नलाइ उसका ❀सङ्‌मा म लड्छू यहाँ ६०
एती बात गरि अश्वलाइ घरमा ❀ भेज्या दमन्‌ले जसै
खोज्‌दै त्यो हयलाइ राघवजिको ❀ आईपुग्यो फौज्‌ तसै
देख्या फौज्‌ जब रामको दमनले ❀ आफ्नाफउज्‌कोपनि
ब्यूहै बाँधि तयार्‌भईकन बस्या ❀ गर्छू लडाईं भनी ६१

नाउँ प्रतापाग्र भनी कह्याका
सेनापती राम तरफ्‌ भयाका
राजा थिया एक्‌ उ अगाडि जाई
देख्या दमन्‌का सब सैन्यलाई ६२
ठूलो फउज्‌ ब्यूह रचीबस्याको
लड्नै भनी कम्बर खुब्‌ कस्याको
देखी प्रतापाग्र बहुत्‌ रिसाया
हाल्‌ बुम्भ्‌नलाई भनि दुत पठाया ६३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यो दूत् जल्दि गएर ती दमनका ❀ साम्ने अगाड़ी महाँ
सोद्यो वया न फउज् लिएर तिमिले ❀ रहे बसेको यहाँ
घोड़ा श्री रघुनाथको पनि यहाँ ❀ कुन् कारणौले गरी
राख्यौ देउ फिराइ नाहिं रणमा ❀ आउ अगाड़ी सरी ६४
यस्तो बात सुनेर दुत्कन तहाँ ❀ मन्द्यन् दमन् बीर्पनि
मैले अश्व धर्याँ तयार् भइ बहुत् ❀ रण् गर्नलाई भनी
जो बीर् हूँ म भनेर ठान्छ मनले ❀ आएर त्यो बीर् यहाँ
लै जानस् हय यो मलाई अहिले ❀ जीतेर युद्ध महाँ ६५
क्रोध्ले पूर्ण भएर यो दमनले ❀ उत्तर् दियाथ्या जसै
फर्की त्यो दुत गै कह्यो सब कुरा ❀ रामका फउजमा तसै
दुत्को वाक्य सुनेर जो फउजमा ❀ ठूलाठुला बीर् थिया
सब्ले लड्न भनेर कम्बर कसी ❀ हातमा हतीयार् लिया ६६

रामका सबै फौज् तिरबाट ताहाँ
राजा प्रतापाग्र अगाड़ि माहाँ
क्रोध्ले दमन्का सँग लड्नलाई
जाँदाभया त्यै घरि रथ् बढ़ाई ६७
आफ्ना सबै फौज्हरु साथ लीया
घेरा दमन् बीर्कन पारिदीया
फेरी दमन्ले पनि रथ् बढ़ाया
धेर् बाण प्रतापाग्र उपर् चलाया ६८
सेना दमन्का जति ताहिं थीया
तिन्ले पनी शस्त्र चलाइ लीया
रामका फउज्ले पनि फेरि ताहाँ
छोड्या हतीयार् उहि बीच माहाँ ६९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हात्मा रिसैले हतियार् धरयाका
सन्मुख् भई लड्न अघीसरयाका
यस्ता दुवै फौज् तिरका बिरैका
कत्तल् भई पर्छति गिरया शिरैका ७०
पृथ्वी रगतले अति लाल भैगो
धेर् बीर्हरूको पनि ज्यान गैगो
फौज् धेर् मरयाका जब देख्नपाया
राजा प्रतापाग्र बहुत् रिसाया ७१
आफ्ना अगाड़ी रथमा बरयाका
लड्नै भनी कम्बर खुब् करयाका
जब् ती दमन् बीर् कन देख्न पाया
क्यै बात् प्रतापाग्रजिले सुनाया ७२
बालख् भई राजकुमार ! तैंले
रामको हरिस् नाहक अश्व ऐल्हे
जुन् रामले सागर पार जाई
मारया सहज् राक्षसराजलाई ७३
उन्को प्रताप् एक् रति क्यै नजानी
खेल्बाड़को कार्य समान ठानी
घोड़ा धरिस् आज यहाँ मलाई
लाज् लाग्छ बाण् हान्न पनी तँलाई ७४
ई बात् प्रतापाग्रजिले गरयाका
सूनेर क्रोधले बहुतै जल्याका
भन्छन् दमन् बीर् रण गर्न आई
क्या बात् कहन्छौ तिमिले मलाई ७५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रामचन्द्रको ग्रश्न भनेर जानी
घर्दो भयाँ एक् रति डर् नमानी
छोड्दीन बातले तिमि सीप् नलाऊ
तागत् भया लड्न ग्रगाड़ि ग्राऊ ७६
"बालख् तँ होस् जा ग्रब खेलनलाई"
तिम्ले भन्यौ जौन कुरा मलाई
सो बातमा खेल्दछु हेर याहाँ
तिम्रा सँगै यो रणभूमि माहाँ ७७
एती भनी डर् रतिभर् नमानी
सौ बाण् प्रतापाग्रजिलाइ हानी
हाँसी दमन्ले ताहिं जल्दि फेरी
शंखै फुक्या क्यै न गरेर देरी ७८
देखी दमन्ले शर त्याग् गर्याका
क्रोध्ले प्रतापाग्र बहुत् जल्याका
सौ बाण तिन्ले पनि छोड़िदीया
ग्राकाशमै ती शर काटिलीया ७९
ग्रापना ति सब् शर्हरु काटियाका
देखी दमन् क्रोधित खुब् भयाका
फेर् बाण बर्साइ गराइ धारा
ढाकीदिया फौज्हरुलाइ सारा ८०
बाण् लागि घेर् बीर्हरु मर्नलाग्या
कातर् थिया जो रण छोडि भाग्या
क्रोध्ले दमन्ले शर छाडि ताहाँ
कत्तल् गर्या फौज् रणभूमि माहाँ ८१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

नर्पा शरैका बहुतै गर्याका
आफ्ना तरफ्का जन घेर् मर्याका
देखी प्रतापाग्र बहुत् रिसाया
दश् बाण आफ्ना धनुमा चढाया ८२
कान्तक् खिंची ती शर छोड़ि ताहाँ
लाया दमन् बीर्कन छाति माहाँ
पाँच् बाण फेर् जल्दि चलाइ लीया
घोड़ा समेत् सारथि काटिदीया ८३
हज्जार शर् फेर् उसमाथि छोडी
तिल् मैं दमन्को रथलाइ तोड़ि
खूशी प्रतापाग्र भएर ताहाँ
अत्यन्त गर्ज्या रणभूमि माहाँ ८४
आफ्नू रथै टुट्न गयो जसै ता
क्रोध्ले दमन् बीर् पनि झट् तसै ता
अर्कौ रथैमाथि चढेर फेरी
भन्छन् प्रतापाग्रजिलाइ हेरी ८५
मेरो पराक्रम् रतिभर् नजानी
राजन् ! तिमीले शर घेर हानी
पार्यौ बिरथ् तै पनि हेर ऐल्हे
कुन् हाल गर्छू तिमीलाइ मैले ८६
एती भनी जल्दि गरेर ताहाँ
नौ शर् दमन्ले लिई हात माहाँ
हानेर चार् शर् रथ चूर्ण पार्या
पाँच् बाणले सारथि अश्व मार्या ८७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पैल्हे बिरथ् यै रितले गराई
फेर् एक शर् झट् धनुमा चढाई
छोड्या उ बाण् लाग्ना गयो जसै ता
मूर्छा प्रतापाग्र भया तसै ता ८८
मूर्छा प्रतापाग्र भएर ताहाँ
लोट्या जसै त्यो रणभूमि माहाँ
त्यो देखि डर् मानिलिएर धेरै
भाग्या सबै फौज्हरु एक बेरै ८९
आफ्ना सबै शत्रु हटीगयाका
देखी दमन् खूशी अधिक् भयाका
जो आउँछन् लड्छु भनेर फेरी
ताहीं रह्या क्यै घरि काल हेरी ९०
रण्मा प्रतापाग्र पनी गिर्याका
छोडेर रण् फौज सबै फिर्याका
देखेर शत्रुघ्न रिसाइ फेरी
भन्दाभया बीर् सबलाइ हेरी ९१
हेबीर् हो! तिमिहेरुमा जन कुनै ❀ साम्ने दमन्का भई
सक्छौलड्नभन्या बताउ नाहिं ता❀ लड्छू म आफैं गई
भन्न्या एति हुकुम् सुन्या सकलले❀ शत्रुघ्नजीको जसै
हात् जोरीकन बिन्ति पुष्कलजिले❀ गर्दाभया झट् तसै ९२
हेनाथ्! गर्नुहवस् हुकुमम्आहिले❀जान्छू लडाइँ महाँ
मारीसैन्य समेत् दमन्कन सहज् ❀ फिर्न्याछु चाँड़ो यहाँ
फर्ला जानु हजूरले किन तहाँ ❀ आफैं अगाडी सरी
शत्रू इन्द्र भया पनी म जितुँला ❀रामकाप्रतापलेगरी ९३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

शत्रुघ्नै सँग बिन्ती यो श्राधि गरी ❀ फेरी प्रतिज्ञा पनि
साम्नेमा सब फौजका गरिलिया ❀ मार्छू दमन् वीर् भनी
साह्रै खूशि भएर पुष्कल उपर् ❀ शत्रुघ्नजीले तहाँ
जाऊ लड्न भनी हुकुम् दिनुयो ❀ लश्करदिइ सङ्गमहाँ ९४
श्राज्ञा लीकन फेर् प्रदक्षिरा तहाँ ❀ शत्रुघ्नजीको गरी
धेरै फौजहरू लिएर खुशि भै ❀ हात्माधनुष्बाराधरी
जान्छू लड्न भनी चढी रथविषे ❀ पुष्कल्जि जल्दी गया
साम्ने गै रराभूमिमा दमनका ❀ रथ्लाइ थाम्दा भया ९५
साम्ने पुष्कललाइ देखि बहुतै ❀ क्रोध्लेदमन् वीर्पनि
हात्मा शस्त्र लिई तयार् भइगया ❀ लड्छू म ऐल्हे भनी
श्रापनू नाम र कुल्सुनाइ पाहिले ❀ धैर्य गरी मन् महाँ
शर्को वर्षरा खुब् दुवै ति विरले ❀ गर्दाभया फेर् तहाँ ९६
ती सब् शर्हरु गै गगन् सलह भैं ❀ ढाकेर छाया परी
श्रंधेकार् रराभूमि भर् हुनगयो ❀ रात्री परेकै सरी
घोड़ा हात्ति र रथ् सिपाहिहरु जो ❀ साम्ने श्रघी सर्दथ्या
लागी ती दुइ वीरका शर श्रनेक् ❀ टुक्रटुक्भई मर्दथ्या ९७

धेर् शर्हरू दमनले विनि त्याग् गर्याको
श्रापना फउज् कतल भै रराामा मर्याको
देखेर त्यो श्रधिक पुष्कलजी रिसाया
श्रग्न्यास्त्रको तहिं प्रयोग् गरि शर् चलाया ९८
ती शर्हरु सकल श्रग्नि समान् भयाका
सीधा भई दमन वाहिनिमा गयाका
राँका ति श्रग्नि सरिका भइ फौज माहाँ
लाग्या जलाउन सबै चिजलाइ ताहाँ ९९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हात्ती सिपाहि रथ खुब् जब डढ्न लाग्या
डरले फउज् दमनका रण छोडि भाग्या
भाग्थे जता तिर उतै तिर शर् चलाई
पुष्कल्जिले सकल फौज दिया जलाई १००

जस्तो गरी प्रलयमा भगवान् त्रिलोचन्
चौधै भुवन्कन सहज् सँग भस्म गर्छन्
पुष्कल्जिले पनि उसै गरि ठिक्क ताहाँ
लागे जलाउन फउज् रणभूमि माहाँ १

छाता ध्वजा रथहरु जिमिमा झर्याका
लागेर अग्नि ति सबै चिज खाग् गर्याका
देखी दमन् बिर पनी बहुतै रिसाया
झट् वारुणास्त्र कन त्याग् गरि जल् गिराया २

वर्षा गराइकन खुब् जलका ति धारा
अग्न्यास्त्रलाइ तहिं जल्दि निभाइ सारा
पुष्कल्जिका फउजमा पनि फेरि ताहाँ
वर्षा गर्या जल बहुत् रणभूमि माहाँ ३

अग्न्यास्त्रलाइ तहिं जल्दि निभाइ सारा
आफ्ना फउज् उपरमा जलका ति धारा
साह्रै गर्या दमनले जब देखिलिया
पुष्कल्जिले त पवनास्त्र चलाइदीया ४

त्यो अस्त्रले हुरि चलीकन जल् उडायो
फेरी दमन् बिर तरफ् रथ सब् टुटायो
त्यो देखि ती दमन बिर् बहुतै रिसाया
झट पर्वतास्त्र तहिं मन्त्र गरी चलाया ५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पर्वत् समान् भइ ति बाण् जब गिर्नलाग्या
पुष्कल् तरफ् जति थिया सब फौज भाग्या
बज्रास्त्र पुष्कलजिले पनि ताहिं छोड्या
चूर्णै गराइकन पर्वतलाइ तोड्या ६
फेरी ति बज्र सरि बाण्हरु एक सङ्गमा
लाग्दाभया दमन्का सब जाइ अङ्गमा
लाग्या जसै सकल बाण्हरु अङ्गमा गै
गिर्दाभया दमन बीर् रथमा बिचेत् भै ७
मूर्छा परी दमन बीर् रथमा गिर्याको
देखेर फौज् सकल डर् मनमा पर्याको
भागी सुबाहु नृपका सब सामुजाई
बिस्तारपूर्वक दिया सब बात् सुनाई ८
पुष्कल् पनी सकल शत्रु जितेर खुश्भै
शत्रुघ्नजीसित उसै घरि सामुमा गै
बस्ता भया सकल फौज्हरु ताहिं आई
तारिफ् गर्‍या अधिक पुष्कल बीरलाई ९
राजा सुबाहु पनि पुत्र लड़ाइ माहाँ
मूर्छा पर्‍यो भनि खबर् सुनि फेर ताहाँ
सुर्ता परेर मनमा सब मन्त्रिलाई
भन्दाभया अब त लड्दछु लौ म जाई १०
मेरो फउज् सकल जो छ मुलुक् भरीमा
सामेल् गराउनु भनेर उसै घरीमा
उर्दी दिई सकल मन्त्रि खटाइ ताहाँ
सामेल् गर्‍या सकल फौज् रणभूमि माहाँ ११

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सब् बन्धुवर्गहरुलाइ लिएर फेरी
राजा सुबाहु पनि वयै नगरेर देरी
टङ्कार् गरेर धनुको रथ झट् बढाई
पौंच्या रणस्थल विषे हतियार् सजाई १२

भाई एक थिया सुबाहु नृपका ❀ नामका सुकेतू तहाँ
दाज्यूका सँगलागि ती पनि गया ❀ लड्नै भनी रण् महाँ
चित्राङ्ग र विचित्रवीर् नृपतिका ❀ छोरा थिया ती पनि
सज्जित् भै रथमा चढी चलिगया ❀ लड्छौंसमर्मामनी १३

फेरी जोत्रु वीरथिया उपनि सब् ❀ सामेल् तुरुन्तै भया
उर्दी माफिक सब् सुबाहु नृपका ❀ सङ्गमा समर्मा गया
हात्ती एक अयुत् रथी दश अयुत् ❀ दश्लाख घोड़ाहरू
पैदल्काअनगिन्तिफौज्नृपतिका❀सङ्गमाचल्योफेरअरू १४

सारा फौजहरू लिएर सँगमा ❀ राजा सुबाहू जसै
पौंच्याथ्या रणभूमिमा दमनवीर्❀ देख्या गिर्याका तसै
साह्रै दिक्क भएर गै नजिकमा ❀ काख्मा उठाई लिया
ठण्डा जल् शिरमा छिटी दमनको ❀ संज्ञा गराई दिया १५

मूर्छा देखि उठाइ पुत्रकन फेर् ❀ शत्रुघ्नका सङ् महाँ
लड्नैलाइ भनेर फौजहरु सबै ❀ जम्मा गराया तहाँ
क्रौंचैव्यूह तयार् गरी सकल वीर् ❀ लड्नै अगाड़ी सर्‍या
फेरी सोहि घरी सुबाहु नृपले ❀टङ्कार् धनूको गर्‍या १६

ठूलो फौज तहाँ सुबाहु नृपको ❀ शत्रुघ्नजीले जसै
देख्या सामु महाँ र फेर् सुमतिका ❀ सङ्गमा सुध्याया तसै
हे मन्त्री ! भन यो कउन् नृपतिको❀ ठूलो फउज् यो घरी
आयाको म अगाड़ि देख्दछु यहाँ ❀ लड्न्या इरादा धरी १७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मन्या प्रश्न सुनेर फेर् सुमतिले ❀ शत्रुघ्नका सङ्गमहाँ
बिन्ती पारिलिया यसै मुलुकका ❀ राजा सुबाहू यहाँ
आया लड्न मनेर लौ अब सबै ❀ हामीहरू छौं जति
लड्नैलाइ तयार भैकन बसौं ❀ पर्नेछ संग्राम् अति १८
बिन्ती एति सुन्या जसै सुमतिको ❀ शत्रुघ्नजीले पनि
आज्ञा जल्दी दिया सबै बिरहरू ❀ जाऊन् समर्मा भनी
सेनाकापति भाई जानकिजिका ❀ लक्ष्मीनिधि बीर् थिया
क्रौंचै ब्यूह त तोड्न भार लिइ सब् ❀ तिन्काअगाड़ीगया १९
पृष्ठ रक्षक भै ति लक्ष्मिनिधिका ❀ पुष्कल्जि फेरी तहाँ
सारा अस्त्र लिई चढेर रथमा ❀ जाँदाभया रण् महाँ
रत्नैग्रीव र नीलरत्न रिपुताप् ❀ फेरी हनूमान्हरू
तिन्का साथ महाँ गया समरमा ❀ लश्कर् लिई धेर् अरू २०
पाँचै ती सब फौज् सुबाहु नृपका ❀ फौज्कानगिच्माजसै
बाजा दुन्दुभि खुब् बजाइ दुइ फौज् ❀ भिड्दाभया फेर् तसै
हात्ती रथ् पइदल् दुवै तरफका ❀ बीर् बीर् अगाडी सरी
छोड्या शस्त्रहरू उसै बखतमा ❀ बृष्टी परयाभैं गरी २१
हाहाकार् परिगो बहुत् बिरमरया ❀ सोही बखत्मा तहाँ
झट् लक्ष्मीनिधि गै सुकेतु बिरका ❀ भिड्दा भया सङ् महाँ
बाक्युद्धै पहिले गरेर पछि फेर् ❀ हात्मा धनुर्बाण् धरी
लाग्या ती दुई बीर लड्न रणमा ❀ बर्षा शरैको गरी २२
दश्बाण् एकबखत् चढाइधनुमा ❀ लक्ष्मीनिधिले तहाँ
हान्या क्रोध गरी सुकेतु बिरका ❀ ताकेर छाती महाँ
लागी ती दश बाणले हृदयमा ❀ घाऊ गरायो जसै
साह्रै क्रोध गरी सुकेतु बिरले ❀ सौबाण् चलायातसै२३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ती सौ बाण् पनि फेर् उसै बखतमै ❀ लागेर सब् अङ्गमहाँ
घाऊ घेर भई रगत् बहिगयो ❀ लक्ष्मीनिधीको तहाँ
आपुस्मा यही रीतले बिर दुबै ❀ संग्राम् ठुलो गर्दथ्या
तिन्का शस्त्र छुटेर फेर् अरु पनी ❀ धेरै फउज् मर्दथ्या २४
मुरुयै ती दुइ बीरको शरिरमा ❀ धेर् बाणको चोट् परी
बग्दा घेर रगत् पलाँश फुलझैं ❀ शोभित् भया तेस्घरी
गोलाकार् धनुको गराइ ति दुबै ❀ लड्दा कसैले पनि
मालुम् गर्न सकेन यस् बखत शर् ❀ छोड्छन् यसोरीभनी २५
सब्ले ती दुइ बीरका शरहरु ❀ लागी रणस्थल् महाँ
काटयाकाशिरमात्र फौज्सकलका ❀ देख्या गिरेयाकातहाँ
आकाश्मा रराभूमिमा सलह झैं ❀ बर्षा शरैको गरी
सारा ढाकिदिया थिएन रतिभर् ❀ खालीजमिन्तेस्घरी२६
आठ्बाण् जल्दि उठाइ लक्ष्मिनिधिले ❀ छोड़ेर साथै महाँ
घोड़ा सारथि चाप् सुकेतु बिरको ❀ काटीदिया फेर् तहाँ
यै रित्ले बिरथी भया पछि गदा ❀ लीई सुकेतू पनि
दौडया क्रोध गरेर लक्ष्मिनिधिको ❀ संहार् म गर्छू भनी २७

लक्ष्मीनिधिले पनि फेरि ताहाँ
ठूलो गदा एक् लिइ हात माहाँ
दौड़ेर गै जल्दि सुकेतुलाई
हान्दाभया सोहि गदा घुमाई २८
साह्रै गदाको जब चोट खाया
फेरी सुकेतू बिर झन् रिसाया
आफ्ना गदाले पनि शीर माहाँ
ठोक्या ति लक्ष्मीनिधि लाइ ताहाँ २९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तै दुवै ती बिर युद्ध गर्थ्या
त्यो देखि सब् बीर्हरु छक्क पर्थ्या
लाग्या गरुड् झैं गरि घुम्न ताहाँ
मण्डल् गरी खुब् रणभूमि माहाँ ३०

बज्रैको सरिको गदा ति कहिले ❀ शिर्मा बडो बेग्गरी
हान्थ्या क्रोध गरी दुबै ति बिरले ❀ मार्न्या इरादा धरी
कैल्हे गर्दनमा र छाति बिचमा ❀ जोर्ले गदा हान्दथ्या
देखी ती दुइको पराक्रम ग्रुरू ❀ आश्चर्य खुब् मान्दथ्या ३१

साह्रै बज्रन गै गदा धरिधरि ❀ सारा शरीरै महाँ
लाग्यो बग्न रगत् र लाल् भइगया ❀ दूबै जना बीर् तहाँ
बल्मा साहसमा बराबर थिया ❀ कौशल् बहुतै गरी
लड्थ्या ती दुई बीर् परस्पर तहाँ ❀ जित्ने इरादा धरी ३२

केही काल् पछि फेर् गदा पनि दुबै ❀ बीर्का टुटी गै गया
मुक्काले पनि फेर् दुबै ति बिरले ❀ खुब् युद्ध गर्दा भया
एही रितिसित एक् मुहूर्त बहुतै ❀ युद्धै गरी फेर् तहाँ
एकैपल्ट दुबैजना बीर गिर्या ❀ मूर्छित् भई रण्महाँ ३३

फेरी ती दुइ बीरलाइ उ बखत् ❀ साह्रै चलाकी गरी
ल्याया झट् दुइ तर्फका फउज गै ❀ रथ्का उपर्मा धरी
सोही औसरमा सुबाहु नृपका ❀ चित्राङ्ग पुत्रै तहाँ
लड्थ्या पुष्कलका गरुर सँगमा ❀ सोही रणस्थल् महाँ ३४

स्वामी कार्तिक् र तारक्असुर आधिजउन् चालले युद्ध गर्थ्या
सोही माफिक् लड़ी ती दुइबिर रणमा सैन्यका प्राण हर्थ्या
दश् बाण् चित्राङ्ग बीर्ले उहि बखत लिई झट् धनूमा चढाया
सोही शर् छोड़ि घाउ शरिरभरि सबै पुष्कलैको गराया ३५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पुष्कल्जिले फेरि बहुत् रिसाई
सौ बारा आफ्ना धनुमा चढाई
छोडेर सब् शर्हरु अङ्ग माहाँ
लाया ति चित्राङ्गजिलाइ ताहाँ ३६
लाग्यो रगत् बग्न बहूत भारी
पुष्कल्जिले औसर सोही पारी
एक् भ्रामकै अस्त्र तहाँ चलाया
चित्राङ्गको रथ्कन खुब् घुमाया ३७
अस्त्रै प्रभाव्ले गरि खुब् उड्याको
आकाशमा गैकन रथ् घुम्याको
देख्दा कुदी त्यो रथ छोड़ि ताहाँ
चित्राङ्ग उत्र्या रणभूमि माहाँ ३८
बयै काल् घुमी त्यो रथ चूर्ण भैगो
टुक्रा रणस्थल् बिच गिर्न गै गो
पुष्कल्जिको अद्भुत कर्म जन्ले
देखि गर्‍या तारिफ धेर मन्ले ३९
चित्राङ्ग बीर्ले पनि फेरि अर्को
रथ्मा चढी पुष्कललाइ शर्को
बर्षा गराईकन धेर ताहाँ
अत्यन्त गर्ज्या रणभूमि माहाँ ४०
भालाहरू लीकन फेरि धेरै
छाड़ेर पुष्कल्कन एकबेरै
व्याकुल् गरी सारथि अश्व मार्‍या
ताहीं बिरथ् पुष्कललाइ पार्‍या ४१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फेर् अर्कौ रथमा चढेर रिसले ❀ पुष्कल्जिले त्यै घरी
छोड़ी पांच्शर अश्वसारथि नि नाश् ❀ चित्राङ्ग वीर्को गरी
पारयाथ्या विरथी जसै अहिनखत् ❀ चित्राङ्ग वीर्ले पनि
फेर् अर्कौ रथमा चढी अघि सर्या ❀ गर्छू लड़ाईं भनि ४२
त्यो रथ्लाइ तहाँ ति पुष्कलजिले ❀ तोड़ी दियाथ्या जसै
फेर् अर्कौ रथमा चढ़्या उ पनि फेर् ❀ तोड्दा भया झट् तसै
यस तैरितीसित फेर् ति पुष्कलजिले ❀ चित्राङ्गलाइ तहाँ
पच्चीस्वार् विरथी गर्या सहजमा ❀ त्यो युद्ध भूमि महाँ ४३
दौताले पनि गर्न मुश्किल हुन्या ❀ पुष्कल्जिले काम् गर्या
देखी अद्भुत काम् दुवै तरफका ❀ सारा फउज् छक् पर्या
साह्रै क्रोध गरेर सोहि घरिमा ❀ चित्राङ्ग वीर्ले गई
फेर् अर्का रथमा चढी अघि सर्या ❀ खुब् सावधानै भई ४४
पाँच् वाण् ली करमा चढाइ धनुमा ❀ चित्राङ्गदैले तहाँ
ताकी पुष्कललाइ त्याग् गरि तिवाण् ❀ लाया निधारै महाँ
लाग्दा ती शर पाँच् रिसाइ नहुतै ❀ पुष्कल्जिले त्यै घरी
चित्राङ्गै विरलाई गैकन भन्या ❀ एक्वाण् करैमा धरी ४५
हे राज्पुत्र ! मलाइ यस् वखतमा ❀ पाँच् शर् ललाटै महाँ
जो लायौ तिमिले उ चोट् सहिलियाँ ❀ मैले सहज्मा यहाँ
सूचन् दीकन भन्दछू सुन तिमी ❀ मैले भनेको पनी
झीकें यो शरलाइ हेर अहिले ❀ तिम्लाइ मार्नैं भनी ४६
पुष्कल्ले इ कुरा सुनाइ धनुमा ❀ एक्वाण् चढ़ाया जसै
वयै हाँसीकन फेर् भन्या यहि कुरा ❀ चित्राङ्ग वीर्ले तसै
हे पुष्कल् ! सुनिल्यौ जउन् शर यहाँ ❀ मार्छू मलाई भनी
देखायौ तिमिले उ शर्कन सहज् ❀ काट्न्याछु मैले पनी ४७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जो हो प्रतिज्ञा तिमिले गर्याको
माहू मलाई भनि शर् धर्याको
त्यो बाण टुक्रा गरि काट्न मैले
गर्छू प्रतिज्ञा सुनिलेउ ऐल्हे ४८

सज्जनले आधि तीर्थमा सज्जना ❀ जाउन् सुखैले भनी
आफ्नू खर्च लगाइ सुन्दर गरी ❀ बाटो खन्याको पनी
तोड्ने जन् गइपर्छ जुन् नरकमा ❀ त्यो बाणलाइ यहाँ
मैले काट्न सकैन ता परुँ म गै ❀ त्यै घोर नर्कै महाँ ४९

चित्राङ्ग बिरका इ बात् जब सुन्या ❀ क्रोधित् भई मन्‌महाँ
त्यै बाण्लाइ चढाई फेरि धनुमा ❀ पुष्कल्‌जि भन्छन् तहाँ
साँचै दास् रघुनाथको म हुँ भन्या ❀ चित्राङ्ग बीर्‌को पनी
काटोस्‌शीर्‌कनाशिर्‌किरीट्‌सहितको ❀ एसै शरैले भनी ५०

पुष्कल्‌ले यहि बात् गरेर पहिले ❀ त्यो बाणछाड्या जसै
त्योबाण्‌काट्नभनेरएक्‌शरलिई ❀ चित्राङ्ग बीर्‌ले तसै
छोड्या त्यो शरले गई गगनमा ❀ सब्‌का अगाडी महाँ
काट्यो पुष्कलको शरैकन दुवै ❀ टुक्रा गराई तहाँ ५१

काट्यो त्यो शर ता तथापि रघुनाथ् ❀ ज्यूका प्रताप्‌ले गरी
टुक्रा एक पछाड़िको उहि फगत् ❀ गिर्दोभयो त्यो धरी
जुन् चाहीं तहिं अग्रभाग टुकड़ा ❀ सोही शरैको थियो
चित्राङ्ग बिरको गएर उसले ❀ शिर्‌लाइ काटीदियो ५२

कुण्डल्‌ले र किरीटले सहितको ❀ चित्राङ्गको शिर् जसै
गीर्यो पृथ्विमहाँ र फौज्‌हरु सबै ❀ भाग्या डरैले तसै
पुष्कल्‌कोजयलाभ देखिकन सब् ❀ दैवताहरुले तहाँ
वर्षाखुन् फुलको गर्या खुशिभई ❀ त्यो युद्धभूमि महाँ ५३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लागेर पुष्कलजिको शरले मर्याको
आफ्नू कुमार रणभूमि बिषे पर्याको
देखी सुबाहु पनि छाति पिटेर ताहाँ
रूँदाभया अधिक ताप् गरि चित्त माहाँ ५४

चित्राङ्गको शिर लिएर उठाइ हेर्दै
भन्छन् सुबाहु नृप धेर बिलाप गर्दै
हा पुत्र ! छोड़िकन आज मलाइ याहाँ
जाँदा भयौ तिमि यसो गरि बस्न काहाँ ५५

तिम्रो अधिक् मधुर बाणि जसै म सुन्थ्याँ
क्रोध्मा भया पनि उसै घरि खूशि हुन्थ्याँ
क्यै बातको दुख पर्या पनि सामु आई
गर्थ्यौ सहास दिइ कुरा तिमिले मलाई ५६

यस्ता रितिसित पुत्रको जतिथियो ❀ सम्झेर सब् गुन् तहाँ
लाग्या गर्न बिलाप् सुबाहु नृपती ❀ सब्का अगाड़ी महाँ
तिन्का पुत्र अरू बिचित्र र दमन् ❀ भन्या दुवै फेर् थिया
जल्दी ती दुइले सुबाहुकन क्यै ❀ शान्ती गराई दिया ५७

हेनाथ् ! धेर् किन गर्नु हुन्छ यसरी ❀ सुर्ता हजुर यो घरी
जो मर्नू मरि गै गयो अब यहाँ ❀ क्या हुन्छ सुर्ता गरी
धैर्यै खूब् गरिबाक्सियोस् हजुरले ❀ हामी छदैछौं यहाँ
मार्नेछौं सब शत्रुलाइ सहजै ❀ यो युद्धभूमि महाँ ५८

सम्झाया दुइ पुत्र गैकन तहाँ ❀ यस्ता प्रकारले जसै
सुर्ता त्याग गरी चढ्या रथ उपर् ❀ राजा सुबाहू तसै
फेरी पुष्कललाइ मार्छु म भनी ❀ हातमाधनुर्बाण्धर्या
साह्रै क्रोध् गरि रामका फउजमा ❀ बर्षा शरैको गर्या ५९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

शरको नर्षरा धेर् सुबाहु नृपले ❀ आफ्ना फउज्मा जसै
लाग्यागर्नेर खुब्रिसाइ हनुमान् ❀ साम्ने भया फेर् तसै
लइन्या मन्सुबले रिसाइकन खुब् ❀ आफ्ना अगाडी महाँ
आयाका हनुमानलाइ उ बखत् ❀ भन्छन् सुबाहू तहाँ ६०
शत्रुघ्नै छ कहाँ बताउ हनुमान् ! ❀ पुष्कल् छ ऐल्हे कहाँ
पैल्हे ती दुइलाइ मार्छु अहिले ❀ यो युद्ध भूमी महाँ
भन्दै क्रोध गरी सुबाहु नृपले ❀ ई बात् गऱ्याथ्या जसै
ठूलो शब्द गरेर हाँसि हनुमान् ❀ फेर् भन्नलाग्या तसै ६१
हे राजन् ! सुन सेवकैहरु छँदै ❀ मालिक्हरू गै कहाँ
लड्छन् युद्ध महाँ बताउ तिमिले ❀ ऐल्हे मलाई यहाँ
सेवक् हूँ म मलाइ ता जित तिमी ❀ पैल्हे लडाई गरी
फेर् शत्रुघ्नजिका गएर सँगमा ❀ लड्नू अगाडी सरी ६२
यस्तोबातहनुमानकोजबसुन्या ❀ क्रोधित् सुबाहु भया
दश्बाण् श्रीहनुमानका हृदयमा ❀ ताकेर हान्दा भया
बाण्लाग्योभनिखुब्रिसाइहनुमान् ❀ बीर्ले ठुलो रुख्घऱ्या
हानी त्यै रुखले सुबाहु नृपको ❀ रथ्लाइ चूर्णौं गऱ्या ६३
फेर् अर्का रथमा चढेर रिसले ❀ राजा सुबाहू पनी
लाग्याबाणहरु वृष्टिगर्नहनुमान् ❀ बीर्लाई मार्नै भनी
छातीमा शिरमा र फेर् पुछरमा ❀ लाग्यो सबै शर् जसै
धेरै घाउ भयो र फेरि हनुमान् ❀ साह्रै रिसाया तसै ६४
क्रोधले पूर्ण भएर सोहि घरिमा ❀ दौडी नगीच्मा गया
जोर्ले लात्ति सुबाहुका हृदयमा ❀ ताकेर हान्दा भया
लाग्योलात् हनुमानको जबतहाँ ❀ रथ्देखि भैंमा झऱ्या
छाद्दै धेर रगत् सुबाहु नृप ती ❀ मूर्छा तुरुन्तै पऱ्या ६५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मूर्छित मै सपना सुबाहु नृपले ❀ देख्या अकस्मात तहाँ
सोह्रै सुन्दर मूर्तिका रघुपती ❀ आफ्ना अगाड़ी महाँ
ब्रह्मादी सब देवताहरु पनी ❀ रामका हजुरमा रही
गर्थ्या श्रीरघुनाथकै स्तुति तहाँ ❀ चाकरसमान्कामई ६६
फेरी वर्यै धरिमा सुबाहु नृपको ❀ मूर्छा खुलेथ्यो जसै
मनलेत्योसपनाविचारगरिबहुत ❀ आश्चर्य मान्या तसै
ईश्वर हुन्रघुनाथ्भनीजबचिन्ह्या ❀ सब् फौजलाई पनी
उर्दी जल्दि गर्‍या उसै बखतमा ❀ थाम्नू लड़ाई भनी ६७
उर्दी एति दिई लडाइँ पनि सब् ❀ थामी फउज्भर् महाँ
पैदल् जल्दि गया सुबाहु नृपती ❀ शत्रुघ्नजी छन् जहाँ
पौंच्या सामुमहाँ बहुत खुशि हुँदै ❀ शत्रुघ्नजीका जसै
हात जोरीगरि दण्डवत् आघिसरी ❀ बिन्ती चढाया तसै ६८
हे शत्रुघ्नजी ! रामलाइ अहिले ❀ मालिक्जगतका भनी
मैले जानिलिंदा हजुर् सँग यहाँ ❀ आयाँ शरण्मा पनी
ब्रह्मादीहरु गर्दछन् सकल काम् ❀ जस्का हुकुम्मा रही
उन्कै अश्व हरण् गर्‍यो दमनले ❀ बालखनजान्यामई ६९
तेस्कोमाफ्गरिबक्सियोस्हजुरले ❀ एल्हे शरण् पर्दछू
मेरो राज्य र रत्न दौलथ समेत ❀ अर्पण् सबै गर्दछू
बिन्ती एती सुनी सुबाहु नृपको ❀ शत्रुघ्नजीले पनी
भन्नूभो तिमिमा कसुर् म अहिले ❀ देख्दीन केही भनी ७०
धर्मै क्षत्रियको लिएर तिमिले ❀ त्यो अश्वलाई हर्‍यौ
सोही कारण फेरि हामिहरुका ❀ सङ्गमा लड़ाई गर्‍यौ
हे राजन् ! अब पुत्रलाइ तिमिले ❀ राज्याभिषेकै गरी
जानूपर्दछ अश्वका पछि पछी ❀ हाम्रा सँगै यो घरी ७१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आज्ञा एति सुन्या सुनाउ नृपले ❀ शत्रुघ्नजीको जसै
घर्मा गैकन पुत्रलाइ दिइ राज् ❀ फर्केर आया तसै
घोड़ालाइ पनी फुकाइ दिनुभो ❀ शत्रुघ्नजीले तहाँ
घुम्दै कै दिनमा पुग्यो हय पनी ❀ फेर् ब्रह्मवर्ते महाँ ७२
ब्रह्मावर्त मुलुक् भरी जति थिया ❀ राजा कसैले पनी
घोड़ा धर्न सकेन कर् लिई सबै ❀ आया ति मान्छौं भनी
कौड़ीलीकनत्योमुलुक्भरि हुकुम् ❀ आफ्नो चलाई तहाँ
श्रीशत्रुघ्नजि फेर् गया पछि पछी ❀ त्योअश्वजान्थ्योजहाँ ७३
यस्तैरितिसित अश्वत्यो घुमिसकी ❀ सब् ब्रह्मवर्तै भरी
पौंच्योफेर्गइसत्यवान्नृपतिका ❀ पुर्मा ठुलो वेग् गरी
शत्रुघ्नै पनि फौजहरु सब लिई ❀ सोही नगर्मा गया
शोभा त्योपुरिको नजर्गरिबहुत् ❀ आश्चर्य मान्दाभया ७४
देखिन्छन् सुनकासबै मणिजडित् ❀ देवल् हजारौं जहाँ
सुन्दर् मठ् अतिथिहरू रहनका ❀ खातिर् बन्याका तहाँ
सारा ब्राह्मणले बसेर घरमा ❀ सुब् अग्निहोत्रै गरी
निस्क्याको चरुको धुवाँ वरिपरी ❀ देखिन्छ त्यो पुर् भरी ७५
तीर्भर् सब् ऋषिका कुटीहरु भई ❀ शोभा भयाकी तहाँ
बग्छिन् फेर्शशिखिलोचनानदिजउन् ❀ पुर्का नगीचै महाँ
त्यो सुन्दर् पुरिका पुगेर नगीचै ❀ शत्रुघ्नजीले पनी
मन्त्री तर्फ फिरी सुद्ध्याउनु भयो ❀ कस्कोपूरीहोभनी ७६

ऋतम्भर राजाको जीवन चरित्र वर्णन ।

यो शत्रुघ्नजिको हुकुम् सुमतिले ❀ सुनेर खूशी भया
हात् जोरीकन फेर् उसै बखतमा ❀ बिन्ती चढ़ाई लिया
हे नाथ्! धार्मिकएक्ऋतम्भरभनी ❀ राजा यहाँ थ्वै थिया
पैल्हे यो स्थलमा विचित्र नगरी ❀ तिन्ले बनाई लिया ७७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

धेरै रानि थिया तथापि ति कुनै ❀ रानी तरफमा पनी
सन्तान् क्यैन हुँदा ति दुःखितभया ❀ छोरा भयानन् भनी
वैराग्यै मनमा लिईकन सदा ❀ बस्थ्या ति शास्त्रै सुनी
आयातिन्कन भेट्न कैदिन यहाँ ❀ जाबालिनाम्का मुनी ७८
देख्याथ्या घरमा ऋतम्भरजिले ❀ जाबालिलाई जसै
पैल्हे पूजन खुब् गरेर पछि फेर् ❀ बिन्ती चढाया तसै
हे सर्वज्ञ ऋषे! उपाय पनि एक् ❀ सन्तान् हुन्या क्यै भया
आज्ञा गर्नुहवस् यहाँ हजुरले ❀ राखी ममाथी दया ७९
यो बिन्ती नृपराज् ऋतम्भरजिको ❀ सूनी ऋषीले पनि
आज्ञा गर्नुभयो म भन्छु सुनिल्यौ ❀ तेस्को उपायै भनी
तीन् छन् हे नृपराज्! उपाय तिमिले ❀ त्यो तीन् उपायै महाँ
यौटै मात्र गर्‍या पनी सहजमा ❀ हुन्याछ सन्तान् यहाँ ८०
की गर्नू शिवको पुजा कि त पुजा ❀ गर्नू हरीको पनि
गाईको कि त गर्नु पूजन सदा ❀ सन्तान् म पाऊँ भनी
यो आज्ञा ऋषिको ऋतम्भरजिले ❀ सूनीलियाथ्या जसै
खूशी भै गउको पूजा विधि पनी ❀ सारा सुद्याया तसै ८१
भक्ती गाई उपर् ऋतम्भरजिको ❀ जानी ऋषीले पनि
आज्ञा भो गउको पूजा गरिलिनू ❀ यस्ता हिसाब्ले भनी
उस्दिन्देखियहाँ बहुत् खुशिभई ❀ सोही विधान्ले गरी
लाग्या नित्य पुजा ति गर्न गउको ❀ भक्ती मनैमा धरी ८२
भक्तीपूर्वक गौ लिएर सँगमा ❀ गौका गुठालो भई
आफैं गाइ चराउनाकन पनी ❀ लाग्या वनैमा गई
एक्दिन् जङ्गलमा फरक् नृपतिका ❀ ती गौ भईथिन् जसै
मुक्कबयाईकन सिंहले तहिंति गौ ❀ मार्‍यो अकस्मात् तसै ८३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

गाई मर्न गइन् भनेर नृपती ❀ दुःखित नहूँतै भया
जाबाली ऋषिका उसै बखतमा ❀ आश्रम् निषेफेर् गया
साम्ने गैं ऋषिका उसै बखतमा ❀ गाई मऱ्याको पनि
बिन्ती पारिलिया ऋषे ! गरुँ कसो ❀ यस्को उपायै भनी ८४

योबिन्ती नृपराज् ऋतम्भरजिको ❀ सूनीसबयाथ्या जसै
तिन्माथी करुणा गरेर ऋषिले ❀ आज्ञा गऱ्या फेर् तसै
हे राजन् ! अहिले नजानि गउको ❀ हत्या भयो ता पनि
जो भन्छू मइँले उपाय गरिल्यौ ❀ नष्टैहनस् पाप्भनी ८५

भक्ती श्री रघुनाथका चरणको ❀ मन्मा निरन्तर् धरी
दिन्दिन्एक्गउदानगर्नुतिमिले ❀ साल्भर्नियम्खुब्गरी
बर्षै भर् यहि रीतिले तिमि यहाँ ❀ पूरौं गरौला जसै
होला पुत्र पनी अवश्य बुझिल्यौ ❀ राम्का कृपाले तसै ८६

यो आज्ञा ऋषिको सुनेर खुशिमै ❀ फर्केर घर्मा गया
राम्को भक्ती गरेर नित्य गउदान् ❀ एक् बर्ष गर्दाभया
ब्रत्को पूर्ण भयो जसै उहि बखत् ❀ राम्का कृपाले गरी
जन्म्या पुत्रपनी ऋतम्भरजिका ❀ प्रख्याततिनैलोक्भरी ८७

जाबालीऋषिले उसै बखतमा ❀ फेर् जातकर्मै गऱ्या
त्योबालक्कनफेर्तहाँतिऋषिले ❀ नाम्सत्यवानैधऱ्या
केहीकाल्पछिखुब्जवान्भइगया ❀ ती सत्यवान्जी जसै
तिन्लाई दिई राज् ऋतम्भर गया ❀ तप्गर्न खातिर्तसै ८८

हेशत्रुघ्न! तिसत्यवान् अझतलक् ❀ यस् ब्रह्मवर्तै भरी
राज् गर्छन् रघुनाथका चरणको ❀ भक्ती निरन्तर् गरी
आयो श्री रघुनाथको हय भनी ❀ जान्या भन्या ती यहाँ
दर्शन् खातिर आउनन् हजुरको ❀ खूशीभई मन्महाँ ८९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

शत्रुघ्नै सँग बिन्ति यो सुमतिले * गर्दैथिया फेर् तहाँ
देख्याथ्योहयसत्यवान्नृपतिका * जन्ले उसै बिच्महाँ
देखी त्यो हयलाइ ती सकल जन् * आश्चर्य साह्रै भया
त्योहाल्गैकनसत्यवान्नृपतिका * साम्नेसबैलेकह्या १०
आयो श्री रघुनाथको हय यहाँ * भन्न्या सुन्याथ्या जसै
शत्रुघ्नै सँग सत्यवान् पनितहाँ * भेट गर्न आया तसै
साम्ने भैकन भक्तिपूर्वक अघी * पाऊ बिषे शिर् धर्‍या
आफ्नू राज्यपनी समर्पण तहाँ * शत्रुघ्नलाई गर्‍या ११
खूशी भैकन सत्यवान् नृपतिको * शत्रुघ्नजीले पनि
धेरै आदर गर्नुभो इ रघुनाथ् * ज्यूकाभगत् हुन्मानि
जेठा पुत्र तहाँ प्रसिद्ध बहुतै * एक्सत्यवान्काथिया
त्योराज्यै पनिफेर् तिनैकन तहाँ * शत्रुघ्नजीले दिया १२

अथ विद्युतमाली बध ।

घोड़ा पूर्व तरफ् गयो उहि बखत् * शत्रुघ्नजी फेर् तहाँ
साथैमा लिइ सत्यवान्कन गया * त्योअश्व जान्थ्योजहाँ
घुम्दा यै रितले समुद्र तिरमा * त्योअश्वएक्दिन्गयो
वायूधेर्चलिअन्धकार् सबदिशा * त्यैदिन्भयंकरमातभयो १३
वर्षा धेर गरेर पीप् रगतको * उल्का बहूतै गरी
आई विद्युतमालि राक्षस तहाँ * घोडा हर्‍यो त्यै घरी
त्यो हो रावणको कुटुम्ब बहुतै * रामका उपर्मा पनि
रिस्गर्थ्योदिनादिन्निरोधमतिलिई * मार्‍याकुटुम्बैभनि १४
आँखा सब् जनको छलेर हय त्यो * ल्याएर गुप्त भई
लाग्यो वर्षण गर्न हाडहरु तहाँ * आकाश बिच्मा गई
फेरी एक मुहूर्त बाद् हरि सबै * त्यो बन्द भैगो जसै
घोडालाइ नदेखि फौज् सकलले * आश्चर्य मान्या तसै १५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

घोडा-रक्षक फौज्हरु जति थिया ❀ ती सब् जनाले पनी
लाग्या हेर्न कसोरि यस् वखतमा ❀ घोडा हरायो भनि
सोही औसरमा ति सब् फउजले ❀ फेरी अकस्मात् तहाँ
देख्यासुन्दर एकविमान्अतिठुलो ❀ आकाशका बीच्महाँ ९६
फेरी सोहि विमानका उपरमा ❀ राक्षस्हरूले हरी
राख्याको हयलाइ फौज् सकलले ❀ देख्दाभया तेस् घरी
राक्षस्ले हय त्यो हर्यो भनिखबर् ❀ जानीलियाथ्या जसै
शत्रुघ्नै सँग फेर् तहाँ ति सबले ❀ बिन्ती चढाया तसै ९७
सोध्नूभो तहिं मन्त्रिका सँगमहाँ ❀ शत्रुघ्नजीले गई
घोडा राक्षसले हर्यो भनि खबर् ❀ सूनेर क्रोधित् भई
हे मन्त्री! सुन यो असुर् कउन हो ❀ कस्ता हिसाब्ले यहाँ
लड्नूपर्दछ त्यो कुरा भन सबै ❀ मेरा अगाडी महाँ ९८
आज्ञा एति सुन्या तहाँ सुमतिले ❀ शत्रुघ्नजीको जसै
यो हो विद्युतमालि राक्षस भनी ❀ बिन्ती चढाया तसै
हेनाथ्! रावणको कुटुम्बपनिहो ❀ उस्तैछ यो वीर् भनि
लड्नू पर्दछ यत्नपूर्वक सबै ❀ हामीहरूले पनि ९९
पुष्कल्फेर्हनुमान्सुबाहुहरुसब् ❀ रण्मा अगाडी सरुन्
जस्ता रित्सितहुन्छ यस् असुरको ❀ संहार् तुरुन्तै गरुन्
यो बिन्तीजबमन्त्रिको सुनिसक्या ❀ शत्रुघ्नजीले तहाँ
फेरी सोधिलिया उसै वखतमा ❀ सब्वीरकासङ्गमहाँ१००
हे वीरहो! तिमिहेरुका बिचमहाँ ❀ कुन्वीर् अगाडीसरी
लड्छौ विद्युतमालिका सँग महाँ ❀ त्यो बात् कहू यो घरी
सून्या एति हुकुम् सबै फउजले ❀ शत्रुघ्नजीको जसै
हात् जोरीकन फेरि पुष्कलजीले ❀ बिन्ती चढाया तसै १

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हेनाथ् ! बक्स नुहोस् हुकुम् हजुरले ❀ ऐल्हे मलाई यहाँ
लड्न्याछू म गएर तेस् असुरका ❀ साम्ने अगाडी महाँ
मूर्छा पारि गिराउँला समरमा ❀ त्यो दुष्टलाइ भनी
साम्नेमा सबका म यस् बखतमा ❀ गर्छू प्रतिज्ञा पनी २
फेरी श्रीहनुमान् पनी उहि बखत् ❀ लड्नै अगाडी सऱ्या
मार्छू विद्युतमालिको सकल फौज् ❀ भन्या प्रतिज्ञा गऱ्या
एही रितासित जो थिया अरु तहाँ ❀ राजाहरूले पनि
हात् जोरीकन बिन्ति यै गरिलिया ❀ लड्छौं सबै जन् भनि ३
बिन्ती एति सुन्या सबै फउजको ❀ शत्रुघ्नजीले जसै
साह्रै खूशि भई हुकुम् गरिलिया ❀ सब्का अगाडी तसै
हे बीर हो ! सुन गर्दछू म अहिले ❀ मेरो प्रतिज्ञा पनि
रण्मा विद्युतमालिको शिर यहाँ ❀ काटी खसाल्छु भनि ४
यै रित्ले रघुनाथका फउजले ❀ पैल्हे प्रतिज्ञा गऱ्या
फेरी शस्त्र लिएर ती सकल बीर् ❀ लड्नै अगाड़ी सऱ्या
देख्यो विद्युतमालिले पनि ति सब् ❀ रामचन्द्रको फौज् जसै
आयो लड्न भनेर राक्षस अनेक् ❀ लीएर सङ्गमा तसै ५
साम्ने भैकन फेरि त्यो असुरले ❀ मन्दोमयो यो पनि
व्यर्थै ज्यान् तिमिहेरुले किन यहाँ ❀ त्याग्गर्न आँट्यौ भनि
घोडा दिन्न म रामको अब यहाँ ❀ शत्रुघ्न चाँडो गरी
लड्न्या मन्सुन नै भया म सँग लौ ❀ आनस् अगाडी सरी ६
पुष्कल्ले जब यो बचन् सुनिलिया ❀ त्यो राक्षसैको तहाँ
साह्रै क्रोध गरेर उत्तर दिया ❀ सब्का अगाडी महाँ
सुन् रे विद्युतमालि ! शत्रुहरुका ❀ साम्ने अगाडी गई
बक्बक् गर्दछ बीर् कउन् तँसरि ठीक् ❀ पागल् समान्को भई ७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जस्ले क्षीरसमुद्रका बिच पनी ❀ साँघू लगाई तर्‍या
फेरी रावणको सबै कुल समेत् ❀ मारेर भूमार हर्‍या
तेस्ता श्री रघुनाथको हय हरी ❀ उम्केर जालास् कहाँ
मान्र्याछन् बुझिले तँलाइ पनि फेर् ❀ शत्रुघ्नजीले यहाँ ८
येबात पुष्कलको जसै सुनि सक्यो ❀ एकबाण हात्मा धर्‍यो
ताकी पुष्कललाई खुब्सित तहाँ ❀ त्यस्ले प्रहारै गर्‍यो
फेरी पुष्कलले उसै बखतमा ❀ तीन्शर चलाईलिया
तिन् टुक्रा गरि बाण त्यो गगनमा ❀ काटी खसाई दिया ९
हज्जार् शरकन फेरि पुष्कलजिले ❀ एकै बखत् त्याग् गरी
सारा विद्युतमालिका शरिरमा ❀ घाऊ गर्‍या त्यै घरी
फेरी विद्युतमालिले पनि ठुलो ❀ मुद्गल् करैमा धर्‍यो
साह्रै क्रोध गरेर त्यै बखतमा ❀ पुष्कल्उपर् त्याग्गर्‍यो १०
वज्रयो वज्रसमान चोट् शरिरमा ❀ त्यो मुद्गलैको गई
एकछिन पुष्कलजीगिर्‍या रथउपर् ❀ मूर्छा तुरुन्तै भई
मूर्छा केही घरी परेर पछि फेर् ❀ चैतन्य आयो जसै
देख्या विद्युतमालिलाइ खुशि भै ❀ साम्ने खडा पो तसै ११
देखी विद्युतमालिलाइ नजिकै ❀ हात्मा धनुर्बाण्लिया
सम्बोधन् गरि फेरि पुष्कलजिले ❀ यो बात् सुनाई दिया
हे राक्षस्! अहिले मलाई पनि जो ❀ मूर्छा गराइस् यहाँ
धन्यै होस् अरु बीर हुनन् तँसरि कुन् ❀ साराजगत् भर्महाँ १२
सूचन् दीकन भन्दछू तँ सुनिले ❀ मेरा शरैले गरी
गिर्लास् पृथ्विविषे अवश्य बुझिले ❀ मूर्छा तुरुन्तै परी
पैल्हे एति सुनाई पुष्कलजिले ❀ एकबाण् चलायाजसै
लागी विद्युतमालि मूर्छित भई ❀ लोट्यो जमीन्मा तसै १३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

दाज्यू मूर्छित भै गिऱ्यो र बहुतै ❀ क्रोधित भई मन् महाँ
आयो पुष्कललाई मार्दछु भनी ❀ फेर् उग्रदंष्ट्रै तहाँ
देख्या पुष्कलले असुर्‌कन तहाँ ❀ आफ्ना अगाडी जसै
दश्‌बाणाऽत्याग्गरित्योअसुर्‌कनपनी❀व्याकुल्‌गरायातसै १४
व्याकुल्‌भैकन क्रोधगरीअसुरत्यो ❀ दौडी नगिच्‌मा गयो
एक्‌मुड्‌कीशिरमातिपुष्कलजिका❀ ताकेर हान्दो भयो
पुष्कल्‌ले पनि क्रोध् गरेर उ बखत् ❀ एक्‌बाण् चलाईलिया
त्यै बाण्‌ले गरि उग्रदंष्ट्रकन फेर् ❀ मूर्छा गराई दिया १५
विद्युतमालि अगाडी मूर्छित थियो ❀ सोही बखत्‌मा तहाँ
मूर्छा खुल्नगयो र पुष्कलजिका ❀ आयो अगाडी महाँ
साम्ने गैकन फेरि तेस् असुरले ❀हातमात्रिशूलएक्‌लियो
क्रोधले पूरा भएर पुष्कल उपर् ❀ ताकेर छोडी दियो १६
बेग्‌ले सोहित्रिशूल् तिपुष्कलजिका❀लाग्यो निधार्‌मा जसै
मूर्छा पर्न गई गिऱ्या रथ उपर् ❀ त्यै बेदनाले तसै
पुष्कल्‌लाइ तहाँ गिराई पहिले ❀क्रोधले असुर् फेर् पनि
लाग्यो वर्षागर्न बाणहरुअनेक्❀ मार्छू सबै फौज्‌भनि १७
पुष्कल् मूर्छित भै जसै गिरिगया ❀ क्रोधित बहुतै भई
आया लड्छु भनेर तेस् असुरका ❀ साम्ने हनूमान् गई
लात्तीले मुठिले र फेर् पुछ्‌रले ❀ हानी शरीरै महाँ
पैल्हे विद्युतमालिलाई बहुतै ❀व्याकुल् गराया तहाँ १८
फेरी वृक्ष ठुलो उखेलिकन गै ❀ पर्वत्‌समान् रूप्‌धऱ्या
हानीराक्षसफौज् पनी तिहनुमान्❀ बीर्‌ले बिनाशै गऱ्या
हात पाऊ शिर टुट्न गैकन तहाँ ❀ क्वै बीर मूर्छा भया
कोही श्री हनुमानको डर गरी ❀ भागेर अन्तै गया १९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

विद्युत्मालि पनी उसै बखतमा ❀ आफ्नो विमान्माथियो
लाखौं बाण् हनुमानका उपरमा ❀ तेस्ले चलाई लियो
बाण्लाग्योभनिखुब्रिसाईहनुमान् ❀ उफ्रीनगिच्मागया
एकलात विद्युतमालिका हृदयमा ❀ ताकेर हान्दाभया २०
लात् लागी हनुमानको असुरत्यो ❀ पीडित् बहुतै भयो
आफ्नूसोहीविमान्उडाइकनफेर् ❀ आकाशबीच्मा गयो
उड्थ्योत्योकहिलेविमान्गगनमा ❀ पक्षी समान्को भई
कैल्हे श्री हनुमानका पनि खडा ❀ हुन्थ्यो अगाडी गई २१
उड्थ्यो विद्युतमालि तैपनिअनेक् ❀ रूप्का हनूमान् भई
हान्थ्या मुड्कि र लात्तिलेकुदिकुदी ❀ सोही विमान्मा गई
साम्नेटिक्न कठिन् हुँदा असुरत्यो ❀ गुप्त भई फेर् तहाँ
माया राक्षसको गरेर बहुतै ❀ उत्पात् गर्‍यो रण्महाँ २२
लाग्यो चल्न हुरी दिशा पनि सबै ❀ खुब् अन्धकार् भै गयो
पर्वत् वृक्ष शिला र पीप् रगतको ❀ वर्षा बहूतै भयो
आकाश् देखि मनुष्यका शिरहरू ❀ खुब् गिर्नलाग्या तहाँ
लाग्यादेखिनफेर्भया नकअनेक् ❀ राक्षसहरू रण्महाँ २३
आफ्नाफौज्हरुलाइतेस्बखतमा ❀ देरुतैनथ्या क्वै पनि
भाग्थ्यान्याकुलभै कसोरिअहिले ❀ यो ज्यान् बचाऊँ भनी
सारा फौज्हरुलाइ व्याकुल बहुत् ❀ देखेर क्रोधित् भया
आफै लड्छु भनेर त्यै बखतमा ❀ शत्रुघ्न रण्मा गया २४
रण्मा गैकन मोहनास्त्र पहिले ❀ मन्त्रेर छोड्या जसै
माया विद्युतमालिको जति थियो ❀ सब् नष्ट भैगो तसै
माया नष्ट जसै भयो उहि बखत् ❀ शत्रुघ्नजीले तहाँ
देख्याविद्युतमालिको उहिविमान् ❀ आकाशकाबीच्महाँ २५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

क्रोध्लेसोहि बिमानलाई पनिफेर् ❀ बर्षा शरैको गरी
चूरौं पारिदिया र त्यो असुर फेर् ❀ आयो जमिन्मा झरी
फेरी एक् रथमा चढेर शरको ❀ बर्षा गराई तहाँ
श्रीशत्रुघ्नजिको पनी उहि बखत् ❀ घाउगर्योअङ्गमहाँ २६
घाउ अङ्ग भरी जसै हुनगयो ❀ शत्रुघ्न क्रोध्मा पर्या
नायव्यास्त्र पढेर एक् शर तहाँ ❀ तेस्का उपर्त्यागगर्या
लाग्यो चल्न हुरी र राक्षस फउज् ❀ ब्याकुल् भयाथ्या जसै
छोड्यो पाशुपतास्त्र तेस् असुरले ❀ रामकाफउज्मातसै २७
निस्कीप्रेतपिशाच भूतहरुअनेक् ❀ त्यो अस्त्र देखी तहाँ
मार्याफौज्रघुनाथकापनिबहुत ❀ त्यो युद्धभूमी महाँ
श्रीशत्रुघ्नजिले पनी उहि बखत् ❀ नारायणास्त्रै लिया
छोडी पाशुपतास्त्रलाइ सहजै ❀ संहार् गराई दिया २८
फेरी बिद्युतमालिले पनि त्रिशूल् ❀ लीएर क्रोध्ले तहाँ
आयो मार्छु भनेर दौडिकन झट् ❀ शत्रुघ्नजी छन् जहाँ
देख्या बिद्युतमालिलाइ नजिकै ❀ शत्रुघ्नजीले जसै
एक्शरत्यागगरित्योत्रिशूल्सहितहात् ❀ काटीखसायातसै
बाण्लागीजिमिमात्रिशूल्सहितको ❀ त्योहातखस्योतापनि
आयो फेर् मुखबाई निल्छु सहजै ❀ शत्रुघ्नलाई भनी
अर्धचन्द्र समान बाण् उहि धरी ❀ शत्रुघ्नजीले लिया
छोडी बिद्युतमालिको शिर तहाँ ❀ काटी खसाई दिया ३०
दाज्यू मारिदिया भनेर रिसले ❀ शत्रुघ्नका सङ्ग महाँ
आयो लड्न भनेर त्यै बखतमा ❀ फेर् उग्रदंष्ट्र तहाँ
ठूलो मुद्गल एक् लिएर करमा ❀ आयो असुर् त्यो जसै
एक्बाण्त्यागगरिशिरगिराइदिनुभो ❀ शत्रुघ्नजीले तसै ३१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मालिक् मर्नगयो जसै अरु तहाँ ❀ राक्षसहरू जो थिया
सब्ले प्राण बचोस् भनेर हय त्यो ❀ ल्याएर सौंपी दिया
मार्‍या विद्युतमालि राक्षस ठुलो ❀ शत्रुघ्नजीले भनी
वर्षा खुब् फुलको गर्‍या खुशि भई ❀ दैवताहरूले पनि ३२
घोडालाई पनी फुकाइ दिनुभो ❀ शत्रुघ्नजीले तहाँ
घुम्दै त्यो हय फेर् कुनै दिन पुग्यो ❀ रेवा किनारै महाँ
श्री शत्रुघ्न पनी फउजहरु लिई ❀ त्यो अश्वका सङ्ग गया
शोभा त्यो नदिको सबै नगिचमा ❀ पौंचेर देख्दा भया ३३
देखिन्छन् ऋषिका अनेक् कुटिहरू ❀ सारा किनारा भरी
बोल्छन् हंस चकोर सारसहरू ❀ साह्रै मधुर् स्वर्गरी
फल्फुल्लेअतिभार् हुन्यारुखहरू ❀ सोही किनारा भरी
हिल्थ्या वायु चलेर मन्दगतिले ❀ शोभा बढ़ूतै गरी ३४

अरण्यक ऋषिको जीवन चरित्र वर्णन ।

देख्या एक् कुटि फेर् उसै बखतमा ❀ शत्रुघ्नजीले तहाँ
वेदाध्यायन खुब् गरी ऋषिहरू ❀ बस्थ्या हजारौं जहाँ
देखी त्यो कुटिलाई खुब् खुशि भई ❀ फेर् मन्त्रिलाई पनि
सोधीबक्सनुभो बताउ तिमी यो ❀ कस्कोकुटीहोभनी ३५
आज्ञा एति सुनेर मन्त्रि सुमती ❀ साम्ने अगाडी सर्‍या
जस्को आश्रम हो बताऊँछु भनी ❀ हात्जोरि बिन्तीगर्‍या
हेनाथ्! यो कुटिहो अरण्यकजिको ❀ इन्ले तपस्या गरी
साह्रै मान्य ठुला ऋषीश्वर भनी ❀ प्रख्यात्भयालोक्भरी ३६
चाँहै ई ऋषिका गएर कुटिमा ❀ दर्शन् हजुर्ले पनि
गर्नै लायक ठान्दछू म अहिले ❀ ठूला ऋषी हुन् भनि
योबिन्तीजब मन्त्रिको सुनिलिया ❀ शत्रुघ्न खूशी भया
दर्शन् गर्न भनी अरण्यकजिका ❀ आश्रमाविषे फेर्गया ३७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आश्रम्मा पहिले पुगेर नहुतै ❀ भक्ती मनैमा धऱ्या
फेर् शत्रुघ्नाजिले अरण्यकजिका ❀ पश्री चरण्मा पऱ्या
देख्या ती ऋषिले पनि कुटि महाँ ❀ शत्रुघ्नलाई जसै
हस्तादर्यादि गरेर आशिष दिई ❀सत्कार्गऱ्याखुब्तसै३८
फल्फुल् दीकन फेर् कुशासनविषे ❀ शत्रुघ्नलाई धऱ्या
प्रीतीपूर्वक फेर् ऋषीश्वरजिले ❀ वार्ताकुशल्कोगऱ्या
फेरी श्री रघुनाथको पनि सबै ❀ वार्ता कुशल्को तहाँ
सोध्या सोहिबखत् अरण्यकजिले ❀ शत्रुघ्नका सङ्ग महाँ ३९
शत्रुघ्न सँग फेर् तहाँ ति ऋषिले ❀ भन्दाभया यो पनि
भन्थ्या लोमशजी मलाई पहिले ❀ राम् ईश्वरै हुन् भनि
जुन् दिन् श्रीरघुनाथले जति लिला ❀ गर्नूभयो सब् यहाँ
विस्तार् पूर्वकले कह्या उ पनि फेर्❀ मेरा अगाड़ी महाँ ४०
राम्कोध्यान्सब्थोक्बताइपहिले❀ भन्दाभया यै पनि
वयैकाल्ध्यान् रघुनाथकोगरिरहू ❀ यै आश्रमैमा भनी
घोड़ा लीकन आउनन् जब तलक् ❀रामचन्द्रका फौज् यहाँ
तेस्दिन् सम्म रहेर जानु तिमिले ❀ फेरी अयोध्या महाँ ४१
गर्नेछौ रघुनाथको तिमि जसै ❀ दर्शन् अयोध्या गई
वैकुण्ठपुरि जाउला उहि बखत् ❀ सायुज्य मुक्ति भई
भन्थ्या लोमशले बताउनु हुँदा ❀ त्यै बात् शिरोपर् धरी
हे शत्रुघ्न! म बस्थ्याँ अभ्र तलक्❀रामचन्द्रकैध्यान्गरी४२
यो आज्ञा ऋषिको सुनेर नहुतै ❀ शत्रुघ्न खूशी भया
एक्रात् मन्त्रिहरू लिई ति ऋषिका ❀ सङ्गमा कुटीमा रह्या
प्रातःकाल महाँ अरण्यक ऋषी ❀ जाउन् अयोध्या भनि
पाल्कीमा धरि फेर पठाउनुभयो ❀ शत्रुघ्नजिले पनि ४३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

जाँदा क्यै दिनमा अरण यक ऋषी ❀ पौंच्या अयोध्या जसै
पैदल् जान्छू भनेर खुब् खुशि भई ❀ उत्र्या जमीन्मा तसै
केयूर् हार किरीट कौस्तुभमणी ❀ पैह्रेर शोभित् भई
बरुन्या रामकन यज्ञमा ति ऋषिले ❀ देख्या नाँगिचू माग ई ४४
श्रीरामले पनि ती ऋषीकन तहाँ ❀ देख्नू भएथ्यो जसै
आदरपूर्वक राखि बक्सनुभयो ❀ आसन् उपरमा तसै
सत्कार् खुब् पहिले गरेर खुशि भै ❀ रामचन्द्रले फेर् पनि
सोधी बक्सनुभो ऋषे ! किन यहाँ ❀ पाल्नूभयाको भनि ४५
आज्ञागर्नुहवस् ऋषे ! हजुरको ❀ इच्छा छ मन्मा जउन्
गर्नेछू म अवश्यमेव अहिले ❀ जो हुन्छ आज्ञा तउन्
यो आज्ञा रघुनाथको ति ऋषिले ❀ सूनीलियाथ्या जसै
गद्गद् वाणि गरेर खूब् खुशिभई ❀ बिन्ती चढाया तसै ४६
हे राम् ! दर्शन पाउँला हजुरको ❀ पाऊ कमल्को भनि
आयाथ्याँ मिलि गै गयो अरु कुरा ❀ माग्दीन केही पनि
जस्को नाम फगत् जपेर दुनियाँ ❀ पुग्छन् परम्पद् महाँ
उन्को दर्शन पाइ फेर् म अरु थोक् ❀ मागूँ कउन् चीज् यहाँ ४७
धन्यै आज भयाँ जउन् तप गर्‍या ❀ तेस्को सुफल् सब् भयो
क्यैपाप् प्राक्तनको भया पनि सबै ❀ मेरा शरीर्को गयो
एती बात् पहिले सुनाइकन फेर् ❀ एकाग्र मन्मा लिई
प्राणायाम् खुशि भै गर्‍या ति ऋषिले ❀ रामचन्द्रमा मन् दिई ४८
सोही औसरमा निधार् ति ऋषिको ❀ फूटेर एक् तेज् गयो
त्यो तेज् विद्युतकै समान् भई तहाँ ❀ रामचन्द्रमा लीन् भयो
यस्तो अद्भुतकाम् तहाँ ति ऋषिको ❀ देखेर सब् छक्क पर्‍या
क्या बात भक्त भनी अरण यकीजको ❀ तारीफ् सबैले गर्‍या ४९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations


शेषजीकामुखदेखि अद्भुतआधिक ❀ रामको चरित्रै तहाँ
वात्स्यायन् ऋषिले सुनेर बहुतै ❀ खुशी भई मन्महाँ
हात्जोरीक बिन्तीफेर्गरिलिया ❀ हे नाथ् ! मलाई पनि
आश्चर्यै हुनगो अरण्यक ऋषी ❀ धन्यै रह्याछन् भनि ६०
हेनाथ् ! फेर् रघुनाथको हय घुमी ❀कुन्कुन्मुलुक्मागयो
कुन्रीत्ले गरि फार्कि यज्ञ रघुनाथ् ❀ ज्यूको समाप्तै भयो
लीला श्री रघुनाथको भकन फेर् ❀ सम्पूर्ण निस्तार् गरी
आज्ञा गर्नुहवस् प्रभो ! हजुरले ❀ मेरा उपर् प्रेम धरी ६१
त्यो बिन्ती ऋषिको सुनेरखुशिभै ❀ फेर् शेषजीले पनि
आज्ञाभो म कहन्छु सब् सुन तिमी ❀ रामको चरित्रै भनि
घोड़ा फेर् रघुनाथको घुमिघुमी ❀ रेवा किनार्मा गयो
साम्ने सब् जनका परेर नदिमा ❀ त्योअश्व गुप्तै भयो ६२
घोड़ा रक्षक जो थिया सकल ती ❀ दुःखित बहुतै भई
त्योहाल्बिन्तिगर्याउसैबखतमा ❀ शत्रुघ्नलाई गई
हे नाथ्!गर्नुकसो हुकुम्दिनुहवस् ❀ चाँडो हजुरले यहाँ
घोड़ा ता नदिमा गुपत् हुनगयो ❀ सब्काअगाडीमहाँ ६३
बिन्ती एतिसुनेर फौज् सकलको ❀ शत्रुघ्नजीले पनि
भन्नूभो नडराउ गर्छु मईले ❀ यस्को उपायै भनि
खातिर् ती सब फौजलाइ दिइफेर् ❀ रेवा किनार्मा गया
पुष्कल्औ हनुमान् दुवैकन लिई ❀ जल्भित्रपस्तामया ६४
त्यो रेवा नदिमा ठुलो रह थियो ❀ तेस् भित्र जाँदा महाँ
देख्याएक्सुनकोशहर्मणिजडित् ❀ सुन्दर् बन्याको तहाँ
देख्याथ्या जब त्यो शहर् नजरले ❀ आश्चर्य साह्रै भया
घोड़ा खोज्न भनेर त्यै रह महाँ ❀तीन्जन्सरासर्गया ६५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations


हेर्दै सोहि शहर् पुग्या घुमिघुमी ❀ वनै नारिका घर्महाँ
देख्या त्यो हयलाइ फेर् ति सबले ❀ बन्धन् पर्याको तहाँ
शत्रुघ्नैहरुलाइ देखिकन फेर् ❀ नारीहरूले पनि
लाग्या हेर्न तहाँ उसै बखतमा ❀ आया कउन् ई भनि ५६
फेरी ती सब नारिका बिच महाँ ❀ मालिक् जउन् एक् थिइन्
शत्रुघ्नैहरुलाइ डाकि नगिचै ❀ तिन्ले सुद्ध्याइदिलिइन्
को हौ वीर! इ तीन कसोरि आहिले ❀ आयौ अकर्मात् यहाँ
के इच्छा छ बताउ सब् तिमिहरू ❀ मेरा अगाड़ी महाँ ५७
प्रश्नै एति सुनेर फेरि हनुमान् ❀ तिन्का नगीच् मा गया
जो काम् आप नु थियो तिनैसँग सबै ❀ खोलेर भन्दा भया
श्रीराम्का सुन सुन्दरी! सब जना ❀ दास् हौं अनाहक् महाँ
यो घोड़ा तिमिले हरण् गरिलिंदा ❀ आयौं सबै जन् यहाँ ५८
सोझो सामु भई बुझाउ तिमिले ❀ यो अश्वलाई पनि
सम्झाईकन भन्दछू म आहिले ❀ नारी तिमी हौ भनि
दिन्नौ सामु भएर यो हय भन्या ❀ शत्रुघ्नले यै घरी
मान्याछन् तिमिहेरुलाइ बुझिल्यौ ❀ वर्षा शरैको गरी ५९
यस्तो बात् हनुमानको सुनिसकी ❀ हाँसेर केही तहाँ
लागिन् भन्न ति नारि फेरि हनुमान् ❀ वीर्का अगाड़ी महाँ
यो घोड़ा मइँले हरण् गरिलियाँ ❀ जानेर राम्को पनि
तेस्को हे हनुमान्! सबै सुना तिमी ❀ कारण् कहन्छु पनि ६०
दासी हूँ रघुनाथकी म पनि यो ❀ रेवा किनार्मा गई
डुल्थ्याँ खूशि भएर यो हय तहाँ ❀ आयो सुशोभित भई
यो घोड़ा मइले हर्या यदि भन्या ❀ शत्रुघ्नका सङ्गमहाँ
होला निश्चय भेट भनेर आहिले ❀ पकेर ल्यायाँ यहाँ ६१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सोही कारणाले यहाँ तिमिहरु ❀ आयौ र भेट् भो पनि
यस्मा रीस् रतिभर् नराख्मउपर ❀ यो अश्व पक्की मानि
यौटा अस्त्र सिकाइदिन्छु आहिले ❀ शत्रुघ्नलाई यहाँ
लैजाउ तिमिहेरु यो हय पनी ❀ खूशी भई मन्महाँ ६२
राजा वीरमणी भनेर शिवका ❀ भक्तै ठुला छन् कुनै
यो घोड़ाकन फेर् तिनी अन उपर् ❀ पक्कीलिन्या छन् उनै
तिन्माथीकरुणाछखूब्शिवजिको ❀ शत्रुघ्नजीले तहाँ
जित्नैलाइ कठिन् हुनेछ सहजै ❀ तिन्लाइ युद्धै महाँ ६३
यो अस्त्रै ति उपर्प्रयोग् गरिलिनन् ❀ शत्रुघ्नजीले जसै
ईश्वर् हुन् रघुनाथ् भनेर ति पनी ❀ जानी लिन्याछन् तसै
चिन्हन् श्री रघुनाथलाई जब ती ❀ मैले निरायाँ मानि
गिर्नन्सोहिबखत्चरणकमलमा ❀ शत्रुघ्नजीको पनि६४
एति बात् पहिले सुनाइकन त्यो ❀ अस्त्रै सिकाइन् जसै
माग्याजान्छुभनी बिदाति सँग फेर् ❀ शत्रुघ्नजीले तसै
बीदा भैकन अश्वलाई पनि ली ❀ फर्की तिनै जन् तहाँ
आयात्योरहदेखिनिस्किकनफेर् ❀ लश्कर्हरूछन् जहाँ६५
शत्रुघ्नैहरुलाई देखिकन सब् ❀ लश्कर्हरूले पनि
सोध्या कुन् रितले तपाईंहरुले ❀ यो अश्व पायौ भनि
सबनिस्तार् हनुमानलेकहिदिंदा ❀ खूशी भई मन्महाँ
तारीफ् धेर गर्या ति सब् फउजले ❀ शत्रुघ्नजीको तहाँ ६६
भेरी शख मृदङ्ग बेन्हरु पनी ❀ सब्ले बजाईलिया
जाओस्जान्छजहाँभनी उहिबखत् ❀ त्यो अश्व छोडीदिया
वायूका गतिले मुलुक् मुलुकमा ❀ त्यो अश्व घुम्दोभयो
फेरी क्वै दिनमा यसै तरहले ❀ विन्ध्याचलैमागयो६७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रुक्माङ्गदको उपाख्यान

श्री शत्रुघ्न पनि फउजहरु लिई ❀ त्यो अश्वका सङ्ग गया
शोभा त्यो गिरिको सबै नगिचमा ❀ पौंचेर देख्दा भया
फेरी सुन्दर एक् शहर् नजरले ❀ देख्या नजीक्‌मा तहाँ
शोभा गर्दछ विन्ध्यवासिनिजिको ❀ मन्दिर् निरन्तर् जहाँ ६८
राजा वीरमणी भनी अघि थिया ❀ प्रख्यात् तिनै लोक् भरी
धर्मैपूर्वक त्यो मुलुक् भर तिनै ❀ राज् गर्दथ्या त्यो घरी
रुक्माङ्गद् भनि फेर् तिनै नृपतिका ❀ छोरा निरन्तर् गई
गर्थ्यात्यो गिरिमा अनेक् बन बिहार् ❀ नारी हजारौं लिई ६९
घोड़ा श्री रघुनाथको घुमिघुमी ❀ त्यै विन्ध्यपर्वत् महाँ
लाग्यो चर्न गई ति वीरमणिका ❀ छोरा रहन्थ्या जहाँ
सुन्दर् त्यो हयलाई देखिकन ती ❀ आश्चर्य साह्रै भया
कस्‌को अश्व रहेछ बुझ्दछु भनी ❀ दौडीनजीक्‌मा गया ७०
फेरी त्यो हयका ललाट बिचको ❀ त्यो पत्र सुन्‌को जसै
बाँच्या ती नृपपुत्रले र बहुतै ❀ क्रोध् गर्नलाग्या तसै
याल्‌मा त्यो हयको समाति करले ❀ बाँधेर रुख्‌मा तहाँ
लाग्या भन्न ति फेरि सब् युवतिका ❀ साम्ने अगाड़ी महाँ ७१
मेरो भक्त भनेर यस् नगरिमा ❀ प्रीती मनैमा धरी
बस्छन् श्री भगवान् सदाशिव पनी ❀ जस्‌को सहायै गरी
उस्‌ता वीरमणी पिता अभ्‌तलक् ❀ मेरा छँदैमा पनि
राम्‌ले शेखि गरेछ वीर् म सरिको ❀ कवै छैन दोश्रो भनि ७२
अर्को वीर छ कुन् त्रिलोकभरमा ❀ मेरा पिताका सरी
शेखी तोड़्दछु रामको म अहिले ❀ यो अश्वलाई धरी
एति बात् पहिले भनेर पछि फेर् ❀ रुक्माङ्गदै वीर् पनि
फर्क्या तेस घरि रामको हय लिई ❀ जान्छन् नगरमा भनि ७३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पौंची फेर् पुरमा पिता सँग ति गै ❀ पश्री चरणमा परया
रामको यो मईले हर्याँ हय मनी ❀ हात्जोरि बिन्तीगरया
एती बिन्ति सुनेर खुब् खुशि भई ❀ फेर् पुत्रलाई पनि
भन्छन् बीरमणी प्रसन् गरिलियौ ❀ हे पुत्र ! तिमले भनि ७४
एती बात् आधि पुत्रका सँग गरी ❀ एकाग्र मै मन् महाँ
फेरी श्री शिवको ति बीरमणिले ❀ ध्यान् गर्नलाग्या तहाँ
वयैकाल्ध्यान्तिनिलेगर्याजबतहाँ ❀ प्रत्यक्ष शङ्कर् भई
सोधी बक्सनुभो ति बीरमणिका ❀ साम्ने अगाड़ी गई ७५
हे राजन् ! तिमिले मलाई अहिले ❀ कुन् कारणैले यहाँ
डाक्यौ जल्दि बताउ त्यो सब कुरा ❀ मेरा अगाडी महाँ
यो आज्ञा भगवान् सदाशिवजिको ❀ सूनी सबयाथ्या जसै
हात् जोरीकन फेर् ति बीरमणिले ❀ बिन्ती चढ़ाया तसै ७६
हे नाथ् ! यो रघुनाथको हय यहाँ ❀ रुक्माङ्गदैले हरी
ल्यायो गर्नु कसो बताउनुहवस् ❀ मेरा उपर् प्रेम धरी
यो बिन्ती शिवले ति बीरमणिको ❀ सूनेर फेरी पनि
भन्नूभो न बुझेर यो हय हर्यो ❀ रुक्माङ्गदैले भनि ७७
एही कारणले अवश्य बुझियौ ❀ शत्रुघ्नका सङ्ग महाँ
कत्तल् क्षत्रियको हुन्या अति ठुलो ❀ पर्याछ संग्राम् यहाँ
तस्मात् यो हयलाइ ली सँग महाँ ❀ चाँड़ो तिमीले पनि
शत्रुघ्नै सँग भन्न जाउ अहिले ❀ दास्हूँभरामको भनि ७८
यो शिक्षा भगवान् सदाशिवजिको ❀ सूनीसबयाथ्या जसै
हात् जोरीकन फेर् ति बीरमणिले ❀ बिंती चढ़ाया तसै
हे नाथ् ! क्षत्रियधर्मले गरि यहाँ ❀ रुक्माङ्गदैले पनि
रामको अश्व हर्यो कृपा छ शिवको ❀ मेरा उपर्मा भनि ७९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

क्षत्री भैकन हे प्रभो! कसरी यो ❀ निन्दित हुन्या काम् गरूँ
फेर् कातर् सरि शत्रुका चरणमा ❀ कस्ता हिसाब्ले परूँ
दास् हूँ हे करुणानिधान्! अन यहाँ ❀ मेरा उपर् प्रेम् धरी
हुर्मत् जुन् रितले रहन्छ उहि काम् ❀ गर्नूहवस् यो धरी ८०
बिन्ती एति सुनेर खुब् खुशिभई ❀ शङ्करजिले फेर् तहाँ
आज्ञा गर्नुभयो ति बीरमणिका ❀ साम्ने अगाडी महाँ
हे राजन्! तिमि लड्दछौ यदि भन्या ❀ तिम्रो सहायै भई
लड्न्याछु भरसक् अन इय म पनी ❀ शत्रुघ्नका साथ् गई ८१
श्रीरामचन्द्र सिवाय बीर् अरु कुनै ❀ आउन् तथापी यहाँ
तिम्रै जीत गराउन्याछु भइँले ❀ संग्राम गर्दा महाँ
दर्शन् श्रीरघुनाथले जब दिनन् ❀ त्यो दिन् अनश्यै पनि
छोड्न्याछु म लडाइँ गर्न बुझिल्यौ ❀ साँचो कुरा हो भनि ८२
अर्को बात पनी म भन्छु सुनिल्यौ ❀ एही लडाई गरी
तिम्रो कीर्ति चलाउँनेछु भइँले ❀ सारा तिनै लोक् भरी
आज्ञा श्रीशिवको ति बीरमणिले ❀ सूनीसवयाथ्या जसै
जान्छू लड्न भनेर फौजहरु सब् ❀ सामेल् गराया तसै ८३
बीर् रुक्माङ्गदले जउन् बखतमा ❀ त्यो अश्व पक्रीलिया
तेस् बेला हयका ति रक्षकहरू ❀ साह्रै पछाडी थिया
सोही कारण रामको हय यहाँ ❀ यस्ले समात्यो भनि
सब् ती रक्षकहरुका बिचमहाँ ❀ जान्दैनथ्यो क्वैपनि ८४
खोज्दै त्यो हय फेर् ति रक्षकहरू ❀ सोही बनैमा गया
तेस् बनमा हय त्यो नदेखिकन ती ❀ आश्चर्य साह्रै भया
सोही औसरमा सबै सँग तहाँ ❀ शत्रुघ्नजीले पनि
सोध्नूभो मन अश्व देख्तिन यहाँ ❀ कस्ले समात्यो भनि ८५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

घोड़ालाई यसोरि यस् बखतमा * यस्ले समात्यो यहाँ
भन्न्या ती सब फौजका बिचमहाँ * निस्केन कोही तहाँ
गान् गर्दै हरिको चरित्र उ बखत् * बीणा करैमा धरी
आया नारदजी बहुत् खुशि भई * आकाशगतिले गरी ८६
देखी नारदलाइ दौड़िकन गै * शत्रुघ्नजीले तहाँ
भक्तीपूर्वक दण्डवत् गरिलिया * पक्री र पाऊ महाँ
आसन्माथि बसाइ भद्द उहिबखत् * पूजा विधानले गर्‍या
चर्णोदक् लिइ फेरि नारदजिको * आपद्नाशिरैमा धर्‍या ८७
हात् जोरीकन प्रश्न यो गरिलिया * शत्रुघ्नजीले पनि
ब्रह्मर्षे ! रघुनाथको हय यहाँ * कस्ले समायो भनि
मिल्ला फेर् कसरी कहाँछ हय त्यो * खोजौं कउन् रीत् गरी
शिक्षा गर्नुहवस् यहाँ हजुरले * मेरा उपर् प्रेम धरी ८८
यस्तो प्रश्न सुन्या ति नारदजिले * शत्रुघ्नजीको जसै
यस्ले अश्व हर्‍यो यहाँछ भनि फेर् * सब् भन्नलाग्या तसै
हे शत्रुघ्नजि ! भक्त शङ्करजिका * प्रख्याततैलोक्भरी
राजा वीरमणि यसै नगरिमा * राज् गर्दछन् यो धरी ८९
रुक्माङ्गद् भनि फेर् ति वीरमणिका * जेठा कुमार् छन् यहाँ
तिन्ले त्यो हयलाई एहि बनमा * पक्री लग्या घर् महाँ
हे शत्रुघ्नजी ! खुब् भयङ्कर यहाँ * पर्‍याछ संग्राम् भनि
तैयार् दिन्छु म लौ तयार् गर फउज् * चाँडो तिमीले पनि ९०
जित्नै छौ पछि ता तिमी तर पनी * पैल्हा लडाईं महाँ
साह्रै कष्ट हुन्याछ वीरहरु अनेक् * कत्तल् हुन्याछन् यहाँ
शत्रुघ्नेकन यो सुनाइ पहिले * बीदा तुरुन्तै भया
गान् गर्दै हरिको चरित्र खुशिमै * आकाशगतीले गया ९१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

नारदूजी जब जानुभो उहि बखत् ❀ शत्रुघ्नजीले पनि
मन्त्रीलाइ हुकुम् दिया फउजको ❀ ब्युहै गराऊ भनि
उर्दी एति सुन्या तहाँ सुमतिले ❀ शत्रुघ्नजीको जसै
फौज्कोब्युहरचित्गरयाअतिठुलो ❀ किल्लासमान्कोतसै ९२
सोही औसरमा ति बीरमाणिले ❀ आफ्नाफउज्जोथिया
भ्यालीदेश्भरिमा पिटाईकनसब् ❀ सामेल् गराई लिया
फेरी भाइ र पुत्रले सहितका ❀ लश्कर्लिई सङ्महाँ
आया लड्न भनेर त्यै बखतमा ❀ शत्रुघ्नजी छन् जहाँ ९३
भेरी शंख मृदङ्ग आदि रणका ❀ बाजा बजाई लिन्या
चल्दामा पृथिवी पनी दमकले ❀ डग्मग् गराई दिन्या
यस्तोलश्कर त्योतिबीरमणिको ❀ देखीलियाथ्या जसै
आफ्नालश्करमा हुकुम्गरिलिया ❀ शत्रुघ्नजीले तसै ९४
हेबीर् हो! हतियार् लिईकन यहाँ ❀ चाँडो तयारी भई
लड्नू सब् जनले इ बीरमणिका ❀ साम्ने अगाड़ी गई
उर्दी एति सुन्या सबै फउजले ❀ शत्रुघ्नजीको जसै
टङ्कार् खुब् धनुको गराइ रणका ❀ बाजा बजाया तसै ९५
फेरी सब् रघुनाथको फउजले ❀ क्रोधित् भई मन्महाँ
बर्षाया हतियार बीरमणिका ❀ फौज्का उपर्मा तहाँ
एकै पल्ट गएर सब् ति हतियार् ❀ फौज्माणिरयाथ्याजसै
हात्ती रथ् पइदल् सिपाइहरू सब् ❀ कत्तल् भया धेर् तसै ९६
आफ्ना लश्करको बिनाश बहुतै ❀ देखेर क्रोधित् भई
छोडया अस्त्र अनेक् चढाइ धनुमा ❀ रुक्माङ्गदैले गई
राम्कोफौज्पनि फेर्तिबीर्गइतहाँ ❀ धेरै गिराया जसै
आया पुष्कलजी म लड्दछु भनी ❀ तिनुका अगाडी तसै ९७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सान्ने पुष्कललाइ देखिकन फेर् ❀ रुक्माङ्गदैले तहाँ
लाग्या शोखि गरेर भन्न इ कुरा ❀ त्यो युद्ध भूमी महाँ
हे पुष्कल्! सुन राजपुत्र तिमि हौ ❀ राज्पुत्रकै सङ्गमहाँ
लड्नू योग्य छ युद्ध खुब् गर तिमि ❀ मेरा सँगैमा यहाँ ९८
एती बात् पहिले सुनाइकन फेर् ❀ हात्माधनुर्बाण्लिया
चार्बाण्पुष्कल्काउपर्उहिबखत ❀ ताकेर छोड़ी दिया
बीर् रुक्माङ्गदका ति सब् शरहरू ❀ आफ्ना शरैले गरी
काट्या पुष्कलले पनी सहजमा ❀ आकाशमै त्यो घरी९९
फेरी पुष्कलले रिसाइ बहुतै ❀ दश् बाण छोड़ी तहाँ
घोड़ा सारथि चक्र रक्षक समेत् ❀ मार्या उसै बीच्महाँ
फेर् अर्को रथमा चढेर रिसले ❀ रुक्माङ्गदै बीर् पनि
आया पुष्कललाइ गैकन सहज् ❀ मार्छु म एल्हे भनि१००
सान्ने पुष्कलका गएर उ बखत ❀ भन्दाभया फेर् तहाँ
हेपुष्कल्! तिमि धन्यछौ तिमिसरी ❀ कै छैन दोश्रो यहाँ
आयाँ लड्न म फेरि लौ तिमी पनी ❀ खुब् धैर्यपूर्बक् रहू
यौटा अस्त्र चलाउँछू म अहिले ❀ त्यो अस्त्रलाई सहू १
पैल्हे एति कुरा सुनाइकन फेर् ❀ रुक्माङ्गदैले तहाँ
छोड्याभ्रामक अस्त्र पुष्कलजिका ❀ ताकेर छाती महाँ
बज्यो अस्त्र गई जसै हृदयमा ❀ बज्दै समान् बेग् गरी
पुष्कल्को रथ चार कोस् हटिगयो ❀ धक्का उसैको परी २
फेरी सारथिले बहुत् जतनले ❀ त्यो रथ् सम्हाली तहाँ
ल्यायो पुष्कललाइ त्यै बखतमा ❀ रुक्माङ्गदै छन् जहाँ
सान्नेमा गइ राजपुत्रकन खुब् ❀ हेरेर क्रोधले गरी
लाग्याभन्नइबात् ति पुष्कल तहाँ ❀ हातमा धनुर्बाण्धरी३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे राज्‌पुत्र ! यहाँ पराक्रम सबै ❀ तिम्‌ले गरयाको पनि
देख्तामामईलेबुभयाँतिमिअधिक् ❀ ठूला रह्याछौ भनि
यौटा अस्त्र चलाउँछू म अहिले ❀ सैचान् अगाड़ी दिई
तेस्‌को चोट्तिमिले पनीसहुयहाँ ❀ खुब् धैर्य मन्‌मा लिई ४
एती बात् पहिले सुनाई धनुमा ❀ एक् बाण् चढ़ाईलिया
त्योबाण्फेरितहाँति पुष्कलजिले ❀ मन्त्रेर छोड़ी दिया
बीर् रुक्माङ्गदका गएर रथमा ❀ त्योबाण्गिरेथ्योजसै
वायूकै सरि बेगले गगनमा ❀ त्यो रथ् उडायो तसै ५
बेग्‌ले त्यो रथ सूर्यको नगिचमा ❀ उड्दै बराबर् गयो
ताहाँ सूर्यजिका कठोर् किरणले ❀ त्यो रथ् खरानी भयो
लागेथ्यो जब डढ्न त्यो रथ तहाँ ❀ रुक्माङ्गदै बीर् पनि
फाल्‌हाल्या रथदेखि बचै धरि रह्या ❀ डढ्छु म ऐल्हे भनि ६
आकाश्‌देखि कुदेर बेग्‌सित जसै ❀ गिरिया जमीन्‌मा गई
मूर्छा पर्नगया उसै बखतमा ❀ पीडा शरीर्‌मा भई
बीर रुक्माङ्गदलाइ मूर्छित भई ❀ देख्यागिर्याका जसै
तिन्‌काफौज्‌हरुजोथियातिपनिसब् ❀ भाग्या डरैले तसै ७
छोरो मूर्छित भै गिर्योभनि बहुत् ❀ क्रोधित् भई मन् महाँ
आया बीरमणी म लड्दछु भनी ❀ पुष्कल् रहन्थ्या जहाँ
सोही औसरमा कुदेर हनुमान् ❀ साम्ने अगाडी गया
पुष्कल्‌को म सहाय गर्दछु भनी ❀ तिन्‌लाइ रोक्दा भया ८
लड्न्या मन्सुबले ति बीरमणिका ❀ साम्ने अगाडी महाँ
आयाका हनुमानलाइ उ बखत् ❀ पुष्कल्‌जिभन्छन् तहाँ
ऐल्हे हे हनुमान् ! इ बीरमणिका ❀ सङ्गमा म लड्छू भनि
आयौ व्यर्थ तिमी सहज् सँग यहाँ ❀ जित्न्याछु मैले पनि ९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे बीर् ! देव मनुष्य दानवहरू ❀ सम्पूर्ण जम्मा भई
आया लड्न भन्या पनी तिमि सहज् ❀ एक्लै अवश्यै गई
सबहौ जित्न भन्याइ वीरमणि हुन् ❀ जोडा भन्या मैं गरी
आयौ लड्हु भनेर लौ किन तिमी ❀ रणमा अगाडी सरी१०
ई बात पुष्कलको सुनेर हनुमान् ❀ अत्यन्त खूशी भया
छोडी ती नृपलाइ लड्हु भनि फेर् ❀ अर्कै थलामा गया
भाई एक थिया ति बीरमणिका ❀ त्यो युद्धभूमि महाँ
तिन्कै साथ महाँ गएर हनुमान् ❀ खुब् लड्न लाग्या तहाँ११
फर्कर्या थ्या हनुमान् जसै उहि बखत ❀ अत्यन्त क्रोधित् भई
हाँक्या पुष्कलले ति बीरमणिका ❀ साम्ने अगाड़ी गई
देख्या पुष्कललाई बीरमणिले ❀ आफ्ना अगाड़ी जसै
साह्रै शोक गरेर बालक बुझी ❀ यसै भन्न लाग्या तसै १२
हे पुष्कल् ! तिमिलाइ बालकन हुत ❀ देखेर खुब् मन् महाँ
माया लाग्छ कसोरि लड्नु भइँले ❀ तिम्रा सँगैमा यहाँ
मेरो पुत्र अघी लडेर तिमिले ❀ मूर्छा गरायौ भनी
आया थ्याँ रिसले तथापि अब ता ❀ रीस् छैन केही पनि१३
बालक् मै किन मर्नलाइ अहिले ❀ आयौ रणार्थ यहाँ महाँ
फर्की जाउ तिमी यसै बखतमा ❀ शत्रुघ्नजी छन् जहाँ
यै रीतका अरु बात ति बीरमणिले ❀ छेड्का सुनाया जसै
गम्भीर् बाणि गरेर पुष्कलजिले ❀ उत्तर् दिया फेर् तसै १४
हे राजन् ! तिमिले भन्यौ मकन जो ❀ बालक् रह्याछौ भनी
साँचै बालक हू मता तिमि त छौ ❀ बूढा अवश्यै पनि
मान्छन् क्षत्रियमा पराक्रमि भया ❀ ठूलो भनि सब् यहाँ
बूढै हो भनि यसै पराक्रमि न भै ❀ को मन्छ संसार् महाँ१५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

तिम्रा पुत्र गिऱ्या जउन् तरहले ❀ तिम्लाइ त्यै रीत् गरी
मूर्छा पारि गिराउन्याछु अहिले ❀ थिर् भै रहू वयै घरी
इ बात् पुष्कलको सुनेर बहुतै ❀ बालख् बुझी मन्महाँ
हाँस्या बीरमणीतिपुष्कलजिको ❀ ठठ्ठा गरी घेर् तहाँ १६
हेलाँ घेर गरी ति बीरमणिले ❀ ठठ्ठा गऱ्याको जसै
देख्या पुष्कलले र क्रोध् गरि बहुत् ❀ नौ बाण् चलाया तसै
एकै बार् नउबाण् जसै हृदयमा ❀ लाग्यो त बेग्ले गई
लाग्यो बग्न रगत् ति बीरमणिका ❀ घाऊ शरीर्मा भई १७
घायल् गऱ्या भनि ति बीरमणी रिसाया
छानेर तीन् शर लिईकन फेर् चलाया
पुष्कल्जिको पनि गएर निधार माहाँ
लाग्या ति शर्हरु उसै घरि जल्दि ताहाँ १८
लागेर तीन् शर ति पुष्कल मन् रिसाई
एकै बखत् शर असी धनुमा चढाई
छोड़ेर अश्व रथ सारथि काटि ताहाँ
गर्ज्या ति बीरमणिका गई सामु माहाँ १९
फेर् अर्को रथमा चढ़ेर रिसले ❀ अर्को उठाई धनू
लाखौंबाण्लिईफेर्तिबीरमणिले ❀ हान्या छिटो क्या भनू
सारा ती शर लागि फौज्हरु तहाँ ❀ पुष्कल्तरफ् जो थिया
धेरै बीर्हरुलाइ तेस् बखतमा ❀ कत्तल् गराई दिया २०
आफ्ना लश्करको बिनाश बहुतै ❀ देखेर पुष्कल् पनि
लाग्या शर्हरु छोड्न बीरमणिका ❀ सब्फौज् गिराऊँ भनी
एकै बार् दुइ बीरका शरहरू ❀ लागी अनेक् बीर् मरी
लाग्यो बग्न कुलो तहाँ रगत्को ❀ शोभा बहुतै गरी २१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आकाशओ रणभूमिमा सलह भै ❀ ढाक्ता ति शरले तहाँ
रात्रीकै सरि अन्धकार हुनगयो ❀ सारा रणस्थल् महाँ
हात्ती रथ् पइदल् सिपाहिहरु फेर् ❀ लागी ति शरले गरी
कत्तल् भै जिमिमा गिरीकन सबै ❀ढाकयो रणस्थल् भरी२२
सारा बीर दुइ तर्फका उस बखत् ❀ ब्याकुल् बहूतै भया
टिक्नै मुश्किल भै रणस्थल महाँ ❀ भागेर अन्तै गया
क्रोधित् भैकन फेर् ति बीरमणिले ❀ बर्षा शरैको गरी
ढाक्या ठीक् पिंजरा गराइकन रथ् ❀ पुष्कल्जिको त्यै घरी२३
फेरी एक् शय शर् ति बीरमणिले ❀ छोडी उसै बिच्महाँ
जल्दी पुष्कलको कवच् पनि सहज् ❀ काटी गिराया तहाँ
एकै पल्ट तहाँ अनेक् शरहरू ❀ लागेर वेग्ले गई
क्यै काल् पुष्कलजी गिर्या रथउपर् ❀ ब्याकुल् बहूतै भई २४
क्यै काल् मूर्छित भै उठेर पछि फेर् ❀ खूब् धैर्य मन्मा धरी
काट्या त्यो शरजाललाई सहजै ❀ आफ्ना शरैले गरी
फेरी त्यो रणभूमिका बिचमहाँ ❀ अत्यन्त क्रोधित् भई
भन्छन् पुष्कलजी ति बीरमणिका ❀ साम्ने अगाडी गई २५
हे राजन्! तिमिले सहज् सँग यहाँ ❀ एल्हे मलाई पनि
पार्दा यो शर जालमा बुझिलियाँ ❀ धन्यै रहेछौ भनि
एति बात् पहिले सुनाइकन फेर् ❀ तीन् बाण् कैमा धर्या
साम्ने सब् जनका ति पुष्कजिले ❀ ठूलो प्रतिज्ञा गर्या २६
क्रोधले पूर्ण भई उसै बखतमा ❀ सब् बीरलाई पनि
भन्छन् पुष्कलजी सुनुन् सब यहाँ ❀ मेरो प्रतिज्ञा भनि
मैले बीरमणीजिलाई सहजै ❀ साम्ने सबैका यहाँ
मूर्छा पारि गिराउन्याछु अहिले ❀ यो युद्ध भूमिमहाँ २७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मूर्छापार्न सक्दीन वयैगरिमन्या ❀ साँचो कुरा गर्दछू
अग्नीमा अहिले प्रवेश् गरि यहाँ ❀ हत्या गरी मर्दछू
एती बात् पहिले सुनाइकन फेर् ❀ एक्बाण् चलायाजसै
बीच्मै त्यो शरलाई बीरमणिले ❀ काटी खसाया तसै २८
फेर् अर्को शरत्याग्गऱ्या उहिपनी ❀ आफ्ना शैरले तहाँ
टुक्रा पारिदिया ति बीरमणिले ❀ आकाशका बीच्महाँ
तिन्बाण्मादुइबाण्निफल्जबभयो ❀ पुष्कल्जिलाईपनि
चिन्ता पर्न गयो पुऱ्याउँ कसरी ❀ मेरो प्रतिज्ञा भनि २९
फेरी श्री रघुनाथका चरणको ❀ भक्ती मनैमा धरी
तेश्रोबाण् धनुमा चढाइकन खुब् ❀ मन्त्रेर धैर्यै गरी
छोड्या त्यो शर गै ति बीरमणिको ❀ लाग्यो शरिर्मा जसै
साह्रै चोट परि वेदना हुनगई ❀ मूर्छा पऱ्या ती तसै३०
सोहीऔसरमा तहाँ ति हनुमान् ❀ साह्रै ठुलो क्रोध् गरी
लड्थ्या त्यो धरि बीरसिंहसित गै ❀ सामुने अगाडी सरी
देखी श्री हनुमानलाइ नगिचै ❀ हातमाधनुर्बाण्लिया
बाण्को वर्षण धेर् गरेर बहुतै ❀ व्याकुल् गराई दिया ३१
एकै पल्ट गई ति सब् शरहरु ❀ लाग्या शरिर्मा जसै
घाऊ धेर भई रगत् बहिगयो ❀ सारा शरीर्मा तसै
क्रोधित् भैकन बीरसिंह नृपका ❀ छाती विषे जोर् गरी
हान्या श्री हनुमानले मुठि जसै ❀ लोट्या ति मूर्छा परी३२
रुक्माङ्गद् पनि चोट खाई पहिले ❀ मूर्छा भयाका थिया
च्यूँभी क्रोध गरेर फेर् उहि बखत् ❀ हातमाधनुर्बाण्लिया
रुक्माङ्गद् र सुभाङ्गदै ति दुइले ❀ सोही बखत्मा तहाँ
फेरी श्री हनुमानलाइ शरले ❀ टाक्याररणस्थल्महाँ३३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

देखीलड्ने दुवैबीर्कन ताहिं हनुमान् बीरपनी खुब्रिसाई
प्राण् लिन्छु यी दुवैको भनि नागिच दुवै बीरका जल्दि जाई
बेली आफ्ना पुछरले दुई रथ तिनको भूमिमा पट्किदीया
रुक्माङ्गद्फेर् सुमाङ्गद्कन पनि सहजै मूर्छितै पारिलीया ३४
जो फौज् बीरमणी तरफ् अरु तहाँ ❀ बाँकी रह्याका थिया
पुष्कल्ले शर बृष्टि खुब्सित गरी ❀ सब्लाई मारीदिया
मेरा भक्त उपर् बिपद् परिगयो ❀ उद्धार् म गर्छू भनी
पछीदारि भएर बीरमणीका ❀ आयासदाशिव्पनि ३५
देख्या श्री शिवलाइ शत्रुदलमा ❀ शत्रुघ्नजीले जसै
आफैं लड्छु भनेर आइ शिवका ❀ साम्ने भया फेर् तसै
साम्ने देख्नुभयो जसै शिवजिले ❀ शत्रुघ्नलाई तहाँ
आफ्ना गणहरुलाइ अर्ढि दिनुभो ❀ लड्नूभनीरणमहाँ ३६
साह्रै क्रोध् गरि बीरभद्रकन फेर् ❀ आज्ञा भयो यो पनी
पुष्कल् लाइ गएर जल्दि तिमिले ❀ मारेर आऊ भनी
यो आज्ञा शिवको सुनेर खुशिभै ❀ श्री बीरभद्रै गई
लाग्यालड्नतहाँतिपुष्कलजिका ❀ साम्ने अगाडी भई ३७
श्री बीरभद्रकन देखि बहुत् रिसाया
पुष्कल् पनि रथ चढीकन लड्न आया
पाँच् बाण छोड़िकन फेरि लगाइ ताहाँ
गर्ज्या ठुलो स्वर गरी रणभूमिमाहाँ ३८
श्री बीरभद्र पनि फेरि बहुत् रिसाया
पुष्कल् उपर् त्रिशुल एक ठुलो चलाया
देखी त्रिशुल्कन अनेक् शर फेर् चलाया
काटेर पुष्कलजिले जिमिमा गिराया ३९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

काट्या पुष्कलले त्रिशुल्‌कन जसै * फेर्‌ बीरभद्रै पनी
आया क्रोध गरेर पुष्कलजिको * रथ्‌ चूर्ण गर्छू भनी
पक्री बाहुलिले उठाइकन रथ्‌ * फ्याँकयाजमिन्‌मा जसै
त्यो रथ्‌ चूर्ण भयो र पुष्कल पनी * उफ्र्या जमीन्‌मा तसै ४०
फेरी ती दुइ बीरले उहि बखत्‌ * रण्‌मा अगाड़ी सरी
बाहू युद्ध गर्‍या परस्पर महाँ * साह्रै ठूलो क्रोध्‌ गरी
घूँड़ाले मुठिले र बाहु दुइले * हान्दा बराबर्‌ तहाँ
हुन्थ्यो बज्रसरी अबाज्‌ अतिठुलो * त्यो युद्ध भूमि महाँ ४१
चार्‌दिन्‌त्यो रणभूमिका बिचमहाँ * यस्तै हिसाब्‌ले गरी
भारी युद्ध गर्‍या परस्पर तहाँ * मार्न्या इरादा धरी
फेरी पाँच्‌ दिनमो जसै उहि बखत्‌ * अत्यन्त क्रोधित्‌ भई
दिन्‌भर्‌ युद्ध गर्‍या ति बीर दुइले * उफ्री गगन्‌मा गई ४२
साह्रै क्रोधित बीरभद्र हुनगै * पाँचौ दिनैमा तहाँ
हान्या बज्र समानका मुशलले * पुष्कल्‌जिकाशिर्‌महाँ
चोट्‌लागीकनत्योकठोर्‌मुशलको * मूर्छित्‌ भयाथ्या जसै
काट्याशिर्‌पनिझट्‌तिपुष्कलजिको * फेरीतिबीर्‌लेतसै ४३
मारी पुष्कललाइ खूब्‌ खुशिभई * फेर्‌ बीरभद्रै पनी
गर्ज्या त्यो रणभूमिका बिचमहाँ * मार्‍याँ ठुलो बीर्‌भनी
पुष्कल्‌ मर्न गया भनेर बहुतै * शत्रुघ्नजी फेर्‌ तहाँ
लाग्या गर्न बिलाप्‌ अनेक्‌ तरहले * त्यो युद्धभूमीमहाँ ४४
सुर्ता पुष्कलको गरेर बहुतै * ब्याकुल्‌ भयाका जसै
देख्ता शङ्करले बुझाउनु भयो * शत्रुघ्नलाई तसै
हे शत्रुघ्न! बिचार्‌ न राखिकन क्यै * जान्न्या पुरुष्‌ भै यहाँ
सुर्ता यो किन गर्दछौ तिमि ठुलो * आएर संग्राम्‌ महाँ ४५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

कालैरुद्र इ बीरभद्र जुम्ल्यौ ❀ क्रोधित् हुनै बीर् भई
दक्षैको पनि यज्ञ नाश् गरिदिया ❀ एक्लै सहज्मा गई
उस्ता बीर् सँगमा बराबर भई ❀ पाँचादिन् लडीखुब्यहाँ
पुष्कल मर्नगया भन्याकिनातिमी ❀ शोक्गर्दछौ मन्महाँ४६
इन्कोशोक्रतिभर्नमानातिमिले ❀ खूब् धैर्य मन्मा धरी
लड्नू योग्य छ यत्नपूर्वक यहाँ ❀ के हुन्छ सुर्ता गरी
ई बात् शङ्करको सबै सुनिसक्या ❀ शत्रुघ्नजीले जसै
क्रोध्ले शङ्करका उपर् शर बहुत् ❀ बर्षा गराया तसै ४७
शङ्कर्ले पनि क्रोध् गरेर बहुतै ❀ बर्षा शरैको गर्‍या
लड्दा यै रितले ति बीर दुइले ❀ आकाश् शरैले भर्‍या
आकाश्मा बसि देवताहरु पनी ❀ आश्चर्य मै मन्महाँ
ताडिफ् धेर गरेर एहि रितको ❀ गर्थ्या कुरा सब् तहाँ४८
यो संग्राम् बहुतै भयङ्कर भयो ❀ हामीहरूले पनि
हेर्नूपर्दछ लौ कसोरि कति दिन् ❀ लड्दा रह्याछन् भनि
एघारौं दिन बित्न गो ति दुइले ❀ संग्राम गर्दा जसै
ब्रह्मास्त्रै लिइ छोड्दिया शिवउपर् ❀ शत्रुघ्नजीले तसै ४९
फेरी श्री भगवान् सदाशिवजिले ❀ ब्रह्मास्त्रको त्यो धरी
संहार् गर्नुभयो चढाइ धनुमा ❀ एक्ब्रह्मशिर्त्यागगरी
धेरैबाण् अरुत्यागगरि उहि बखत् ❀ सब् मर्म भमैं महाँ
मूर्छा शङ्करले गराउनुभयो ❀ शत्रुघ्नलाई तहाँ ५०
श्री शत्रुघ्नजिलाई त्यो रथ महाँ ❀ देख्या गिर्‍याको जसै
हाहाकार्गरिरामकासकलफौज् ❀ भाग्या डरैले तसै
फेरी श्रीहनुमान् रिसाईकन खुब् ❀ दौडेर बेग्ले गरी
साम्ने शङ्करका गया उहि बखत् ❀ लड्न्या इरादा धरी ५१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पौंची श्री हनुमानले शिवजिका ❀ साम्ने भन्या यो पनि
हे शङ्कर्! रघुनाथको किन तिमी ❀ काम् विघ्न गर्छौ भनि
ध्यान् गर्छन् रघुनाथकै शिवपनी ❀ भन्थ्या सबै जन् यहाँ
राम् कालश्करको विनाश् कि नगर्यौ ❀ यो युद्धभूमी महाँ ५२
यस्को कारण वयैं भया सकल त्यो ❀ मेरा अगाड़ी कहू
नाहीं शेषि छुटाइ दिन्छु अहिले ❀ खुब् यत्नपूर्वक् रहू
ई बात् श्रीहनुमानको सुनिसकी ❀ भन्छन् सदाशिव् तहाँ
साँचा हुन् तिमिले भन्यौ जति कुरा ❀ ऐल्हे मलाई यहाँ ५३
के गर्नू तर भक्त वीरमणि हो ❀ मेरो अवश्यै पनि
भक्तैमाथि विपद् परेर अहिले ❀ रक्षा म गर्छू भनि
आयाको छु तथापि भक्ति रघुनाथ् ❀ ज्यूकै सदा गर्दछू
भक्तै हो भनि आइ दर्शन् दिया ❀ उन्कै शरण् पर्दछू ५४
यस्तो बात् शिवको सुनेर हनुमान् ❀ वीर्ले उसै बिच्महाँ
हान्या पत्थर एक् उठाइ शिवको ❀ रथ्लाइ ताकी तहाँ
लाग्यो पत्थर त्यो गएर रथमा ❀ रथ् चूर्ण भैगो जसै
क्रोधले पूर्ण भई सदाशिव पनी ❀ उत्र्या जमीन्मा तसै ५५
फेरी एक ठुलो सदाशिवजिले ❀ शक्ती उठाई लिया
त्यै शक्ती हनुमानका हृदयमा ❀ ताकेर छाडी दिया
त्यो शक्तीकन फेर् छेलर हनुमान् ❀ वीर्ले तुरुन्तै तहाँ
हान्या वृक्ष ठुलो उखेलि शिवका ❀ ताकेर छाती महाँ ५६
त्यै बीच्मा शिवले मुसल् अति ठुलो ❀ लीएर फेरी पनि
भन्नू भो हनुमानलाइ अब हेर् ❀ मार्छू तँलाई भनि
पैल्हे एति भनि मुसल्कन तहाँ ❀ छोड़ी दिनूभो जसै
तेस्लाइ पनि फेर् छल्याति हनुमान् ❀ वीर्ले सहज्मा तसै ५७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बेग्लेसोहि मुसल् जहाँ गइगिर्‍यो ❀ फोड़ेर पृथ्वी तहाँ
सोमैत्योशिनकोमुसलउहिबखत् ❀ पौंच्यो रसातल् महाँ
फेरी श्री हनुमानले पनि ठूलो ❀ पर्वत् उठाइ लिया
क्रोधले पूर्ण भई सदाशिव उपर् ❀ ताकेर छोड़ी दिया ५८
एही रितसित वृक्ष पर्वत शिला ❀ वर्षा गराया जसै
सन्तोष् भै हनुमानलाइ शिवले ❀ आज्ञा गर्‍या फेर् तसै
वयाबात् हेहनुमान्! पराक्रममहाँ ❀ क्वै छैन तिम्रा सरी
जो माग्दछौ वरदान् म दिन्छु अहिले ❀ खूशी हुनाले गरी ५९
यो आज्ञा शिवको सुनेर हनुमान् ❀ बीर् भन्नलाग्या तहाँ
श्री रामचन्द्रजिको कृपा हुनगई ❀ पूर्णौं छु बर्ले यहाँ
माग्छू तै पनि बर् कृपा हजुरले ❀ मेरा उपर्मा गर्‍या
रक्षा गर्नुहवस् इ सब् पुरुषको ❀ जोजोसमर्मामर्‍या६०
द्रोणाचल् गिरिमा गएर अहिले ❀ ल्याएर औषध् यहाँ
सब्को प्राण बचाइदिन्छु भईले ❀ यो युद्धभूमी महाँ
औषध् ली जवतक् म फिर्दिन यहाँ ❀ सब्को जतन्ले गरी
रक्षा गर्न कबोल गर्‍या हजुरले ❀ जान्याथियौं यो घरी६१
यो बिन्ती हनुमानको सुनिसकी ❀ भन्छन् सदाशिव् पनि
रक्षा ई सबको म गर्छु तिमि गै ❀ ली आउ औषध् भनि
यो आज्ञा शिवको सुनेर हनुमान ❀ द्रोणाचलैमा गया
पौंची त्योगिरिमा पुछर् जमिनमा ❀ जोर्ले बजार्दा भया६२
काँप्यो पर्वत त्यो सबै उहि बखत् ❀ सोही दमक्ले जसै
रक्षक्जोगिरिका थियातिपनिसब् ❀ आएर घेर्‍या तसै
फेरी श्री हनुमानलाइ सब ती ❀ रक्षक्हरूले पनि
वर्षा खुब् हतियारको गरिलिया ❀ माछौं सहज्मा भनि६३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फेरी श्री हनुमानले पनि तहाँ ❀ लातले पुछरले गरी
हानी ती सब बीरलाइ सहजै ❀ व्याकुल् गर्‍याल्यै धरी
कोही मूर्छित भै गिर्‍या जमिनमा ❀ कोही डरैले तहाँ
भाग्या प्राण बचाइ शीघ्र गतिले ❀ श्री इन्द्रजी छन् जहाँ ६४
देखी सोधिलिया ति सब्कन तहाँ ❀ श्री इन्द्रजीले पनि
कुन् बीरले तिमिहेरुलाइ आहिले ❀ घाउ गरायो भनि
आज्ञा इन्द्रजिको सबै सुनिलिया ❀ रक्षक्हरूले जसै
हात् जोरीकन इन्द्रका हजुरमा ❀ बिन्ती चढाया तसै ६५
हेनाथ्! बानर एक् यसै बखतमा ❀ द्रोणाचलैमा गयो
त्यस्ले जो रखवार् थिया हजुरका ❀ सब्लाइ मार्दो भयो
मार्‍यो कतैकन कोहिलाइ रिसले ❀ मूर्छा गराई दियो
आयौं हामि खबर् बताउन यहाँ ❀ त्यो बीर् बसेकै थियो ६६
यस्तो बात रखवारको सुनी तहाँ ❀ श्री इन्द्रजीले पनि
धौतालाइ हुकुम् दिया तिमिहरू ❀ सब् लड्न जाउ भनि
आज्ञा इन्द्रजिको सुन्या सकल ती ❀ धौताहरूले जसै
जान्छौं लड्न भनेर द्रोणगिरिका ❀ पौंच्याशिखर्मा तसै ६७
फेरी श्री हनुमानका नगिचमा ❀ धौताहरू सब् गई
लाग्याथेर् हतियार् खसाउन तहाँ ❀ अत्यन्त क्रोधित् भई
देख्याथ्या हनुमानले पनि तहाँ ❀ धौताहरू जो थिया
सब्का साथ लड़ेर त्यै बखतमा ❀ व्याकुल् गराई दिया ६८
व्याकुल् भै डरले फिरेर ति सबै ❀ धौताहरू फेर् गई
बिन्ती इन्द्रजिका गर्‍या हजुरमा ❀ दुक्खित् बहूतै भई
हेनाथ्! हामिहरू सबैकन जित्यो ❀ त्यस् बानरैले तहाँ
तेस्को केहि उपाय लौ हजुरले ❀ गर्नूहवस् झट् यहाँ ६९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

एती बिन्ति सुनेर इन्द्राज पनि ❀ चिन्तित् बहूतै भया
जल्दी सोहि घरी बृहस्पतिजिका ❀ साम्ने अगाड़ी गया
पाऊमा गुरुका परेर पहिले ❀ बिन्ती गरया यो पनी
कुन् हो बानर त्यो बताउनुहवस् ❀ ऐल्हे मलाई भनी ७०
बिन्ती इन्द्रजिको बृहस्पतिजिले ❀ सूनीलियाथ्या जसै
साराहाल् हनुमानको जतिथियो ❀ एक्एक् सुनाया तसै
भक्तै हुन् रघुनाथका इ हनुमान् ❀ कारण् कुनै एक् भई
आया औषधि खोज्नलाइ तिमिले ❀ शान्तै गराउ गई ७१
यो आज्ञा गुरुको सुनेर सुरराज् ❀ अत्यन्त खुशी भया
शान्तै श्री हनुमानजी गरूँ भनी ❀ द्रोणाचलैमा गया
साम्ने गै हनुमानलाई पहिले ❀ सोद्धाभया यो पनी
ऐल्हे के मनमा लिई तिमि यहाँ ❀ आई रह्याछौ भनी ७२
फेरी पर्वत यो उठाइ अहिले ❀ लैजान खोज्छौ कहाँ
त्योबात्खोलिकह्यौभन्याभपनिवयै ❀ मद्दत् दिन्याहू यहाँ
त्यस्तोइन्द्रजिकोबचन्तिहनुमान् ❀ बीरले सुन्याथ्या जसै
आयाँ कारण यो परेर म भनी ❀ सब्बात्सुनायातसै ७३
औषध् चिन्ह कठिन् भयो र मइँले ❀ बोकेर पर्वत् पनी
आँट्याको हु लिएर जान अहिले ❀ चिन्नन् सुषेणले भनी
खाली औषधि सोहि बक्सनु भया ❀ अत्यन्त खूशी भई
फर्की श्री रघुनाथका फउजको ❀ उद्धार गर्थ्या गई ७४
यो बिन्ती हनुमानको सुनिलिया ❀ श्री इन्द्रजीले जसै
यो हो औषधि त्यो भनेर खुशिमै ❀ औषध् चिन्हाया तसै
त्यो औषध् लिइफेर् फिरर हनुमान् ❀ आई रणस्थल् महाँ
छर्की औषधि त्यो खडा गरि दिया ❀ सब् बीरलाई तहाँ ७५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मूर्छा देखि उठेर फेर् सकल ती ❀ रामका फउज् त्यै घरी
लाग्या लड्न गएर शत्रुहरुका ❀ साम्ने अगाड़ी सरी
पुष्कल्जी गई बीरभद्रसित फेर् ❀ भारी लड़ाई गर्‍या
फेरी लड्न भनी सदाशिवजिका ❀ शत्रुघ्नसाम्नेसर्‍या ७६
शत्रुघ्नैकन देखि सन्मुख महाँ ❀ शङ्करजिले फेर् तहाँ
दिव्यास्त्रैहरु धेर् प्रयोग् गरिलिया ❀ त्यो युद्धभूमी महाँ
जुन्जुन् अस्त्र चलाउँथ्या शिवतहाँ ❀ शत्रुघ्नजीले पनी
सोही अस्त्र चलाउँथ्या उहि बखत् ❀ संहार गर्नै भनी ७७
त्यै बिच्मा शिवले रिसाइ शरको ❀ वर्षा बहूतै गर्‍या
ती सब् शर्हरु लागि सैन्यहरु धेर् ❀ शत्रुघ्नजीका मर्‍या
आफ्ना फौज्हरुको बिनाश न हुतै ❀ देखेर चिन्ता गरी
सम्झ्या श्रीरघुनाथको पदकमल् ❀ शत्रुघ्नले त्यै घरी ७८
खुब् एकाग्रभई स्मरण् गरिलिया ❀ शत्रुघ्नजीले जसै
पुष्पक्माथि चढ़ेर ताहिं रघुनाथ् ❀ पाल्नूभयो झट् तसै
देखी श्री रघुनाथलाइ उ बखत् ❀ अत्यन्त खूशी भई
पाऊमा परि दण्डवत् गरिलिया ❀ शत्रुघ्नजीले गई ७९
फेरी शङ्करले पनी उहि घरी ❀ संग्रामको त्याग् गर्‍या
साह्रै खूशि भएर गै नगिचमा ❀ रामका चरण्मा पर्‍या
हात् जोरीकन फेर् उसै बखतमा ❀ बिन्ती गर्‍या यो पनि
हे नाथ्! पर्छु शरण् सबै कसुरको ❀ माफ्पाउँलाकी भनी ८०
यो बिन्ती शिवको सुनेर खुशिभै ❀ रामचन्द्रजीले पनी
आज्ञा गर्नुभयो कसूर हजुरको ❀ क्यै छैन यस्मा भनी
राजा बीरमणी ठुला हजुरका ❀ भक्तै भनी जान्दछू
भक्तैलाइ सहाय जो दिनुभयो ❀ योग्यै भयो ठान्दछू ८१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे शङ्करजि ! ममा र फेर् हजुरमा ❀ कौनै कुराको पनी
केही छैन फरक् म जान्दछु सबै ❀ एकै स्वरुप् हो भनी
तरमात् कारण भक्ति जो हजुरको ❀ गर्छन् निरन्तर यहाँ
मेरै भक्त ति हुन् सदा म तिनमा ❀ राख्छू दया मन्महाँ ८२
जो जन् केहि पनी ममा हजुरमा ❀ मन्ले फरक् गर्दछन्
तीसब् दुर्जन हुन् मरया पछि नरक्❀ तेस्तै पुरुष् पर्दछन्
भन्न्या यै रितले अनेक् अरु तहाँ ❀ राम्चन्द्रजीले जसै
आज्ञा गर्नुभयो र शङ्कर पनी ❀ राजी हुनूभो तसै ८३
फेरी बीरमणी जहाँ उस घरी ❀ मूर्छा परयाका थिया
तिन्माथी करुणा गरेर शिवले ❀ चैतन्य पारी दिया
मूर्छा देखि उठी ति बीरमणि गै ❀ राम्काचरण्मापरया
आफ्नू राज्य पनी सबै उहि घरी ❀राम्लाइअर्पणगरयाा ८४
बिन्ती फेरि गरया ति बीरमणिले ❀ दोषी म हूँ ता पनी
तेस्कोमाफ्गरिबक्सियोस्रघुपते!❀ आयोशरण्माभनी
बिन्ती एति सुनेर खुब् खुशि भई ❀ राम्चन्द्रजी फेर् तहाँ
अन्तर्ध्यान् हुनुभो उसै बखतमा ❀सब्का अगाड़ी महाँ८५
अन्तर्ध्यान् रघुनाथ् जसै हुनुभयो❀ फेरी सदाशिव् पनी
पाल्नूभो सब गण् लिएर सँगमा ❀ जान्छू म कैलाश् भनी
राजा बीरमणी पनी सँगमहाँ ❀ शत्रुघ्नजीका गई
घोडा रक्षक भै चल्या पछि पछी ❀ अत्यन्त खूशी भई ८६

राजा सुरथको उपाख्यान ।

घोड़ा श्री रघुनाथको पनि तहाँ ❀ छोड़ी दियाथ्या जसै
सारा देश विदेश जङ्गल पहाड् ❀ खुब् घुम्न लाग्यो तसै
अङ्गै बङ्ग कलिङ्ग आदि जति छन् ❀ ठूला ठुला देश्हरू
घुम्थ्यो त्योहय पक्रन्या जन कहीं ❀ निस्केन दोश्रो अरू ८७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

घेर्दिन् यै रितले मुलुक् मुलुकमा ❀ घुम्दै कुनै दिन् महाँ
फेरी कुंडनपुर् निषे पनि पुग्यो ❀ बस्थ्या सुरथ्जी जहाँ
भक्ते हुन् रघुनाथका सुरथजी ❀ एकाग्र मन्मा धरी
पूजा श्रीरघुनाथका ति निशि दिन् ❀ गर्थ्यानियम्‌खुब्‌गरी ८८
कुन्‌दिन् दर्शन पाउँला भनि तहाँ ❀ तिन्‌का मनैमा थियो
संयोग्‌ले रघुनाथको हय पनी ❀ कुण्डन् नगर्‌मा गयो
देख्याथ्या रघुनाथको हय तहाँ ❀ रैतीहरूले जसै
बाँच्या फेर् हयका ललाट बिचको ❀ त्यो पत्र सुन्‌को तसै ८९
तेस्‌को अर्थ बुझेर गैकन जहाँ ❀ राजा सुरथ्‌जी थिया
घोड़ाको सब बात उसै बखतमा ❀ बिन्ती चढ़ाई लिया
त्यो बिन्ती सब रैतिको सुनीसकी ❀ भन्छन् सुरथ्‌जी पनी
मेरो भाग्य खुलेर त्यो हय यहाँ ❀ आएछ ऐल्हे भनी ९०
दर्शन् श्रीरघुनाथको पनि सहज् ❀ मिल्न्याछ चाँड़ो यहाँ
त्यो घोड़ाकन पक्रि ल्याउ सबले ❀ मेरा अगाड़ी महाँ
आज्ञा एति तहाँ सुरथ् नृपतिको ❀ सूनीसकयाथ्या जसै
त्यो घोड़ा रघुनाथको ति सबले ❀ पक्रेर ल्याया तसै ९१
फेरी मन्त्रिहरू उसै बखतमा ❀ डाकी सुरथ्‌ले पनि
उर्दी जल्दि दिया तयार् गर सबै ❀ मेरा फउज्‌को भनि
आज्ञा एति सुन्न्या ति मन्त्रिहरुले ❀ राजा सुरथ्‌को जसै
जोजोसैन्यथिया तयार् गरिलिया ❀ उर्दी बमोजिम् तसै ९२
घोड़ालाइ नदेखि त्यै बखतमा ❀ शत्रुघ्नजीले पनि
सोध्या सब् जनलाइ अश्व अहिले ❀ कस्‌ले समात्यो भनि
आज्ञा एति सुनेर फौज् सकलले ❀ हात्‌जोरि बिन्तीगर्‍या
हेनाथ! बीरहरु आइयस् मुलुकका ❀ त्यो अश्वलाइ हर्‍या ९३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बिन्ती एति सुनेर फौज् सकलको ❀ शत्रुघ्नजीले पनि
सोद्ध्याक्रोधगरिमन्त्रिकासँगमहाँ ❀ कसूको मुलुक्होभनि
यो प्रश्नै सुनि फेरि मन्त्रि सुमती ❀ सङ्गमा नरयाका थिया
तिन्ले यो पुरि हो सुरथ् नृपतिको ❀ भन्न्या सुनाई दिया ९४
फेरी बिन्ति गऱ्या उसै बखतमा ❀ हे नाथ्! सुरथ् छन् जहाँ
योटा दूत् अब गै खबर् बुझि सबै ❀ फर्केर आवस् यहाँ
बिन्तीएतिसुनीसबयासुमतिको ❀ शत्रुघ्नजीले जसै
डाकी अङ्गदलाइ त्यै बखतमा ❀ आज्ञा गऱ्या फेर्तसै ९५
हे अङ्गद्! तिमिले सुरथ् नृपतिका ❀ साम्ने तुरुन्तै गई
जो जो भन्दछु त्यो कुरा मन सबै ❀ सोह्रै चनाखो भई
श्रीरामचन्द्रजिको प्रमान नबुझी ❀ यो अश्व ऐल्हे हरी
राख्यौ कुन् मनले बताउ तिमिले ❀ शोखीन ह्याक्मा गरी ९६
धर्मै क्षत्रियको लिएर अहिले ❀ घोड़ा हऱ्यौ ता पनी
छोड़ी चौ रघुनाथलाइ तिमिले ❀ सम्झी बड़ा हुन् भनी
आज्ञा एति सुनेर दूत् भई तहाँ ❀ अङ्गद् तुरुन्तै गया
फेरी सोह्रि घरी सुरथ नृपतिका ❀ घर्मा ति दाखिल् भया ९७
घर्मा अङ्गदलाइ देखिकन ती ❀ राजा सुरथ्ले पनी
सोद्ध्यासज्जनलाइ यो किन यहाँ ❀ आएछ बानर् भनी
को हो के मनमा लिएर अहिले ❀ आयो अकस्मात् यहाँ
सोधी त्यसकन त्योकुरा कहु सबै ❀ मेरा अगाड़ी महाँ ९८
यस्तो प्रश्न सुनी सुरथ् नृपतिको ❀ भन्छन् ति अङ्गद् पनि
दूत् हूँ हे अधिराज्! म ता बुझतिमि ❀ शत्रुघ्नजीको भनी
फेरी भन्दछु हित कुरा म अहिले ❀ घोड़ा हऱ्यौ जो यहाँ
छोड़ी चौ किन गर्दछौ तिमि बिरोध् ❀ रामचन्द्रकासङ्ग महाँ ९९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मार्‍या रावण कुम्भकर्ण सहजै ❀ जसले समुद्रै तरी
उसको अश्व हरण् गरेर बचुँला ❀ भन्छौं कउन् रित् गरी
छोड्दैनौ रघुनाथको हय भन्या ❀ शत्रुघ्नजीले यहाँ
मान्र्याछन् तिमिलाइ निश्चयपनी ❀ संग्राम भूमी महाँ १००

अङ्गदजिको बचन एति सुनेर ताहाँ
उत्तर दिया सुरथले उहि बीच माहाँ
साँचो भन्यौ तर पनी हय यो हर्‍याको
कारण् कहन्छु सुन बात् मइँले गर्‍याको १

रामको दर्शन गर्नलाइ बहुतै ❀ इच्छा हुनाले गरी
यो घोड़ा रघुनाथको बुझ तिमी ❀ ल्याया जफत्ले हरी
दर्शन् श्री रघुनाथले जब दिनन् ❀ उनकै अगाड़ी महाँ
मेरो राज्य र अश्व यो म गरुँला ❀ अर्पण् तुरुन्तै यहाँ २
आवैनन् रघुनाथ् यहाँ जब तलक् ❀ मैले रणौमा गई
लड्न्याछू तिमिहेरुका सँगमहाँ ❀ शत्रू समान्को भई
सूनी अङ्गदले ति बात् सुरथको ❀ भन्दाभया फेर् पनि
कस्तारितसितलड्नमन्सुनगर्‍यौ ❀ शत्रुघ्नका सङ्गमनी ३
मार्‍याएक्शरलेलवण्कनजऊन् ❀ शत्रुघ्न एक्लै गई
खोज्छौ लड्हु भनीयहाँ किनातिमी ❀ साम्ने उनैका भई
फेरी पुत्र भरत्जिका बुझ तिमी ❀ तिन्का सँगैछन् भनी
जसले युद्ध गरेर खुश् गरिदिया ❀ श्री बीरभद्रै पनि ४
हे राजन्! हनुमानलाइ बुझिल्यौ ❀ जसले समुद्रै तर्‍या
लङ्का खाक गरेर राक्षस अनेक् ❀ जसले बिनाशै गर्‍या
द्रोणाचल् सहजै गएर जसले ❀ ल्याया पिठैमा धरी
तेस्ता बीर् हनुमानलाइ तिमिले ❀ जितछौ कउन्‌रितगरी ५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अङ्गदका ड बचन् सबै सुनीसको ❀ भन्छन् सुरथ्जी तहाँ
घोड़ा दिन्न फिरेर जाउ भन गै ❀ शत्रुघ्नका सङ्ग महाँ
बनै बीर्देखि म कति छैन बलमा ❀ शत्रुघ्नका सङ्ग गई
लड्न्याछू रणमा फउज् लिई यहाँ ❀ आउन् तयारी भई ६
यस्तो बात जसै सुन्या सुरथको ❀ अङ्गद्जि फर्की गया
शत्रुघ्नै सँग त्यो कुरा उहि घरी ❀ पौंचेर भन्दा भया
अङ्गद् देखि खबर् सुनी सुरथको ❀ शत्रुघ्नजीले पनी
फौज् भर् उर्दि दिया बजाउ रणका ❀ बाजा सबैले भनी ७
आज्ञा एति सुन्या तहाँ फउजले ❀ शत्रुघ्नजीको जसै
युद्धैको शुरुको सबै रकमको ❀ बाजा बजाया तसै
त्यै बिच्मा रथमा चढेर खुशि भै ❀ लड्छू म एल्हे भनि
आफ्ना फौजहरू लिएर सँगमा ❀ आया सुरथ्जी पनि ८
देख्या लश्कर त्यो सुरथ् नृपतिको ❀ रामका फउज्ले जसै
साम्नेमा गइ द्वन्दयुद्ध रिसले ❀ खुब् गर्नलाग्या तसै
जेठा पुत्र थिया सुरथ् नृपतिका ❀ चम्पक्थियो नाम्पनि
तिन्कासाथगएर पुष्कलभिड्या ❀ गर्छू लड़ाई भनि ९
मोहक्नामहुन्यासुरथ्नृपतिका ❀ सेनापति एक थिया
तिन्का साथमहाँ कुशध्वज गई ❀ साम्ने मुहूडा दिया
एही रितसित सुग्रिवादि सब बीर् ❀ क्रोधित् बहूतै भई
लाग्यालड्नसुरथ् तरफ्जतिथिया ❀ बीर्का सँगैमा गई १०
सोध्या चम्पकलाइ पुष्कलजिले ❀ सोही बखत्मा तहाँ
के नाम् हो भन राजपुत्र! तिमिले ❀ मेरा अगाड़ी यहाँ
धन्यै बीर् तिमि हौ सहज् सँग यहाँ ❀ मेरा अगाड़ी पनी
आयौ यो रणभूमिका बिच महाँ ❀ गर्छू लड़ाई भनि ११

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पुष्कल्का इ बचनू सबै सुनिसकी ❀ भन्छन् ति चम्पक् तहाँ
मेरो चम्पक नाउँ हो भनिदियाँ ❀ के सोध्छौ फेर् यहाँ
छोरो हूँ रघुनाथको भनि बहुत् ❀ मन्मा घमण्डै गरी
बोल्छौ बात् कि नयौ समर्थ छ भन्या ❀ आऊ अगाड़ी सरी १२
एती बात् भनि फेर् ति चम्पकजिले ❀ बर्षा शरैको गऱ्या
काटया पुष्कलले ति शर्हरु तहाँ ❀ टुक्रा हुँदै सब् झऱ्या
साह्रै क्रोध् गरि फेर् ति चम्पकजिले ❀ ब्रह्मास्त्र छोडया जसै
ब्रह्मास्त्रैकन छोडि पुष्कलजिले ❀ सहार् गऱ्या फेर् तसै १३
आफ्नो अस्त्र जसै निफल् हुन गयो ❀ चम्पक्जिले क्रोध् गरी
रामास्त्रैकन फेरि पुष्कल उपर् ❀ छोड्दा भया त्यै घरी
पुष्कल्ले पनि त्यो निफल् गरुँ भनी ❀ धेर् अस्त्रको त्याग् गऱ्या
त्यो रामास्त्र निफल् भएन गईत्यो ❀ लागेर मूर्छा पऱ्या १४
मूर्छा पुष्कलजी जसै हुन गया ❀ डर्ले सबै फौज् तहाँ
भागी त्यो रणदेखी त्यै घरि पुग्या ❀ शत्रुघ्नजी छन् जहाँ
पुष्कल् मूर्छित भै गिऱ्या भनि सुन्या ❀ शत्रुघ्नजीले जसै
डाकी श्री हनुमानलाइ नजिकै ❀ आज्ञा गऱ्या फेर् तसै १५
एल्हे हे हनुमान्! गई रण महाँ ❀ मारेर चम्पक् तहाँ
उद्धार् पुष्कलको गरेर तिमिले ❀ लीएर आऊ यहाँ
आज्ञा एति गऱ्या रिसाइ बहुतै ❀ शत्रुघ्नजीले जसै
दौड़ी श्रीहनुमान् ति चम्पकजिका ❀ पौंच्या नगीच् मात तसै १६
देखी श्री हनुमानलाइ रिसले ❀ बीर् चम्पकैले पनी
छोड्या धेर् हतियार् तहाँ ति हनुमान् ❀ बीर्लाइ मार्नै भनी
जोजो चम्पक छोड्दथ्या ति हतियार् ❀ पक्री निचैमा तहाँ
भाँच्थ्या श्रीहनुमान् पनी सहजमा ❀ क्रोधित भई मन्महाँ १७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भाँची सब् हतियारलाइ छिनमा ❀ एक् वृक्ष हात्मा लिई
हान्या चम्पकलाइ फेरि हनुमान् ❀ बीर्ले तुरुन्तै गई
चम्पक्ले पनि फेर् चढाइ धनुमा ❀ घेर् बाण् चलाई लिया
हज्जारौं टुकुरा गरेर बिच मै ❀ त्योरुख् खसाई दिया१८
आफ्नू रुख्टुकुरा भई जब गिर्‍यो❀पत्थर् ठुलो एक् धर्‍या
त्यो पत्थर् हनुमानले उहिबखत्❀चम्पक्उपर्त्यागगर्‍या
त्योपत्थर्पनिफेर् तिचम्पकजिले❀ काटीदियाथ्या जसै
दौडी चम्पकको गएर धनु त्यो ❀ खोसेर भाँच्या तसै१९
फेरी श्री हनुमानले पयरमा ❀ पक्रेर जोर्ले तहाँ
चम्पक्लाई बहुत् घुमाइ रिसले ❀ पट्क्या जमीनै महाँ
जोर्ले श्री हनुमानले जमिनमा ❀ पट्की दियाथ्या जसै
पीडा ज्यादि भएर मूर्छित भई ❀लोटयातिचम्पक्तसै२०
चम्पक्काजतिफौज्थियातिपनिसब्❀ संहार्तुरुन्तैगर्‍या
पुष्कल्लाई उठाई फेरि हनुमान् ❀ बीर्ले रथैमा धर्‍या
छोरो मूर्छित भै गिर्‍यो भनि खबर्❀ पाई सुरथ्जी पनि
आया फेर् रथमा चढेर हनुमान् ❀ बीर् लाइ मार्छू भनी २१

देखी सुरथ् नृपतिलाइ बहुत् रिसाई
फेरी तहाँ ति हनुमानजि सामु जाई
हातले उसै बखत वृक्ष उखेलि लीया
मार्छू सुरथ्कन भनेर चलाई दीया २२

देखी श्री हनुमानलाइ नगिचै ❀ राजा सुरथ्ले पनि
सोध्या के मनमा लिएर आहिले ❀ दौडेर आयौ भनि
मेरो चम्पक पुत्र जो जमिनमा ❀ ऐल्हे गिरायौ यहाँ
तेस्को फल् तिमिलाइ दिन्छु भनेले❀ यो युद्ध भूमि महाँ २३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

भक्तै हौ रघुनाथका तिमि भनी ❀ खूब् जान्दछू त्यो पनि
रामूकै भक्त महूँ अनश्य बुझिल्यौ ❀ साँचै भन्या यो भनि
एती बात् पहिले सुनाइकन फेर् ❀ राजा सुरथ्ले तहाँ
हान्या बाण् हनुमानलाइ बहुतै ❀ ताकेर छाती महाँ २४
धेरै बाण चलाई देहभरमा ❀ घाऊ गराया जसै
क्रोधित् भै हनुमानले पनि धनू ❀ भाँच्या सुरथ्को तसै
फेरी त्यै घरिमा सुरथ् नृपतिले ❀ अर्कौ उठाया धनू
भाँच्यात्योपनि फेर् गएर हनुमान् ❀ बीर्लोछिटो क्याभनू २५
यै रितले अरु जो धनुष् सूरथले ❀ हातमा उठाई लिया
भाँची श्रीहनुमानले ति पनि सब् ❀ टुक्रा गराई दिया
जो लिन्छन् धनु भाँचियो र रिसले ❀ राजा सुरथ्ले पनि
हान्या शक्ति उठाई फेरि हनुमान् ❀ बीरलाइ मार्नै भनि २६
लाग्यो शक्ति गई जसै हृदयमा ❀ मूर्छा तुरुन्तै भया
मूर्छादेखी उठेर फेरि हनुमान् ❀ साम्ने सुरथ्का गया
साम्ने गैकन फेर सुरथ् नृपतिका ❀ रथ्लाई पक्री जसै
फाल्या श्री हनुमानले सहजमै ❀ रथ् चूर्ण भैगो तसै २७
चूर्णौ गर्‍या रथ भनेर सुरथ् रिसाई
हातमा ठुलो परिघ एक लिई घुमाई
छोड्दा भया रिस गरीकन त्यो जसै ता
व्याकुल् बहुत् हुनगया हनुमान् तसैता २८
औसर् तहाँ सुरथले पनि सोहि पाया
अर्को ठुलो रथ ऊपर् चाढि लइन आया
त्यो रथ् पनि ति हनुमान् गइ जल्दि फेरी
फालीदिया सुरथका मुख तर्फ हेरी २९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

एक् कम् पचास् सुरथका रथलाइ ताहाँ
फाल्या यसै एकमले रणभूमि माहाँ
त्यो कर्मदेखि हनुमान्कन बीर जान्या
मार्छू भनेर लिई पाशुपतास्त्र हान्या ३०
छोड्या पाशुपतास्त्र क्रोध् गरि तहाँ ❀ राजा सुरथ्ले जसै
निस्क्या भूतपिशाच रुद्रगण सब् ❀ त्यो अस्त्र देखी तसै
फेरी श्री हनुमानले पनि तहाँ ❀ रामचन्द्रको ध्यान्गरी
पक्री पाशुपतास्त्रलाइ सहजै ❀ संहार् गऱ्या त्यै घरी ३१
क्रोधित् भैकन फेर् तहाँ सुरथले ❀ ब्रह्मास्त्र छोड्या जसै
मुख् बाई हनुमानले निलिदिया ❀ त्यो अस्त्रलाई तसै
ब्रह्मास्त्रैपनि त्यो निफल् जब भयो ❀ राजा सुरथ् छक् पऱ्या
अर्को केहि उपाय गर्न नसकी ❀ रामचन्द्रको ध्यान्गऱ्या ३२
बयै काल् ध्यान् रघुनाथको गरि तहाँ ❀ रामास्त्र फेरी लिया
बाँधछू यो हनुमानलाइ म भनी ❀ मन्त्रेर छोडी दिया
रामास्त्रैसित जोर् चलेन हनुमान् ❀ बन्धन् उसैमा पऱ्या
शत्रू बाँधि लियाँ भनी सुरथले ❀ खुब् शंखको नाद् गऱ्या ३३
बन्धन्मा हनुमान् जसै परिगया ❀ पुष्कल् अगाडी सरी
लाग्या लड्न सुरथ्जिका सँगमहाँ ❀ बर्षा शरैको गरी
घेर् बाण् फेरि सुरथ्जिले पनि तहाँ ❀ पुष्कल् उपर् त्याग् गऱ्या
काट्या ती शरलाइ पुष्कलजिले ❀ साराजमिन्मा झऱ्या ३४
जो जो अस्त्र चलाउँथ्या गगनमा ❀ सब् काट्न लाग्या जसै
फेरी एक अमोघ बाँई रिसले ❀ छोड्या सुरथ्ले तसै
लाग्यो बाँई गएर त्यो हृदयमा ❀ पुष्कल्जि मूर्छा भया
क्रोधले पूर्ण भएर फेर् सुरथका ❀ शत्रुघ्न सामने गया ३५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

साम्ने भैकन फेर् सुरथ् नृपतिको ❀ शत्रुघ्नजीले तहाँ
भन्नूभो हनुमानलाइ तिमिले ❀ बाँद्यौ सहज्मा यहाँ
मेराफौजहरुको विनाश्गरिदियौ ❀ पुष्कल्जिलाई पनि
मूर्छा पारिलियौ भनेर अहिले ❀ आयाँ म लड्नै भनी ३६
यो शत्रुघ्नजिको बचन् सुनिसकी ❀ भन्छन् सुरथ्जी तहाँ
बाँद्या श्री हनुमानलाइ मइँले ❀ रामका कृपाले यहाँ
संग्राममा थिर भै रह्यौ यदि भन्या ❀ ऐल्हे म तिम्रो पनि
प्राणै नष्ट गराउन्याहु बुझिल्यौ ❀ साँचो कुरा हो भनि ३७
यस्तो बाक्यसुरथ्जिकोजबसुन्या ❀ शत्रुघ्न क्रोधमा पऱ्या
मार्छू यस्कन लौ भनेर सहजै ❀ बर्षा शरैको गऱ्या
आग्नेयास्त्र चढाइ फेरि धनुमा ❀ छोड़ी दियाथ्या जसै
ब्रह्मास्त्रैकन छोड़ि फेर् सुरथले ❀ आगो निभाया तसै ३८
क्रोधले पूर्ण भएर त्यै बखतमा ❀ शत्रुघ्नजीले पनि
छोड्या मोहनअस्त्र फेर् सुरथको ❀ संहार गर्नै भनि
आयो त्यो जब मोहनास्त्र रिसले ❀ व्याकुल् सुरथ्जी भया
जो जो सैन्य थिया तहाँ सुरथका ❀ मूर्छा ति सब् भै गया ३९
रक्षा आज गरुन् सितापतिजिले ❀ यो अस्त्र देखी भनि
एक्बाणजल्दिचलाइअस्त्रकनत्यौं ❀ काट्या सुरथ्लेपनि
आफ्नूअस्त्र जसैनिफल् हुनगयो ❀ फेरी उसै बिच्महाँ
क्रोधितभै शरवृष्टि खुब्सित गऱ्या ❀ शत्रुघ्नजीले तहाँ ४०
जुन् बाणले लवणासुरैकन अघी ❀ माऱ्या उसैले पनि
हान्या फेरि सुरथ्जिलाइ रिसले ❀ मार्छू सहज्मा भनि
बेग्ले त्यो शर फेर् गई सुरथका ❀ लाग्यो शरीर्मा जसै
मूर्छा पर्न गई गिऱ्या रथ उपर् ❀ राजा सुरथ्जी तसै ४१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मूर्छा देखि उठ्या जसै सुरथले ❀ हात्मा अमोघ् शर् धर्या
श्री शत्रुघ्न उपर् रिसाइकन फेर् ❀ त्यो शर् प्रहारै गर्या
त्यो बाण् बज्रन गैगयो हृदयमा ❀ शत्रुघ्नजीको जसै
पीड़ा ज्यादि परेर मूर्छित भई ❀ लोट्या जमिन् मात सै ४२

शत्रुघ्नजी गिरिगया जब भूमि माहाँ
हा हा पर्यो सकल फौज्हरुलाइ ताहाँ
हर्ष भई सुरथका जति सैन्य थीया
सब्ले उसै बखत शंख बजाइ लीया ४३

आफ्ना फौज्हरूको विनाश बहुतै ❀ देखेर क्रोधित् भई
जल्दी सुग्रिवजी पनी सुरथका ❀ साम्ने अगाड़ी गई
लाल्लाल् नेत्र गराइ फेर् उहि बखत् ❀ भन्दाभया यो पनि
हे राजन्! स्थिर भै रहू तिमि यहाँ ❀ आयाँ म लड्नै भनि ४४

पैल्हे एति भनेर पर्वत ठुलो ❀ लीएर हात्मा जसै
फेंक्या सुग्रिवले र त्यो गगनमै ❀ काट्या सुरथ्ले तसै
पर्वत् व्यर्थ भयो भनेर बहुतै ❀ सुग्रिव्जिले क्रोध् गरी
हान्या फेरि सुरथ्जिलाइ मुठिले ❀ छाती बिषे त्यै धरी ४५

बज्र्यो मुठी अति कठोर् जब छाति माहाँ
क्रोधित् भई सुरथले पनि जल्दि ताहाँ
रामास्त्र मन्त्र गरि फेरि चलाइ दीया
सुग्रीवलाई पनि बन्धन पारि लीया ४६

बाँधी ती सब बीरलाइ रथमा ❀ राखी सुरथ्जी पनि
घर्मा जल्दि फिर्या बहुत् खुशि हुँदै ❀ जित्भो लड़ाई भनि
पौंच्याथ्या सब बीरलाइ सँगमा ❀ लीएर घर्मा जसै
भन्छन् श्री हनुमानका सँग महाँ ❀ राजा सुरथ्जी तसै ४७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ऐल्हे हे हनुमान्! म भन्छु सुनिल्यौ ❀ रामचन्द्रको ध्यान् गरी
डाकीलेऊ नहीं भन्या सकलको ❀ आयो निपद्को घरी
यो बात् श्रीहनुमानले सुनिलिया ❀ राजा सुरथ्को जसैं
साँचै हो भनि रामका चरणको ❀ ध्यान् गर्न लाग्या तसैं ४८
भक्तीपूर्वक ध्यान् गरेर पछि फेर् ❀ भन्दा भया यो पनि
हे नाथ्! दुःख छुटाइ बक्सनुहनस् ❀ आई हजुर्ले भनि
यस्तैं रीतासित फेर् अनेक स्तुति गर्‍या ❀ रामचन्द्रजीको जसैं
पुष्पक्‌माथि चढेर ताहिं रघुनाथ् ❀ पाल्नू भयो झट् तसैं ४९
पाल्नू भैकन बीरहरू जति तहाँ ❀ मूर्छा भयाका थिया
चैतन्यै सबको गराइ पहिले ❀ बन्धन् फुकाई दिया
खुशी भै रघुनाथका चरणमा ❀ आई सुरथ्ले पनि
भक्तीपूर्वक दण्डवत् गरिलिया ❀ मालिक् हइनै हुनू भनि ५०
फेरी अश्व पनी उसै बखतमा ❀ ल्याएर हाजिर् गर्‍या
माफ् पाऊँ रघुनाथ्! कसूर सब भनी ❀ पश्री चरण्मा पर्‍या
यस्तो बिन्ती सुनी तहाँ सुरथ्को ❀ भन्छन् सिताका पति
लड्न्या क्षत्रिय धर्म हो लडिलियौ ❀ रीस् छैन मेरो रति ५१
आज्ञा यस् रितको सबै सुनिलिया ❀ राजा सुरथ्ले जसैं
भक्तीपूर्वक फेर् पुजा गरिलिया ❀ रामचन्द्रजीको तसैं
तिन् दिन् सम्म बसी सुरथ् नृपतिका ❀ घर्मा जगन्नाथ पनि
पुष्पक्‌माथि चढेर फर्कनु भयो ❀ जान्छू अयोध्यामा भनि ५२
आफ्नो चम्पक पुत्रलाइ धरि फेर् ❀ सिंहासनैमा तहाँ
घोड़ा रक्षक भैं सुरथ् पनि गया ❀ शत्रुघ्नका सङ्ग महाँ
फेरी श्री रघुनाथको चालिगयो ❀ त्यो अश्व बेग्ले जसैं
श्रीशत्रुघ्न पनी फउज् लिइ चल्या ❀ तेस्का पछाडी तसैं ५३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

अङ्ग बङ्ग कलिङ्ग देशहरु सबै ❀ नाघेर शोभित भई
त्यो घोड़ा पनि फेरी भागिरथिका ❀ पौंच्यो किनारमा गई
आश्रम्बाल्मिकिकोथियोनगिचमा❀ ताहीं सिताजी गई
बसिथन् पुत्र दुबै लिएर सँगमा ❀ठीक् योगिनी भैंभई ५४
कान्छा जानकिका कुमार लवजी ❀ आई उसै बिच्महाँ
घोड़ा श्री रघुनाथको नजरले ❀ देख्या अकस्मात् तहाँ
तेस् बेला ऋषिका कुमारहरु जो ❀ सङ्गमा गयाका थिया
कस्को अश्व रहेछ लौ बुझ भनी ❀ सब्लाइआज्ञादिया ५५
तेस्का माथ बिषे सुवर्णदलमा ❀ देखिन्छ अक्षर् पनि
तेस्को कारण बुझ्नु पर्छ किन हो❀ लेखी लियाको भनि
पैल्हे एति भनेर दौड़िकन गै ❀ त्यो अश्व चर्थ्यो जहाँ
बाँची अक्षर सब् रिसाइ लवजी ❀ फेर् भन्न लाग्या तहाँ ५६
साह्रै शोखि गरेर हेर सबले ❀ लेखेछ अक्षर् पनि
तेस्को शोखि म तोड़ि दिन्छु सहजै ❀ कुन् राम हो त्यो भनि
लड्ला क्षत्रिय हो भन्या म सँग त्यो ❀ रणमा अगाड़ी सरी
भन्दै त्यो हयलाइ पक्रि लवले ❀ बाँधीलिया त्यो घरी ५७
त्यो देखी ऋषिपुत्रहेरु डरले ❀ सब् भन्न लाग्या तहाँ
हे लव ! श्रीरघुनाथको किन हरयौ❀ घोड़ा तिमीले यहाँ
सारा ति ऋषिका कुमारहरुले ❀योबात् भन्याथ्या जसै
लाल्लाल् नेत्र गरी रिसाइ लवले ❀ उत्तर् दिया फेर् तसै ५८
क्षत्रीका बलको प्रमान् तिमिहरू ❀ के जान्दछौ लौ यहाँ
बोल्छौ व्यर्थ यसोरि डर् यदि भया ❀ जाऊ सबै घर् महाँ
एतीबातलवको सुनी ऋषिकुमार्❀ सम्पूर्ण चुप् भै रह्या
घोड़ा रक्षक फेर् उसै स्थल महाँ ❀ आएर दाखिल् भया ५९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

बाँद्याको हयलाइ देखि ति सबै ❀ रक्षकहरूले पनि
सोद्या बालखलाइ कुन् पुरुषले ❀ यो अश्व बाँद्योभनि
घोडारक्षकले इ बात् जब तहाँ ❀ आएर सोधीलिया
मैले अश्व धर्याँ भनेर लबले ❀ उत्तर् तुरुन्तै दिया ६०
मेरा दाज्यु सहाय छन् कुश भन्या ❀ आधार उन्कै गरी
लड्न्याछू यमराजका सँग पनि ❀ आया भन्या यो घरी
यस्तो बात् लबको सुन्या सकलती ❀ रक्षक्हरूले जसै
त्यो घोडाकन झट् फुकाउनभनी ❀ दौडेर आया तसै ६१
लाग्या फुकाउन गर्ई जब अश्व ताहाँ
क्रोधित् भई लबजिले उहि बीच माहाँ
हात्मा लिएर धनु बाण अनेक् चलाई
ढाकीदिया सकल रक्षकहेरुलाई ६२
एती कथा सुनि ति शेषजिदेखि ताहाँ
बात्स्यायनै ऋषिजिले उहि बीच माहाँ
बिन्ती गर्या किन तहाँ ति सिताजि जाइ
बन्मा रहिन् सकल भन्नुहवस् मलाई ६३
शेषजीले इ कुरा सुनी ति ऋषिको ❀ मन्नू भयो खुश् भई
जुन् कारण् पीहले परेर ति सिता ❀ बस्थिन् बनैमा गई
राबण् मारिसक्यापछी रघुपती ❀ फर्की अयोद्या महाँ
राज्यै गर्नुभयो अयुत् बरष तक् ❀ सङ्मा सिताका तहाँ ६४
सीता गर्भवती भइन् उहि बखत् ❀ मैन्हा बित्यो पाँच् जसै
एक् दिन् श्री रघुनाथले खुशि भई ❀ राखी नजिक्मा तसै
प्रेम्का बात गरेर धेर पहिले ❀ सोध्नुभयो यो पनि
हे सीते ! तिमिलाइ के गरिलिन्या ❀ इच्छा छ एल्हेभनि ६५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations
यो आज्ञा रघुनाथको सुनसकी ❀ भन्छिन् सिताजी तहाँ
हे नाथ! राजसुखभोग्गऱ्याँहजुरको ❀ केवल् कृपाले यहाँ
एकबारफेर् वनमागएर ऋषिका ❀ पत्नीहरू छन् जति
सब्को दर्शन गर्नलाइ रघुनाथ! ❀ इच्छा छ मेरो अति ६६
बिन्ती जानकीको सुनेर खुशि भै ❀ भन्छन् सीताका पति
जो मन्छयौम पुऱ्याउनेछु तिमिले ❀ मन्ले चिताया जति
भोली गै वनमा फिरौलिभनियो ❀ रामको हुकुम् भो जसै
स्वामीकोकरुणा बुझेर ति सिता ❀ खुशीभइन् खुब् तसै ६७
दिन् दिन् श्री रघुनाथका चरहरू ❀ गुप्त हिसाब्ले गरी
घुम्थ्याहाल्सबबुझनलाइनिशिमा ❀ सारा अयोध्या भरी
एकै दिन् एक् धनिका पुगेर घरमा ❀ देख्या उज्यालो पनि
एकछिन्ताहिंखडाभयासबजना ❀ यस्कोबुझौंहाल्भनि ६८
तेस घर्मा अतिसुन्दरी युवतिएक् ❀ आफ्ना पलङ्मा रही
प्रीतीपूर्वक स्वामिका सँग कुरा ❀ गर्थिन् बहुत् खुशभई
प्रेमले मोह भएर स्वामिकन फेर् ❀ भन्दीभइन् यो पनि
सुन्दर्मा रघुनाथ कै सरि मुहार् ❀ देख्छु हजुर्कोभनि ६९
भार्याका इ कुरा सुनी पुरुषले ❀ भन्दाभया फेर् तहाँ
केमा राम् सरिको मलाई तिमिले ❀ ऐल्हे भन्याको यहाँ
सिंहैको मृगको जसो गरि फरक् ❀ देखिन्छ तेस्तै गरी
श्रीरामचन्द्रजिकाअघिल्तिर म ता ❀ हुन्छु मृगैका सरी ७०
जस्ले पाउ धरेर पत्थर पनी ❀ मानिस् गराई लिया
जस्ले फेर् शिवको धनू सहजमा ❀ टुक्रा गराई दिया
यस्ता श्री रघुनाथका चरणको ❀ धूलै बराबर पनि
हे प्यारी! म त छैन जान तिमिले ❀ साँचै इ भन्छन् भनि ७१
CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यै बात् त्यो घरमा सुनेर ति सबै ❀ अर्कै घरैमा गया
कीर्ती श्री रघुनाथको तहिं पनि ❀ सम्पूर्ण सुन्दाभया
घर्घर्मा यहि रीतले चरहरू ❀ घुम्दा नगर् भर् महाँ
सुन्थ्या यश् रघुनाथकै सकलले ❀कीर्तन्गर्याकोतहाँ ७२
फेरी यै रितले ति चर्हरु सबै ❀ एक् धोबिका घर् गया
तेस्को हाल पनि बुझौं भनि तहाँ ❀ एक्छिन् खड़ा भै रह्या
त्यो धोबी झगड़ा गरेर उ बखत् ❀ चुल्ठो कसैले धरी
लात्ले स्त्रीकन हान्दथ्यो घरि घरि ❀साह्रै ठुलो क्रोध्गरी ७३
भन्थ्यो फेर् अब बस्न हुन्न तइँले ❀ मेरा घरैमा पनि
ठान्दी होस् कि मलाइ यो पनि उनै ❀ रामचन्द्र मैं हो भनि
जस्तै रावणले हरेर घरमा ❀ राख्यो तथापी यहाँ
ल्यायो सोहि सिता भनेर मइँले ❀ राख्दू तँलाइ कहाँ ७४
तेस्ले यै रितले अनेक प्रभुजिको ❀ निन्दा गर्याको जसै
सून्या चर्हरुले र दिक् भई बहुत ❀ थुन्दाभया कान् तसै
फेरी सोहि बखत् ति चर्हरु सबै ❀ अर्का घरैमा गया
तेस घर्मापनिरामकै अति सुयश् ❀ सूनेर खुशी भया, ७५
प्रातःकाल भयो जसै उहि बखत् ❀ रामका हजुर्मा पनि
आया ती सब चर्हरू नगरका ❀ हाल् बिन्ति गर्नै भनि
श्रीरामचन्द्रजिले ति चर्कन तहाँ ❀ देख्नूभएथ्यो जसै
के भन्छन्दुनियाँमलाइ कहु सब् ❀भन्नूभयो फेर् तसै ७६
रामको एति हुकुम् सुनी चरहरू ❀ सब् भन्नलाग्या तहाँ
हे नाथ! कीर्ति ठुलो सदाहजुरको ❀ सुन्छौं मुलुक्मा यहाँ
दुर्भिक्ष रतिभर् हुँदैन कहिल्यै ❀ कोनै मुलुक्मा पनि
सब् भन्छन्अघि रामका सरि कुनै ❀राजा भयानन् भनि ७७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

इक्ष्वाकू कुलमा सगरहरु जऊन् ❀ राजा प्रतापी थिया
ती भन्दा पनि रामले अति ठुलो ❀ कीर्ति चलाई लिया
जस्ता रितसित सूर्यका किरणले ❀ ढाक्छन् उसै रीत् गरी
ढाक्याको छ हजूरका सुयशले ❀ भन्छन् तिनैलोक् भरी ७८
मानिस्कोत कउन्कुरा रघुपते ! ❀ चौताहरूले पनि
भन्छन् राम्सरिकोकुनैअमतलक् ❀ राजा भयानन् भनि
यौटा धोबी फगत् कुकर्मि बहुतै ❀ देख्यौं यसै पुरमहाँ
त्योनीच्कोसुनीबिसयोसकलबात ❀ भन्छौंसबैलेयहाँ ७९
हे नाथ्! यै निशिमा सबै नगर भर् ❀ घुम्दै बराबर गयौं
देखी धोबि कहाँ अघोर झगड़ा ❀ ताहीं खड़ा भै रह्यौं
यौटी धोबिनीलाइ स्वामि उसको ❀ लात्ले बराबर तहाँ
हान्दै क्रोध् गरि भन्दथ्यो यहि कुरा ❀ पक्रेर चुल्ठो महाँ ८०
निक्ली जा घरदेखि झट् यहि घरी ❀ इच्छा छ तेरो जहाँ
राम् झैं उल्लु भई म यस् घरमहाँ ❀ राख्छू तँलाई कहाँ
जस्तै रावणले हरेर घरमा ❀ एक् वर्ष राख्दा पनि
ल्यायो रावणलाइ मारि सँगमा ❀ चोखी छ सीता भनि ८१
त्यो दुर्वाच्य सुनेर हे रघुपते ! ❀ जो जो गयाका थियौं
त्यो धोबीकन मारिद्यूँ तहिं भनी ❀ सबले इरादा लियौं
फेरी सोहि घरी मतो गरिलिंदा ❀ आयो बिचार् यो पनि
राम्लाइ न सुनाई मार्नु कसरी ❀ हामीहरूले भनि ८२
यो बिन्ती रघुनाथले ति सबको ❀ सुन्नूभयाथ्यो जसै
सुरकेरा मुखले गरी जमिनमा ❀ गिर्नू भयो झट् तसै
क्यै काल् मूर्छित भै उठेर पछि फेर् ❀ दुःखित भई मन्महाँ
आज्ञा दूतहरुलाइ बक्सनुभयो ❀ राम्चन्द्रजीले तहाँ ८३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे दूत् हो ! भरतादिका घर गई ❀ रामूको हुकुम्भो भनि
डाकी ल्याउ यसै बखत् तिमिहरू ❀ सब् भाइलाई पनि
यो आज्ञा रघुनाथको सुनि तहाँ ❀ जो दूत् नजिक्माथिया
ती सब्ले भरतादि भाइकन गै ❀ डाकेर ल्याई दिया ८४
हाजिर् भै रघुनाथको मुखकमल् ❀ देख्या अँध्यारो जसै
हात् जोरीकन फेरि भाइहरुले ❀ बिन्ती चढाया तसै
हे नाथ् ! हामिहरू मुहार् हजुरको ❀ देख्छौं अँध्यारो यहाँ
यस्को कारण सब् बताउनुहवस् ❀ हाम्रा अगाड़ी महाँ ८५
बिन्ती एति सुनेर भाइहरुको ❀ मन्‌मा न हुत् शोक्गरी
आज्ञा श्री रघुनाथले गरिलिया ❀ अश्रू नजर्‌मा धरी
हे भाईहरु हो ! मलाइ अहिले ❀ जुन् कारणले यहाँ
सुर्ता पर्न गयो कहन्छु सुनिल्यौ ❀ एकाग्र भै मन् महाँ ८६
यो सूर्यैकुलमा जउन् अब तलक् ❀ राजा भयाका थिया
सब्ले राज्य गरी प्रजाहरु सबै ❀ राजी गराई लियाँ
मैले त्यै कुलमा जनम् लिइ न हुत् ❀ दुर्नाम् चलाई लियाँ
निर्मल् यो रघुकुल् विषे अति ठुलो ❀ धब्बा लगाई दिया ८७
जन्म्याको पनि सार्छ त्यै पुरुषले ❀ जस्ले असल् काम्गरी
आफ्नू कीर्ति चलाउँछन् अतिठुलो ❀ सम्पूर्ण पृथ्वी भरी
जस्‌को बद्यै अपकीर्ति यस् पृथिविमा ❀ गर्छन् सबै जन्हरु
बाँच्नू चाहिं म ठान्छु तेस् पुरुषले ❀ मर्नै निको हो बरु ८८
हे भाईहरु हो ! सिताकन हरी ❀ एक् वर्ष लङ्का महाँ
राख्यो रावणले भनी सकलमा ❀ जाहेर्छ त्यो बात् यहाँ
सोही कारणले यसै नगरको ❀ एक् धोबिले यो घरी
लायो दोष मलाइ जानकि उपर ❀ शंका नहुतै गरी ८९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations


यो दुर्नाम छुटोस् भनेर कि त लौ ❀ सिताजिको त्याग्गरौं
की ता वयै आपघात् गरीकन यहाँ ❀ आफैं म ऐल्हे मरौं
यस्को उत्तर द्यौ भनेर रघुनाथ् ❀ आँशू नजर्मा धरी
लाग्या रोदन गर्न भाइहरुका ❀ साम्ने विलापै गरी १०
यस्तो बात सूनेर दुक्खित भई ❀ भाईहरूले तहाँ
बिन्ती पारिलिया उसै बखतमा ❀ रामका हजूरै महाँ
यौटा दुर्जनले बिचार् नगरि वयै ❀ हेनाथ् ! हजुर्को यहाँ
निन्दा केहि गर्‍यो भनेर इ बचन् ❀ भन्नू उचित् हो कहाँ ११
रावणका घरमा थिइन् तर पनी ❀ अग्नी प्रवेशै गरी
आफ्नू शुद्ध शरीर् प्रकाश् गरिलिइन् ❀ सारा तिनै लोक् भरी
ब्रह्मा रुद्र महेन्द्र आदि जति छन् ❀ द्यौताहरूले पनि
सौंप्या चोखि भनी हजुर्कना सिता ❀ लैजाउ सङ्गमा भनी १२
गङ्गाजल् सरि निर्मलै हजुर्को ❀ कीर्ती तिनै लोक् भरी
गान् गर्छन् निशिदिन् प्रभो ! सकलले ❀ भक्ती मनैमा धरी
यौटा दुर्जन धोबी कै बचनले ❀ त्यागछु म सीता भनि
आज्ञा हुन्छ कसोरि हे रघुपते ! ❀ ऐल्हे हजुर्ले पनि १३
सुर्यैले सब् लोक् प्रकाश् गरिदिंदा ❀ देख्छन् सबै जन् अरू
देख्दैनन् तर त्यो प्रकाश् कन यहाँ ❀ लाटाकोसेरा हरू
तेस्मा सुर्यजिलाइ दोष् कसरि द्यूँ ❀ तेस्तै हजुर्को पनि
नाश् होलाकिन कीर्ति एक् अधमले ❀ दुर्वाच्य बोल्यो भनि १४
जान्नू हुन्छ सबै कुरा हजुरले ❀ हे नाथ् ! सिताकासरी
को छन् नारि पतिब्रता जगतमा ❀ आज्ञा हवस् यो घरी
यस्तीछन् इ सिता भनेर सब बात ❀ जानी हजुर्ले यहाँ
त्याग् गर्छु म भनेर भन्नु पनि यो ❀ योग्यै छ ऐल्हे कहाँ १५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तो बिन्ति सुनेर भाइहरुको ❀ रामचन्द्रले फेर् पनि
आज्ञा भो सब जान्दछू जति भन्यौ ❀ साँचो कुरा हो भनि
के गर्नू अपकीर्तिको डर हुँदा ❀ सीता म त्याग् गर्दछू
भन्छौ त्याग न हुँदैन जानकि भन्या ❀ हत्या गरी मर्दछू ९६
बज्रैघात सरियो हुकुम सुनि भरत ❀ शत्रुघ्न मूर्छा पर्‌या
लक्ष्मणले तहिं धैर्य राखिकन फेर् ❀ हात जोरि बिन्ती गर्‌या
हे नाथ्! कुन् अपकीर्ति भो हजुरको ❀ सीता सती हुन् भनी
सब् भन्छन् अरु ता बुझाउँछु म गै ❀ त्यै धोबिलाई पनि ९७
हे नाथ्! केहि बिचार् नराखि अपवाद् ❀ तेस्ले सिताको गर्‌यो
सोही कारणले हजुर्‌कन ठुलो ❀ सन्ताप् मनैमा पर्‌यो
कर्काप् क्यै नगरी मधुर् बचनले ❀ त्यो धोबिलाई पनि
सम्झाईकन पारिदिन्छु मइँले ❀ सीता सती हुन् भनि ९८
जो जो जानकि कोस्न भान्छ उपनी ❀ मैले सबै जान्दछू
त्यागी बिबसनु भो भन्या ति अहिले ❀ मर्निन् भनी ठान्दछू
सोही कारणले प्रभो! हजुरका ❀ पाऊ बिषे पर्दछू
सीतालाइ न त्यागि बिबसनु हवस् ❀ बिन्ती म यै गर्दछू ९९

बिन्ती यती जब ति लक्ष्मणले गर्‌याका
सूनीसकेर मनमा अति ताप् पर्‌याका
रामले हुकुम् गरिलिया तहिं भाइलाई
सिता न त्याग भनि ब्यर्थ भन्यौ मलाई २००
लोकापवाद् यदि गर्‌या हुँदि केहि ऐल्हे
त्याग् गर्दिन्याछु यहि देह समेत मैले
दुर्नाम मै जिउनु धिक् छ कि आज मर्छू
शल्लाह यो कित सिताकन त्याग गर्छू १

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे भाई ! तिमि मैं मलाइ आहिले ❀ मेरा शरीरको पनि
प्रीती छैन अवश्य जान तिमिले ❀ साँचै इ मन्छन् भनि
तेस्ता छौ त पनी प्रजा सकलले ❀ दुर्नाम् गर्‍या छिन् महाँ
त्यागन्याछूमभन्यासिताकनकउन्❀त्याग्नैकठिन्मोयहाँ २
यो आज्ञा रघुनाथको जब सुन्या ❀ लक्ष्मणजिले फेर्तहाँ
के गर्नू भईले उचित् छ भनि खुब् ❀ चिन्ता गर्‍या मन्महाँ
सम्भयाभट्आधिकोकुराउहिबखत्❀ श्री परशुरामले पनि
मातालाइ पिताजिका हुकुमले ❀ मारीदियाथ्या भनि ३
मन्मा एति बिचार् गरेर पहिले ❀ रामका चरण्मा पर्‍या
फेरी नम्र भएर लक्ष्मणजिले ❀ हात्जोरिबिन्तीगर्‍या
हेनाथ्! केहि अयोग्य काम् हजुरले❀ आज्ञाहबस् ता पनि
त्यो काम् गर्दछु नाछनु छैन गुरुको❀ आज्ञा कसैले भनि ४
पालन् गर्न त गर्दछू म आहिले ❀ आज्ञा शिरोपर् धरी
मन्माताप् पछिफेर् हुन्याछ रघुनाथ्!❀ एसै कुराले गरी
यो बिन्ती पहिले गरेर बहुतै ❀ दुःखित् भई मन्महाँ
मन्छन्भन्नूहबस् सिताकनलगी❀ छोड़ेर आऊँ कहाँ ५
एति बिन्ती सुनेर लक्ष्मणजिको ❀ रामचन्द्रजीले पनि
आज्ञा भो तिमिले मलाई बहुतै ❀ सन्तोष् गरायौ भनि
हे भाई! सुन जानकी पनि हिजो ❀ मेरा सँगैमा यहाँ
भन्थिन् एहि कुरो म भन्छु आहिले ❀ तिम्रा अगाड़ी महाँ ६
सोद्याथ्या भईले प्रसङ्ग नशले ❀ सीताजिलाई पनि
हेसीते! तिमिलाइ के गरिलिन्या ❀ इच्छा छ ऐल्हे भनि
भन्थिन्सोहिबखत् हुकुम्दिनुभयो❀ दर्शन् बनैमा गई
गर्थ्यौं फेर् ऋषिपत्निहेरु सबको❀ अत्यन्त खुशी भई ७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

तस्मात् बाल्मिकिजी जउन् बनमहाँ ❀ बस्छन् उसै बन्महाँ
एहि छल् गरि जानकीकन लगी ❀ छोड़ेर आऊ तहाँ
भन्या एति हुकुम् सुनेर मनमा ❀ दुःखित बहूतै भया
जो आज्ञा दिनुहुन्छ गर्छु म भनी ❀ उठेर लक्ष्मण् गया ८
डाकी मन्त्रि सुमन्त्रलाइ उ बखत् ❀ लक्ष्मणजिले फेरू पनि
उर्दी बक्सनु भो तयार गरि रथ् ❀ ल्याया सबेरै भनि
त्योरातबित्नगयापछिआतिसबेर् ❀ घरमा सिताका गई
हातजोरीकनबिन्तिफेरूगरिलिया ❀ दुःखित बहूतै भई ९
हे सीते ! ऋषिपत्निहेरुकन गै ❀ दर्शन् म गर्छु भनि
बिन्ती गर्नु भएछ राघवजिको ❀ सङ्मा हजुरले पनि
सोही कारणले म यस् बखतमा ❀ रामका हुकुमले गरी
आयाकोछु लिएर जान्छु रथमा ❀ चढ्नू हवस् यै घरी १०
बिन्ती एति सुनेर खुब् खुशि भइन् ❀ श्री जानकीजी पनि
पायाँ दर्शन गर्नलाइ ऋषिका ❀ पत्नीहरूको भनि
फेरी सब् ऋषिपत्निलाइ दिनका ❀ खातिर् सिताले तहाँ
आभूषण् कपड़ा लिएर बहुतै ❀ चढ्दी भइन् रथ् महाँ ११
शेषजीका मुखदेखि यो सब कथा ❀ सूनीलियाथ्या जसै
वात्स्यायन् ऋषिले अचम्म हुनगै ❀ बिन्ती चढाया तसै
हे नाथ ! चौधभुवन् पवित्र गरन्या ❀ कीर्ती सिताको थियो
कुन्कारण् भइ धोबिले यसरि त्यो ❀ दुर्वाच्य बोलीलियो १२
तेस्को तत्व म सुन्नपाउँ भनि यो ❀ प्रश्नै गराथ्या जसै
सम्बोधन् गरि शेषले ति ऋषिका ❀ साम्ने सुनाया तसै
ब्रह्मर्षे ! सुनिल्यौ बिवाह नहुँदै ❀ एक्दिन्जनक्पुरमहाँ
खेल्थिन्घरसँगिनीलिएरतिसिता ❀ कोही बघैंचा महाँ १३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

ताहीं एक् शुकले र फेर् सुधानिले ❀ अत्यन्त खूशी भई
गर्थ्यांबात् रघुनाथको सकल त्यो ❀ सूनिन् सिताले गई
के भन्दछन् आहिले ड पक्षि दुइले ❀ सुन्छू सबै बात भनि
वयैकाल्सम्मखड़ाभईकनरहिन् ❀ ताहीं सिताजी पनि २४
भन्थ्यो एहि कुरा सुधा सुधिनिका ❀ सङ्गमा बराबर तहाँ
होला याहिं बिबाह जानाकिजिको ❀ राम्चन्द्रका सङ्गमहाँ
धन्यै भाग्य रहेछ जानाकिजिका ❀ पूज्यै जगत भर् भई
गर्लिन्खुब्सुखभोग्अयुत्बरषतक् ❀ रामका सँगैमा रही २५
प्रीतीपूर्वक यो कुरा सुधिनिका ❀ सङ्गमा सुधाले गर्‍यो
त्यो बोली गई सब् उसै बखतमा ❀ कान्मासिताकोपर्‍यो
सोह्रै खूशि भई सबै सँगिनिका ❀ सङ्गमा सिताले पनि
लागिन् भन्न जसोरि हुन्छ ड सुधा ❀ पक्रेर ल्याऊ भनि २६
आज्ञा एति सुनेर जो सखिहरू ❀ सङ्गमा सिताका थिया
सब्ले यत्न गरेर सोहि धरिमा ❀ पक्रेर ल्याई दिया
सोह्रै डर् गरि फेर् सुधा सुधिनिले ❀ जोरले कराया जसै
लागिन् भन्न सिता ति पक्षि दुइका ❀ साम्ने अगाड़ी तसै २७
हे शुक् हो! रति डर् नमानि मनमा ❀ खुब् धैर्यपूर्वक् रहू
रामकोबात्अघिजोगर्‍यौसकलफेर् ❀ मेरा अगाड़ी कहू
को हुन् रामभन जानकी कउन हुन् ❀ तिन्कोबिबाहायहाँ
होला निश्चय लौ भनेर कसरी ❀ जानीलियौ मन्महाँ २८
योबातजानाकिको सुधासुधिनिले ❀ सूनीसकी फेर् पनि
लाग्या भन्न तहाँ सबै सुन तिमी ❀ बिस्तार् कहन्छौं भनि
बाल्मीकी ऋषिको जउन् बनमहाँ ❀ आश्रम् थियो गै तहाँ
बस्थ्यौ हामिहरू पनी अघि दुवै ❀ खूशी भई मन् महाँ २९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रामायण् ऋषिले जउन् वनमहाँ ❀ गान् गर्दथ्या खुश् भई
सुन्थ्यौं हामिहरू पनी सकल त्यो ❀ तिन्कै समीप्मा रही
सोही राघवको चरित्र आहिले ❀ सम्पूर्ण विस्तार् गरी
भन्छौं लौ सुन सुन्दरी ! तिमि यहाँ ❀ एकाग्र मन्मा धरी २०
सूर्यैका कुलमा प्रतापी दशरथ ❀ राजा अयोध्या महाँ
राज् गर्थ्या सब रैतिलाइ वहुतै ❀ राजी गराई तहाँ
तिन्का तिन् महिषि थिया तरकुनै ❀ रानी तरफ्मा पनि
सन्तान् कयै न हुँदा ति दुःखित थिया ❀ नष्टै भयो कुल् भनी २१
धेरै काल् पछि ऋष्यशृङ्ग ऋषिका ❀ केवल् कृपाले गरी
चार् रूप्ले दशरथ्जिका सुत भई ❀ पैदा भया श्री हरि
जेठा राम् हुनुभो ति चार् तनयमा ❀ तिन्कै स्वरूप्को यहाँ
वर्णन् गर्दछु सुन्दरी ! सुन सबै ❀ तिम्रा अगाड़ी महाँ २२
नयन् सुन्दर् लामा कमलदललाई जितिलिन्या
मुहार्ले चन्द्रैमैं सकल जनको तेज् हरिदिन्या
मदन् भन्दा सुन्दर् रघुपतिजिको रूप्कन यहाँ
सखी ! वर्णन् धेरै कति गरुँ म तिम्रा सँग महाँ २३
विश्वामित्रजिले तिनै रघुपती ❀ लक्ष्मण्सहित्का तहाँ
मागी श्री दशरथ्जिका सँगमहाँ ❀ ली आउँन्याछन् यहाँ
तोड़ी श्री शिवको धनू सहजमा ❀ राम्ले सीताको पनी
गर्न्याछन् पछि फेर् विवाह बुझिल्यौ ❀ साँचो कुराहो भनि २४
धन्यैजानकिको नसीब् नुझ तिमि ❀ रात् दिन् सँगैमा रही
गर्न्याछिन् सुख्भोग् अयुत्वरषतक् ❀ रामकी पियारी भई
को हौ लौ तिमि के प्रयोजन हुँदा ❀ रामको चरित्रै यहाँ
सोध्यौ सुन्दरी ! त्यो वताउ आहिले ❀ हाम्रा अगाड़ी महाँ २५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तो प्रश्न सुनी ति पक्षि दुइको ❀ सीताजि खुशी भइन्
सीता जस्कन भन्दछौ उहि म हूँ ❀ भन्या सुनाई दिइन्
फेर् भन्छिन् जबतक् हवैन बुझिल्यौ ❀ मेरो बिबाहा पनि
त्यै दिन्तक् तिमिहेरुलाइ भइँले ❀ राख्छु सँगैमा भनि २६
यो बात् जानकिको ति पक्षि दुइले ❀ सूनीलियाथ्या जसै
काँप्दै डर् गरि फेर् मधुर् बचनले ❀ बिन्ती चढाया तसै
हे सीते! बनमा जनम्भरि रह्यौं ❀ स्वच्छन्दले खुश् भई
बन्धन्मा कसरी रहौं कठिनले ❀ तिम्रा घरैमा गई २७
पत्नी गर्भवती छ कोहि रुखको ❀ खोजेर टोड्का महाँ
बच्चा पारि जतन् गरेर सहजै ❀ हुर्काउन्याछौं तहाँ
छोडी द्यौ करुणा गरेर भनि यो ❀ बिन्ती बहुत् गर्दछौं
छोड्दिन्नौ तिमिले भन्या यहि धरी ❀ हामी दुवै मर्दछौं २८
यस्तोबिन्ती सुनी सुधाकन फगत् ❀ छोडिन् सिताले जसै
छोडीनन् सुधिनी र त्यो शुक तहाँ ❀ फेर् भन्नलाग्यो तसै
हे सीते! रतिभर् दया नगरि क्यै ❀ यो गर्भिणीको यहाँ
पाप्लिन्छयौकि नछोडियौ मस्राहिले ❀ लैजान्छु साथैमहाँ २९
फेरी त्यो सुधिनिपनी उहि बखत् ❀ मन्मा ठुलो ताप् गरी
लागी भन्न सिताजिलाइ बहुतै ❀ आँशू नजर्मा धरी
एल्हे गर्भिणि छु कुनै दिन पछी ❀ बच्चा हुन्याछन् जसै,
तिम्रासाथ् रहँदा अवश्य बुझिल्यौ ❀ मर्नन्तिबच्चातसै ३०
धेरै यै रितले सुधासुधिनिले ❀ दुःखितभई मन्महाँ
सम्झाया तर छोडिनन् र सुधिनी ❀ भन्छे रिसाई तहाँ
हे सीते! जसरी बिछोड् गरिदियौ ❀ हामीहरूको यहाँ
तेस्तै राम् तिमिलाइ गर्भिणि हुँदा ❀ त्याग्नन् अवश्यै तहाँ ३१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

एती बात् पहिले सुनाइकन फेर् ❀ अत्यन्त सुर्ता गरी
साम्ने जानकिका उसै बखतमा ❀ त्यो शुक्कि पत्नी मरी
वार्ता श्री रघुनाथको गरि तहाँ ❀ छोडीदिई प्राण् जसै
आयो दिव्य बिमान् चढेर गइ त्यो ❀ बैकुण्ठ धाम्मा तसै ३२
भार्या मर्न गई भनेर रिसले ❀ त्यो शुक्पनी फेर् तहाँ
सीतालाइ म दुख् दिलाउन सकूँ ❀ भन्यालिई मन्महाँ
क्रोधले पूर्ण भएर बेग्सित उडी ❀ गङ्गा किनार्मा गयो
फाल्हाली जलमा डुबेर सहजै ❀ त्यो पक्षि मर्दोभयो ३३
त्यै कारण् भइ धोबिका कुलबिषे ❀ जन्मी अयोद्ध्या महाँ
तेस्ले जानकिलाइ तेस् बखतमा ❀ दुर्वाच्य बोल्यो तहाँ
हे वात्स्यायनजी! जसोरि बनमा ❀ लक्ष्मणजिले त्यो घरी
छोड्याजानकिलाईसो सुन तिमी ❀ मन्छू मबिस्तार् गरी ३४
सीताजी रथका उपर् जब चढिन् ❀ लक्ष्मणजिले फेर्आनि
आज्ञा सारथिलाइ बक्सनुभयो ❀ चाँडो चला रथ् भनि
आज्ञा लक्ष्मणकोजसै सुनिलियो ❀ त्यो सारथीले तहाँ
हाँक्यो रथ्कन वायुझैं गति गरी ❀ फेरी उसै बिच्महाँ ३५
दक्षिण्नेत्रसिताजिको तहिं फुर्यो ❀ सोही बखत्मा जसै
चिन्ता पर्न गयो र लक्ष्मण तरफ् ❀ फर्केर सोधिन् तसै
हे लक्ष्मण! शुभकर्म गर्न मनमा ❀ इच्छा हुँदा यो घरी
आयाँथ्याँ तर फुर्छ दक्षिण नजर् ❀ मेरो कुलक्षण् गरी ३६
जङ्गल्का पशुपाक्षिहेरु पनि फेर् ❀ आएर रस्ता महाँ
दक्षिण् तर्फ मलाइपारिकिन सब् ❀ गर्छन् परीक्रम् यहाँ
मेरो चित्त बहुत् उदास् छ किन हो ❀ देख्छू कुलक्षण् पनि
यस्लेठान्छुभएक्नबिपत् अतिठुलो ❀ बयैपर्नआँटयोभनि ३७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे लक्ष्मण ! जति पर्छ आपद परोस् ❀ मेरै कपाल्मा सबै
बयै आपत् नपरोस् प्रजाहरुसहित ❀ राम्का उपर्मा कबै
यो बात् जानकिको सुनेर मनमा ❀ लक्ष्मणजिले शोक् गरी
बयै उत्तर् नदिई रह्या ति मुटुमा ❀ गाँठो बहुतै परी ३८
यस्तै तर्क वितर्क जानकि अनेक् ❀ गर्दै थिइन् फेर् तहाँ
पौंच्यो रथ् पनि त्यो उसै बखतमा ❀ गङ्गाजिका तीर् महाँ
गङ्गाका तिरमा जसै रथ पुग्यो ❀ सीता र लक्ष्मण पनि
उत्र्या त्यो रथदेखि फेर् जमिनमा ❀ पार् जानलाइ भनि ३९
जस्मा दूध् सरि फींज् उठेर लहरी ❀ शोभा बहुत गर्दछन्
जस्मा स्नानगरीति नै भुवनका ❀ प्राणीहरू तर्दछन्
यस्ती भागिरथी विषे अति असल् ❀ नाऊ तलासै गरी
तार्‍या जानकिलाइ दुःखित भई ❀ लक्ष्मणजिले त्यै घरी ४०
गङ्गा पार् पुगि नाउदेखि जिमिमा ❀ उत्र्यार फेरी तहाँ
सीतालाई लिएर लक्ष्मणजिले ❀ पस्ता भया बन् महाँ
चल्दा जानकिका दुवै पयरमा ❀ काँडाहरूले गरी
घोच्थ्यो तै पनि हिंड्दाथिन् बरिपरी ❀ हेर्दै सबै बन्भरी ४१
लागिन् देरुन फगत् खयर् बबुरका ❀ वृक्षैहरू छन् जती
आगो लागि डढेर ती रुख पनी ❀ काला भयाका अती
बाघ् भालू चितुवा र सिंहहरुले ❀ हात्तीहरूले तहाँ
गर्ज्याको सुनी फेर् सिताक बहुत् ❀ डर् पस्नगो मन् महाँ ४२
फेरी केहि घरी थाकित् भई सिता ❀ ताहीं खडा भै रहिन्
लक्ष्मण्को मुहुडा पनी अति मलिन् ❀ देखेर सोध्दी भइन्
हे लक्ष्मण ! तिमिले मलाइ ऋषिका ❀ आश्रमहरू छन् जहाँ
लै जान्छू म भनी अघोर बनमा ❀ लैजान आँट्यौ कहाँ ४३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हिंड्दा यो बनमा खयर् बबुरका ❀ काँडाहरूले गरी
घोच्दा हिंड्न पनी कठिन् हुनगयो ❀ पीडा पयर्मा परी
आश्रम् बवै ऋषिको पनी नजरले ❀ देखिन्न यो बन् महाँ
काँडैका रुख मात्र सब् वरिपरी ❀ देख्छू म ऐल्हे यहाँ ४४
हे लक्ष्मण्! तिमिले पनी अति ठुलो ❀ सन्ताप् गर्‍यामैं गरी
रुन्छौ धेर् किन हो बताउ ति कुरा ❀ मेरा उपर् प्रेम् धरी
यो बात् जानकिको सुनेर बहुतै ❀ सन्ताप् मनैमा परी
वयै उत्तर नादिएर लक्ष्मण तहाँ ❀ रोयाविलाप् खुब् गरी ४५
उत्तर् वयै नादिएर लक्ष्मणजिले ❀ रोईरह्याको तहाँ
देख्दा जानकिलाइ मन् अति ठुलो ❀ सन्ताप् बढ्यो मन महाँ
मन्मा तर्क वितर्क धेर् गरितहाँ ❀ जिद्दी गरी फेर् पनि
सोधिन् लक्ष्मणलाइ जल्दि तिमियो ❀ कारण् बताऊ भनि ४६
सोह्रै जिद्दि गरी कसम् दिइदिई ❀ सोधिन् सिताले जसै
लाग्या लक्ष्मण भन्न फेर् गहभरी ❀ आँशू गराई तसै
हे सीते ! कसरी भनू कठिनको ❀ यो बात मुखैले पनि
रामले त्याग्नुभयो हजुर्कन यहाँ ❀ यस्ता हिसाब्ले भनि ४७
एक्लै रावणले लगेर घरमा ❀ एक् वर्ष राख्दा महाँ
शङ्का केहि चरित्रमा हजुरको ❀ सब् गर्नलाग्या यहाँ
सोही कारणले प्रजा सकलको ❀ चित्तै बुझाऊँ भनि
त्यागी बक्सनुभो हजुर्कन यहाँ ❀ रामचन्द्रजीले पनि ४८
बज्रैका सरि चोट हुन्या हृदयमा ❀ त्यो बात् गर्‍याको जसै
लक्ष्मण्देखि सुनिन् ऱ्याकुल भई ❀ काँपिन् सिताजी तसै
एक्छिन् कम्पित भै जउन् तरहले ❀ ठूला हुरीमा यहाँ
गिर्छन् वृक्षहरू उसै तरहले ❀ लोटिन् सिताजी तहाँ ४९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लक्ष्मणले पनि आफुलाइ उ बखत् ❀ धिक्कार् बहुतै दिई
रूँदै जानकिका गई नजिकमा ❀ हात्मा पछ्यौरा लिई
हाँक्याजोर्गरित्योजलतासाशिरमा ❀ लागेर धेर् बेर् तलक्
मूर्छाखुल्नगयोरजानकिजिले ❀ खोलिन् नयन्कापलक् ५०
मूर्छादेखि उठेर लक्ष्मण तरफ् ❀ फर्केर जोर्ले रूँदै
लागिन् भन्न सिताविलाप् गरिगरी ❀ अत्यन्त व्याकुल् हुँदै
हे लक्ष्मण्! भनधोबिकै वचनले ❀ निर्दोष हो यो भनि
जानीजानिकसोरित्यागिदिनुभो ❀ राम्लेमलाई पनि ५१
लक्ष्मण्जीकन यो कुरा अघि भनी ❀ फेरी उसै बिच्महाँ
सम्झी श्री रघुनाथलाई मनले ❀ भन्छिन् सिताजी तहाँ
भन्छन् जुन् रघुनाथलाइ सबले ❀ साह्रै दयालू भनि
मैमाथी कसरी कठोर हुनुभो ❀ ऐल्हे उनै राम् पनि ५२
ऐल्हे त्याग्नु थियो भन्या हजुरले ❀ ठूलो परिश्रम् सही
नाहक्ल्याउनुभो मलाइ रघुनाथ्! ❀ लङ्कापुरीमा गई
लङ्कैमा म भया ति राक्षसहरू ❀ खान्थ्या कुनै दिन्महाँ
यो संकष्ट यसोरी भोग्नु मइँले ❀ पर्दैनथ्यो क्यै यहाँ ५३
जुन् मेरो पतिले मलाइ लिनका ❀ खातिर् समुद्रै तर्‍या
फेरी राक्षसकुल् बिनाश् गरिसकै ❀ उद्धार् मलाई गर्‍या
त्यस्ता राम्कन दोष् कसो गरिदिऊँ ❀ जो दुख् पर्‍यो ता पनि
ठान्छू पाप् अघिको थियो र बिधिले ❀ यो दुख् गरायो भनि ५४
रूँदै यै रितका बिलाप् अरु पनी ❀ धेरै रकम्का गरिन्
व्याकुल्भैकन फेर् सिता उस बखत ❀ मूर्छा तुरुन्तै परिन्
यस्तो जानकिको बिलाप् नजरले ❀ देखेर शोक्मा परी
लक्ष्मणजी पनि फेर् उसै बखतमा ❀ रोया बिलाप् खुब् गरी ५५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मूर्छा केहि घरी परेर पछि फेर् ❀ चैतन्य आयो जसै
देखिन् लक्ष्मणलाई जानकिजिले ❀ रोई रह्याका तसै
फेरी धैर्य गरी उसै बखतमा ❀ लक्ष्मणजिलाई पनि
लागिन् भन्न फिरेर जाउ अहिले ❀ रामकाहजुरमा भनि ५६
हे लक्ष्मण! तिमिले गई ऋषिहरू ❀ सब्का अगाड़ी महाँ
भन्नू श्री रघुनाथका हजुरमा ❀ जो बात म भन्छु यहाँ
हे नाथ्! अग्नि बिषे परेर भइले ❀ दोष् छैन इन्मा भनि
बिश्वाश्पारिसक्यो सदाशिवसमेत ❀ ब्रह्मादिलाई पनि ५७
बिश्वाश्चौधभुवन् बिषे परिसक्यो ❀ मेरा चरित्रै महाँ
बिश्वाश् पर्न गएन ता गरुँ कसो ❀ त्यो धोबिलाई यहाँ
सब्का साक्षि हजुर् भन्या हजुरले ❀ कुन्बात नजान्नूथियो
दोष्छूँ कस्कन हे प्रभो! सकलदुख् ❀ मेरै नसीब्ले दियो ५८
हेराम्! हेकरुणानिधान्!! हजुरकी ❀ दासी चरण्की म हूँ
त्यागनूभो मुखले तथापि म सदा ❀ दिल्मा हजुर्कै रहूँ
ईश्वर्लाई म भन्छु हे रघुपते! ❀ दोश्रा जनम्मा पनि
दासी भैकन बस्न पाउँ म सदा ❀ रामचन्द्रजीकै भनी ५९
हे लक्ष्मण! तिमिले गएर अहिले ❀ राखी ममाथी दया
बिन्ती श्री रघुनाथका हजुरमा ❀ मेरो सबै यो कह्या
फेरी सासुहरू सबैकन पनि ❀ सेवा सुनाई लिनू
मन्मा याद रहूँ निरन्तर भनी ❀ बिन्ती चढाई दिनू ६०
एती बात पहिले भनेर पछि फेर् ❀ लक्ष्मणजिलाइ तहाँ
भन्छिन् जानकिजी उसै बखतमा ❀ दुःखित भई मन् महाँ
खाली गर्भवती हुँदा बुझ तिमी ❀ यो ज्यान् बचाउँ भनी
इच्छा लाग्छ नहीं भन्या म अहिले ❀ मर्थ्यां अवश्यै पनि ६१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हे लक्ष्मण्! रघुनाथका हुकुमले ❀ ल्याई मलाई यहाँ
छोड्दा दोष् रति छैन फर्क तिमि ता ❀ चिन्ता नली मन्महाँ
ईश्वर्ले तिमिलाइ मङ्गल गरुन् ❀ तिम्रा सँगैमा पनि
मन्छू देवर हौ मलाइ मनले ❀ कैल्है नानिरःर्यामानि ६२
सीताका इ कुरा जसै सुनिलिया ❀ दुक्खित बहुतै भई
बिन्ती लक्ष्मणले गर्‍या उहि बखत ❀ साम्ने सिताका गई
हे सीते! जति बात् ख्रह्माउनु भयो ❀ ऐल्है मलाई यहाँ
त्यो सब् बिन्ती चढाउन्याछु मईंले ❀ राम्का हजूरै महाँ ६३
आश्रम् बाल्मिकिको छ यै बनमहाँ ❀ तिन्का शरण्मा परी
बस्यै काल्बरःनुहवस्हजुर्पनितहाँ ❀ सुर्ता सबै त्याग् गरी
एती बिन्ति गरी बुझाईकन फेर् ❀ बीदा तुरुन्तै भया
मन्मा दुक्ख गरी रुँदै उहि बखत् ❀ फर्केर लक्ष्मण् गया ६४
फर्क्या लक्ष्मणजी बिदा भइ जसै ❀ फेरी सिताजी तहाँ
लागिन् लक्ष्मणलाइ हेर्न बहुतै ❀ दुक्खित भई मन्महाँ
भन्थिन्मन्मनले सिताउहिबखत् ❀ देवर इ हुन् ता पनि
लाग्थ्यो पुत्र बुझेर प्रेम इनमा ❀ राम्कैसमान् हुन्मनी६५
राख्थ्यालक्ष्मणले पनीमकनप्रेम् ❀ माता समान्को गरी
बस्या आश्चर्यभयो मलाइ बनमा ❀ छाड़ी गया यो घरी
आफ्नै प्राणसरि प्रेम् मलाईगरन्या ❀ रामचन्द्रजीले पनि
आज्ञाबक्सनुभो कसोरि बनमा ❀ छाड़ेर आऊ भनि ६६
लक्ष्मणलाइ जहाँ तलक् नजरले ❀ देख्थिन् सिताजी तहाँ
रुन्थिन् यै रितले विलाप् गरिगरी ❀ दुक्खित भई मन्महाँ
गङ्गा पारि तरेर लक्ष्मण गया ❀ चिन्नै कठिन् भो जसै
झन् सुर्ता मनमा गरेर ति सिता ❀ मूर्छा परिन् फेर् तसै ६७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आफ्नी पुत्रिनिचेत भई जनागारिन् ❀ आएर पृथ्वी तहाँ
हँसैका सरि रूप् धरी मधुर जल् ❀ ल्याई परेवटा महाँ
त्यो जल् जानकिका शरीर सत्रमा ❀ छर्केर पंखा सरी
लागिन् हाँवन सिताजिलाइ परले ❀ प्रीती मनैमा धरी ६८
साह्रै शीतल वायु मन्द गतिले ❀ लाग्यो शरीरमा जसै
मूर्छा खुल्नगयो र फेर् पनि सिता ❀ खेद् गर्नलागिन् तसै
भन्छिन् हे रघुनाथ्! बिना कसुरमा ❀ कुन् धर्म हो यो भनि
त्यागी बक्सनुभो मलाइ यसरी ❀ ऐल्हे हजुर्ले पनि ६९
यै रित्का अरुधेरु बिलाप् गरिगरी ❀ साह्रै ठुलो स्वर् गरी
लागिन् रून तहाँ सबै नारिपरी ❀ हेरेर त्यो बन् भरी
रोएको बनमा अघोर् स्वर सुनी ❀ को रुन्छ ऐल्हे भनि
सोध्या बाल्मिकिले उसै बखतमा ❀ सब् शिष्यलाई पनि ७०
फेरी जल्दि उठेर बाल्मिकि ऋषी ❀ हेर्दै सबै बन् महाँ
आया शिष्यहरू लिएर सँगमा ❀ रुन्थिन् सिताजी जहाँ
हाराम्! हा करुणानिधान्!! रघुपते!!!! ❀ यै बात् बराबर् कही
रून्या जानकिलाइ तेस् बखतमा ❀ देख्यानजीक्मा गई ७१
साम्ने बाल्मिकिलाइदेखिकन झट् ❀ ऊठेर सीता तहाँ
हातजोरीकन फेर्प्रणाम्गरिलिइन् ❀ पश्रेर पृथ्वी महाँ
आशिर्वाद दिई सिताकन तहाँ ❀ सोध्या ऋषीले पनि
कोहौ यस्रितले तिमी किनयहाँ ❀ रुन्छयौ बताऊ भनि ७२
आफूमाथि कृपा गरेर ऋषिले ❀ प्रश्नै गर्याको जसै
सूनिन् जानकिले र गै नजिकमा ❀ बिन्ती चढाइन् तसै
रामकी पत्नी म हूँ ऋषे ! रघुपती ❀ जीले मलाई यहाँ
त्यागी बक्सनुभो र रुन्छु आहिले ❀ दुःखित भईमन् महाँ ७३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

एती बिन्ति गरेर फेर् पनि सिता ❀ शोक्‌गर्न लागिन्‌जसै
त्योशोक्‌शान्तगराइबाल्मिकिजिले ❀ आज्ञा गर्‍याफेर् तसै
हे सीते! गुरु हूँ जनक् नृपतिको ❀ छोरी उनैकी भनी
देख्तामा तिमिलाइ लाग्छ बहुतै ❀ माया मलाई पनि ७४
सोही कारणले पिता सरि बुझि ❀ मेरा कुटीमा गई
वयै चिन्ता नगरी रहू अन्न उपर् ❀ छोरी समान्‌की भई
यस्ता रीत्‌सितले बुझाइकन खुब् ❀ आऊ सँगैमा भनि
ल्यायाबाल्मिकिलेसिताकनतहाँ ❀ आफ्‌नाकुटीमापनि ७५
आफ्‌ना आश्रममा सिताकन लगी ❀ फेरी उसै बीच्‌महाँ
डाकी बाल्मिकिले अह्राउनुभयो ❀ सब् शिष्यलाई तहाँ
ऐल्हेजानकिकानिमित्तअतिबेस् ❀ एक् पर्णशाला पनि
सब्‌ले यत्न गरेर यस् स्थल महाँ ❀ चाँडो बनाऊ भनि ७६
यो आज्ञा गुरुको सुनेर उ बखत् ❀ शिष्येहरू जो थिया
सब्‌लेजानकिकानिमित्ततहिँएक् ❀ आश्रम् बनाई दिया
जल्दीसब् ऋषिपत्निलाइ पनिफेर् ❀ डाकी सिताको यहाँ
सेवा गर्नु भनेर बाल्मिकिजिले ❀ आज्ञा दिनूभो तहाँ ७७
रातदिन् ध्यान्‌रघुनाथकाचरणको ❀ मन्‌ले बराबर् गरी
बाल्मीकीऋषिलाइजानिकनठीक् ❀ आफ्‌नै पिताका सरी
सेवा बाल्मिकिको गरेर ति सिता ❀ सोही कुटीमा रहिन्
जोजोदुख् मनमा थियो उहिबखत् ❀ सम्पूर्णभुल्‌दीभइन् ७८
यै रित्‌ले ऋषिपत्निका सँग बसी ❀ वयैदिन् बिताइन् जसै
फेरी जानकिका कुमार् दुइ भया ❀ राम्‌कै समान्‌का तसै
खुश्‌भै बाल्मिकिले उसै बखतमा ❀ झट् जात कर्म गर्‍या
नाऊँफेर् 'कुश' 'लव्' भनेरतिदुवै ❀ सीताकुमारकोधर्‍या ७९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

शुक्लै पक्ष भएर चन्द्रै जसरी ❀ बढ्छन् उसै चालले
सीताका ति दुवै कुमार्हरू बढ्या ❀ फेरी कुनै कालले
संस्कार्सब् ब्रतबन्ध आदिऋषिले ❀ ताहीं दुवैको गरी
फेरी शास्त्र सबै पढाउनु भयो ❀ प्रीती मनैमा धरी ८०
सब् शास्त्रैहरुमा कुशल् जन भया ❀ फेरी धनुर्वेद् पनि
साङ्गोपाङ्ग सबै पढाइ दिनुभो ❀ यै मुख्य काम्हो भनि
रामायण पनि फेर् दुवैकन तहाँ ❀ सारा पढाई लिया
फेर् दिव्यास्त्रहरू पनी ति ऋषिले ❀ हात्मा दुवैका दिया ८१
हात्मा दिव्य धनू लिएर पिठमा ❀ अक्षय्य ठोक्रो धरी
लाग्या ती दुइ भाइ घुम्न बनको ❀ शोभा बहुतै गरी
आफ्ना ती दुइ पुत्रलाइ निशिदिन् ❀ लीएर बस्ता महाँ
जोजो दुख् मनमा सिताकन थियो ❀ त्योसब् हरायो तहाँ ८२
यस्ता रीतिसित जानकीकन कुमार् ❀ पैदा भयाथ्या भनि
वात्स्यायन् ऋषिलाई सब् कहनुभो ❀ खोलेर शेषले पनि
फेरी भन्नुभयो ऋषे! सुन तिमी ❀ जस्ता हिसाब्ले गरी
रणमा गै लवकुश् दुवै जन लड्या ❀ भन्छू भनि स्तार् गरी ८३
घोडालाई फुकाउँछौं भनि तहाँ ❀ जोजो गयाका थिया
बाण्को वर्षण धेर् गरेर लवले ❀ सब्लाई मारीदिया
फेरी त्यो समचार् उसै बखतमा ❀ कोही पुरुष्ले गई
श्रीशत्रुघ्नजीका अघिल्तिर भन्या ❀ अत्यन्त दुःखित् भई ८४
फौज्को नष्ट गराई अश्व अहिले ❀ एक् बालकैले धर्यो
भन्या विन्ति सुनी अचम्भ मनमा ❀ शत्रुघ्नजीको पर्यो
कयैकाल् सम्म विचार् गरेर पहिले ❀ क्रोधित् भई फेर् अनी
सेनान्नायक कालजित् कन [illegible] ❀ [illegible] ८५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सेनानायकले हुकुम् सुनिलिया ❀ शत्रुघ्नजीको जसै
धेरै सैन्य लिएर लड्न लवका ❀ साम्ने गया झट् तसै
साम्नेमा लवका गएर बहुतै ❀ कोमल्स्वरूप्का तहाँ
देख्तामा लवलाइ तिन्कन दया ❀ आयो उसै बिच्महाँ ८६
लाग्या भन्न तिकालजित्लवजिका ❀ सङ्गमा गइ यो पनि
बालख् भैतिमिलेहरण्किनगर्‍यौ ❀ यो अश्वलाई भनि
फेरी सुन्दर रामकै सरि मुहार् ❀ देख्छू नजर्ले पनि
मायालाग्छ कसोरि लड्नु मइँले ❀ तिम्रा सँगैमा भनि ८७
तस्मात् कारण छोड़ियौ हय तिमि ❀ कुन् साहसैले यहाँ
भन्छौ लड्छु भनेर बालक भई ❀ शत्रुघ्नका सङ्ग् महाँ
मान्दैनौ तिमिले भन्या गरुँ कसो ❀ संग्राममा यो घरी
मान्र्याछू तिमिलाई निश्चय पनी ❀ वर्षा शरैको गरी ८८
सेनानायकका इ बात् सुनिलिया ❀ सीताकुमार्ले जसै
साम्ने गै रति डर् नमानि मनमा ❀ उत्तर् दिया फेर् तसै
हे सेनापति! जो भन्यौ मकन यो ❀ देखेर बालक् यहाँ
बालक् हूँ तर काल हो यहि भनी ❀ जानीलिया मन्महाँ ८९
मर्नैको तिमिलाई मन् यदि भया ❀ मेरा अगाड़ी रहू
घोड़ा दिन्न भन्यो भनेर कि त गै ❀ शत्रुघ्नलाई कहू
यस्तो बात् लवको सुनेर बहुतै ❀ क्रोधित भई मन्महाँ
लाग्या ती लवलाइ भन्न इ कुरा ❀ फेर्कालीजत्ले तहाँ ९०
हे बालक्! तिमि छौ जमीन् बिचमहाँ ❀ रथ्मा म छू यो घरी
तिम्रा साथ्मइँले कउन् तरहले ❀ लड्नू अधर्मै गरी
शेखीका इ कुरा सबै सुनिलिया ❀ सीताकुमार्ले जसै
साहै क्रोध गरी कालजित्कन तहाँ ❀ फेर भन्न लाग्या तसै ९१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

रथ्मा हूं म भनी घमण्ड तिमिले ❀ जो गर्दछौ त्यो यहाँ
तोडी यो रथ झट् गराई बिरथी ❀ झार्छू जमीनै महाँ
एती बात् पहिले सुनाइकन फेर् ❀ सौ बाण् करैमा लिया
छोडी ती शर कालजित्‌कन बहुत् ❀ ब्याकुल् गराईदिया ९२
बाण्लाग्योभनिखुब्रिसाइकनफेर् ❀ सेनापतीले पनि
बर्षाया लवका उपर् शर् अनेक ❀ मार्छू म ऐल्हे भनि
ती सब् शरहरुलाइ फेरी लवले ❀ आकाशमा त्यो घरी
टुक्रा पारि दिया सहज् सँग तहाँ ❀ आफ्ना शरैलेगरी ९३
छोडी एक्‌शय शर् उसै बखतमा ❀ सेनापतीको तहाँ
तोड्या रथ्‌कनफेर् पनी लि लवले ❀ त्यो युद्धभूमी महाँ
तोड्या रथ् लवले भनेर रिसले ❀ फेर्कालजित्‌बीर्पनि
हात्तीका पिठमाचढ्याउहि बखत् ❀ लड्छूमऐल्हे भनि ९४
देख्याहात्ति उपर् जसै लवजिले ❀ दश् बाण छोड़ीदिया
फेरी त्यै घरि कालजित्‌कन तहाँ ❀ घाउ गराईलिया
चोट् खाई लवका कठोर शरको ❀ फेर्कालजित्‌ले पनि
जान्या खुब् मनले बहूत बलवान् ❀ बालक्रह्याछन्भनि ९५
पैल्हे एति बिचार् गरेर पछि फेर् ❀ हातमागदाएक्‌लिया
क्रोधित्‌मै लवका उपर् उहि बखत् ❀ ताकेर छोडीदिया
सेनानायकको गदा नजरले ❀ देखीलियाथ्या जसै
काट्या फेर् पनित्योगदागगनमै ❀ सीताकुमार्ले तसै ९६
फेरी झट् लवका उपर् अति ठुलो ❀ सेनापतीले तहाँ
बर्छी छोड़ि दिया र त्योपनि सहज् ❀ काट्या उसै बीर्महाँ
छोड़ी एक् शर फेर् तहाँ लवजिले ❀ सेनापतीको पनि
हात्ती मारिदिया लडोस् म सँग यो ❀ उत्री जमीन्‌माभनि ९७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

हात्ती मारि कुदेर फेरू नजिकमा ❋ सेनापतिका गई
तान्या हात महाँ समाति लवले ❋ अत्यन्त क्रोधित् भइ
बाहूयुद्ध गरेर बयै घरि तलक् ❋ फेरी दुवै वीर् तहाँ
लाग्या शस्त्र लिएर लड्न रणमा ❋ क्रोधित्भई मन्महाँ ९८
सोही औसरमा खिचेर तलवार् ❋ साह्रै ठुलो वेग् गरी
आया फेर्तहिं कालजित् लवजिका ❋ साम्ने अगाड़ी सरी
फेरी श्री लवले पनी उहि बखत् ❋ एक्बाण् चलाईलिया
तिन्को त्यो तरवारले सहितहात ❋ काटी खसाई दिया ९९
त्योहात् काटी दिया तथापि रिसले ❋ बायाँ करैले पनि
आया एक गदा उठाइ लवको ❋ संहार गर्छू भनि
त्यो हात्लाइ पनी तहाँ लवजिले ❋ काटीदियाथ्या जसै
मुख् बाई लवलाइ निल्दछु भनी ❋ दौड़ेर आया तसै २००
फेरी एक् तरवार् खिचेर लवले ❋ सेनापतीको तहाँ
कुण्डल्ले र किरीटले सहित शिर् ❋ काट्याउरै बीच्महाँ
सेनानायक कालजित् जबमर्या ❋ सारा फउज् त्यो घरी
आया लड्नभनी रिसाइ लवका ❋ साम्ने अगाड़ी सरी १
सोही औसरमा चढाइ धनुमा ❋ सीताकुमार्ले पनी
बाण्कोवर्षणाधेर्गर्यासकलफौज् ❋ मार्छू म एल्हे भनि
मार्छौं यस्कन गै भनेर लवका ❋ साम्ने जउन् पर्दथ्या
ती सब् वीर्हरु चोटखाइ शरको ❋ कत्तल् भई गिर्दथ्या २
बाण्लागी लवको रणस्थल महाँ ❋ धेर् सैन्य मर्नै गई
लाग्यो बग्न रगत्तहाँ उसबखत् ❋ खोलै समान्को भई
हात्पाउशिरसब् अलग् भइ कती ❋ सोही नदीमा परी
लाग्या बग्नातिमत्स्यकूर्म सरिभै ❋ शोभा बहुतै गरी ३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

गोलाकार् धनुको गराइ लवजी ❀ चारै तरफ् फौज् महाँ
छोड्थ्या बाणहरू ठुलो झरि हुँदा ❀ पानी पर्‍या झैं तहाँ
हात्ती रथ् पइदल्‌जती लवजिका ❀ साम्ने गयाका थिया
कोही बाँकि रहेन छिन्‌भरि महाँ ❀ सब् लाइ मारी दिया ४
यस् बेला शर झिक्दछन् इ अहिले ❀ छोड्छन् यसोरी भनि
संधान् गर्नसकेन तेस् बखतमा ❀ कोही पुरुष्‌ले पनि
हाहाकार् परिगो जसै फउज भर् ❀ पुष्कल्‌जि फेरी तहाँ
आया लड्‌न भनी रिसाइ लवका ❀ साम्ने अगाड़ी महाँ ५
पैदल् श्री लवलाइ पुष्कलजिले ❀ देखी लियाथ्या जसै
युद्धैको सब धर्म संझि मनले ❀ भन्दा भया फेर् तसै
हेबीर्! कुन् रितले लडूँ म अहिले ❀ तिम्रा सँगैमा यहाँ
पैदल् छौ तिमि ता म हू रथउपर् ❀ यो युद्ध-भूमि महाँ ६
तस्मात कारण त्यौ म दिन्छु रथयो ❀ तिम्रा निमित्तै पनि
लड्नू यै रथमा चढेर तिमिले ❀ मेरा सँगैमा भनी
ई बात् पुष्कलको सुनेर लवले ❀ भन्दा भया फेर् तहाँ
हे बीर! कुन् रितले मलाइ तिमिले ❀ योबात् सुनायौयहाँ ७
ब्राह्मण् हैन म दान्‌लिएर कसरी ❀ तिम्रा रथैमा चढौं
फेर् तिम्रै रथमा चढेर कसरी ❀ तिम्रा सँगैमा लडौं
तस्मात् जुन् रथमा चढेर बहुतै ❀ गर्छौ घमण्डै यहाँ
सोही रथ्‌कन चूर्ण गर्छु सहजै ❀ मैले यसै बीच्‌महाँ ८
एती बात् लवले सुनाइ धनुमा ❀ सौ बाण् चटाई लिया
छोडी त्यै घरिमाति पुष्कलजिको ❀ रथ् चूर्ण पारीदिया
तोड्‌या रथ्‌भनिफेरि पुष्कलजिले ❀ अत्यन्त क्रोधित् भई
लाग्या पैदल युद्ध गर्न लवका ❀ साम्ने अगाड़ी गई ९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

क्रोधले पूर्ण भई ति वीर दुइले ❀ वर्षा शरैको गरी
ढाक्या सूर्य किरण उसै वखतमा ❀ सारा रणस्थल् भरी
ताँदो खुब् धनुको खिँचेर शरत्याग् ❀ गर्दा दुवैले तहाँ
वज्राघात सरिको आवाज् हुनगयो ❀ त्यो युद्ध भूमी महाँ १०
लागी वज्र समान् कठोर शर अनेक् ❀ धारा रगतको वही
लड्थ्या आपुसमा पलाँश फुलका ❀ रङ्गमैं दुवै वीर् भई
सुन्दरमा वयमा पराक्रम महाँ ❀ एकै समान्का थिया
देख्दा ती दुइको लडाइँ सबले ❀ आश्चर्य मानीलिया ११
वाण् लागेर कवच् सबै शरिरको ❀ टुक्टुक् भयो ता पनि
लड्थ्या झन् ति दुवै जनाहरु तहाँ ❀ शत्रू हटाऊँ भनि
साक्षात् विष्णु र इन्द्र हुन् कि त ई हुन् ❀ श्री चन्द्र सूर्यैहरू
भन्थ्या तारिफ गर्दथ्या ति दुइको ❀ संग्राम देख्न्या अरू १२
धेरै वाणहरु लागि त्यो वखतमा ❀ अत्यन्त व्याकुल् भई
भन्छन् पुष्कलजी रिसाइ लवका ❀ साम्ने अगाडी गई
धन्यै वीर् तिमिहौ जगत्भरि महाँ ❀ कवै छैन तिम्रा सरी
वाण् हान्हू मइँले सहू अब यहाँ ❀ खुब् धैर्य मन्मा धरी १३
यो वात् पुष्कलले सुनाइ शरको ❀ वर्षा गराई लिया
चौतर्फी पिंजरा गराइ लवको ❀ रूप्लाइ ढाकी दिया
सुन्का पंख हुन्या ति पुष्कल्जिका ❀ सब् शर्हरु त्यो घरी
ढाकी सूर्य किरण् सबै सलह झैं ❀ उड्थ्या रणस्थल् भरी १४
देख्या आफु उपर् वहुत शरको ❀ वर्षा गर्याको जसै
आफ्ना शर्हरु त्याग् गरेर लवले ❀ काटीदिया सब् तसै
फेरी एक् शर झट् चढाइ धनुमा ❀ पुष्कल्जिलाइ तहाँ
हान्या श्री लवले उसै वखतमा ❀ क्रोधित् भई मन्महाँ १५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

देखी त्यो शरलाइ पुष्कलजिले ❀ एक्बाण् कैमालिया
छोड़ी त्यो शर त्यैबखत् गगनमा ❀ काटी खसाई दिया
काट्याबाण्भनिभनूरिसाईकन फेर् ❀ सीताकुमार्लेपनि
छोड्या एक्शर फेरि पुष्कलजिको ❀ संहार गर्नै भनि १६
लाग्यो बाण्गई त्योजसै हृदयमा ❀ बज्रै समान् बेग् गरी
पीड़ा ज्यादि भएर पुष्कल गिर्‍या ❀ मूर्छा तुरुन्तै परी
पुष्कल् मूर्छित भै गिर्‍या जब तहाँ ❀ दौडेर जल्दी गई
ल्याया श्री हनुमानले पिठ उपर् ❀ राखेर दुःखित् भई १७
मूर्छित पुष्कललाइ देखिकन खुब् ❀ शत्रुघ्नजी फेर् तहाँ
लाग्या गर्नबिलाप् अनेक्तरहको ❀ दुःखित भई मन्महाँ
फेरी श्री हनुमानलाइ उ बखत् ❀ आज्ञा गर्‍या यो पनि
त्यो बालक्कन गै यसै बखतमा ❀ मारेर आऊ भनि १८
आज्ञा एति सुनी उखेलि करमा ❀ यौटा ठुलो रुख् धर्‍या
क्रोधित्भै हनुमान् गएर लवका ❀ आफैं अगाडी सर्‍या
देख्या श्री हनुमानलाइ लवले ❀ साम्ने अगाडी जसै
बाण्को वर्षण घेर् गरेर बिचमै ❀ त्यो वृक्ष काट्या तसै १९
त्यो रुख् काटिदिया भनेर रिसले ❀ अर्को ठुलो रुख् धरी
आया श्रीलवलाइ मार्न हनुमान् ❀ साह्रै ठुलो बेग् गरी
त्यो रुख्लाइ पनी तुरुन्त लवले ❀ काटी दियाथ्या जसै
क्रोधले पर्वत एक् उठाइ हनुमान् ❀ दौड़ेर आया तसै २०
लाखौं बाणहरू चढाइ धनुमा ❀ हानेर सोही घरी
काट्या त्योगिरिलाइफेर्लवजिले ❀ टुक्रा हजारौं गरी
एही रित्सित वृक्ष पर्वत शिला ❀ हातमाजउन्चीज्लिया
काटी सब् हनुमानलाइ लवले ❀ ब्याकुल्गराईदिया २१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

व्याकुल भैकन खुब रिसाइ हनुमान् ❀ दौडी नजिक्मा गया
जोर्ले श्री लवलाइ फेर् पुछरले ❀ बेह्नेर तान्दा भया
क्रोधले पूर्ण भएर फेरि लवले ❀ सोही पुछरमा पनी
हान्या श्री हनुमानलाइ मुठिले ❀ छोड़ोस् मलाई भनी २२
बज्रैकासरि त्यो कठोर लवजिको ❀ मुड्की पुछर्मा जसै
लाग्यो श्री हनुमानलाइ र तहाँ ❀ छोड्या पुछर् त्यो तसै
बन्धन्देखि खुली रिसाइकन फेर् ❀ हातमा धनुर्बाण् धरी
छोप्या श्री हनुमानलाइ लवले ❀ वर्षा शरैको गरी २३
बज्रैका सरि शरहरू सकल ती ❀ आकाश देखी तहाँ
लाग्यागिर्न गएर सब्बतिहनुमान् ❀ बीर्का शरीरै महाँ
अङ्गुलभर् नबिराइबाण्सकलती ❀ लाग्या शरीर्मा जसै
पीडित भै हनुमानका मनमहाँ ❀ चिन्तापर्यो खुब् तसै २४
सोह्रबीर् लवलाई जानि हनुमान् ❀ शक्दीन लड्नै भनि
हार् खाईकन मन्मनै यहि कुरा ❀ मन्दा भया फेर् पनि
योबालक्सितलड्नमुश्किलभयो ❀ कुन् जुक्ति एल्हे गरूँ
भागीजाऊँभन्यापनीभकनराम् ❀ धिक्कार्दिन्याछन्प्रभू २५
जो चीज् लड्न भनेर लिन्छु अहिले ❀ त्योचीज् उसैबिच्महाँ
भैलो हान्न नपाइ काट्छ सहजै ❀ यो बालकैले यहाँ
बाण्कोचोट्पर्योशरीर्पनिसबै ❀ चाल्नू समान्को भयो
मेरो बल् रति छैन यस् बखतमा ❀ प्राणमात्रबाँकीरह्यो २६
तर मात् कारण ज्यान् बचाउनु पर्‍यो ❀ एल्हे छलैले गरी
लोट्छू यै रणभूमिका बिचमहाँ ❀ मूर्छा परयाकै सरी
मन्ले एति बिचार् गरेर हनुमान् ❀ मूर्छित भयाभैं तहाँ
लोट्या त्यो रणभूमिमा कपटले ❀ फेरी उसै बीचमहाँ २७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

छलले जमिन् बिच गिर्‌या भनि वयै नजानि
मूर्छित् भया इ हनुमान् भनि सत्य ठानी
तिन्‌लाइ छोडिकन फेर् अरु सैन्यलाई
कत्तल् गर्‌या लवजिले शर धेर् चलाई २८

लाखौं ति अग्नि सरि बाण् जब गिर्न लाग्या
ब्याकुल् भई सकल फौज् रण छोडि भाग्या
शत्रुघ्नलाइ पनि फेर् सब सैन्य जाई
संग्रामको सकल हाल दिया सुनाई २९

मूर्छा परेर हनुमान् रणमा गिर्‌याका
ठूलाठुला अधिक बीरहरू मर्‌याका
शत्रुघ्नले जब इ बात्‌कन सुन्न पाया
साह्रै रिसाइ रथमा चढि लड्‌न आया ३०

क्रोधले पूर्ण भई रणस्थल महाँ ❀ शत्रुघ्न पौंच्या जसै
देख्या श्रीलवलाइ सुन्दर बहुत् ❀ रामकै समान्‌का तसै
यो बालक् रघुनाथका सरि भयो ❀ कस्‌ता प्रकार्‌ले भनि
आश्चर्यै भई फेर् गएर लवका ❀ सङ्‌मा सुद्ध्याया पनि ३१

हे बालक् ! सुन रामचन्द्र सरिकै ❀ तिम्‌लाई देख्दा महाँ
उस्‌तैरूप् कसरी भयो भनि बहुत् ❀ आश्चर्य मान्छू यहाँ
कुन् बीर्‌का तिमि पुत्र हौ किन यहाँ ❀ आएर घोड़ा हर्‌यौ
मेरो यो सब सैन्यको पनि बिनाश् ❀ कुन् कारणले गर्‌यौ ३२

श्री राम्‌चन्द्रजिको पराक्रम सबै ❀ होला सुन्याको पनी
उन्‌कै अश्व हरण् गरेर कसरी ❀ मन्छौ बचूँला भनी
बालक् हौ तिमिलाई माफ् गरिदियाँ ❀ जो जो गर्‌यौ सब् यहाँ
घोड़ा छौ किन राम्‌का सँग बिरोध ❀ गर्छौ अनाहक महाँ ३३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

एती प्रश्न तहाँ सुन्या लवजीले ❀ शत्रुघ्नजीको जसै
लाल्लाल् नेत्र गरेर पूर्ण रिसले ❀ उत्तर् दिया फेर् तसै
मेरो नाम र कुल् सुनेर तिमिले ❀ के गर्दछौ यो घरी
आयौ लड्न भनी लडाई गरिल्यौ ❀ मेरा अगाडी सरी ३४
घोड़ा दिन्न उसै अवश्य बुझिल्यौ ❀ मैले भनेको यहाँ
लैजाऊ तिमिले समर्थ छ भन्या ❀ जीतेर युद्धै महाँ
पैल्हे एति कुरा सुनाइ लवले ❀ क्रोधित् भई मन्महाँ
लाग्याबाण्हरुछोड्नफेर्उहिबखत् ❀ शत्रुघ्नलाई तहाँ ३५
देख्या आफु उपर् बहुत् शरहरू ❀ वर्षा गर्याको जसै
छोड्याबाण्बहुतै रिसाइकनफेर् ❀ शत्रुघ्नजीले तसै
एकैबार् दुइ वीरले शर अनेक् ❀ छोड्दा रणस्थल् भरी
ढाक्यो सूर्यकिरण्पनी ति शरले ❀ सब्दिक्अँध्यारो गरी ३६
चारै तर्फ खचित् भई ति शरले ❀ ढाकी दिनाले तहाँ
वायूचलनसमेत्छुट्यो उहिबखत् ❀ सारा रणस्थल् महाँ
यो संग्राम् बहुतै भयङ्कर भयो ❀ हेरौं तमाशा भनि
आया हेर्न विमानमा बसिबसी ❀ सब्देवतागण्पनि ३७
देवासुर् सरिको ति वीर दुइको ❀ संग्राम देख्दा महाँ
आश्चर्यै भइ देवताहरु पनी ❀ सब्भन्नलाग्या तहाँ
राम्को रावणको लडाई हुनगो ❀ लङ्कापुरीमा जउन्
यस्तो युद्ध भएन कोहि थलमा ❀ वर्णन्गरौंफेर्कउन् ३८
तारिफ् यै रितलेअनेक्गरि तहाँ ❀ देवताहरुले पनि
फुलको वृष्टिगर्याति वीर्दुइउपर् ❀ साह्रै ठुला हुन् भनि
सोही औसरमा रिसाइ बहुतै ❀ शत्रुघ्नजीले तहाँ
काट्याबाण्हरुजोथियालवजिका ❀ त्यो युद्धभूमि महाँ ३९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यो मेरो शर जाललाइ सहजै ❀ काटी खसाया मानि
काट्या फेरि धनू तहाँ लवजिले ❀ शत्रुघ्नजीको पनि
फेरी श्री लवले चढाइ धनुमा ❀ सौ बाण छोडीलिया
श्री शत्रुघ्नजिको उसै बखतमा ❀ रथ्चूर्ण पारीदिया ४०
पार्याथ्या विरथी जसैजहिँबखत ❀ शत्रुघ्नक्रोधमापर्या
फेर् अर्का रथमा चढेर लवका ❀ साम्ने अगाडी सर्या
देख्याथ्या रथका उपर् लवजिले ❀ शत्रुघ्नलाई जसै
लाखौं बाण्हरु छोडि देहभरिमा ❀ घाऊ गराया तसै ४१
श्री शत्रुघ्नजिलेपनी शर अनेक् ❀ छोडी उसै बीच्महाँ
फेरी श्री लवका शरीरभरिमा ❀ घाऊ गराया तहाँ
घाऊदेखि रगत् बहेर अति लाल् ❀ रङ्का हुनाले गरी
देखिन्थ्या लवजी रणस्थल महाँ ❀ ठीक् बालसूर्यैसरी ४२
क्रोधले पूर्ण भएर फेरि लवले ❀ ताकेर छाती महाँ
हान्या एक् शरले उसै बखतमा ❀ शत्रुघ्नलाई तहाँ
त्यो बाणबज्रसमानकोहृदयमा ❀ लागेर बेग्ले गरी
पीडा धेर भई गिर्या रथ उपर् ❀ शत्रुघ्न मूर्छा परी ४३
मूर्छा पारिदिया जसै लवजिले ❀ शत्रुघ्नलाई तहाँ
हाहाकार् परिगो उसै बखतमा ❀ सारा फउज् भर्महाँ
फेरी बीरमणी सुरथ् प्रभृतिका ❀ राजाहरू जो थिया
एकैबार् लवलाइ गै वरिपरी ❀ घेरा गराईलिया ४४
घेर्याथ्या जब आफुलाइ रणमा ❀ राजा हजारौं गई
छोड्या फेर् लवले अनेक् शर तहाँ ❀ अत्यन्त क्रोधित् भई
एकैबार् लवका उपर् सकल ती ❀ राजाहरूले पनि
बर्षाया हतियार तेस् बखतमा ❀ मार्छौंसहज्मामनि ४५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सारा ती हतियारलाइ लवले ❀ आकाशमै त्यो घरी
टुक्रा पारिलिया सहज् सँग तहाँ ❀ आफ्ना शरैले गरी
एकैबार् धनुमा चढाइकन फेर् ❀ छाडी अनेक् शर् तहाँ
दश्दश्बाण्लवलेतिसब्नृपतिका ❀ हान्या शरीरै महाँ ४६
बज्रैका सरि बाण् गएर सब ती ❀ लाग्या शरीर्मा जसै
जो जो सामु महाँ थिया नृपहरू ❀ मूर्छा परया सब् तसै
मूर्छा खुल्नगयो उसै बखतमा ❀ शत्रुघ्नजीको पनि
आया फेर् लवका अगाडी रिसले ❀ गर्छू लडाई भनि ४७
साम्ने श्रीलवका गई त्यस बखत् ❀ शत्रुघ्न भन्छन् तहाँ
हेबीर् बालक ! धन्य छौ तिमि सरी ❀ क्वै छैन संसार् महाँ
बालक्को लिइ योस्वरूपभगवान् ❀ शङ्कर् अवश्यै पनि
आया मैं तिमिलाइ ठान्छु मइँले ❀ छल् गर्नलाई भनि ४८
शङ्कर् वा हरि हौ तिमीकि नभन्या ❀ यस्ताहिसाब्ले यहाँ
मूर्छा पारि गिराउन्या मकनबीर् ❀ क्वै छैन संसार् महाँ
साक्षात् शङ्करनै भया पनि सहज् ❀ एक्बाण् प्रहारै गरी
मूर्छा पारि गिराउन्याछु मइँले ❀ रैचान् रहू यो घरी ४९
एती बात् पहिले सुनाइकन फेर् ❀ जुन्बाण् प्रयोगै गरी
मारयाथ्या लवणासुरैकन अघी ❀ त्योबाण्करैमा धरी
क्रोध्ले पूर्ण भई चढाइ धनुमा ❀ शत्रुघ्नजीले तहाँ
छोडया श्रीलवका उपर् उहि बखत् ❀ ताकेर छाती महाँ ५०
त्यो बाण्गै लवका जसै हृदयमा ❀ लाग्यो बडो बेग्गरी
लोटया पीडित भै रणस्थल निषे ❀ मूर्छा तुरुन्तै परी
मूर्छित् भै लवजी रणस्थल महाँ ❀ देख्या गिरयाका जसै
जल्दी राखिलिया उठाइ रथमा ❀ शत्रुघ्नजीले तसै ५१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

साथी श्रीलवका तहाँ ऋषिकुमार् ❀ जोजो गयाका थिया
दुःखित् भै तिसबै सिताजिकन गै ❀ त्यो हाल् सुनाइ दिया
आफ्नो पुत्र धरेर शत्रुहरुले ❀ सङ्ग्मा लग्याको जसै
सूनिन् जानकिले रताप् गरि विलाप् ❀ खूब् गर्नलागिन् तसै
भन्छिन् फेरि सिता रुँदै अहिबखत् ❀ कुन् दुष्ट राजा यहाँ
मेरो बालक पुत्रका सँग लड्यो ❀ आई रणस्थल् महाँ
कस्तो निर्दयि त्यो रहेछ कसरी ❀ यस्तो अधर्मैं गरी
यौटा बालकलाइ बीर मिलि धेर् ❀ पक्री लिया यो घरी ६३
बालक् भै नबुझेर आज तिमिले ❀ हे पुत्र! के काम् गर्‍यौ
घोड़ालाइ धरेर शत्रुहरूका ❀ नाहक् वशैमा पर्‍यौ
लाखौं बीरहरुका अगाडि तिमिले ❀ कस्तो कुबुद्धी लिई
युद्धै आज गर्‍यौ बिना बुझि उसै ❀ एक्लै जमीन्मा रही ६४
त्याग्नू भो रघुनाथले तर पनी ❀ आजतक् भयो बन्महाँ
बस्थ्या दुःख सबै भुलेर तिमि हौ ❀ भन्याहि सान्लेयहाँ
माता मेरि अनाथ छन् भनि दया ❀ मन्मा नली क्यै पनि
छोड़ी आज मलाइ शत्रुहरुका ❀ वश्मा पर्‍यौ के भनी ६५
यै रीत्का अरु धेर् विलाप् गरिगरी ❀ आँशू नजर्मा धरी
लागिन् रून सिताजि दुःखित भई ❀ साह्रै ठुलो स्वर् गरी
सेवा बाल्मिकिको सबै गरिसकी ❀ सोही बखत्मा तहाँ
आया श्री कुशजी पनी जननिका ❀ साम्ने उसै बीच्महाँ ६६
देख्याजानकिलाइ शोक् गरितहाँ ❀ रोईरह्याकी जसै
हात् जोरीकन नम्र भै कुशजिले ❀ बिन्ती चढ़ाया तसै
हे मातर्! म छँदै हजुर्कन कउन् ❀ सन्ताप् मनैमा परी
रूनू आज पर्‍यो बताउनुहवस ❀ यस्ताहि सान्ले गरी ६७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

माईलाइ पनी म देरुितन कहाँ ❀ खेल्ने निमित्तै गया
डाकी ल्याउँछू गै तुरुन्त आहिले ❀ आज्ञा मलाई भया
यो बिन्ती कुशको सुनेर मनमा ❀ सन्तोष् बहूतै गरी
लागिन् भन्नासितारुँदै उहि बखत् ❀ आँशू नयन्माधरी ५८
हेकुश्! सब् ऋषिपुत्रलाइ सँगमा ❀ लीएर ऐल्हे यहाँ
तिम्रो भाइ गएर भागिरथिका ❀ खेल्थ्यो किनारा महाँ
यज्ञैको तहिं एक् ठुलो नृपतिको ❀ आयाछ घोडा जसै
पक्रेछन् लवले बिचार नगरी ❀ बालक् हुनाले तसै ५९
भारी युद्ध गरेर तेस् नृपतिका ❀ लश्करहरू धेर् तहाँ
मारयाछन् पहिलेअनेकलवजिले ❀ एक्लै रणस्थल् महाँ
फेरी जो नृपती थियो उहि पनी ❀ आएर युद्धै गरी
एक् चोटी लवका कठोर शरले ❀ लोटेछ मूर्छा परी ६०
मूर्छादेखि उठी लडेर बहुतै ❀ जीतेर तेसले तहाँ
पक्री ती लवलाइ बाँधिकन फेर् ❀ लीएर गो सङ्ग महाँ
भन्न्या बात् ऋषिपुत्रहेरु ड सबै ❀ आएर भन्छन् यहाँ
सोही कारणले म रुन्छु आहिले ❀ दुखितभइमन्महाँ ६१
एती बात् पहिलेसुनाइकन फेर् ❀ आँशू नजरमा धरी
रूँदै श्री कुशलाइ जानकिजिले ❀ आज्ञा गरिन् त्यो घरी
हे कुश्! गै तिमिले पराजय गरी ❀ सब् शत्रुलाई तहाँ
आफ्नो भाइ छुटाइ ल्याउ आहिले ❀ मेरा अगाडी महाँ ६२
त्यो आज्ञा कुशले तहाँ जननिको ❀ सूनीलियाथ्या जसै
लाल्लाल्नेत्रगरीरिसाइकनखुब् ❀ बिन्ती चढाया तसै
हे मातर! म शपथ् गरेर आहिले ❀ गर्छू प्रतिज्ञा पनि
दुश्मन् लाइ जितेर भाइकन ली ❀ फिर्न्याछु चाँडै भनि ६३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मन्कोशोक्अब छाडिनकुस नुहन्नस् ❀ सब् देवताग‌ण्‌ तहाँ
आया लड्न भन्या पनि म सहजै ❀ जितन्याछु युद्धै महाँ
माईलाइ लिई मुहूर्त भरिमा ❀ दर्शन् हजुर्‌को पनि
गर्न्याछू यदि गर्नलाइ नसक्या ❀ भन्नू कुपुत्रै भनि ६४
यस्रीतले पहिले तहाँ जननिको ❀ साम्ने प्रतिज्ञा गऱ्या
जान्छू लड्न भनेर फेर् कुशजिले ❀ हातमा धनुर्बाण् धऱ्या
सीताजी पनि पुत्रको सब कुरा ❀ सूनेर खुशी भइन्
आशिष्‌दीकन लड्न जाउ भनि फेर् ❀ आज्ञा तुरुन्तै दिइन् ६५
बिदा भै कुशजी सितासँग तहाँ ❀ दौड़ेर जल्दी गई
पौंच्या सोही घरी रणस्थल महाँ ❀ अत्यन्त क्रोधित् भई
बन्धन्मा लवजी थिया तर पनी ❀ कुश्‌लाइ देख्या जसै
तोडी बन्धन त्यो कुदेर खुशि भै ❀ उत्र्या जमीन्‌मा तसै ६६
फेरी ती दुइ भाइ भैकन तहाँ ❀ अत्यन्त क्रोधित भई
लाग्या वर्षण गर्न शर्‌हरु अनेक् ❀ सोही बखत्‌मा गई
आकाश् औ रणभूमिमा सलह भैं ❀ छोप्या ति बाण्‌ले जसै
हाहाकार् गरि सैन्य राघवजिका ❀ सम्पूर्ण भाग्या तसै ६७
भाग्न्या व्याकुल भैति फौज्‌कन तहाँ ❀ शत्रुघ्नजीले पनि
रोक्नू भो नडराउ गर्छु भइले ❀ रक्षा सबैको भनि
फेरी जानकिका कुमार्‌हरु दुवै ❀ जाहाँ बस्याका थिया
ताहीं गै लवका समान् स्वरुपका ❀ कुश्‌लाइ देखीलिया ६८
एकै शक्कलका दुवै जन भया ❀ कस्‌ता हिसाब्‌ले भनि
आश्चर्यै भइ फेर् गएर कुशमा ❀ ती सोद्‌न लाग्या पनि
हेर्बीर! ठीक् लवको समान अनुहार् ❀ देखेर तिम्रो यहाँ
भाइ हौ उनकै सहोदर तिमी ❀ भन्न्या नु भयाँ मनु महाँ ६९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

कुन्बीरका तिमीपुत्रहौ किनयहाँ ❀ बस्छौ यसोरी भनी
केही जान्दिन सब् बताउ तिमिले ❀ त्यो बात् मलाई पनि
यो प्रश्नै कुशले जसै सुनिलिया ❀ शत्रुघ्नजीको तहाँ
गम्भीर् बाणि गरेर उत्तर दिया ❀ सब्काअगाडीमहाँ ७०
हेबीर्! जानकिका कुमार् दुइजना ❀ हामी कुशैलब् भनि
प्रख्यात छौं सबमा पिता कउन हुन् ❀ जान्दीन मैले पनि
विद्याभ्यास गरेर बाल्मिकिजीका ❀ बस्छौ सदा सङ्गमहाँ
आयौं लड्न भनेर यस् बखतमा ❀ तिम्रा सँगैमा यहाँ ७१
कोहौ बीर अनेक् मिली किनयहाँ ❀ यस्तो अधर्मै गरी
मेरो बालक भाइलाइ तिमिले ❀ पक्रीलियौ यो घरी
हे राजन्! तिमि बीर हौ यदि भन्या ❀ आएर चाँडो यहाँ
मेरा सामु भई लड़ाइँ गरिल्यौ ❀ यो युद्धभूमि महाँ ७२
यो बात श्रीकुशको सबै सुनिसकी ❀ शत्रुघ्नजीले पनि
जान्या खुब् मनले इ पुत्र दुइ हुन् ❀ रामचन्द्रजीकै भनि
छोराका सँगमा कसो गरि लड़ौं ❀ भन्न्या भई मन् महाँ
फेरीक्यै घरितक् बिचार् गरिलिया ❀ शत्रुघ्नजीले तहाँ ७३
सोही औसरमा रिसाइ कुशले ❀ हातमाधनुर्बाण्लिया
श्री शत्रुघ्नजिलाइ शरहरु अनेक् ❀ छाडेर ढाकी दिया
संझी क्षत्रियधर्मलाइ मनले ❀ लड्नै उचित् हो भनि
काट्याफेर् कुशका ति शर् गगनमै ❀ शत्रुघ्नजीले पनि ७४
बाणले केहि घरी लडेर पछि फेर् ❀ दुश्मन् हटाऊँ भनि
लाग्या छोइन ति बीर दुबैकन तहाँ ❀ दिव्यास्त्रहेरू पनि
पैल्हे श्री कुशले चढाइ धनुमा ❀ आग्न्यास्त्र मन्त्री लिया
श्रीशत्रुघ्नजिका उपर् उहि बखत ❀ ताकेर छोडी दिया ७५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आग्न्यास्त्रै कुशको नजर् गरि तहाँ ❋ शत्रुघ्नजीले पनि
छोड्या फेर् वरुणास्त्र सोही घरिमा ❋ शान्तै गराऊँ भनि
आग्न्यास्त्रै वरुणास्त्र त्याग् गरितहाँ ❋ शान्तै गराथ्या जसै
नारायण्यास्त्र उठाइ फेरि कुशले ❋ छोड़ीदिया झट् तसै ७६
लाग्यो चल्न हुरी र फौज्हरु तहाँ ❋ सब् डढ्न लागी गया
त्यो देखीकन पर्वतास्त्र लिइ फेर् ❋ शत्रुघ्नले छोड् दिया
जो दिव्यास्त्र चलाउँथ्या कुशजिले ❋ त्यो युद्धभूमी महाँ
तेस्कोशान्तिगराऊँथ्याउहिबखत् ❋ शत्रुघ्नजीले तहाँ ७७
आफ्नाअस्त्रसबैनिफल् हुनगया ❋ भन्न्या हिसाब्ले गरी
क्रोधित्भैकन फेर् भन्न्याकुशजिले ❋ तीन् बाण हातमा धरी
हेवीर ! लौ तिमिलाइ तीन्शर इनै ❋ छोडेर मैले यहाँ
मूर्छा पारि गिराउन्याछु बुझिल्यौ ❋ यो युद्धभूमी महाँ ७८
मूर्छा क्यै गरि पार्नलाइ नसक्या ❋ गर्छू प्रतिज्ञा पनि
अग्नि यो स्थलमा जलाइ आहिले ❋ कूदेर मर्छू भनि
एती बात् कुशले भनेर धनुमा ❋ एक्बाण् चढाई लिया
श्रीशत्रुघ्नजिलाइ त्यै बखतमा ❋ ताकेर छोडीदिया ७९
देख्या बाण् कुशको भयङ्कर जसै ❋ शत्रुघ्नजीले तहाँ
जल्दीतीन्शरत्याग् गर्‍यागगनमै ❋ काट्या उसै बीच्महाँ
दोश्रो शर्कन झन् रिसाइ कुशले ❋ छोडी दियाथ्या जसै
काट्यात्योपनि फेर्सहज्गगनमै ❋ शत्रुघ्नजीले तसै ८०
आफ्नाबाण्तिदुबैगगन्बिचमहाँ ❋ काटीखसाया भनि
क्रोधले पूर्ण भइ लिएर करमा ❋ सीता कुमार्ले पनि
तेश्रोबाण् कन फेर्चढाइधनुमा ❋ सीताजिको ध्यान्गरी
श्री शत्रुघ्नजिलाई ताकि रिसले ❋ छोडीदिया त्यो घरी ८१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यो बाण बज्रसमानको जन्नगर्ड * लाग्यो बडा बेग्गरी
साह्रै पीडित भै गिऱ्या रथ उपर् * शत्रुघ्न मूर्छा परी
श्री शत्रुघ्नजिलाइ मूर्छित भई * देख्या गिऱ्याको जसै
हाहाकारपरिगो फउज् जति थिया * सम्पूर्ण भाग्या तसै ८२
सोही औसरमा चढेर रथमा * राजा सुरथ्जी गई
बर्षाया कुशका उपर् शर अनेक् * अत्यन्त क्रोधित् भई
फेरी तीन् शर त्याग् गरेर कुशले * राजा सुरथ्को तहाँ
तीन् टुक्रा धनुको गराइ सहजै * काट्याउसैबीच्महाँ ८३
फेर् अर्को धनु झट् लिएर करमा * राजा सुरथ्ले पनि
बाणाकोवृष्टिन्हुत्गऱ्याकुशजिको * संहार गर्छू भनि
सारा ती शरहेरुलाइ कुशले * काटी बिचैमा तहाँ
फेरीएक्शर त्याग् गऱ्या सुरथका * ताकेर छाती महाँ ८४
बज्रयोबाणगइत्यो जसै हृदयमा * बज्रै समान् बेग् गरी
छाड्दै ताहिं रगत् गिऱ्या सुरथजी * मूर्छा तुरुन्तै परी
मूर्छा पारिदिया सुरथ्कन भनी * हातमाठुलो रुख् लिई
आया श्री कुशकाअगाडिहनुमान् * अत्यन्त क्रोधित् भई ८५
देख्या श्री हनुमानलाइ कुशले * आफ्ना अगाडी जसै
हात्को रुख्शरत्यागगरेर बिचमैं * काटी खसाया तसै
त्यो रुख् काटीदिया भनेर रिसले * अर्कौठुलोरुख् लिया
फेरी श्री हनुमानले कुश उपर् * ताकेर छोडीदिया ८६
त्यो रुख् श्रीकुशका गएर शिरमा * लाग्यो बडो बेग्गरी
घाउ धेर भई बह्यो रगतको * धारा सबै अङ्ग भरी
लाग्यो चोट् बहुतै तथापि कुशले * खुब्धैर्य मनमा लिया
मार्छू यो हनुमानलाइ म भनी * ब्रह्मास्त्र छोडीदिया ८७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

साह्रै वेगसित त्यो जसै हृदयमा ❀ ब्रह्मास्त्रलाग्यो गई
लोटया श्रीहनुमान् रणस्थलमहाँ ❀ मूर्छा तुरुन्तै भई
मूर्छा श्री हनुमान् रणस्थल महाँ ❀ पारेर फेरी पनि
बाणको वृष्टिगरया तहाँ कुशजिले ❀ सब्फौज्गिराऊँभनि ८८
लाग्यागिर्नाति बाणहरू सकल गै ❀ फौज्का उपर्मा जसै
व्याकुल् भै रणमा ठहर्न नसकी ❀ सम्पूर्ण भाग्या तसै
सारा लश्करको विनाश नहुतै ❀ देखेर वेग्ले गरी
ल्याया पर्वत एक् उठाइ रिसले ❀ सुग्रीव सोही घरी ८९
फेरी श्रीकुशले पनी शर अनेक् ❀ छोडेर पर्वत् तहाँ
हज्जारौं टुकरा गराइ सहजै ❀ काटया उसै वीच्महाँ
पर्वत् काटिदिया भनेर कुशको ❀ संहार गर्नै भनि
ल्याया वृक्ष ठुलो उखेलिकन झट् ❀ सुग्रीव फेरी पनि ९०
त्यो रुख्लाइ पनी उसै बखतमा ❀ काटीदियाथ्या जसै
फेरी श्री कुशलाइ सुग्रिवजिले ❀ हान्या पुछरले तसै
त्योचोट्सुग्रिवको कठोर पुछरको ❀ लागेर वेग्ले गरी
व्याकुल् केहिघरी भया कुशपनी ❀ पीडा शरीर्मा परी ९१
फेरी धैर्य गरी उसै बखतमा ❀ एक् वारुणास्त्रै लिया
क्रोध्ले सुग्रिवका उपर्कुशजिले ❀ ताकेर छोड़ी दिया
वेग्लेत्योवरुणास्त्रझट्कुशजिका ❀ मन्त्रै प्रमाणले गई
बाँध्यो सुग्रिवलाइजोर्सित तहाँ ❀ सर्पै समान्को भई ९२
कुशले सुग्रिवलाइ त्यो रण महाँ ❀ बाँधीलियाथ्या जसै
बाँकी फौज्हरु जो थिया तिडरले ❀ सम्पूर्ण भाग्या तसै
पुष्कल्वीरभरत् सुमद् सहितका ❀ राजाहरू जो थिया
ती सब्लाइ पनी लडेर लवले ❀ मूर्छा गराई दिया ९३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

मूर्छा पारि सबै ति बीरकन फेर् ❀ शत्रुघ्नजीको तहाँ
शिर्देखीसुनको किरीट् कुशाजीले ❀ लीया उसै बिच्महाँ
सुन्दर् पुष्कलकोकिरीट्खुशिभई ❀ फेरी लवैले पनि
ल्यायासोहिबखत उतारिकनझट् ❀ लैजान्छु मैले भनि ९४
फेरी ती दुइ भाइ जानकिजिका ❀ छोराहरूले तहाँ
सुग्रिव श्री हनुमान बीर दुइका ❀ बाँधेर खुब् खड्गमहाँ
भन्छन् ई दुइ बानरै कन लिई ❀ चाँडो घरैमा पनि
जाऔं लौ अब क्यै बिलम्ब न गरी ❀ हामीहरूले भनि ९५
यो बात् आपुसमा गरेर लव कुश् ❀ भाई दुवै तेस् घरी
फर्क्या ती दुइ बीर बानर सँगै ❀ लीएर बन्धन् गरी
केही जोर् नचलेर बन्धन महाँ ❀ दुश्मन्हरूका परी
सुग्रीव् श्रीहनुमान् पनी चलिगया ❀ सामान्य बानर्सरी ९६
लाग्या सुग्रीवलाइ भन्न हनुमान् ❀ सोही बखत्मा तहाँ
हे राजन्! गरुँ कुन् उपाय अहिले ❀ हामीहरूले यहाँ
आँट्यालौंलि इजानजानकिजिका ❀ सामने इनीलो पनि
साह्रै शर्म भयो कसोरि भइँले ❀ देखाउँ यो मुख्भनि ९७

यो बात सुनेर हनुमानजिलाइ ताहाँ
सुग्रीवले पनि भन्या उहि बीच माहाँ
साँचो भन्यौ जिउनु धिक् छ यसोरि एल्हे
मर्नै असल् बरु थियो भनि ठान्छु मैले ९८

बाटोभर् अति खेद् गरेर मनमा ❀ यस्तै रकम्का अरू
गर्थ्या धेर कुरा ति आपुस महाँ ❀ मुरुयै ति बानर्हरू
खूशीभै लवकुश् पनी ति दुइबीर् ❀ बानर् लिई सङ्गमहाँ
जाँदामा कुटिमा पुग्या उहि बखत् ❀ बाल्मिकीसिताजीज ... ९९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सारा शत्रुहरु रणस्थल महाँ ❀ जीतेर भेट्नै भनि
आयाका दुइ पुत्रहरु कुटिमा ❀ देखी सिताजी पनि
आसन्देखि उठी उसै बखतमा ❀ दौडेर बयै दूर् गई
प्रीतीपूर्वक अङ्कमाल् गरिलिइन् ❀ अत्यन्त खूशीभई १००
फेरी श्री हनुमान सुग्रिव दुवै ❀ बीर्लाइ बन्धन् गरी
ल्यायाका दुइ पुत्रले कुटि महाँ ❀ देखेर खुब् छक् परी
भन्दै हास्य गरी ति पुत्र दुइका ❀ सङ्गमा सिताले पनि
सोधिन् बानर ई दुवै किन यहाँ ❀ पक्रेर ल्यायौ भनी १
ई बानर्हरुले कउन् गरिलिया ❀ त्यस्तो कसुर् यो घरी
जल्दी त्यो सब लौ कहू तिमिहरु ❀ सम्पूर्ण बिस्तार् गरी
एती बात पहिले सुध्याइकन फेर् ❀ भन्छिन् सिताजी तहाँ
छोड़ीद्यौ तिमिहरुले ई दुइको ❀ बन्धन् फुकाई यहाँ २
आज्ञा यस्प्रितको तहाँ जननिको ❀ सूनीसबयाथ्या जसै
बयै हाँसीकन फेर् तहाँ लवजिले ❀ बिन्ती चढाया तसै
हे मातर् ! सुनिबाक्सियोस् हजुरले ❀ गङ्गा किनार्मा गई
खेल्थ्यौं खूशि भएर बालकहरु ❀ सम्पूर्ण जम्मा भई ३
घोड़ा सुन्दर एक् उसै बखतमा ❀ आएर फेरी तहाँ
लाग्यो चर्न घुमी घुमी बारिपरी ❀ हाम्रा अगाडी महाँ
कस्को अश्वरहेछ यो किन यहाँ ❀ आयाछ हेरौं भनि
हेर्दा त्यो हयलाइ पत्र सुनको ❀ देख्यौं निधार्मापनि ४
त्यो पत्रै हयका ललाट बिचको ❀ देख्यौं सबैले जसै
यस्मा के छ भनेर गै नजिकमा ❀ सम्पूर्ण बाँच्यौं तसै
कोही राम भनी रह्याछ नृपती ❀ यज्ञै म गर्छू भनि
साह्रै शेखि गरेर त्यो नृपतिले ❀ छोडेछ घोडा पनि ५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

लेख्याको जस पत्रमा यहि थियो ❀ श्रीराम् अयोध्या पति
गर्छन् यज्ञ ति उर्दि यो सब सुनुन् ❀ क्षत्रीहरु छन् जाति
उर्दी मान्नुछ यो भन्या सकल वीर् ❀ रामका शरणमा परुन्
मान्दैनन् रघुनाथलाइ जसले ❀ यो अश्वलाई धरुन् ६
शेखी त्यो नृपको बुझेर उ बखत् ❀ अत्यन्त क्रोधित् भई
को हो राम् भनि अश्वलाइ पहिले ❀ पक्र्यौं तुरुन्तै गई
आया लड्न भनेर जो अधिसरी ❀ सब्लाइ युद्धै महाँ
मूर्छा पारि सहज् इ बानरहरू ❀ बाँधेर ल्यायौं यहाँ ७
त्यो बिन्ती लवको सुनेर खुशिमै ❀ भन्छिन् सिताजी पनि
हेलव्! यो हय यज्ञको किन हर्यौ ❀ आफ्नै पिताको भनि
फेरी जो दुइ वीर बानरहरू ❀ बाँधेर ल्यायौ यहाँ
जाहेर् छन् हनुमान सुग्रिब भनी ❀ सारा तिनैलोक् महाँ ८
मेरा खातिरमा इ वीर दुइले ❀ रामको सहायै भई
राक्षस्का कुलको विनाश् गरिलिया ❀ लङ्कापुरीमा गई
तस्मात् ई दुइलाई बन्धन पनी ❀ नाहक् यसोरी गर्यौ
फेरी यज्ञ निमित्तको हय पनी ❀ नाहक् पिताको हर्यौ ९
छोडी द्यौ अहिले इ बानर दुवै ❀ फेर् अश्वलाइ पनि
ल्यायौ जुन् थलदेखि त्यै थल महाँ ❀ छोडेर आऊ भनि
आज्ञा जानकिले जसै दिनुभयो ❀ सोही बखत्मा गई
छोड्या श्री लवले सबै कन तहाँ ❀ अत्यन्त खुशि भई १०
श्री शत्रुघ्नहरू पनी रण महाँ ❀ मूर्छा पर्याका जसै
सुनिन् जानकिले र सूर्यतिर फेर् ❀ फर्केर भन्छिन् तसै
रामकै दासि म सत्य हूँ यदि भन्या ❀ शत्रुघ्नहेरू पनि
मूर्छादेखि उठुन् अवश्य भगवान्! ❀ एसै बखत्मा भनि ११

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यस्तारीत्सित प्रार्थना गरिलिइन् ❀ श्री जानकीले जसै
मुर्छा खुल्नगयो फउजूहरु समेत् ❀ शत्रुघ्नजाको तसै
मुर्छा देखि उठेर त्यो बखतमा ❀ शत्रुघ्नजीले तहाँ
देख्या यज्ञ निमित्तको हय पनी ❀ आफ्ना अगाड़ी महाँ २२
शिर्कोआफ्नुकिरीटनदेखिकनफेर् ❀ जो जो अगाडी थिया
श्री शत्रुघ्नजिले अचम्म हुनगै ❀ सब्लाइ सोधी लिया
हेवीर्हो! सुनिल्यौ विचित्र रितको ❀ आश्चर्य ऐल्हे भयो
कस्ले आई किरीट् लिइकन यहाँ ❀ हामीहरुको गयो २३
यज्ञैका प्रतिमूर्ति हुन् कि ति दुवै ❀ घोड़ा छलैले हरी
छोड्या फेरि कृपा गरेर अहिले ❀ हाम्रो परीक्षा गरी
पैल्हे एति भनेर सब्सित तहाँ ❀ शत्रुघ्नजी फेर् पनि
मन्छन् मन्त्रि तरफ् फिरेर अब लौ ❀ जाऊँ अयोध्या भनि २४
आज्ञा एति गरेर मन्त्रि कन फेर् ❀ आफ्ना अगाडी महाँ
यज्ञैको हय त्यो लगाई खुशिमै ❀ शत्रुघ्नजी फेर् तहाँ
चढ्नू भै रथका उपर् उहिबखत् ❀ हिंड्नू भएथ्यो जसै
पृथ्वी कम्प गराई वीर्हरु सबै ❀ लाग्या पछाड़ी तसै २५
भेरी शंख मृदङ्ग आदि सब थोक् ❀ बाजा बजाई तहाँ
गङ्गा पारि तरेर फौजहरु सबै ❀ लीएर साथै महाँ
चिन्तन् श्रीरघुनाथको चरणको ❀ गर्दै बराबर् गई
श्रीशत्रुघ्नजि फेर्पुग्या सरयुका ❀ तीर्मा बहुत्खुश्भई २६
घोड़ालाई लिएर पुष्कल समेत् ❀ शत्रुघ्न आया भनि
सूनीबक्सनुभो र खुब् खुशिभई ❀ रामचन्द्रजीले पनि
लक्ष्मण् लाई अह्राइबक्सनुभयो ❀ लश्कर् लिई सङ्महाँ
हे भाई! तिमी जाइ ल्याउ अहिले ❀ शत्रुघ्नलाई यहाँ २७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आज्ञा राघवको जसै सुनिलिया ❀ अत्यन्त खूशि भई
रथमा जल्दि चढेर लक्ष्मरण पनी ❀ धेरै फउज् सङ लिई
बाजा मङ्गलका बजाई लिनका ❀ खातिर् बराबर् गया
प्रीतीपूर्वक भाइलाइ सँगमा ❀ लीएर फिर्दा भया १८
खूशी भैकन सैन्य सब् सरयुका ❀ पौंच्याकिनार्मा जसै
देख्या शोभित यज्ञ ताहिं रघुनाथ् ❀ जीले गर्याका तसै
प्रत्येक् मण्डपका सबै वरिपरि ❀ ब्राह्मण् हजारौं रही
भक्ती पूर्वक वेद पाठ सबले ❀ गर्थ्या बहुत् खुश्भई १९
भुल्थ्या चित्र विचित्र यज्ञभरि फेर् ❀ धेरै पताका हरू
होम्गर्थ्या सब कुण्डमा ऋषिहरू ❀ नाना रकम्का चरू
यज्ञै रक्षरा गर्नलाइ भनि फेर् ❀ हात्मा धनुर्बाण् लिई
राजाहेरु पनी अनेक् वरिपरी ❀ घुम्थ्यासुशोभित्भई २०
काहीं भोजनका अनेक् चिजहरू ❀ राखेर पात्रै भरी
खान्थ्या ब्राह्मणहेरु आपुस महाँ ❀ वार्ता खुशीका गरी
मेवाका जतिचीज् थियासकल ती ❀ जान्दैनथ्या क्वै पनि
सोद्ध्थ्याक्वैनाचिन्हेरसब्सँगइचीज् ❀ के हुन् बताऊभनि २१
खाँदै पायसलाइ खुब् खुशि भई ❀ लीएर हातै महाँ
यो हो अमृत नै अवश्य बुझिल्यौ ❀ भन्थ्या कुनै जन् तहाँ
भन्थ्या फेरि शिखर्निलाइ करमा ❀ लीएर ब्राह्मण् हरू
राजादेखि सिवाय यो चिज तयार् ❀ को गर्न सक्ला अरू २२
यस्तै रीत्सित पात्रमा जति रकम् ❀ थीया धरेका तहाँ
ती सब् चीज्हरुलाइ देखिकन खुब् ❀ आश्चर्य भै मन् महाँ
तारिफ् यै रितले गरी सकल चीज् ❀ खाएर खुब् पेट भरी
नाच्थ्या ब्राह्मणहेरु खुब् खुशिभई ❀ रामको प्रशंसा गरी २३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

काहीं बन्दिहरू र करिनहरु फेर् ❀ रामको चारित्रै तहाँ
गान् गर्थ्या खुशिमै मधुर् स्वर गरी ❀ त्यो यज्ञभूमी महाँ
उत्सव्त्यस्रितकोनजर्गारितहाँ ❀ शत्रुघ्न खूशी भया
पुष्कल्लाइ लिएर त्यै बखतमा ❀ रामका हजुरमा गया २४
साम्ने श्री रघुनाथले नजर भो ❀ शत्रुघ्नलाई जसै
खूशी भैकन अङ्कमाल् गरुँ भनी ❀ उठ्नूभयो झट् तसै
भक्तीपूर्वक रामका चरणमा ❀ दौडी नजीक्मा गई
श्रीशत्रुघ्न पनी परया उहि बखत् ❀ अत्यन्त खूशी भई २५
फेरी श्री रघुनाथले पनि तहाँ ❀ अत्यन्त प्रेम्ले गरी
बाहू पक्रि उठाइ काख बिचमा ❀ शत्रुघ्नलाई धरी
आलिङ्गन् पहिले गरेर खुशि भै ❀ हर्षाश्रुले फेर् तहाँ
सेचन् गर्नुभयो उसै बखतमा ❀ शत्रुघ्नका शिर्महाँ २६
पुष्कल्जी पनि रामका चरणमा ❀ आइ गिरयाथ्या जसै
तिन्लाई पनि काखमा लिनुभयो ❀ रामचन्द्रजीले तसै
श्रीसुग्रिव् हनुमान्हरू र अरू फेर् ❀ राजाहरू जो थिया
आलिङ्गन् सबको गरी प्रभुजिले ❀ सङ्गमा बसाई लिया २७
मन्त्री फेर् सुमती उसै बखतमा ❀ रामका हजुरमा गया
भक्ती पूर्वक दण्डवत् अघि गरी ❀ साम्ने खड़ी भै रह्या
मन्त्री तर्फ नजर् गरेर बहुतै ❀ खुशी भई मन् महाँ
सोधीबक्सनुभो उसै बखतमा ❀ रामचन्द्रजीले तहाँ २८
हे मन्त्री ! मन अश्व यो घुमिघुमी ❀ कुन्कुन्मुलुक्मागयो
कुन् वीर् आइ कहाँ कउन् तरहले ❀ यो अश्व हर्दो भयो
फेरी युद्ध भयो कउन् तरहले ❀ कस्का सँगैमा कहाँ ?
विस्तारपूर्वक त्यो कुरा कह सबै ❀ मेरा अगाडी महाँ २९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

यो आज्ञा रघुनाथको सुमतिले ❀ सूनी सबयाथ्या जसै
बाँधी अञ्जलि खूब नम्रित भई ❀ बिन्ती चढाया तसै
जाहेर् सब् छ जगत्पते ! हजुरमा ❀ जो हुन्छ संसार् भरी
सोछ् नूभो गरुँ क्या बताउँछु सबै ❀ आज्ञा शिरोपर् धरी ३०
हे नाथ् ! पूर्व तरफ् गयो हजुरको ❀ घोडा जउन् देश् महाँ
आया भेट्न भनी उसै बखतमा ❀ राजाहरू सब् तहाँ
आफ्नू राज्यपनी चरण् कमलमा ❀ सब्ले समर्पण् गऱ्या
दास् हूँ राघवको भनी चरणमा ❀ शत्रुघ्नजीका पऱ्या ३१
घोड़ा फेर् आहिक्षत्रमा चालिगयो ❀ राजा सुमद्जी पनि
आया रत्नहरू लिई उहि बखत् ❀ भेट गर्नलाइ भनि
आफ्नू राज्य सबै समर्पण गरी ❀ शत्रुघ्नलाई तहाँ
घोड़ा रक्षक भै चल्या पछि पछी ❀ लश्कर्लिई सङ्महाँ ३२
घुम्दै त्यो हय फेर् सुबाहु नृपको ❀ पौंच्यो मुलुक्मा जसै
घोड़ा पक्रिलिया तिनै नृपतिका ❀ छोरा दमन्ले तसै
ताहीं पुष्कलले दमन्कन जित्या ❀ भारी लड़ाई गरी
आया लड्न भनी सुबाहु नृपती ❀ फेरी अगाडी सरी ३३
क्यै काल्श्री हनुमानका सँगलड़ी ❀ मूर्छा परयाथ्या जसै
मूर्छादेखि उठी पऱ्या शरणमा ❀ शत्रुघ्नजीका तसै
आफ्नू राज्य सबै समर्पण गरी ❀ फेरी सुबाहू पनि
घोडा रक्षक भै चल्या पछि पछी ❀ दास्हूँ म राम्को भनि ३४
घुम्दै त्यो हय फेर् मुलुक् मुलुकमा ❀ रेवा किनार्मा पुग्यो
साम्ने सब् जनका पसेर नदिमा ❀ डूबेर गुप्तै भयो
शत्रुघ्नै पनी फेर् पऱ्या नदि बिषे ❀ नारी तहाँ क्यै थिइन्
सौंपी त्यो हयमोहनास्त्र पनि फेर् ❀ तिन्लेसिकाईदिइन् ३५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

घोडा फेरि घुमेर वीरमणीका ❀ पुरमा बराबर गयो
त्योहाल्वयामभनूहजूरपनितहाँ ❀ पाल्नू भयाकै थियो
फेरी विद्युतमालि राक्षस ठुलो ❀ आएर घोड़ा हरयो
क्यै काल् युद्ध गरेर त्यो असुर फेर् ❀ शत्रुघ्नदेखी मर्‌यो ३६
फेरी अश्व हरण् गर्‌या सुरथले ❀ जो जो भयाका तहाँ
जाहेरै छ हजुरलाइ किन फेर् ❀ बिन्ती चढाऊँ यहाँ
एही रीत्सितसब्मुलुक् मुलुकमा ❀ घुम्दै सुशोभित् भई
पौंच्यो वाल्मिकिकोछ आश्रम जहाँ ❀ घोडा हजुर्‌को गई ३७
आश्चर्यै हुनगो तहाँ रघुपते ! ❀ साक्षात् हजुर्‌कै सरी
रुप्का बालक आइ अश्वकन फेर् ❀ पक्रया सहज्‌ले गरी
घोड़ालाइ फुकाइ ल्याउन भनी ❀ जो जो अगाडी सर्‌या
एक्लै युद्ध गरी सबैकन तहाँ ❀ संहार् तिनैले गर्‌या ३८
युद्धै गर्न भनेर तिन्‌सँग तहाँ ❀ फेर्‌काल्‌जीत्‌वीर्‌गया
क्यै काल् सम्म ठुलो ति वीर दुइले ❀ संग्राम गर्दाभया
फेरी क्रोधित भै अनेक् शरहरू ❀ वर्षा तिनैले गरी
सेनानायक कालजीत्‌कन तहाँ ❀ मार्दाभया त्यो घरी ३९
पुष्कल्‌श्रीहनुमान् समेत् अरुपनी ❀ जो जो ठुला वीर् थिया
तिन्‌ले युद्ध गरी सबैकन तहाँ ❀ मूर्छा गराई दिया
हाहाकार् परिगो सबै फउजमा ❀ कत्तल्‌अनेक्‌वीर्‌भया
साह्रै क्रोध गरेर लड्‌दछु भनी ❀ शत्रुघ्न आफैं गया ४०
श्री शत्रुघ्नजिले ति वीर्‌कन गई ❀ मूर्छा गराया जसै
अर्का बालक एक् तिनै सरि तहाँ ❀ फेर् लड्‌न आया तसै
क्यै बेर् युद्ध गरी तिनैसँग तहाँ ❀ शत्रुघ्न मूर्छा पर्‌या
सुग्रीव् श्री हनुमानलाइ पनिफेर ❀ बन्धन् तिनैलेगर्‌या ४१

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फेरी श्री हनुमान सुग्रिव दुवै ❀ वीरलाइ छोडी तहाँ
छोडयाअश्व पनी कृपा गरि बहुत ❀ ल्याई रणस्थल् महाँ
बाण् लागीकन फौज्हरू हजुरका ❀ जोजो मर्याका थिया
सब्माथी करुणा गरेर पछि फेर् ❀ तिन्ले बचाई दिया ४२
घोडालाइ लिएर हामिहरु सब् ❀ फेरी उसै बीच् महाँ
साह्रै खूशि भएर हे रघुपते ! ❀ फर्केर आयौं यहाँ
त्यस्तो बिन्तीगर्यातहाँ सुमतिले ❀ रामका हजुर्मा जसै
खुशभै बाल्मिकिलाइ राघवजिले ❀ सोधीलिन्भो तसै ४३
ब्रह्मर्षे ! ति कउन् दुरुस्त अनुहार् ❀ मेरै भयाका तहाँ
आया लइन्न भनेर बालकहरू ❀ शत्रुघ्नका सङ् महाँ
मूर्छा पारिदिया लडेर सहजै ❀ शत्रुघ्नलाइ भनि
सुन्दामा अहिले मलाइ बहुतै ❀ आश्चर्य लाग्योपनि ४४
आज्ञा बाल्मिकिले सबै सुनिलिया ❀ रामचन्द्रजीको जसै
हात् जोरेर तहाँ बहुत् खुशि भई ❀ बिन्ती चलाया तसै
हे राम् ! ती दुइपुत्र हुन् हजुरका ❀ जस्ता हिसाब्ले गरी
तिन्को जन्म भयो बताउँछु सबै ❀ सुन्नूहवस् यो घरी ४५
जुन्दिन्हेरघुनाथ् ! सिताकन अघी ❀ लक्ष्मणजिले वन् महाँ
मेरा आश्रमका लगेर नगिचै ❀ छोडेर फर्क्या यहाँ
लागिन् रून विलाप् गरि गरि सिता ❀ भार्या हजुरकी जसै
आफ्नै पुत्रि समान् बुझेर मइँले ❀ ल्यायाँ कुटीमा तसै ४६
देख्या गर्भवती सिताकन जसै ❀ बेग्लै बसुन् ई भनि
तिन्कानिम्तिअसलतयार्गरिदिया ❀ एक् पर्णशाला पनि
फेरी सब् ऋषिपत्निलाई मइँले ❀ डाकी उसै बीच्महाँ
गर्नू जानकिको टहल् सकलले ❀ भन्याअह्रायाँतहाँ ४७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

क्यै दिन्मा दुइपुत्र जानकिजिले ❀ पैदा गरीथिन् जसै
मैले नाम धर्‍या गएर लवकुश् ❀ भन्या दुवैको तसै
शुक्ले पक्ष भएर चन्द्र जसरी ❀ बढ्छन् जउन्चाल् महाँ
लाग्याबढ्नसिताजिकादुइकुमार् ❀ दिन्दिन्बराबर्तहाँ ४८
दश् वर्ष जब भै गया ति दुइको ❀ शास्त्रै विधान्ले गरी
त्यै काल्मा व्रतबन्ध फेर् गरिदिया ❀ प्रीती मनैमा धरी
चारैवेद् इतिहास् पुराणहरु सब् ❀ फेरी धनुर्वेद् पनि
साङ्गोपाङ्ग दिया पढाई मइँले ❀ हेरा हजुर्का भनि ४९
रामायण् कविता गरेर अहिले ❀ मैले रच्याको थिया
फेरी ती दुइलाइ गान् गर भनी ❀ सारा सिकाई दिया
वाणीका सुरमा मिलाइ ति दुवै ❀ रामायणैको जसै
गान् गर्थ्या सब देवताहरु पनी ❀ आएर सुन्याथ्या तसै ५०
हेनाथ् ! ती दुइले मधुर् स्वरगरी ❀ गाना गर्‍याको तहाँ
एक्दिन् आइ जसै सुन्या वरुणले ❀ खूशी भई मन्महाँ
क्यै दिन् साथ लगेर सुन्छु मइँले ❀ इन्कोमधुर् गान्भनि
हेरा जानकिका दुवैकन लग्या ❀ आफ्नापुरीमा पनि ५१
सुन्दा तृप्ति नभै चरित्र रघुनाथ् ❀ सारा हजुर्को तहाँ
धेरैदिन् ति दुवै कुमार् वरुणले ❀ राख्तामया सङ्महाँ
फर्क्यानन् किन ती भनेर म पनि ❀ अत्यन्त दुःखित् भया
खोज्दै ती दुइलाइ फेर् वरुणका ❀ पुर्मा म आफैं गया ५२
साह्रै खूशि भई तहाँ वरुणले ❀ पूजा मलाई गरी
कोहुन् बालकयो भनीमसँगफेर् ❀ सोद्धाभया त्यो घरी
जो वृत्तान्त थियो सबै कहि दियाँ ❀ फेरी वरुण्ले पनि
पूजा ती लवकुश् दुवैकन गर्‍या ❀ हेरा हजुर्का भनि ५३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुन्दर मूर्ति र गुण् उमेर् ति दुइको ❀ देखी वरुणाले तहाँ
लाग्याभन्न मलाई फेर् उहि वखत ❀ खूशी भई मन्महाँ
ब्रह्मर्षे ! रघुनाथका हजुरमा ❀ जाई हजुर्ले पनि
बिन्ती गर्दिनु यो कुरा वरुणाले ❀ भन्थ्या मलाई भनि ५४
सीतालाइ पतिव्रता भनि सबै ❀ भन्छन् तिनैलोक् महाँ
यौटा दुर्जन धोबिका वचनले ❀ त्याग्नू उचित् हो कहाँ
सीता त्याग्नूभयो भन्या हजुरले ❀ सब्ले अ्रनश्यै पनि
दीनेछन् अपयश् रहेनछ बिवेक् ❀ रामचन्द्रलाई भनि५५
दिन्‌दिन्‌जानकिकाचरण्कमलको ❀ जोजन्‌स्मरण्गर्दछन्
पाप्‌को नष्ट भईति सब् जनहरू ❀ संसार् सहज् तर्दछन्
ब्रह्मा रुद्र समेत् चराचर जगत् ❀ सारा हजुर्ले यहाँ
सृष्टी गर्नुभयो सिताकन फगत् ❀ लीएर साथै महाँ ५६
माता जानकि हुन् पिता हजुर भै ❀ प्राणी सबैका पनि
सीता माथि कुदृष्टि क्या हजुरले ❀ गर्नू उचित हो भनि
ब्रह्मर्षे ! मइँले भन्या जति कुरा ❀ मन्‌मा हजुर्ले लिनू
चाँडो गै रघुनाथका हजुरमा ❀ सारा सुनाईदिनू ५७
त्यो बिन्ती पहिले गरी वरुणाले ❀ मेरा सँगैमा तहाँ
तारिफ् धेर् कुश लव् दुवैकन गर्‌या ❀ खूशी भई मन्महाँ
रामायण् गइ गान् जहाँ हजुरका ❀ छोराहरू गर्दथ्या
एही रीत्‌सित सब् सुरासुरहरू ❀ आश्चर्यखुब् पर्दथ्या ५८
तिनकोगान्‌सुनिलोकपाल्‌हरुपनि ❀ सम्पूर्णमोहितथिया
वर्‌दान् ती दुइलाई फेर खुशीभई ❀ सारा ऋषिले दिया
जो देख्छन् तिदुवै कुमार्‌कन तहाँ ❀ यै बात ति सब्‌लेपनि
भन्छन्‌राम्‌अ्रधिएक्‌थिएपृथिविमा ❀ एल्हेभयातिन्‌भनि५९

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

गान् गर्छन अरु बातमा हजुरको ❀ ऐल्हे तिनैलोक् महाँ
सीता त्यागिदिंदा अकीर्ति सबले ❀ गान्गर्न लाग्यायहाँ
तस्मात् पुत्रसहित्सिताकनअहरा्❀ गर्नू भया यो घरी
गर्नन् कीर्ति ठुलो सबै हजुर को ❀ साराति नैलोकमरी ६०
सर्वज्ञै रघुनाथ् थिया तर पनि ❀ यस्तै प्रकार्ले तहाँ
बिन्तीबाल्मिकिलेब हुत्गरीलिया ❀ रामका हजुरै महाँ
बिन्ती एतिसुनेर बाल्मिकिजिको ❀ साह्रै प्रशंसा गरी
डाकी लक्ष्मणलाइ राघवजिले ❀ आज्ञागरया त्योघरी ६१
हे भाई ! सुन पुत्रले सहित की ❀ सीता रहन्छिन् जहाँ
चाँडो गैकन जो कुरा हुन गयो ❀ हामीहरूको यहाँ
बिस्तारपूर्वक त्यो कुरासबकही ❀ तिन्का अगाडी महाँ
तिन्लाई रथमा चढाई तिमिले ❀ लीउर आऊ यहाँ ६२
लक्ष्मण्लेजबयो हुकुमसुनिलिया ❀ अत्यन्त खूशी भया
बीदा भै रथमा चढी उहि बखत् ❀ ऊठेर जल्दी गया
पौंच्या आश्रमका जसै नगिचमा ❀ रथ्देखि भैंमा झर्या
दौडी गैकन फेरि जानकिजिका ❀ पश्रीचरण्मापर्या ६३
लक्ष्मण्लाइ नजर् गरेर खुशिमै ❀ फेरी सिताले पनि
सोधिन्यस्घरिमायहाँकिनतिमी ❀ आयौ बताऊ भनि
प्रीतिपूर्वक यो सुध्याइ पहिले ❀ लक्ष्मणजिलाई तहाँ
फेरी जानकिले कुशल् सकलको ❀ सोधिन्उसैबिच्महाँ ६४
आज्ञा एति सुनेर लक्ष्मणजिले ❀ सीताजिका सङ्महाँ
सब्बान्धव्हरुकोकुशल्आघिकही ❀ बिन्ती गर्या फेर्तहाँ
जल्दी जानकिलाइ गैकनतिमि ❀ लीएर आऊ भनि
आज्ञा राघवको हुँदा म अहिले ❀ आयाँ हजुर्मा पनि ६५

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आफ्ना प्राक्तन कर्मको सकलभोग् ❀ गर्छन् सबैले भनि
मन्ले एति विचार गरेर सब थोक् ❀ ऐल्है हजुर्ले पनि
जोजो दुःखपर्‍या तथापि मनमा ❀ चिन्ता नली बस्यै यहाँ
चाँडो पाल्नुहवस् कुमार्हरु दुवै ❀ लीई अयोध्या महाँ ६६
सुन्दर् वस्त्र अमूल्य भूषणहरू ❀ पैह्रेर सब् अङ्ग भरी
छत्रै चामरले र दासिहरुले ❀ शोभित् भई यो घरी
चाँड़ो चढ्नु भएर यो रथ उपर् ❀ मेरा सँगैमा यहाँ
हे सीते ! अब जानुपर्छ खुशि भै ❀ राम्का हजूरै महाँ ६७
यस्तै लक्ष्मणले अनेक् तरहले ❀ जाऊँ अयोध्या भनि
सम्झाएभरिसक्नभानिकनफेर् ❀ भन्छिन् सिताजी पनि
आफ्नो अप्यश भो भनेर पहिले ❀ राम्ले मलाई यहाँ
त्यागीबक्सनुभो भन्या म कसरी ❀ जाऊँ अयोध्या महाँ
साम्नेमापतिकारहुन्छकि त रहुन ❀ काहीं पछाड़ि पनि
केही दोष्दिनु योग्य छैन पतिको ❀ पत्नीहरूले भनि
हे लक्ष्मण् ! रघुनाथलाइ भईले ❀ दोष् दिन्न केही अरू
चिन्तन् श्री रघुनाथकै गरि सदा ❀ बस्छू बनैमा बरू ६९
श्रीरामचन्द्रजिका कुमार्हरु दुवै ❀ सौंपन्छु मैले यहाँ
फर्की जाउ तिमी डनै दुइ कुमार् ❀ लीएर साथै महाँ
मान्यै जन्जाति छन् सबैकन पनी ❀ मेरा तरफ्ले गई
पाऊमा पारि दण्डवत् कहि दिनू ❀ अत्यन्त नम्रित् भई ७०
एती बात् पहिले भनेर खुशि भै ❀ फेरी उसै बीच्महाँ
सौंपिन् जानकिले कुमार्हरु दुवै ❀ लक्ष्मण्जिलाई तहाँ
आज्ञा एति सुनी कुमार्हरु दुवै ❀ लीएर लक्ष्मण् पनि
सीताका सँगमा बिदा भई फिर्‍या ❀ जान्छू अयोध्याभनि ७१

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फेरी लक्ष्मणजी कुमारहरु दुवै ❀ लीई अयोध्या गई
दर्शन् राघवको गरेर पहिले ❀ अत्यन्त नम्रित् भई
सीतालेजतिबात्भनिन्सकलत्यो ❀ विस्तारपूर्वक कह्या
जो आज्ञा दिनुहुन्छ गर्छु म भनी ❀ साम्नेखडाभैरह्या ७२
उत्तर् जानकिको सुनेर बहुतै ❀ सुर्ता मनैमा गरी
गिर्नू भो रघुनाथ् उसै बखतमा ❀ मूर्छा तुरुन्तै परी
मूर्छा केहि घरी परया पछि जसै ❀ चैतन्य आयो तहाँ
लक्ष्मणलाइ अह्राइबक्सनुभयो ❀ फेरीउसैबीच्महाँ ७३
हे भाई ! तिमिले यसै बखतमा ❀ फर्केर फेरी पनि
भन्नू एति कुरा सितासँग गई ❀ मैले भन्याको भनि
हे सीते ! पतिकोटहल्सरि ठुलो ❀ नारीहरूको यहाँ
अर्को धर्म कउन् बुभेर तिमिले ❀ बस्छ्यौभन्यौबन्महाँ ७४
स्वामीनिर्गुणिनैहवस्किअथवा ❀ दोषी हवस् ता पनि
मान्नै पर्दछ नारिहेरु सबले ❀ ईश्वर्समान् हुन्भनि
राजी गर्नसक्यामलाईजतिछन ❀ चौताहरू सब् यहाँ
हुन्छन् तुष्ट भन्या बसेर तिमिले ❀ वंयाहुन्छजङ्गलमहाँ ७५
कस्तैतीर्थ र ब्रत्क्रिया गरतिमि ❀ तिम्ले गरयाको जति
निष्फल् हुन्छमदोखिबाहिकअरू ❀ वयै छैन तिम्रो गति
आफैंसब् ऋषिपत्निलाइ गइभेट् ❀ गर्छू भनी गै तहाँ
हेसीते ! किनदोष्अवाहकमहाँ ❀ दिन्छ्यौ मलाई यहाँ ७६
त्यस्तैरीतासितकाअनेक्अरुकुरा ❀ राम्चन्द्रजीले जसै
आज्ञा गर्नुभयो र लक्ष्मण गया ❀ सीताजिका पास्तसै
फेरी वाल्मिकिले बहुत् खुशिभई ❀ सोही बखतमा तहाँ
आज्ञा ती कुशलव् दुवैकन गरया ❀ रामकाअगाडीमहाँ ७७

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations


वीणाका सुरमा मिलाइकन खुब् ❀ हे पुत्र ! ऐल्हे यहाँ
रामायरा् तिमिहेरु गान् गर सबै ❀ यो यज्ञभूमी महाँ
यो आज्ञा ऋषिको जसै सुनिलिया ❀ अत्यन्त खूशी भई
रामायरा् सब गान् गर्याति दुइले ❀ राम्का अगाड़ी गई ७८
गान् गर्थ्याति दुवै विचित्र रितले ❀ साह्रै मधुर स्वर् गरी
ढाक्यो सोहि अवाजले उहि बखत् ❀ सारा तिनैलोक् भरी
साह्रै सुन्दर गान् सुनीति दुइको ❀ मोहित् हुँनाले तहाँ
आए सुन्न भनेर देवगरा सब् ❀ त्यो यज्ञभूमी महाँ ७९
गान्को शब्द सुनेर मोहित भई ❀ जो जो सभामा थिया
हर्षाश्रु दुइ नेत्रदेखि सबले ❀ मोचन् गराईदिया
आफ्ना ती दुइ पुत्रलाइ खुशि भै ❀ राम्चन्द्रजीले पनि
एक्एक् लाख्सुनका असर्फि दिनुभो ❀ खिल्लत् लिउन्ई भनि ८०
खिल्लत् नली ति लव कुश् दुइ भाइ ताहाँ
ऊठेर वाल्मिकिजिका गइ सामु माहाँ
बिन्ती गर्या नृपतिले धन यो पठाई
खोज्छन् भुलाउन् ऋषे ! किन हामिलाई ८१
क्षत्री भई जुन प्रतिग्रह लिन्छ याहाँ
त्यो जन् मरेर पछि गिर्दछ नर्क माहाँ
कस्तो विचार् नृपतिले गरि दान दिया
हाम्रो यसोरि किन इज्जत आज लीया ८२
बिन्ती एति सुनेर खुब् खुशि भई ❀ बाबू इनै हुन् भनि
सम्झाया लव कुश् दुवैकन तहाँ ❀ फेरी ऋषीले पनि
आज्ञा वाल्मिकिको सुनेर ति दुवै ❀ दौड़ी नजीक्मा गई
श्री राम्चन्द्रजिका चरण्कमलमा ❀ गिर्दाभया खुश भई ८३

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फेरी श्री रघुनाथले पनि दुवै ❀ छोराहरूको तहाँ
आलिङ्गन् पहिले गरेर बहुतै ❀ खूशी भई मन् महाँ
आफ्ना तीदुइ पुत्रका शिर विषे ❀ हर्षाश्रु मोचन् गरी
सेचन् जल्दी गरेर काख दुइमा ❀राख्नू भयो त्यो घरी८४
लक्ष्मणले पनि जानकी सित गई ❀ फेरी उसै बीचमहाँ
आज्ञा श्री रघुनाथको जति थियो ❀ सारा सुनाया तहाँ
पैल्हे जान्न भनेर जानकिजिले ❀ उत्तर् दिइथिन् जसै
फेरी लक्ष्मणले बुझाइकन खुब् ❀ राजीगराया तसै ८५
बीदासब् ऋषिपत्निका सँग महाँ❀ सोही बखत्मा भइन्
खूशी भै रथमा चढेर ति सिता ❀ फेरी अयोध्या गइन्
पौंचीथिन् पुरिमा जसै उहि बखत्❀ रामका हजुरमा गई
भक्तीपूर्वक दण्डवत् गरिलिइन् ❀ अत्यन्त खूशी भई८६
सब् सासूहरुका गएर घरमा ❀ फेरी सिताले तहाँ
पाउमा परि दण्डवत् गरिलिइन्❀ खुशी भई मन्महाँ
प्रीतिपूर्वक सब् ति सासुहरुले ❀आशिष् दियाथ्या जसै
फर्की श्री रघुनाथका हजुरमा ❀हाजिर्भइन् फेर्तसै८७
सूनकोएक्प्रतिमूर्तिजानकिजको❀यज्ञै निमित्ताक् तहाँ
राख्याको रघुनाथ्का सँग थियो❀ त्यो यज्ञभूमी महाँ
सोही औसरमा अगारित ऋषिले ❀ त्योमूर्ति फाली दिया
सीतालाइ लगेर राघवजिका ❀ सङ्गमा बसाइ लिया८८
सीताजीकन साथमा लिइ तहाँ ❀ बस्नू भयाको जसै
देख्या श्री रघुनाथलाइ जतिले ❀ खूशी भया सब् तसै
सोही औसरमा बशिष्ठसित गै ❀ रामचन्द्रजीले पनि
सोध्नूभो अब के गरूँ हजुरले ❀आज्ञाहवस्त्योमानि८९

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

आज्ञा त्यस् अगस्तिको वशिष्ठ ऋषिले * सुनी लियाथ्या जसै
हात् जोरी रघुनाथका हजुरमा * बिन्ती चढाया तसै
हे राम् ! सब् ऋषिहेरुलाइ पहिले * यो यज्ञभूमी महाँ
पूजा गर्नूहवस् यसै वखतमा * चाँडो हजुर्ले यहाँ १०
त्यो आज्ञा गुरुको सुनेर खुशि भै * रामचन्द्रजीले पनि
सब् भन्दा पहिले पुजा हजुरकै * गर्छू म ऐल्हे मानि
सुन्दर् वस्त्र अमूल्य भूषणहरू * धेरै समर्पण् गरी
पूजा गर्नुभयो वशिष्ठ ऋषिको * भक्ती मनैमा धरी ११
जुन् रीत्ले गुरुको पुजा गरिलिया * सोही बमोजिम् तहाँ
पूजा फेरि अगस्तिको पनि गर्‍या * त्यो यज्ञभूमि महाँ
त्यस्तै रितसित रामले अरु तहाँ * जो जो ऋषीश्वर् थिया
पूजा ती सबको गरेर वहुतै * राजी गराईलिया १२
बाँकी ब्राह्मण जो थिया अरु अरू * लाख्लाख् अशर्फीतहाँ
सब्लाई रघुनाथले दिनुभयो * फेरी उसै बीच्महाँ
कङ्गाल् भिक्षुक जो थिया अरू तहाँ * सब्लाइ फेरी पनि
वस्त्रै भूषण रामले दिनुभयो * राजीहउन्सब्मानि १३
सोही औसरमा अगस्ति ऋषिले * राम्लाइ खूशी भई
बिन्ती पारिलिया प्रभो ! सरयुमा * राजाहरूले गई
घोड़ालाइ नुहाउनाकन यहाँ * सुन्का घडामा भरी
ल्याउन्जल्अहिले हुकुम्दिनु नहवस् * रामचन्द्रजीले जसै १४
आज्ञाएतिअगस्तिको सुनीलिया * राम्चन्द्रजीले जसै
चौषट्ठी नृपलाइ डाकि नजिकै * आज्ञा गर्‍या फेर् तसै
फेरी ती सब भूपति सरयुका * तीर्मा तुरुन्तै गया
सुन्दर् जल् सुनका घड़ा भरिभरी * लीएर हाजिर्भया १५

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यै जल् मन्त्र पढी अगस्ति ऋषिले ❀ फेरी उसै बीच्महाँ
घोडालाइ नुहाइ वेद विधिले ❀ शुद्धै गराया तहाँ
फेरी त्यो हयका गई नजिकमा ❀ रामचन्द्रजीले पनि
भक्तिपूर्वक प्रार्थना गरिलिया ❀ नष्टैहवस्पाप्मनि ९६
त्यो घोड़ाकन प्रार्थना यसरि घेर् ❀ देख्या गरेको जसै
सारा ती ऋषिहेरु आपुस महाँ ❀ फेर् मन्न लाग्या तसै
जस्का चिन्तनले तिनै भुवनका ❀ प्राणीहरू तर्दछन्
आश्चर्यै सुनिल्यौ उनै रघुपती ❀ के प्रार्थना गर्दछन् ९७
केही मन्त्र पढी अगस्ति ऋषिले ❀ एक्खड्गत्योबीच्महाँ
हात्मा राघवका दिया खुशिभइ ❀ त्यो अश्व मार्नै तहाँ
रामले त्यो हय मार्नको मन गरी ❀ खड्गै उठाया जसै
दिव्यै रूप् धरि अश्व त्यो गगनमा ❀ ऊडेर गै गो तसै ९८
छोडी त्यो हयको स्वरूप हरि मैं ❀ चार् बाहुको रूप् भई
बस्न्या दिव्य विमानका उपरमा ❀ आकाश बीच्मा गई
साह्रै सुन्दर त्यो पुरुषकन तहाँ ❀ देखीलियाथ्या जसै
जो जो यज्ञ विषे थिया ति सबले ❀ आश्चर्यमान्या तसै९९
आफैंले सब जान्दथ्या तर तहाँ ❀ जानुन् सबैले भनि
सोद्या श्री रघुनाथले सब कुरा ❀ तेस्का सँगैमा पनि
को हौ सुन्दर हे पुरुष्! अघि तिमी ❀ कुन् कारणले यहाँ
घोड़ा भै रहनू पर्यो भन सबै ❀ मेरा अगाडी महाँ१००
आफ्नू हाल सबै सुद्याउनु भयो ❀ रामचन्द्रजीले जसै
हात जोरीकिन फेर् तिनै पुरुषले ❀ बिन्ती चढ़ाया तसै
हे नाथ्! ब्राह्मण हूँ निरन्तर अघी ❀ गङ्गा किनार्मा गई
बस्थ्या सब जनलाइ तुच्छ मनले ❀ मान् ऋषीश्वर् भई १

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations


धेरै झिष्यहरू लिएर सँगमा ❀ मेरा अगाड़ी महाँ
दुर्वाशा ऋषि फेर् उसै बखतमा ❀ आया अकस्मात् तहाँ
देख्याँ योगि समान् भएर छलले ❀ मैले बस्याका जसै
क्रोधले पूर्ण भई शराप् ति ऋषिले ❀ दीया मलाई तसै २
हे नीच् ! दम्भ गरेर योगि सरि मै ❀ सबलाइ छल्छू भनि
बस्न्यादेखिशराप्मदिन्छुतँभयास् ❀ घोड़ा अनश्यै पनि
त्यस्तोश्राप्ऋषिलेजसैदिनुभयो ❀ घोड़ा समान् रूप् धर्याँ
ऐल्हे स्पर्श हजूरले गरिदिंदा ❀ त्यो श्रापदेखी तर्याँ ३
एती बिंति गरेर फेरि ति पुरुष् ❀ बीदा तुरुन्तै भया
तीन् बार् श्री प्रभुको प्रदक्षिण गरी ❀ बैकुण्ठधाम्मा गया
दिब्यै रूप् भइ अश्व त्यो जब गयो ❀ दुःखित भइ मन्महाँ
सोध्या फेरि बशिष्ठजीसित गई ❀ राम्चन्द्रजीले तहाँ ४
हे सर्वज्ञ ऋषे ! कउन् बलि यहाँ ❀ ऐल्हे तयारी गरी
मेरो यज्ञ समाप्त हुन्छ उ सबै ❀ आज्ञा हवस् यो घरी
फेरी कुन् चिजको हवन् गरिलिया ❀ यो यज्ञकुण्डै महाँ
तृप्त भैकन भाग् ग्रहण् गरिलिनन् ❀ दैवताहरूले यहाँ ५
आज्ञा त्यस् रितको बशिष्ठ ऋषिले ❀ सूनी लियाथ्या जसै
हात् जोरी रघुनाथका हजुरमा ❀ बिन्ती चढाया तसै
हे राम् ! जल्दि कपूर् मगाउनुहवस् ❀ गर्छु हवन् यो घरी
सबदैवताहवित्योग्रहणगरिलिनन् ❀ मेरा बचन्ले गरी ६
बिन्ती एति सुनि बशिष्ठ ऋषिको ❀ राम्चन्द्रजीले पनि
लाखौं भारि कपूर मगाइ दिनुभो ❀ होम् गर्नलाई भनि
आवाहन् गरि देवता सकलको ❀ सोही बखत्मा तहाँ
लाग्या होमन कपूर बशिष्ठ ऋषिले ❀ सबु यज्ञकुण्डै महाँ ७

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

द्यौताहेरु पनी उसै बखतमा ❀ सम्पूर्ण जम्मा भई
प्राप्नूभाग्हविखानलाइखुशिले ❀ त्यो यज्ञमा सब् गई
यज्ञैका स्थलमा बसेर हवि त्यो ❀ खाएर तृप्त भया
कीर्तन् श्री रघुनाथको गरि सबै ❀ फर्केर स्वर्गै गया ८
द्यौतालाइ खुशी गराइ पहिले ❀ ब्राह्मण्हरु जो थिया
दान्ले ती सबलाइ राघवजिले ❀ राजी गराइ लिया
होम्गर्नेऋषिगण् थियाजतिजती ❀ त्यो यज्ञभूमि महाँ
एक्एक्दान्तिसबैजनाकनादिया ❀ रामचन्द्रजीले तहाँ ९
दान्ले पूर्ण भएर सब् ति ऋषिले ❀ राम्का हजुर्मा गई
उच्चारण् जय शब्दको गरिलिया ❀ अत्यन्त खूशी भई
एही रीत्सितले समाप्त हुनगो ❀ त्यो यज्ञको काम् जसै
पुर्णाहूती गरि वशिष्ठ ऋषिले ❀ बिन्ती चढाया तसै १०
हे राम् ! यज्ञ विषे क्रिया हजुरको ❀ सारा समाप्त भयो
सीताजीकन साथमा लिइ फगत् ❀ स्नान्गर्न बाँकीरह्यो
त्यो बिन्ती गुरुको सुनेर अवनभृत् ❀ स्नान् गर्नलाई भनि
सीतालाइ लिएर फेर् सरयुमा ❀ पाल्नुभयोराम्पनि ११
पाल्नुभो रघुनाथ् सिताकन लिई ❀ स्नान् गर्नलाई जसै
राजाहेरु पनी बहुत् खुशि भई ❀ लाग्या पछाड़ी तसै
साह्रै खुशि भएर फेर् उहि बखत् ❀ सब् पौरवासी पनि
लाग्या श्री रघुनाथका पछि पछी ❀ हेरौं तमाशा भनि १२
बाजा मङ्गलका बजाइकन फेर् ❀ बन्दी हजारौं गई
कीर्तन् श्री रघुनाथको उहि बखत् ❀ गर्दा भया खुश् भई
लाखौं करिन्नहरू गई बरिपरी ❀ नाचेर रस्ता भरी
गान् गर्थ्या रघुनाथको सकल चरा ❀ साहैमधुर स्वरगरी १३

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized by Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations



त्यै रीत्‌ले सरयू पुगेर रघुनाथ्‌ ❀ अत्यन्त खुशी भई
सीतालाइ सँगै लिएर जलमा ❀ परनू भयो फेर्‌ गई
ब्राह्मण्‌हेरु गएर खुब्‌ खुशि भई ❀ वेद्‌का ऋचाले गरी
मन्त्री जल्‌ रघुनाथका शिरमहाँ ❀ सेचन्‌ गर्‌यात्योघरी २५
सीतालाइ लिएर फेरि रघुनाथ्‌ ❀ उत्रया किनार्‌माजसै
द्यौताले पनि पुष्पवृष्टि खुशि भै ❀ सब्‌ गर्नलाग्या तसै
केयूर्‌ हार किरीट कौस्तुभ भरी ❀ पैह्रेर जल्दी तहाँ
सीतालाइ सँगै लिई रघुपती ❀ परनू भयो पुर्‌महाँ २५
एही रीत्‌सित रामले अति ठुलो ❀ यज्ञै समाप्त गरी
आफ्नु कीर्ति चलाइबक्सनुभयो ❀ सारा तिनै लोक्‌ भरी
सीतालाइ सँगै लिएर रघुनाथ्‌ ❀ जीले अयोध्या महाँ
यै रीत्‌ले गरिबक्सियो खुशि भई ❀ तीन्‌ अश्वमेधै तहाँ २६
वात्स्यायन्‌ ऋषिका अगाडि सबयो ❀ राम्‌को चरित्रै कही
आज्ञा शेषजिले गर्‌या उहि बखत्‌ ❀ अत्यन्त खुशी भई
हे वात्स्यायनजी! जसोरि पहिले ❀ रामाश्वमेध्‌ भो यहाँ
विस्तार्‌पूर्वकले सबै कहिसक्याँ ❀ तिम्रा अगाड़ी महाँ २७

असली पुरानू भाषाको स्वर्गीय सुब्बाहोमनाथकृत रामाश्वमेध समाप्त



CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

नेपाली साहित्य गगनमा आफ्ना अमर लेखनी द्वारा सूर्य झैं प्रसिद्ध

सुब्बाहोमनाथ केदारनाथजीको महाभारत १८ पर्व, रामायण-रामास्त्रमेध, श्री कृष्णचरित्र र श्री मद्देवीभागवतको तपाईंका बाबु बराजु, भाई भारदार, बुढापुरानाले र देशका महाराजाधिराज, मुख्तियार मन्त्रीहरूले शुद्ध राम्रो र पूर्ण सम्झी पढने पढाउने गरेको कुरा सारा नेपालीहरूलाई थाहां भएको कुरा हो। सुब्बा होमनाथ केदारनाथजीको महाभारत, रामायण, श्रीकृष्णचरित्र प्रचलित भएको सयकड़ौं वर्ष भयो! सुब्बा होमनाथ केदारनाथजीका कलमले लेखिएका श्लोकहरू विवाह र उत्सवहरूमा पनि नेपालीहरूले श्लोक हाल्ने गरेको कुरा तपाईंहरू सबैलाई थाहा छ। सुब्बा होमनाथ केदारनाथजीका पुस्तक ग्रन्थहरू नै नेपालका महाराज र भाई भारदारले तारीफ गरी लिने र पढने गरेका छन्। तेस कुराको विचार गरी हालमा बनाएका बेपारीहरूको किताब पढ़नु जुहार छोडी काँच लिनू, र गंगाजीको स्नान छोडी भैंसोले पोखरमा गई अहाल खेल्ने झैं ठहर्नें छ।



असली पुस्तक पाइने एकमात्र ठेगाना—

**सुब्बा होमनाथ केदारनाथ,**

हितैषी कम्पनी,

वाराणसी १ ( बनारस सिटी। )

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

# रामायण-उपसंहार

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

सुब्बा होमनाथात्मज तनय पं० रामजीउपाध्यायकृत

काकभुसुण्डी र गरुडको सम्बाद, सात प्रश्नको उत्तर र काकभुसुण्डिको तीन जन्मको कथा

रामको निर्मल यो चरित्र मतिले ❋ भेटे तलक् हो जति ।
मैले आज यथार्थ वर्णन गर्‍याँ ❋ तिमीलाई हे पार्वती ! ॥
पैले काकभुशुण्डिका सँगमहाँ ❋ श्रीरामको यो कथा ।
पक्षीराज गरुड्जिले सुनिलिया ❋ भक्तीगरी खूब् तदा ॥ १ ॥
वाहन् श्रीहरिका र पार्षद समेत् ❋ यस्कै प्रभावले भया ।
यस्को वर्णन गर्न वेद्हरू समेत् ❋ ज्यादै असक्तै थिया ॥
यस्ता बात सुनेर शंकरजिको ❋ हर्षित् भई खूब् तहाँ ।
भन्छिन् पार्वति शंसयै हुनगई ❋ श्री शंभुका साथ्महाँ ॥ २ ॥
हे स्वामी! जुन यो अलौकिक कथा ❋ तीकाक्भुशुण्डीजिको ।
भन्नुभो अहिले मलाइ यसमा ❋ सन्देह यौटा भयो ॥
पक्षी भैकन के गरेर तिनमा ❋ यत्रो ठुलो ज्ञान् रह्यो ।
जुन् वैराग्य र ज्ञान मनुष्यहरूमा ❋ मिल्नैकठिन् खूब् थियो॥ ३ ॥
फेरी काकभुशुण्डि औ गरुडको ❋ सम्बन्ध भो के गरी ! ।
यस्को कारण जुन् छ प्रष्टगरि सब ❋ भन्नूहवस् यस् घरी ॥
यस्ता बात् सुनिगौरीको शिवजिले ❋ भन्नूभयो यो तहाँ ।
हे गौरी ! अघि प्रश्न यै गरुडले ❋ ती पक्षिका सङ्महाँ ॥ ४ ॥
गर्दा काकभुशुण्डिले पनि तहाँ ❋ उत्तर् दियाथ्या जुन ।
त्यो सारा तिमिलाइ भन्दछु यहाँ ❋ एकाग्रमन्ले सुन ॥
पैले दक्ष प्रजेशका घरमहाँ ❋ जन्मै तिमीले लियौ ।
आफ्नै भै अपमान यज्ञ विचमा ❋ हाम्फालि मर्दी भयौ ॥ ५ ॥
दुःखी भैकन बन् नदी नद पहाड् ❋ तिम्रो वियोग्मा घुम्याँ ।
पागल् भैं भइ नील पर्वत विषे ❋ घुम्दै म पुग्दोभयाँ ॥
त्यस्का चारशिखर्थिया अतिशयै ❋ सुन्दर् र ऊँचा तहाँ ।
सुन्दर् रत्नजडित् तलाउ पनि एक् ❋ शोभित् थयो फेर्जहाँ ॥ ६ ॥
सोही पर्वतमा वस्याँ म अतिनै ❋ आनन्द मिल्दा तहाँ ।
पक्षी काक भुशुण्डिको पनि थियो ❋ आश्रम् त्यहीस्थान्महाँ॥
त्यो पर्वत् प्रलयैमहाँ पनि कसै ❋ सक्तनथ्यो नाश हुन ।
त्यस्मा पक्षि ति गर्दथ्या हरिभ्जन ❋ जुन सेतले त्यो सुन ॥ ७ ॥

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पीपल्को बसि फेदिमा ति गरथ्या * पैला प्रहर् ध्यान् अनि ।
जप्थ्या पारवरि वृक्षका मुनि वसी * दोश्रा प्रहर्मा उनी ॥
गर्थ्या पूजन फेर् प्रहर् तृतियमा * आँप्का बसी फेदिमा ।
भन्थ्या रामकथा प्रसन्न मनले * चौथा प्रहर्मा तहाँ ॥ ८ ॥
सुन्नालाइ ति पक्षिको हरिकथा * धेर् पक्षिगण् आउँथ्या ।
हँसहेरू तलाउका पनि त्यहाँ * त्यो राम्कथा सुन्दथ्या ॥
देखी त्यो रमिता असाध्य मनमा * आनन्द लाग्दा तहाँ ।
हाँस्कै रूप धरी म धेर दिन तक् * बस्तोभयाँ जल्महाँ ॥ ९ ॥
त्यस्काक्यै दिनमा म खुश् अतिभई * कैलाशमा फर्कियाँ ।
हे गौरी ! म ति पक्षिका निकटमा * यस्ताहिसाबले पुग्याँ ॥
फेरी जुन् रितले तहाँ गरूडजी * पुग्दाभया त्यो कुरा ।
हे प्यारी ! सुन मन लगाइकन त्यै * भन्छु म अैले पुरा ॥ १० ॥
श्री रामूले जब युद्धका बखतमा * लीला अनेक् गर्नु भो ।
नागपाश्ले प्रभुलाइ इन्द्रजितले * तत्काल बाँध्दो भयो ॥
त्यो नागपाश्कन तोड्न नारदजिले * भेज्दा गरुड्जी कन ।
आई श्री रघुनाथको सकल पाश् * तोड्या गरुड्ले पुनः ॥ ११ ॥
संझी बन्धन सत्य त्यो प्रभुजिको * दुःखित् भई मन्महाँ ।
चिन्ता औ भ्रमले कुतूहलि थिया * फेरी गरुड्जी तहाँ ॥
आतुर् भैकन शोच्तथ्या गरुडजी * त्रैलोक्यनाथ् रामूकन ।
कस्ता रीत्सित बन्धनै हुनगयो * शोच्नै म क्यै शक्तिन ॥ १२ ॥
भ्रमूले तिन्कन मोहमा लगिदियो * त्यस्बाट मायामहाँ ॥
तस्मात् यो सब तत्त्व जान्न तिगया * देवर्षि नारद् कहाँ ॥
नारद्ले पनि यो भन्या सुन गरुड् ! * रामूको छ माया जुन ।
वर्णन् गर्न यथार्थ आज म यहाँ * केही पनि शक्तिन ॥ १३ ॥
तस्मात् जाउ र प्रश्न यै गर तिमि * ब्रह्माजिका सँङ्महाँ ।
तिम्रो भ्रमूकन दूर गर्न विधिनै * सक्लान् अवश्यै तहाँ ॥
यस्ता वात सुनेर नारदजिको * ती पक्षिराज्ले पनि ।
ब्रह्माका सँगमा गएर उहि बात् * फेरी सुध्याया अनि ॥ १४ ॥
यस्तो बात सुनेर ती गरुडको * ब्रह्माजि भन्छन् तहाँ ।
श्री रामूको महिमा सिवाय शिवले * जान्दैन कोही यहाँ ॥
तस्मात् गौरान शंभुलाई सब यो * सन्देह आपनो ...

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

होला शंसय दूर श्री शिवजिको ❋ ठूलो दया भैकन ॥ १५ ॥
ब्रह्माको सुनि बात यो गरूडले ❋ सन्तोष मन्मा धरी ।
ब्याकुल् भैकन दौडिदौडि मकहाँ ❋ आया तिनी त्यस घरी॥
त्यस्बेला म कुबेरको घरमहाँ ❋ जानै हिंडेको थियाँ ।
देखी तिन्कन खूब व्याकुल तहाँ ❋ आश्चर्य भै रोकियाँ ॥ १६ ॥
आफ्नो हाल यथार्थ वर्णन गरी ❋ तिन्ले सुनाया ममा ।
ती पक्षीपतिलाइ सान्त्वन दिंदै ❋ मैले भन्या यो तहाँ ॥
हे पक्षी ! तिमिले मलाइ अहिले ❋ भेट्ता भयौ मार्गमा ।
यस्तो गुप्ति कुरा बताउँ कसरी ❋ तस्मात् म अैले यहाँ ॥ १७ ॥
धेरै कालतलक् परस्पर महाँ ❋ सत्सङ्ग हुन्थ्यो जब ।
तिम्रो संशय जो छ दूर सब त्यो ❋ हुथ्यो अवश्यै तब ॥
तस्मात् भेज्दछु पक्षिराज्! म अहिले ❋ तिमूलाइ त्यो स्थान्महाँ।
नित्यै हुन्छ गुणानुवाद हरिको ❋ श्रद्धासहित्ले जहाँ ॥ १८ ॥
सुन्दा त्यो हरिको कथा छ मनमा ❋ सन्देह तिम्रो जुन ।
नाश् भै फेर् प्रभु रामको चरणमा ❋ लाग्न्याछ तिम्रो मन ॥
उत्तर्तर्फछ एक नील्गिरि पहाड् ❋ अत्यन्तनै सुन्दर ।
वस्छन् काकभुशुण्डित्यस गिरिमहाँ ❋ रामूको गरी आदर ॥ १९ ॥
भक्तै हुन् प्रभु रामका इनिठुला ❋ फेरी चतुर् छन् अति ।
भन्छन् रामकथा निरन्तर उनी ❋ राम्मा लगाई मति ॥
तिन्को त्यो गुणगान पक्षिहरू सब् ❋ आएर सुन्छन् तहाँ ।
तस्मात्जाउगरूड्!तिमीपनिछिटै ❋ त्यो नीलपर्बत् महाँ ॥ २० ॥
सुन्नाले हरिको कथा गरुडजी ! ❋ तिम्रो सबै शंसय ।
श्रीराम्को करुणा भईकन विनाश् ❋ होला सबै निश्चय ॥
यस्ता बात भनि गरुड्कन तहाँ ❋ मैले बुझायाँ अनि ।
हर्षित् भैकन खूब् प्रणाम्गरि हिड्या ❋ उत्तर् दिशामा उनी ॥ २१ ॥
हे गौरी ! ति गरुड्जिको भ्रम सबै ❋ मैले बुझ्याँ तापनि ।
संझाइन अवश्य हो प्रभुजिको ❋ तिन्मा परीक्षा भनी ॥
यस्तारीत्सित फेर् पुग्या गरूडजी ❋ त्यो नीलपर्बत् महाँ ।
देखी त्यो गिरिको छटा सब गयो ❋ सन्देह तिन्को तहाँ ॥ २२ ॥
फेरी स्नान गरेर गैकन वस्या ❋ बट् वृक्षका फेदिमा ।
देख्या त्यो रूखका उपर गरूडले ❋ धेर बृद्ध पक्षी तहाँ ॥

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations


थाल्या काकभुशुण्डिले हरि कथा * प्रारंभ गर्नै जसै ।
पक्षीराज गरूड् त्यसै वखतमा * पुग्दाभया झट् तसै ॥ २३ ॥
देखी तिन्कन काकभुशुण्डिजिभया * अत्यन्तनै हर्षित ।
पर्वतका सब वृद्ध पक्षिगणले * तिन्कोगरचा स्वागत ॥
फेरी काकभुशुण्डिले खुशिभई * भन्दाभया यो तहाँ ।
दर्शन् पाई हजूरको गरूडजी ! * छौं हामि हर्षित् यहाँ ॥ २४ ॥
आज्ञाहोस् अब के गरुँ हजूरको * सेवा म औले यहाँ ।
कुन् काम् आइपरचौ र आउनुभयो * यो नीलपर्वत् महाँ ॥
यस्ता बात सुनेर ती गरुडजी * अत्यन्त हर्षित् भया ।
गर्दै सान्त्वन काकभुशुण्डिकनफेर् * यो बात भन्दा भया ॥ २५ ॥
हे पक्षी ! जुन कामले म अहिले * दौडेर आयौं यहाँ ।
दर्शन् पाई हजूरको सब कुरा * पूर्णै गराई लियौं ॥
मन्को भ्रम् सब दूर्भयो हजुरका * जान्यौं ठुलो गौरव ।
हे पक्षी ! रघुनाथको शुभकथा * सुन्ने छ इच्छा अब ॥ २६ ॥
यस्ता बात सुनेर ती गरुडको * ती काकभुशुण्डिजिको।
मन्मा प्रेम र सान्त्वना अनिपछी * उत्साह बढ्दोभयो ॥
हे गौरी ! रघुनाथको जुन कथा * मैले तिमीमा कह्यौं ।
सोही राम कथा ति पक्षिवरले * भन्दाभया सब् तहाँ ॥ २७ ॥
उत्साहा मनमा बढ्यो गरुडको * सून्या कथा त्यो जसै ।
लाग्या काकभुशुण्डिका सँगमहाँ * यो बात भन्नै तसै ॥
हे पक्षी ! म उपर् कृपा हुनगई * भन्नूभयो यो कथा ।
श्री रामूको महिमा सुनेर अहिले * शंका मिट्यो सर्वथा ॥ २८ ॥
नागपाश्‌ले रघुनाथ् पनी रणमहाँ * जो बाँधिई बक्सियो ।
सोही कारणले मलाइ मनमा * शंका भयाको थियो ॥
रामूकै भै करुणा यहाँ हजुरको * पायौं प्रभो ! दर्शन ।
मेरो गर्नुभयो सबै हजुरले * सन्देहको मोचन ॥ २९ ॥
यस्ता बात सुनेर ती गरुडका * हर्षित् भई मन्महाँ ।
भन्छन् काकभुशुण्डि गद्गद भई * आँसू गिराई तहाँ ॥
हे पक्षी ! अहिले हजूर सरिको * सम्मान्य अर्को जन ।
कोही देख्दिन, भाग्यले हजुरको * पायौं यहाँ दर्शन ॥ ३० ॥

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

पारौं कृतार्थ भनि आज यहाँ मलाइ ।
यै मोहको निहुं गरेर हजूर लाइ ॥
राम्ले पठाउनु भयो अति हर्ष लाग्यो ।
दर्शन् हुंदा हजुरको सब मोह भाग्यो ॥ ३१ ॥
यो मोहले जगतमा सबलाइ ग्रास ।
गर्दोछ हे गरूडजी ! बुझ्नोस् सहर्ष ॥
तस्मात् इ राघजिवको शुभ यो चरित्र ।
सुन्नोस तपाइँ प्रतिदिन् भइ खूब् पवित्र ॥ ३२ ॥
यस्ले कदापि मनमा रहँदैन मोह ।
मिल्नेछ ज्ञान पनि मै प्रभुको सहाय ॥
लीलामहाँ ति प्रभुको जसरी म पैलै ।
फस्तो भयाँ सब कहन्छु यथार्थ औले ॥ ३३ ॥
त्रेतामा रघुनाथको जब भयो ❀ औतार पृथ्विमहाँ ।
हेर्थ्यां बाललिला गएर मपनी ❀ नित्यै अयोध्यामहाँ ॥
देखी श्री रघुनाथलाइ मनमा ❀ अत्यन्त हर्षित् भयाँ ।
खेल्दै आपुसमा त्यसै बखतमा ❀ एक्दिन् म टाढा पुग्याँ ॥ ३४ ॥
लाग्नूभो रघुनाथ् रूनाकन तहाँ ❀ बालक् सरीको बनी ।
फेरी ती प्रभुका गयाँ नजिकमा ❀ हाँस्नूभयो राम् धनी ॥
लीला यस रितको तहाँ प्रभुजिको ❀ देखी लियाथ्यौँ जसै ।
ढाकीयो मन मोहले अति तहाँ ❀ सोही घरीमा तसै ॥ ३५ ॥
आकाश्मार्ग गरी उड्याँ मपनि फेर् ❀ सोही बखत्मा पनि ।
पीछा गर्नुभयो नछोडि प्रभुले ❀ दौड्दोभयाँखूब्अनि ॥
यस्ता रीत्सितले उड्याँ गगनमा ❀ हज्जार कोशौं जति ।
दौडन्थ्या म जती जती प्रभुजिता ❀ देख्थ्याँ समीप्मा उति ॥ ३६ ॥
दौडी दौडि म ब्रह्मलोक्तक पुग्याँ ❀ सोही घरीमा जब ।
केवल् अंगुल दूइको फरकभो ❀ व्याकुल् भया खूब् तब ॥
आँखा चिम्लि अडेर एक्छिनपछी ❀ आँखा उघार्याँ तहाँ ।
आफूलाइ त फेर् त्यसै वखतमा ❀ देख्याँ अयोध्यामहाँ ॥ ३७ ॥
सारै छक्कपरी बस्याँ जब मता ❀ फेरी प्रभूजी तहाँ ।
हाँस्नूभो अति जोडले र प्रभुका ❀ पस्तोभयाँ मुख्महाँ ॥
पर्वत् वृक्ष नदी समुद्र पृथिवी ❀ गन्धर्व औ किन्नर ।

... Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

द्यौता दानव सिद्ध चांरण सवै * देख्याँ तहाँ सुन्दर ॥ ३८ ॥
यो हो प्रपञ्च प्रभुको भनि छक्क पर्थ्यां।
आश्चर्य भो मनमहाँ र बिचार गर्थ्यां॥
देखीन फेर् जगतमा जुन वस्तु मले।
देख्याँ ति सब् प्रभुजिका मुखमा क्रमैले ॥ ३९ ॥
जान्थ्याँ जतातिर उतै प्रभुलाइ देख्थ्याँ।
एक् एक् गरेर सब यो मनभित्र लेख्थ्याँ॥
एक् कल्पसम्म प्रभुकै मुखमा वसेर।
निक्ल्याँ म बाहिर दया प्रभुको भएर ॥ ४० ॥
निस्की फेर् म पछारियाँ पृथिविमा * हे पक्षिराज्जी ! जब !
श्रीराम्ले पनि हातले छुनुभयो * मेरो शिरैमा तब ॥
सारा मोह र दुख् हटी त्यसघरी * चैतन्य आयो ममा।
लाग्याँ गर्न अनेक स्तुती प्रभुजिको * पश्चेर फेर् पाउमा ॥ ४१ ॥
मेरो त्यो स्तुति देखि खुस् अति भई * श्रीराम् प्रभूले पनि।
चाँडैनै वरमाग वाबु ! तिमिले * भन्नूभयो यो अनि ॥
यस्ताबात सुनेर राघवजिको * अत्यन्त हर्षित् भयाँ।
वर्मागौं भनि झट् उठेर प्रभका * साम्ने अगाडी गयाँ ॥ ४२ ॥
हेस्वामी ! म उपर् दया हजुरको * देखेर माग्छु वर।
केवल् भक्ति र ध्यानमा हजुरको * मेरो रहोस् मन् स्थिर॥
फेरी राघवले तथास्तु भनि फेर् * भन्नूभयो यो तहाँ।
सारै नै मन पर्दछन मकनता * सज्जन् जती छन् यहाँ ॥ ४३ ॥
मेरा नै सब हुन् तथापि किनहो * हे काक्भुसुण्डी ! यहाँ।
लाग्छन् मानिसनै अतिप्रिय बुझ्यौ * सम्पूर्ण प्राणीमहाँ ॥
हे पक्षी ! भय त्रास् र आशसबजीज् * त्यागी निरन्तर् अब।
मैलाई भज कालले तिमिकनै * गर्दैन केही तब ॥ ४४ ॥
वर्दान् यसरितको सुनेर प्रभुको * अत्यन्त हर्षित् भयाँ।
हेरौं बाललिला भनेर प्रभुको * क्यै दिन अयोध्यै रह्याँ॥
आश्रम्मा पछि ती सिताप।तजिको * आज्ञा लिई फर्कियाँ।
आफ्नो यो अनुभव् सबै हजुरमा * हे पक्षि ! मैले कह्यां ॥ ४५ ॥
पक्षी काक भुशुण्डिका सब कुरा * सुन्दोभयाथ्या जसै।
रामका भक्त हुंदा गरुडजिपनि फेर * हर्षित भया खुब तसै ॥

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

फेरी प्रश्न गऱ्या तहाँ गरुडले ❀ तो पक्षिका सङ्ग अनि ।
कस्ता रीतूसित कागको जुनि भई ❀ पैदा हुनुभो भनी ॥ ४६ ॥
उत्कण्ठा मनमा छ यस् विषयमा ❀ जान्ने मलाइ अब ।
यस्को जुन् छ रहस्य विस्तृत गरी ❀ हे पक्षि ! भन्नोस् सब ॥
यस्तो प्रश्न गरूडजिको जब सुन्या ❀ तो काक्भुशुण्डोजिले ।
लाग्या भन्न यथार्थ बात जुन हो ❀ अत्यन्त नै प्रेमले ॥ ४७ ॥
बित्तै तीन् युग फेरी हे गरुडजी ! ❀ लाग्यो कलीयुग् जब ।
सारा देशविदेशका जनहरू ❀ पाप् गनलाग्या सब ॥
सोही औसरमा म शूद्र कुलमा ❀ जन्म्याँ अयोध्यामहाँ ।
धनूले मत्त भएर हे गरुडजी ❀ नास्तिक् भयाँ खूब् तहाँ ॥४८॥
धेरैनै कलिकालको जगतमा ❀ वृद्धी भएथ्यो जसै ।
नानारूप धरेर मानिस हरू ❀ पाप् गर्न लाग्या तसै ॥
धर्मैको लिइ आड़ नास्तिकहरु ❀ नीच्कर्म गर्थे तहाँ ।
तिन्कै सङ्गतमा भुलेर मपनि ❀ उज्जैन् नगर्मा पुग्याँ ॥४९॥
खानैसम्म मिलेन गैकन त्यहाँ ❀ अत्यन्त व्याकुल् भयाँ ।
केहीकाल वितेपछी अलिकति ❀ द्रव्यै कमाईलियाँ ॥
सेवा शंकरको गरीकन रह्याँ ❀ सो द्रव्य साथ्मा हुंदा ।
यौटा शंकरभक्त विप्र सँगमा ❀ सँगत् भयो फेर तदा ॥ ५० ॥
आदर्पूर्वक गर्दथ्याँ म तिनको ❀ सेवा निरन्तर् तहाँ ।
विश्वाश्मा परि मान्दथ्या मकनतो ❀ पुत्रै समान् मन्महाँ ॥
गर्थ्या खूब कपट मता ति द्विजको ❀ बैरी समान्को बनी ।
कैथ्यौं अर्ति दिया मलाइ उनले ❀ मानोन यौटै पनि ॥५१॥
मान्थ्याँ केवल शंभुलाइ जगका ❀ इश्वर् इनै हुन् भनी ।
रामूलाई पनि मान्नु पर्दछ मनी ❀ कर्लाउँथ्या धेर् उनी ॥
एक् दिन् कोहि शिवालयै बिच बसी ❀ ध्यान् गर्दथ्याँ शंभुको ।
मेरा ती गुरूजो पनि त्यसघरी ❀ पौंच्या तहीं नै अहो ॥ ५२ ॥
सारैनै अभिमान् गरी गुरुकनै ❀ ढोगीन मैले जब ।
ज्यादै नै अपमान हुंदा गुरुजिको ❀ क्रोधित् हुनुभो शिब ॥
मन्दिरका बिचबाट फेर त्यसघरी ❀ आकाशबाणी भयो ।
त्योबाणी सुनि त्यस्घरी गरुड जी ! ❀ मेरो त होशै गयो ॥ ५३ ॥
निन्दा ती गुरुको गरिस् यसघरी ❀ हे दुष्ट ! तैंले यहाँ ।
तस्मात् दुःख सहेर जन्मन गएस् ❀ सर्पै भई पृथ्विमा ॥

Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations



यस्तो श्राप सुनेर शंकरजिको * अत्यन्त कातर् बनी ।
गर्नु भो शिवको अनेक् स्तुति तहाँ * मेरा गुरुले अनि ॥५४॥
मेरा ती गुरुको सुनी स्तुति तहाँ * अत्यन्त हर्षित् भई ।
भन्नुभो शिवले त्यसै बखतमा * आश्वाशनै खूब् दिई ॥
इच्छा जुन् चिजको छ माग अहिले * दिन्छु त्यही चीज् यहाँ ।
शंकर्को सुनि वाणि यो गुरूजिले * भन्नूभयो फेर् तहाँ ॥५५॥
हे शंभो ! यसलाई श्राप् हजुरले * अैले दिनूभो जुन ।
त्यस्कोफल्कनभोगिजल्दि अबहोस् * श्राप्बाट यो मोचन ॥
यस्तै होस भनेर शंकर तहाँ * लुप्तै हुनूभो जब ।
विन्ध्याचल् गिरिमा गएर मपनि * सर्प भयाँ झट तब ॥५६॥
त्यो चोलापनि छोडि कयै दिन पछी * ब्राह्मण् भई जन्मियाँ ।
केवल् राघवको भजन् गरिलिने * व्रतूलाइ मैले लियाँ ॥
सोध्याँ लोमशलाई एक्दिन गई * यो बात मैले अनी ।
ब्रह्मोपासन गर्न के छ सजिलो * भन्नोस् उपायै भनी ॥५७॥
मेरो बात सुनेर लोमशजिले * जुन् तर्क भन्नू भयो ।
केही बुझ्न सकीन चंचल हुंदा * त्यो बात व्यर्थै गयो ॥
मेरो चाल्कन देखि लोमशजिले * ज्यादै रिसाईकन ।
मैलाइ गरि लक्ष त्यस् घरिमहाँ * भन्नूभयो यो पुनः ॥५८॥
विश्वाश्कयै गरिनस् अधर्मिअहिले * हित् बात भन्दा यहाँ ।
सोही कारण जन्मिएस् यसघरी * गै कागका कुल्महाँ ॥
यस्तो श्राप सुनेर लोमशजिको * अत्यन्त दुःखित् भयाँ ।
हे ब्रह्मर्षि! क्षमा म पाउँ भनि फेर् * हात्जोरिबिन्तीगर्याँ ॥५९॥
रामको मन्त्र दिनूभयो खुशि भई * जप्नू निरन्तर् भनी ।
सोही मन्त्र जपेर यस् गिरिमहाँ * आयाँ सरासर् अनी ॥
सत्ताईस् जति कल्प यस् गिरिमहाँ * बस्ता बिताई लियाँ ।
मेरो पूर्वकथा सबै गरुडजी ! * मैले बताई दियाँ ॥६०॥
यस्तावात ती काक्भुशुण्डि सँगमा * सुन्दाभयाथ्या जसै ।
हे गौरी ! अति खुश् भई गरुडले * भन्दाभया यो तसै ॥
हेपक्षी! मविषे दया हजुरको * भै रामजीको कथा ।
पायाँ सुन्न यथार्थ दूर अब भो * सन्देह यो सर्वथा ॥६१॥
मैले फेरि हजुरका सँगमहाँ * सात प्रश्न गर्छु यहाँ ।

CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

त्यस्को उत्तर सुन्नलाइ अब फरू * इच्छा रह्यो मन्महाँ ॥
यस्तोबात सुनेर ती गरुडको * हर्षित भई मन्महाँ ।
लाग्याकाकभुशुण्डि उत्तर दिनै * ती प्रश्नको सब् तहाँ ॥ ६२ ॥
कुन् हो दुःखठुलो? गरीब हुनुहो * सत्संग नै हो सुख ।
केहो सज्जनको स्वभाव ? जसको * मन्मा दया नित्य छ ॥
कुन्हो वैदिक धर्म ? पालन गर्नु * नित्यै अहिंसाकन ।
कुन् हो पाप ठुलो? कसैकन पनि * निन्दा न गर्नू पुनः ॥ ६३ ॥
कुन् हो मानस रोग प्राणिहरूको? * अज्ञान नै रोग हो ।
सर्वश्रेष्ठ दयालु फेरि कुन हो ? * अज्ञान नाश गर्छ जो ॥
तस्मात् राघवको भजन् गरुडजी! * गर्नोस् निरन्तर् अब ।
सारै गुप्त रहस्य यो हजुरमा * भने सुनायाँ सब ॥ ६४ ॥
यस्ताबाततिकाक् भुशुण्डि सँगमा * सुन्दा बहुत् खुश भई ।
हात् जोरीकन भन्दछन् गरुडजी * चाँडै अगाडी गई ॥
हे पक्षि! अहिले मिल्यो मकन ज्ञान * ठुलो हजुर्बाट यो ।
गर्न्याछु अब नित्य चिन्तन यहाँ * श्रीरामका पाउको ॥ ६५ ॥
यस्ताबात भनेर ती गरुडजी * मौनै रह्या एक क्षण ।
पाउमा परि दण्डवत् गरि गया * बैकुण्ठमा ती पुनः ॥
तस्मात् यो कलिमा सितापति प्रभू * रामचन्द्रको नाम् सरी ।
अर्को केही उपाय छैन जगमा * पाप् नाशनमा यस् घरी ॥ ६६ ॥
हे प्यारी ! तर यो कथा शठ तथा * मूर्खै हरूमा पनि ।
भन्न हुन्न कदापि राख मनमा * गुप्तैछ यो खूब् भनी ॥
जस्ले रामचरित्र पढ्दछ सदा * श्रीराममै मन् धरी ।
सारा पाप विनष्ट भै पछि उही * जानेछ संसार् तरी ॥ ६७ ॥
यस्ता बात सुनेर शंकरजिका * अत्यन्त हर्षित् भई ।
बिन्ती फेरि गरिन् ति पार्वतिजिले * साम्ने शिवैको गई ॥
हेनाथ ! राघवको चरित्रमहिमा * सारा सुन्या यस्घरी ।
शंका दूर भयो प्रसन्न म भयाँ * रामूकै प्रभाव्ले गरी ॥ ६८ ॥
यस्ताबात सुनेर शंकरजिले * भन्न भयो यो तहाँ ।
रामका भक्त समस्तलाइ कहिल्यै * दुख् हुन्न संसार् महाँ ॥
यस्तै रीत्सित याज्ञवल्क्य ऋषिले * श्री रामको यो कथा ।
भारद्वाज्कन सब सुनाउनुभयो * त्यै तीर्थमा सर्वथा ॥ ६९ ॥
....०....

CC-O. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

Vinay Avasthi Sahib Bhuvan Vani Trust Donations

छापियो ! अपूर्व दोश्रो आवृत्तिको !! छापियो !!!

# नेपाल दिग्दर्शन अर्थात् इतिहास

## सुब्बा होमनाथात्मजतनय श्रीरामजी उपाध्यायकृत

यो नेपालको इतिहासमा परापूर्वकालदेखिका भएभरका राजवंशको र त्यस वेलाको चलनहरुको वर्णन गरिएको र बाइसी चौबिसीका सेन, चन, खान र मल्ल राजाहरुको पालाको इतिहास र शाहवंशको प्रादुर्भाव--गोरखा राज्याधिकार, वर्तमान श्री ५ हरुको नेपाल साम्राज्य सङ्गठनको वर्णन अत्यन्त सरल रीतले गरेकोछ। अधिका राज्यकाल सम्म देशको गौरवमय कथा पढेर देशको समृद्धि तथा आर्थिक गौरवमयकालको कथा र पछि नेपालका राहु कंवरखलकका जंगबहादुर र राणा प्रधानमन्त्री भनाउनेहरुले स्वेच्छाचार, अनाचार र दमनले देशको दुर्दशा गरी देशको समस्त धन लुटेरा झैं लुटी बिदेश लगी थुपारेको र नेपाली जनतालाई सब तरफबाट सर्वहारा बनाई आज बिदेशमा कुली, खलासी, दरबानी नोकरी गर्न कर लगाएको कारणको र देशका स्वामी धिराज त्रिभुवनले देश त्यागगरी पुनः स्वदेश फर्कि राज्य व्यवस्था चलाएको र वहाँका स्वर्गारोहण पछि वर्तमान श्री ५ धिराज महेन्द्र-वीर विक्रमको शासनकाल सम्मको कुराहरू वर्णन गरेको छ। यसैमा नेपाल-को रीति थितिहरू तथा सबै तीर्थहरूको पनि वर्णन गरेको छ।

यति हुँदा हुँदै पनि यस पुस्तकमा वर्तमान श्री५ महेन्द्रको राज्यारोहण उत्सवको गरी सैकड़ों रंगीन तस्वीर समेत भएकोले तस्वीरैले मात्र सबै कुरा वायस्कोप हेरे झैं छर्लङ्ग देखिनेछ। मूल्य एक प्रतिको ८) तर हाल प्रचार-लाई ६) मा पठाउनेछौं। पुस्तक जस्ता किसिमले बिक्री भई रहेकोछ, त्यस हिसाबले पछि मगाउनेहरुले अर्को संस्करणको प्रतीक्षा गर्नु पर्नेछ।

नेपालको चित्रावली:--अर्थात् नेपालका भएरका राजा, मन्त्री, मन्दिर, देश, तीर्थहरुको सैकड़ों तस्वीरहरूको अलबम १ के दाम ३) तर प्रचारलाई हाल २।५० मा दिइ रहेकाछौं, चाँडो मगाउनुहोस्।

पता--सुब्बा होमनाथ केदारनाथ, वाराणसी

रामू... CC-0. Nanaji Deshmukh Library, BJP, Jammu. Digitized By Siddhanta eGangotri Gyaan Kosha

